


# रजत स्मारिका

## २०७४






रजत स्मारिका २०७४

प्रकाशक

जनसचेतन बचत तथा ऋण सहकारी संस्था लिमिटेड

वैत्यश्वर गा.पा. ५, काब्रे, दोलखा

# संस्थापक सदस्यहरू


यज्ञराज ढुङ्गेल
सदस्यता नं. १


विष्णुप्रसाद चौलागाईं
सदस्यता नं. २


बाबुराम गिरी
सदस्यता नं. ३


पुण्यप्रसाद घिमिरे
सदस्यता नं. ४


गोपिकृष्ण शर्मा
सदस्यता नं. ५


पुण्यप्रसाद घिमिरे
सदस्यता नं. ६


सुदर्शन ढुङ्गेल
सदस्यता नं. ७


पुस्करकुमार दाहाल
सदस्यता नं. ८


बिर्खबहादुर खडका
सदस्यता नं. ९


कुमार चौलागाईं
सदस्यता नं. १०


चित्रप्रसाद भट्टराई
सदस्यता नं. ११


भीमप्रसाद दाहाल
सदस्यता नं. १२


भीमप्रसाद दाहाल
सदस्यता नं. १३


रत्नप्रसाद घिमिरे
सदस्यता नं. १४


छत्रप्रसाद दाहाल
सदस्यता नं. १५


राजेन्द्रप्रसाद ढुङ्गेल
सदस्यता नं. १६


दिपककुमार वस्नेत
सदस्यता नं. १७


परितोषकुमार कर्ण
सदस्यता नं. १८


पुण्यप्रसाद न्यौपाने
सदस्यता नं. १९


रामप्रसाद दाहाल
सदस्यता नं. २०


राधाकृष्ण दाहाल
सदस्यता नं. २१


वोमहरि दाहाल
सदस्यता नं. २२


हरिप्रसाद दाहाल
सदस्यता नं. २३


वालकुमार दाहाल
सदस्यता नं. २४


धर्मानन्द दाहाल
सदस्यता नं. २५


विष्णुप्रसाद दाहाल
सदस्यता नं. २६


ज्ञानेन्द्रबहादुर खड्का
सदस्यता नं. २७


ललितबहादुर कार्की
सदस्यता नं. २८


पशुपति चौलागांईं
सदस्यता नं. २९


शिवप्रसाद ढुङ्गेल
सदस्यता नं. ३०


मिनप्रसाद शिवाकोटी
सदस्यता नं. ३१


भवानीप्रसाद घिमिरे
सदस्यता नं. ३२


घनश्याम घिमिरे
सदस्यता नं. ३३


चन्द्रबहादुर दाहाल
सदस्यता नं. ३४

# जनसचेतन रजत स्मारिका २०७४




**प्रकाशक**




**बचत तथा ऋण सहकारी संस्था लि.**

वैतेश्वर-५, दोलखा

सम्पर्क फोन नं. +९७७-४९-४११००४, ४११००५, ६९०१४०

इमेल : info@janasachetan.org.np

web: www.janasachetan.org.np

**स्मारिका प्रकाशन व्यवस्थापन**

**सल्लाहकार**

पशुपति चौलागाइँ

यज्ञराज ढुङ्गेल

भीम प्रसाद दाहाल

**प्राविधिक सल्लाहकार**

कृष्ण कुमार श्रेष्ठ

**प्रकाशन तथा प्रचार-प्रसार उपसमिति**

**संयोजक** : हेमन्त चौलागाइँ

**सदस्य** : भरत के.सी.

**सदस्य** : शरदचन्द्र सापकोटा

**सदस्य** : अर्जुन दाहाल 'अपवाद'

**सदस्य** : बलराम के.सी.

**सम्पादक** : बिर्ख क्रान्ति

**कार्यकारी सम्पादक** : अर्जुन दाहाल 'अपवाद'

**भाषा सम्पादक** : शङ्करलाल श्रेष्ठ



**डिजाइन** : शेषराज गौतम, बागबजार, काठमाडौं
फोनः ४२१५४४८

**मुद्रण** : फास्ट एण्ड फाईन प्रेस
कौसलटार, भक्तपुर, ९८५११११५९१



प्रधानमन्त्री



काठमाडौं, नेपाल

# शुभकामना

**जनसचेतन बचत तथा ऋण सहकारी संस्थाले** आफ्नो स्थापनाको २४ वर्ष पुरा गरी २५औं वर्षमा प्रवेश गर्न लागेको अवसरमा **जनसचेतन रजत स्मारिका** प्रकाशन गर्न लागेको जानकारी पाउँदा खुसी लागेको छ ।

गुणस्तरीय सहकारी परिचालन मार्फत समुदायको विकास र उत्थानमा यस सहकारीले दिएको योगदान प्रशंसनीय छ । सहकारीका प्रतिपादित अन्तर्राष्ट्रिय सिद्धान्त र मूल्य मान्यतालाई आत्मसाथ गर्दै सहकारीलाई समाज केन्द्रित बनाउँदै आफूलाई ग्रामीण भेगमा सफल सहकारीको रूपमा अगाडि बढाउने प्रयास गरिरहेको यस सहकारीका सम्पूर्ण शेयर सदस्यहरूलाई २५औं वर्ष प्रवेशको अवसरमा हार्दिक बधाई दिन चाहन्छु ।

हाम्रो संविधानले राज्यको तीन खम्बे अर्थनीति अवलम्बन गरेको अवस्थामा सहकारी क्षेत्रबाट राज्यको अर्थतन्त्रको समग्र विकासमा महत्वपूर्ण भूमिका हुने कुरा हामी सबैले बुझेका छौं।देशभित्र हाल सञ्चालनमा रहेका करिब ३५ हजार सबै प्रकृतिका सहकारीले प्रत्यक्ष र अप्रत्यक्ष रूपमा पुऱ्याएको योगदान भित्र यस जनसचेतन सहकारीको पनि महत्वपूर्ण स्थान छ ।

राष्ट्रिय सहकारी अभियान मात्र होइन सहकारी कार्यालयबाट समेत समय-समयमा पुरस्कृत यस सहकारी संस्था अन्य सहकारीको लागि नमूना सहकारीको रूपमा स्थापित भएको, सहकारी सञ्चालन र वित्तीय अनुशासनमा उत्कृष्ट कार्य गरे बापत अन्तर्राष्ट्रिय सहकारी अभियान मार्फत ACCESS SILVER BRAND प्राप्त गर्न सफल यस संस्थाको थप प्रगतिको कामना गर्दछु ।

अन्त्यमा, यस संस्थाको उत्तर-उत्तर प्रगति र सफलताको कामना गर्दै प्रकाशन हुन गईरहेको स्मारिकामा समेटिने विषयहरूले यस संस्थाले गरेका राम्रा कार्यहरू समेट्दै समुदायलाई सहकारी शिक्षा प्रदान गर्न र बचत तथा लगानी गरी जीवनस्तरमा सकारात्मक परिवर्तन गर्न अभिप्रेरित गर्न सकोस्, शुभकामना छ ।

धन्यवाद ।

जय नेपाल ।
भदौ, २०७४

शेरबहादुर देउवा
**प्रधानमन्त्री**

मा. अम्बिका बस्नेत
मन्त्री
सहकारी तथा गरिबी निवारण मन्त्रालय



निजी सचिवालय
सिंहदरबार, काठमाडौं ।

पत्र संख्या :- ०७४/७५
चलानी नं. :- १६८



२०७४ भाद्र २६

# शुभकामना

जनसचेतन बचत तथा ऋण सहकारी संस्थाले आफ्नो स्थापनाको २५ औं वर्ष पुगेको उपलक्ष्यमा २५ वर्षका स्मृतिहरु तथा सहकारी अभियानका अनुभव र लेखहरुको संगालोको रुपमा जनसचेतन स्मारिका प्रकाशन गर्न लागेको थाहा पाउँदा मलाई खुशी लागेको छ । सहकारीसँग सरोकार राख्नेहरुका लागि यो प्रकाशन संग्रहणीय हुनेछ भन्ने मैले विश्वास लिएको छु ।

सहकारी अभियानमा लामो अनुभव संगालेको जनसचेतन बचत तथा ऋण सहकारी संस्थाले आफ्नो रजत जयन्ती सम्मको यात्रा तय गर्दा यसले स्थानीय स्तरमा पुऱ्याएको वित्तिय सेवा प्रति हार्दिक धन्यवाद व्यक्त गर्न चाहन्छु । आगामी दिनहरुमा पनि यस सहकारी संस्थाले प्रदान गर्ने वित्तिय सेवाहरु अझ प्रभावकारी हुनेछ भन्ने मेरो विश्वास छ । सहकारीको मुल्य र मान्यतालाई अंगिकार गर्दै यस संस्थाले प्रदान गर्ने सेवाहरु अझ प्रभावकारी हुनेमा म विश्वस्त छु । रजत जयन्तीको उपलक्ष्यमा संस्थाको उत्तरोत्तर प्रगतिको शुभकामना ।

**जय नेपाल, जय सहकारी**

अम्बिका

**मा. अम्बिका बस्नेत**
मन्त्री
सहकारी तथा गरिबी निवारण मन्त्रालय

कार्यालयको ठेगाना:
सिंहदरबार, काठमाडौं
अफिस: +९७७-१-४२०००५५, फ्याक्स: +९७७-१-४२११९५८
E-mail: info@mocpa.gov.np, Website: www.mocpa.gov.np



ASSOCIATION OF ASIAN CONFEDERATION OF CREDIT UNIONS





## Happy 25th Anniversary!

On behalf of the entire Asian Credit Union Movement, we extend our sincere congratulation to Janasachetan SACCOS for completing 25 glorious years of success. You have always been on the top of the list for serving the community with your unselfish services. You have achieved tremendous growth and have built eminent goodwill in the community.

Cooperative like yours with a brilliant team of dedicated volunteers and with a friendly work environment can only aim for high results. Working with you has been a real honor and we value your response to each and every initiative ACCU has introduced to you.

With your commitment and sincerity, you have time to time proved your worth and have gained the much deserved recognition and fame. With your services, the community has gained a lot. Being a 'Silver ACCESS Branded' cooperative in Asia is a proof of your dedication.

We wish Janasachetan SACCOS employees will continue to consider it a privilege working in your organization where they get all facilities possible. Not only do you provide a learning platform but also offer a growing career curve for them.

Finally, we take this opportunity to express our heartfelt appreciation on the success Janasachetan SACCOS and we wish you a very successful 25th Anniversary celebration on October 8, 2017.

We wish you all the success for many more years to come.

Sincerely yours,

**Elenita V. San Roque**

Chief Executive Officer

8th Floor, U Tower Building, No. 411, Srinakarin Road,
Suanluang, Bangkok 10250, Thailand
Tel: (66)-2-7044253-54 Fax: (66)-2-7044255
Email: accumail@aaccu.coop
Website: www.aaccu.asia; www.aaccu.coop

Member: International Co-operative Alliance;
International Cooperative Banking Association;
International Raiffeisen Union;
United Nations Special Consultative Status; PROXFIN



**National Co-operative Federation of Nepal Ltd.**
Pulchok, Lalitpur, Nepal
G.P.O. Box: 11859, Kathmandu

**राष्ट्रिय सहकारी संघ लि. नेपाल**
पुल्चोक, ललितपुर
पो.ब.नं. ११८५९, काठमाडौं

Tel: 977-1-5010116, 5010033
Fax: 977-1-5010075
E-mail: ncf@wlink.com.np
Website: www.ncfnepal.com.np







# शुभकामना

मुलुकको आर्थिक समृद्धि,सामाजिक न्याय तथा गरीबी न्यूनीकरणका लागि सहकारीको अपरिहार्यतालाई मनन गर्दै नेपालको संविधान २०७२ र नेपाल सरकारको नीति तथा कार्यक्रममा सरकारी, सहकारी र निजी क्षेत्र सहितको तीन खम्बे अर्थनीतिलाई प्राथमिकतामा राखेकाले सहकारी क्षेत्रको महत्व थप उजागर भएको व्यहोरा विदितै छ । सोही तीन खम्बे अर्थनीति अनुरूप यस क्षेत्रको सुदृढीकरण गर्दै सहकारी क्षेत्रको भूमिका र योगदानलाई अझ वृद्धि गर्न सहकारीकर्मीहरू ऐक्यबद्ध हुन आव्हान गर्दछु ।

यसै अनुसार सहकारी अभियानमा क्रियाशिल जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि.वैतेश्वर गाउँपालिका ५,मैनापोखरी, दोलखा, स्थापनाको २५ वर्ष पुगेको अवशरमा रजत जयन्ती मनाउन गइरहेकोमा संस्थाका पदाधिकारी,कर्मचारी तथा सदस्यहरूमा राष्ट्रिय सहकारी संघ लि. नेपालको तर्फबाट हार्दिक बधाई ज्ञापन गर्न चाहान्छु ।

सहकारी अभियानको गुणात्मक पक्ष मजबुत बनाउनका लागि शिक्षा,तालिम,सूचना र सञ्चारको महत्वपूर्ण भूमिका रहेको हुन्छ । अत:संस्थाको स्थापना देखि हाल सम्मका महत्वपूर्ण कुराहरुलाई समेटेर प्रकासन गर्न लागिएको जनसचेतन रजत स्मारिकाले सदस्यहरु लगाएत सरोकारवालालाई संस्थाको बारेमा जानकारी हुन गई महत्वपूर्ण सूचना समेत प्राप्त हुने विश्वास लिएको छु ।

अन्त्यमा,सहकारी सिद्धान्तको पूर्ण पालना गर्दै सहकारी पद्धती अनुरुप सहकारी संस्थाले सुशासनमा ध्यानदिएर सदस्यमुखी कार्यक्रमहरु कार्यान्वायन गर्न २५ वर्षको अनुभवले दिशानिर्देश गर्ने अपेक्षाका साथ संस्थाको उत्तरोत्तर प्रगतिको शुभ कामना व्यक्त गर्दछु ।

धन्यवाद ।

मिति: २०७४ भाद्र २३ गते

(केशब प्रसाद बडाल)
अध्यक्ष



# राष्ट्रिय सहकारी विकास बोर्ड

(राष्ट्रिय सहकारी विकास बोर्ड ऐन, २०४९ द्वारा स्थापित)



पत्र संख्या :
चलानी नं.:

फोन नं. { ५०१०१३१/५०१०२३७
५०१००९६/५०१०१९०
पुल्चोक, ललितपुर, नेपाल ।

मिति :२०७४।६।२



## शुभकामना

जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि. मैनापोखरी दोलखाले संस्थाको रजतजयन्तीको अवसरमा **जनसचेतन रजत स्मारिका** प्रकाशन गर्न लागेको थाहा पाउदा मलाई खुशी लागेको छ ।

अहिले हाम्रो देशमा सहकारी प्रतिको आकर्षण बढिरहेको छ । सहकारीको माध्यमवाट आफ्नो आर्थिक, सामाजिक, विकास गर्न सकिने विश्वासका साथ सहकारीमा संलग्न हुने र उद्यम व्यवसाय गर्ने जुन प्रवित्तिहरु देखिएको छ त्यसलाई सकारात्मक रुपमा लिनु पर्दछ । अपितु सहकारी क्षेत्रमा विविध समस्याहरु पनि देखिएका छन् । ती समस्याहरुको निराकरण गर्दै सहकारीहरुले आफ्ना सदस्यहरुलाई गुणात्मक सेवा प्रदान गर्न सक्नु पर्दछ । सहकारीको माध्यमवाट कृषिको विकास गर्दै उत्पादन वृद्धि गर्ने स्वरोजगार वन्न अभिप्रेरित गर्ने, रोजगारीको सिर्जना गर्ने, उद्यमशिलताको विकास गर्ने, जस्ता कार्यक्रमहरुमा सहकारीहरुले आफ्नो ध्यान केन्द्रित गर्नु पर्ने आजको तड्कारो आवश्यकता देखिन्छ ।

त्यस संस्थाले आफ्ना सदस्यहरुलाई गुणस्तरीय सेवा प्रदान गर्दै उत्कृष्ट कार्यहरु गरेकोमा प्रशंसनीय छ । सफलतम संस्थाको रुपमा परिचित यस संस्थाले अन्तर्राष्ट्रिय स्तरको गुणस्तरीय प्रमाणिकरण (एक्सेस सिल्भर ब्राण्ड) समेत प्राप्त गरिसकेको छ । "सवल सुरक्षित संस्था, समृद्ध सदस्य" भन्ने परिकल्पना बोकेर अगाडि बढिरहेको यो संस्थाले सदस्यहरुको आर्थिक, सामाजिक एवं सांस्कृतिक विकासको लागि आगामी दिनमा पनि अझ प्रभावकारी कार्यहरुका साथ अगाडि बढ्ने छ भन्ने मैले अपेक्षा गरेको छु ।

अन्त्यमा संस्थाले प्रकाशन गर्न लागेको २५ बर्षका स्मृतिहरु र सहकारी अभियानका संग्रहणीय अनुभव तथा लेख रचनाहरुको संगालो **जनसचेतन रजत स्मारिका** सफल रुपमा प्रकाशन भई सहकारीकर्मी एवं आम पाठकलाई सहकारी प्रतिको जिज्ञासा मेटाउन सफल हुनेछ भन्ने शुभकामना दिन चाहन्छु । संस्था र सदस्यहरुको उत्तरोत्तर प्रगतिको कामना गर्दछु ।

प्रसन्नकुमार कोइराला
सदस्य-सचिव



**National राष्ट्रिय सहकारी बैंक लिमिटेड**
**Co-operative Bank Limited (NCBL)**

(नेपाल राष्ट्र बैंकबाट सीमित बैंकिङ्ग कारोबार गर्न स्वीकृती प्राप्त बैंक)



## हार्दिक शुभकामना

प्रस्तुत विषयमा दोलखा जिल्ला काब्रे-३ मैनापोखरी स्थित जनसचेतन बचत तथा ऋण सहकारी संस्था लिमिटेडले मिति २०७४ ०६ २२ गते "रजत जयन्ती" मनाउन लागिएको र सोही अवसरमा संस्थामा भए गरिएका विविध गतिविधिहरु,समसामयिक सवालहरु,लेख रचना तथा २५ वर्षका स्मृतिहरु तथा सहकारी अभियान भित्रका संग्रहनिय अनुभव तथा लेखहरुको संगालोको रुपमा **"जनसचेतन रजत स्मारिका"** प्रकाशन गर्न लागेको जानकारी पाउँदा अत्यन्त खुशी लागेको छ ।

एकका लागि सबै र सबैका लागि एक भन्ने सहकारीको मुल आदर्शलाई आत्मसाथ गर्दै २०५० साल अश्विन २२ गते स्थापना गरिएको यस सहकारी संस्थाले अन्तर्राष्ट्रिय स्तरको गुणस्तर प्रमाणिकरण (एक्सेस सिल्भर ब्राण्ड) प्राप्त गर्न सफल भएकोमा अत्यन्त खुशी लागेको छ । सहकारी क्षेत्रमा पुऱ्याएको योगदानको कदर तथा प्रशंसा गर्दै नेपाल जस्तो न्यून आर्थिक वृद्धि, बेरोजगारी, आर्थिक विकासमा क्षेत्रीय असमानता, व्याप्त गरिबी र बिप्रेषणमुखी अर्थतन्त्रलाई सुधार गर्नको लागि सदस्यहरुको सहभागिता र व्यवस्थापनमा संचालन हुने सहकारी पद्धति मार्फत आम समुदायलाई संगठित गराई देशको आर्थिक, सामाजिक तथा सांस्कृतिक रुपान्तरणमा पुऱ्याएको योगदानको कदर गर्दछु ।

साथै गरीबि न्यूनिकरण, लैंगिक समानता र सामाजिक सद्भाव कायम गरी देशको समग्र आर्थिक विकास गर्न, रोजगारी सिर्जना गर्न, आयात प्रतिस्थापन तथा निर्यात बृद्धि गर्न, छरिएर रहेका स-साना पूँजिहरुलाई एकिकृत गरी सदस्यहरुकै संयुक्त सहभागितामा परिचालन गरी सहकारीको अन्तर्राष्ट्रिय सिद्धान्त अनुरुपको गतिविधि संचालन गरी सहकारी अभियानमा अग्रणी स्थान हासिल गर्न सफल र सक्षम रहोस् भन्ने शुभकामना सहित **"रजत जयन्ती तथा जनसचेतन रजत स्मारिका"** प्रकाशन को पूर्ण सफलताको लागि हार्दिक शुभकामना व्यक्त गर्दछु ।

मिति : २०७४/०५/२५

के.बी. उप्रेती
प्रबन्ध संचालक

**Corporate Office:** Kupandol, Lalitpur, Tel.: 01 - 5180182, Fax: +977 - 01 - 5555687
E-mail: ncbl@ncbl.coop, corporate@ncbl.coop, Website.: www.ncbl.coop

स.वि.द.नं. : ३२९-०५०/०५१






# नेफ्स्कून

## नेपाल बचत तथा ऋण केन्द्रीय सहकारी संघ लि.






श्री अध्यक्षज्यू
जनसचेतन साकोस
काब्रे-३, मैनापोखरी, दोलखा

## शुभकामना

यस संघमा आबद्ध **जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि.** ले आफ्नो **स्थापनाको २५ औं बर्षमा** प्रवेश गर्न लागेको पुनित अवसरमा प्रकाशित **"जनसचेतन रजत स्मारिका"** मा संघको तर्फबाट शुभकामना प्रदान गर्न पाउँदा हामी अत्यन्त हर्षित भएका छौं ।

बचत तथा ऋण संघ सञ्चालनका सार्वभौम मूल्य, मान्यता र सिद्धान्तलाई आत्मसात गरी संस्था नीति, विधि र प्रविधिको प्रधानता भित्र रहेर समुदायमा निरन्तर दीगो, भरपर्दो र सदस्य केन्द्रित सेवा प्रवाह गर्दै २०६९ सालदेखि लगातार एशियाली ऋण महासंघ (ACCU) बाट एशियाली स्तरको ब्राण्ड प्राप्त गर्न सफल भएको छ । **"एकका लागि सबै र सबैका लागि एक"** भन्ने सहकारीको मूल आदर्शलाई आत्मसाथ गर्दै सदस्यहरुको समृद्ध भविष्य निर्माणका लागि अहोरात्र कटिबद्ध त्यस संस्थाले विभिन्न सहकारी क्षेत्रका राष्ट्रिय तथा अन्तर्राष्ट्रिय संघहरुबाट समेत पुरस्कार तथा सम्मान प्राप्त गरेको छ ।

वि.सं.२०६६ सालमा नेफस्कूनबाट उत्कृष्ट सहकारी पुरस्कार प्राप्त यस साकोसले सन् २०१६ र २०१७ को एशियाली स्तरको गुणस्तर प्रमाणिकरण (एक्सेस सिल्भर ब्राण्ड) प्राप्त गर्न सफल भएकोमा संघको तर्फबाट म हार्दिक बधाई तथा शुभकामना व्यक्त गर्दछु ।

सहकारी अभियानमार्फत वित्तीय सुशासन सहितको समुदायको आर्थिक, सामाजिक, सांस्कृतिक र पर्यावरण विकासका लागि सदस्यहरुको सक्रिय सहभागिता सहित प्रतिवद्धताका साथ अटुट रुपमा अझ अगाडि बढ्न यस रजत महोत्सवले थप उर्जा मिलोस् । हार्दिक शुभकामना !!

जय सहकारी !!
मिति २०७४/०५/२२

डी.बी. बस्नेत
अध्यक्ष

www.nefscun.org.np
नयाँबानेश्वर, काठमाडौं, नेपाल
पो.ब.नं.: ९९६९, फोन: +९७७-१-४७८१९६३, ४७८०२०१
फ्याक्स: +९७७-१-४७८३०७१, ४७८४५६९, Email: nefscun@nefscun.org.np



# जिल्ला समन्वय समिति



दोलखा, चरिकोट,

३ नं. प्रदेश, नेपाल

मिति २०७४/५/२५

०४९ – ४२११४२

प.सं. : २०७४/७५

च.नं. : ४८१



**विषय : शुभकामना ।**

श्री जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि.

बैतेश्वर गाउँपालिका, दोलखा

प्रस्तुत विषयमा दोलखा जिल्लाको साविक काँडे गाविस हालको बैतेश्वर गाउँपालिकामा २०५० साल आश्विन २२ गते स्थापना भएको जनसचेतन बचत तथा ऋण सहकारी संस्था दोलखा जिल्लाको मात्र नभई नेपालकै अग्रणी संस्थाको रुपमा रहेको छ । गुणस्तरीय सहकारी वित्तीय सेवा प्रदान गर्ने समुदायमा आधारित अन्तर्राष्ट्रिय स्तरको गुणस्तर प्रमाणीकरण (एक्सेस ब्रान्ड) प्राप्त गर्न सफल जनसचेतना बचत तथा ऋण सहकारी संस्थाले २५ वर्ष पुरा गरेको उपलक्ष्यमा रजत जयन्ती मनाउन लागेको जानकारी पाउँदा ज्यादै खुशी लागेको छ ।

यस अवधिमा संस्थाले २० हजार भन्दा बढी सदस्यलाई संस्थामा आबद्ध गराई सेवा प्रवाह गरेको र ९२ करोड २३ लाख पूँजि परिचालन गर्नु ज्यादै सह्रानीय कार्य हो । संस्थाको सदस्यता विस्तार, सेवामा विविधीकरण, गुणस्तर प्रमाणीकरण, संस्थागत विकास र सामाजिक विकासमा समेत महत्वपूर्ण उपलब्धी हासिल गरी आफ्नो पहिचान स्थापित गरेको छ । संस्थाले समुदायमा दीगो र भरपर्दो सेवा प्रदान गर्दै एशीयाली ऋण महासंघबाट अन्तर्राष्ट्रिय स्तरको एक्सेस ब्राण्ड, राष्ट्रिय सहकारी संघद्वारा उत्कृष्ट सहकारी व्यवसाय, पुरस्कार, नेपाल बचत तथा ऋण केन्द्रिय सहकारी संघ लि. (नेफ्स्कून) बाट देशभरीको उत्कृष्ट सहकारी पुरस्कार लगायत अन्य थुप्रै स्थानीय तथा राष्ट्रिय स्तरका पुरस्कार तथा सम्मान प्राप्त गर्न सफल भएकोमा हार्दिक बधाइ तथा शुभकामना व्यक्त गर्दछु ।

संस्थाले रजत जयन्तीको अवसरमा २५ वर्षका स्मृतिहरु तथा सहकारी अभियान भित्रका सराहनीय अनुभव तथा लेखहरु संगालोको रुपमा **जनसचेतन रजत स्मारिका** प्रकाशन गर्नु ज्यादै राम्रो कुरा हो । यसले विगतका विविध आरोह अवरोहहरुको स्मृति दिलाउने र भावि दिनमा अगाडिको बाटो अझ राजिलो बनाउन उक्त कृति ज्यादै उपयोगी हुने विश्वास गर्दछु । यस पुनित अवसरमा जनसचेतन बचत तथा ऋण सहकारी संस्थाको उत्तरोत्तर प्रगति, उज्वल भविष्यको कामना सहित संस्थाको उद्देश्य प्राप्तिमा सफलता मिलोस भन्ने शुभकामना व्यक्त गर्दछु ।

(डम्बर पाण्डे)

प्रमुख

जिल्ला समन्वय समिति



नेपाल सरकार
सहकारी तथा गरिबी निवारण मन्त्रालय
सहकारी विभाग
**डिभिजन सहकारी कार्यालय, दोलखा**

फोन/फ्याक्स नं. ०४९-४२१११८,
Email : deodolakha1@gmail.com
Website : www.deodolakha.gov.np

प.सं. : २०७४/०७५
च.नं. : १६४

मिति : २०७४/०५/२०



## शुभ-कामना

श्री जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि., वैतेश्वर गा.पा.-५, दोलखा २४ वर्ष पुरा गरी २५ औं वर्षमा प्रवेश गरेको उपलक्षमा रजत जयन्ती भव्यताका साथ मनाउनु हुन हार्दिक शुभ-कामना व्यक्त गर्दछु ।

संस्थाको रजत जयन्तीको अवसरमा २५ वर्षका स्मृतिहरु तथा सहकारी अभियान भित्रका संग्रहनिय अनुभव तथा लेखहरुको संगालोको रुपमा प्रकाशित हुने "जनसचेतन रजत स्मारिका" ले संस्थाका सदस्यहरुलाई सुसुचित गर्दै संस्थाको पारदर्शिता झल्काउने छ ।

सदस्यहरुको आर्थिक तथा सामाजिक उन्नती गर्ने क्रियाकलापमा सक्रिय रही आफ्ना शेयर सदस्यको मन जित्न सकेकोमा हार्दिक धन्यबाद दिँदै आगामी दिनहरुमा पनि सहकारीताको माध्यमलाई अँगालेर सहकारीको मूल्य, मान्यता, सिद्धान्तको परिपालना गर्दै आफ्ना सदस्यहरु लगायत समुदायको समुच्च हितमा कार्य गर्दै यो संस्था अझै सफलता तर्फ उन्मुख हुने छ र सरकारको तीन खम्बे अर्थ नीतिलाई साकार बनाउन एउटा ईंटा थप्नेछ भन्ने विश्वास लिएको छु ।

**जय सहकारी !!**

भविन्द्र बहादुर थापा
(नि.सहकारी अधिकृत)
निमित्त सहकारी अधिकृत



दर्ता नं.३११/०५०/०५१ पान नं. : ६०१६६२०९०



# जिल्ला सहकारी संघ लि. दोलखा

**District Co-operative Federation of Dolakha Ltd .**

चरिकोट, दोलखा Charikot, Dolakha

फोन नं./ फयाक्स नं. ०४९-४२१२००

च.नं. ०७ /२०७४/०७५ Email : dcudolakha@gmail.com मिति : २०७४/०५/२७



## शुभ-कामना

श्री जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि.२५ औं वर्षमा प्रवेश गरेको सुखद अववसरमा "जनसचेतन रजत स्मारिका" प्रकाशन गर्न लागेको थाहा पाउँदा जिल्ला सहकारी संघ लि. दोलखालाई अत्यन्तै खुसी लागको छ । सहकारी संञ्चालनको लागि आबश्यक सार्वभौम मुल्य, मान्यता, सिदान्त सहकारी ऐन नियम तथा मापदण्डलाई आत्मासाथ गर्दै संस्थाको निति, नियम, विधि, र विनियमको प्रविधिभित्र रहेर जनसचेतन साकोस दोलखा जिल्लामा मात्र नएर समग्र नेपालकै इतिहासमा सफल वित्तिय संस्थाको रुपमा स्थापित हुँदै समुदायमा लिगो र भरपर्दो सुवा प्रदान गर्दै २०६९ सालदेखीनै लगातर एशियाली ऋण महासंघ (ACCU) बाट अन्तराष्ट्रिय स्तरको (एक्सेस सिल्भर ब्राण्ड) प्राप्त गर्न सफल नमुना सहकारी संस्था बन्न पुगेकोमा २४ वर्ष पुरा भई २५ औं वर्षमा प्रवेश गर्न लागेको अवसरमा संस्थाको रजत जयन्ति मनाउन लागेको जानकारी पाउँदा मलाई ज्यादै खुसी लागेको छ।

सहकारीताका माध्यमबाट वित्तिय क्षेत्रमा यस संस्थाले पुऱ्याएको योगदान अविस्मरणिय एंव उल्लेखनिय रहको छ। वि.सं. २०५० साल असोज २२ गते शिक्षक, किसान, तथा सामाजिक अभियान्ताहरु सहित ३४ जना व्यक्तिहरु मिलि दोलखाका जिल्लाको साबिक काब्रे गा.बि.समास्थपना भएको यस जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि. यतिबेलासम्म संस्थाले गरेको "सबल र सुरक्षित संस्था, समृद्ध सदस्य" भन्ने परिकल्पना बोकि अगाडी बढिरहेको यस संस्थाले भौतिक तथा विविध पक्षमा संस्थाले गरेको प्रगति सबैका लागि अनुकरनिय र उदारनिय समेत बन्न पुगेको छ। गरे के हुन्न र ? भन्ने अभिव्यक्तिलाई जनसचेतनले सार्थकता प्रदान गरेको छ। सहकारीका मुलभुत आर्दश मुल्य-मान्यताहरुलाई अङ्गीकार गर्दै समुदायका विपन्न वर्गको आर्थिक, सामाजिक, सांस्कृतिक उत्थानमा समर्पित भएको पाउँदा हामिलाई गौरब लागेको छ। सदस्य संख्या र पुँजि परिचालनको हिसाबले संस्थाले जुन गति र स्थान तयस संस्थाले प्राप्त गरेको छ अझ त्यो भन्दा बढी उत्साहका साथ अगाडी बढने आशा एंव विश्वास लिएको छु

अन्तमा जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि.लाई यहाँसम्म ल्याईपुऱ्उनु हु सबै प्रति धन्यबाद व्यक्त गर्दै २५ औं "जनसचेतन रजत स्मारिका"ले यस संस्थाका बारेमा बुझन,जान्न जउपयोगी कार्य गर्न सहकारी आन्दोलनका समग्र पक्षमा थप प्रेरणा लिन समेत हामी सबैाई यो स्मारिका उपयोगि हुनेछ भन्ने विश्वासका साथ रजत जयन्तिको पुर्ण सफलको सुभकामना सहित संस्थाको उत्तर-उत्रर प्रगतिको कामना व्यक्त गर्दछु

रत्न बहादुर श्रेष्ठ
उपाध्यक्ष

प्यान नं. ३०३१२०९३९३ — दर्ता नं. ३२९/०५०/०५१



# दोलखा जिल्ला बचत तथा ऋण सहकारी संघ लि.

दोलखा



फोन नं. ०४९-४२१६८४

मिति....२०७४/६/१.........



श्री अध्यक्ष ज्यू
जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि.
बैत्यश्वर गाउँपालिका - ५, काब्रे, दोलखा

## विषय : शुभकामना

यस संघमा आवद्ध श्री जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि. वैत्यश्वर गा पा- ५ काब्रे दोलखाले आफ्नो स्थापनाको २४ वर्ष पुरा गरि २५ औं वर्षमा प्रवेश गर्ने लागेको अवसरमा संस्थाले विभिन्न कार्यक्रमका साथ रजत जयन्ती वर्ष भव्यताका साथ मनाउन गइरहेको व्यहोरा जानकारी पाउंदा अति नै खुसी लागेको छ । दोलखा जिल्लामा क्रियाशिल बचत तथा ऋण सहकारी संस्थाहरुमध्ये अग्रणी संस्थाको रुपमा स्थापित जनसचेतन बचत तथा ऋण सहकारी संस्था गुणस्तरीय सहकारी वित्तिय सेवा प्रदान गर्ने समुदायमा आधारित अन्तराष्ट्रिय स्तरको गुणस्तर प्रमाणिकरण (एक्सेस - सिल्भर ब्राण्ड) प्राप्त गर्न सफल बचत तथा ऋण सहकारी संस्थाको रुपमा परिचित र स्थापित हुन सफल भएकोमा उक्त उपलब्धीको हार्दिक प्रशंसा गर्न चाहन्छु । यसै सन्दर्भमा २०७४ आश्विन २२ गते संस्थाले मनाउन लागिरहेको रजत जयन्ती कार्यक्रमको अवसरमा जनसचेतनको २५ वर्षका स्मृतीहरु तथा सहकारी अभियान भित्रका संग्रहनीय अनुभव तथा लेखहरुको सग्रहको रुपमा "जनसचेतन रजत स्मारिका" प्रकाशन हुन लागिरहेकोमा ज्यादै खुशि लागेकोछ । यस उपलक्ष्यमा दोलखा जिल्ला बचत तथा ऋण सहकारी संघ लि. र मेरो व्यक्तिगत तर्फबाट संस्थाको २५ औं रजत जयन्ती भव्य र सभ्य रुपमा सम्पन्न होस् भन्ने सफलतको हार्दिक शुभकामना व्यक्त गर्न चाहान्छु ।

दोलखा जिल्लामा स्थापित बचत तथा ऋण सहकारी संस्थाहरु मध्ये जिल्लाभर कार्यक्षेत्र विस्तार गरी आफ्नो कार्यक्षेत्रभित्रका धेरै भन्दा धेरै सदस्यहरुलाई संस्थामा आवद्ध गराउंदै, सहकारी अभियानमा नमूना कार्य गर्न सफल त्यस सहकारी संस्थाले सबल र सुरक्षित संस्था, समृद्ध सदस्य भन्ने परिकल्पनका साथ सदस्यहरुको आर्थिक, सामाजिक तथा सांस्कृतिक विकासमा प्राप्त गरेको उल्लेखनीय सफलताको प्रशंसा गर्न चाहन्छु । यस संघमा आवद्ध त्यस संस्था सहकारीको मूल्य मान्यता र सिद्धान्तहरुलाई आत्मसात गर्दै अगाडि बढ्न सफल र सक्षम हुनेछ भन्ने कुरामा विश्वास छ ।

अन्तमा, संस्था २५ औं वर्षमा प्रवेश गर्न गइरहेको उपलक्ष्यमा रजत जयन्ती वर्ष पूर्ण रुपमा सफल रहोस् र संस्थाले आफ्ना सदस्यहरुको समग्र विकास गर्दै अगाडि बढ्न संस्थालाई सफलता मिलोस् भन्ने हार्दिक शुभकामना व्यक्त गर्दछु ।

**धन्यबाद, जय सहकारी !!**

जिबसराज खड्का
अध्यक्ष

 

# सम्पादकीय

**आरम्भ**

- **जनसचेतन रजत स्मारिका २०७४** सार्वजनिक हुनु जनसचेतन र सबै सहकारीकर्मीहरूका लागि धेरै खुशीको कुरा हो । संयोगवश, प्रकाशन तथा सम्पादन समूहमा संस्थापक, सञ्चालक र शेयर सदस्यहरूको प्रतिनिधित्व भएको छ, यो हाम्रो समूहको लागि खुशीको बोनस थपेको क्षण हो ।
- प्रस्तुत सम्पादकीयले स्मारिका प्रकाशन प्रक्रियादेखि यसमा समावेश भएका लेखहरूको सन्देश, यसका कार्यान्वयनका केही उपायहरू र व्यवस्थापकीय पक्षको समेत संक्षिप्त जानकारी दिनसकोस् भन्ने उद्देश्यले बुँदागत रुपमा प्रस्तुत गरिएको छ ।

**उद्देश्य**

- जनसचेतनका विगत २४ वर्षका गतिविधिहरू र कम्तीमा आगामी १ दशकका लक्ष्यहरू यस संस्थाका सदस्यहरू र सहकारी अभियानसम्वद्ध सबै पक्षबीच सार्वजनिक गर्ने उद्देश्यले यो स्मारिका प्रकाशन गरिएको हो ।
- आन्तरिक रुपमा यो प्रकाशनले संस्थाका उपलब्धिहरूको पुनरावलोकन गर्दै गौरवताको आत्मवोध गर्न र आगामी यात्राका लागि आत्मसमीक्षा गर्दै अघि बढ्न थप योगदान गर्नेछ भन्ने अपेक्षा लिइएको छ ।
- समग्रतामा, सहकारी क्षेत्रका वर्तमान पुस्ताका भरिला सवालहरू सहकारीसम्वद्ध सर्वसाधारणदेखि नीतिगत तहसम्मका सबै पक्षबीच सार्वजनिक बहसको विषय बन्न सकोस् र तिनका सम्बोधनका लागि सबै तहमा सामुहिक प्रयत्नहरू जन्मन सकुन् भन्ने अपेक्षा पनि राखिएको छ ।

**सामग्री संयोजन**

- यस स्मारिकामा जनसचेतनका आन्तरिक र तथ्याङ्कीय विवरणहरू, समग्र सहकारीसम्बन्धी विचारहरू, सहकारीकेन्द्रित साहित्यिक रचनाहरू र संस्थागत गतिविधिसम्बन्धी फोटो विवरणहरू समावेश गरिएको छ । पाठकहरूको सहजतालाई ध्यानमा राखी यिनलाई क्रमशः भिन्न खण्डहरूमा प्रस्तुत गरिएको छ ।
- लेखहरूमा संस्थापक, पूर्वसञ्चालक, सञ्चालक, कर्मचारी, उद्यमी, शेयर सदस्य, स्थानीयदेखि केन्द्रीयस्तरसम्मका सहकारीकर्मी, राजनीतिकर्मी, पत्रकार, अर्थविदहरूलगायतका विचारहरू समावेश गरिएको छ । तीबाहेक शुभकामना पत्रहरूले पनि सरकारी तथा सहकारी संघहरूको संस्थागत विचारहरूको प्रतिनिधित्व गरेका छन् ।

**मूल सन्देश**

- **सहकारीहरू अब उद्यमशीलताको माध्यमबाट गरिबी निवारणमा केन्द्रित हुनुपर्छ । यसका लागि दिगो विकासका लक्ष्यहरूको योजना ढाँचा समाउनुपर्छ ।**
- संस्थापक, पूर्वसञ्चालक, सञ्चालक, कर्मचारी, उद्यमी, शेयर सदस्य, सहकारीकर्मी, राजनीतिकर्मी, सरकारी क्षेत्रका प्रतिनिधिहरू, सहकारी संघका प्रतिनिधिहरू, अर्थविदहरू, पत्रकार र रजत वर्षको नारासहितले यस स्मारिकामा व्यक्त गरेका विचारहरूको निचोडको आधारमा यो मूल सन्देश तयार गरिएको हो ।

**सम्पादक मण्डलको भनाइ**

- कम्तीमा ५० वर्षको आयु राखेर यो स्मारिका जन्माइएको छ । जनसचेतनको प्रकाशन अभिलेखमा गएका २५ वर्ष र आगामी स्वर्ण जयन्तीसम्म यसले एक ऐतिहासिक कालखण्डको प्रतिनिधित्व गर्नेछ भन्ने अपेक्षा राखिएको छ । यो अपेक्षा त्यतिखेर मात्र सजीव हुनेछ, जतिखेर जनसचेतनको अविश्राम यात्राले यस स्मारिकाको मूल सन्देशको गन्तव्य टेक्नेछ ।
- जनसचेतनको संस्थागत ज्ञानलाई व्यवस्थित गर्न व्यवस्थापनले वार्षिक प्रकाशनबाहेक कम्तीमा पनि **'१ कार्यकाल, १ विशेषाङ्क'** प्रकाशन गर्ने नीति लिन सकोस् ।
- सहकारी क्षेत्रका ज्ञान तथा विकासक्रमबाट उत्पन्न हुने समकालीन सवालहरूमाथि आम सदस्य, सहकारीकर्मी, सम्वद्ध क्षेत्रगत विकासका प्रतिनिधिहरू र व्यवस्थापकहरूबीच साझा बुझाइ निर्माण गर्दै तिनका व्यवस्थापनको

सामुहिक प्रयत्न विकास गर्ने ध्येयले **जनसचेत अध्ययनशाला** विकास गरी नियमित अध्ययन, अनुसन्धान, संवाद तथा प्रकाशन, प्रसारण गर्ने व्यवस्था मिलाउन सकोस् ।

**धन्यवाद**

- ४२ जना लेखकहरूबाट ४० वटा लेखमार्फत कम्तीमा पनि २०० घण्टाको वौद्धिक योगदान स्वयम्‌सेवी रुपमा यो स्मारिकाले पाएको छ । शुभकामनाहरूका लागि छुट्टै समय लगानी भएको छ । प्रकाशन समितिका पदाधिकारीहरूबाट सञ्चार, समन्वय, योजना, प्रकाशन सामग्रीहरू संकलन, प्राविधिक व्यवस्थापन तथा लेखकहरू लगायतलाई वितरणसहितको वौद्धिक तथा व्यवस्थापकीय योगदान कम्तीमा पनि ५० घण्टामाथि पुग्नेछ । आफ्ना कथाहरू सुनाउने समय दिएर उद्यमीहरूको योगदान पाएको छ । पुस्तक आकार प्राप्त गर्न डिजाइनर र मुद्रकको विशेष मलजल पाएको छ । यसका लागि दशैं जस्तो महान चाडको प्रवाह नगरी आफ्ना कार्यमा दत्तचित्त भई डिजाइन गर्नुहुने टच क्रियसनका भाइहरू शेषराज गौतम, ऋषि गौतम र मुद्रण कार्यमा अहोरात्र खट्नुहुने फास्ट एण्ड फाईन प्रेसका भाइहरू दिपक ढुङ्गेल, बिनोद ढुङ्गेल, दिपेश ढुङ्गेल र सरोज राजथला धन्यवादका पात्र हुनुहुन्छ । पुस्तकको अवधारणा तयारीदेखि रचना संकलन र सम्पादनले कम्तीमा १०० घण्टा योगदान पाएको छ । सल्लाहकारहरूको विशेष परामर्श पाएको छ । यसबाहेक अरु कैयौं व्यक्तिहरूको प्रत्यक्ष, अप्रत्यक्ष योगदान पनि यसमा मिसिएको छ । लोकार्पणका लागि विशेष अतिथिहरूको समेत महत्वपूर्ण समय प्राप्त गर्ने अपेक्षा पनि राखिएकै छ । यी सबै योगदानहरू यस सहकारीका लागि बहुमूल्य पूँजी हुन् । यसका लागि जनसचेतन गहिरो भावनासहितको **'हार्दिक कृतज्ञता'** को पवित्र फूल चढाउन चाहन्छ । योभन्दा महँगो अर्पण गर्ने वस्तु अर्को भेटिएन ।

**अन्तमा**

- स्मारिकामा आफ्नो विचार राख्न चाहने लेखन तथा पैरवी क्षेत्रका जनसचेतनसम्बद्ध कतिपय सक्रिय सदस्यहरूका विचारहरू विविध प्राविधिक कारणले खोजेजति समय र स्थान दिन सकिएको छैन । तिनका योगदानहरूलाई आगामी दिनमा संस्थाले उपयुक्त विधिमार्फत सम्मान र उपयोग गर्ने नै छ ।
- भाषा तथा व्याकरण सम्पादनको क्रममा समय व्यवस्थापनको कारणवश लेखहरूमा नयाँ र पुराना दुवै व्याकरणहरू प्रयोग भएका छन् । इमान्दार र अधिकतम प्रयासका बावजुद पनि सम्पादन पक्षले पूर्णता नपाएको हुनसक्छ, सम्पादनको आँखाबाट कतिपय शब्द तथा वाक्यहरू भिन्न अर्थ र अपूर्ण पनि रहेका हुनसक्छन्, डिजाइन पक्ष पाठकमैत्री नभएको पनि हुनसक्छ, यी सबै कमजोरीहरूलाई व्यवस्थापन, लेखक तथा पाठकहरूले स्वीकारभावका साथ आगामी दिनका लागि गहकिला र ठोस सुझाव दिनुहुनेछ भन्ने अपेक्षा राखिएको छ ।

धन्यवाद ।
जय सहकारी ! जय जनसचेतन ‼

 

# अध्यक्षको मन्तव्य

२०५० साल आश्विन २२ गते स्थापना भएको जनसचेतन बचत तथा ऋण सहकारी संस्थाले २४ बर्ष पार गरी २५ औं वर्षमा प्रवेश गरिरहेको यो ऐतिहासिक क्षणमा आफ्नो रजत जयन्ती सम्पन्न गरिरहेको खबर सबैसामु राख्न पाउँदा अत्यन्त खुशी लागिरहेको छ । साविक काब्रे गाउँ विकास समितिमा रहेको हनुमन्तेश्वर मा.वि.का प्रधानाध्यापक रहनुभएका श्री यज्ञराज ढुङ्गेलको अगुवाइमा ३४ जना शिक्षक, कर्मचारी, समाजसेवी तथा किसानहरूले यो संस्था स्थापना गरेका हुन् जसप्रति हार्दिक कृतज्ञता प्रकट गर्दछु ।

सहकारीका पिता रोवर्ट ओवनका २८ जना अनुयायीहरूले बेलायतमा सन् १८४४ मा श्रमिकहरूको पहिलो सहकारी संस्थाको स्थापना गरेका थिए । गाउँ-गाउँबाट गरीब जनतालाई गरिबीबाट मुक्त गराउने उद्देश्यले सन् १८९४ मा जर्मनका Herman Shulze र F.W Raiffeisen ले बचत तथा ऋण सहकारी आनदोलनको शुरुवात गरेका थिए । त्यस बेलादेखि नै "**एकका लागि सबै र सबैका लागि एक**" (Each for all , all for each) भन्ने सिद्धान्त लागू भएको थियो । विश्वभरिका सहकारीहरूलाई एकत्रित गरी सहकारी आन्दोलन अगाडि बढाउने उद्देश्यले अन्तर्राष्ट्रिय महासंघ (ICA) स्थापना भै यसले सन् १९९५ मा सहकारी सञ्चालनका ७ वटा सिद्धान्त पारित गरेर लागू गर्‍यो भने बचत तथा ऋण सहकारीको छाता संगठनको रूपमा विश्व ऋण परिषद WOCCU को स्थापना भै सन् १९८४ मा ऋण संघ सञ्चालनका ९ वटा सिद्धान्तहरू प्रतिपादन गरी लागू गर्‍यो । हाल विश्व ऋण परिषदले ऋण संघ सञ्चालनका सिद्धान्तलगायत सदस्य संरक्षणको सिद्धान्त, सुशासनको सिद्धान्त र सुरक्षा तथा सक्षमताको सिद्धान्तसमेत प्रतिपादन गरी विश्वभर लागू गरेको छ ।

संवत २०१३ सालमा चितवनका बाढी पीडितहरूलाई सहयोग पुर्‍याउने उद्देश्यले खोलिएको बखान सहकारी संस्था नै नेपालको पहिलो सहकारी संस्था मानिन्छ । प्रजातन्त्रको पुनस्थापना भइ २०४८ मा नयाँ सहकारी ऐन बनेपछि मात्र समुदायमा आधारित सहकारीको स्थापना भएको हो । यो ऐन बनेपछि सहकारी क्षेत्रले ठूलो फड्को मारेको पाइन्छ । जुन बेला नेपाल सरकारले सहकारी नीतिमा साहसिक परिवर्तन गरेको देखिन्छ । त्यसपछि "गाउँ-गाउमा सहकारी घर-घरमा भकारी" भन्ने उद्घोष गर्दै नेपालमा आज झन्डै ३४ हजार सहकारी दर्ता भइसकेका छन् । थोपा थोपा मिलेर सागर बन्दछ भन्ने नारा बोकेर गरीबभन्दा गरीबको झुप्रोमा पुगेर सानो रकम जम्मा गरेर समृद्ध बन्ने कार्यक्रम सञ्चालन गर्दै सहकारी अभियानमा ६० लाखभन्दा बढी मानिसहरू संलग्न छन् । आर्थिक समृद्धि गरी सामाजिक जनजीवनमा परिवर्तन ल्याउने उदेश्यका साथ यति ठूलो जनसंख्याको नेतृत्व गर्ने एक मात्र अभियानका रूपमा सहकारी क्षेत्र रहेको छ । सहकारी सिद्धान्तले कुनै जात, धर्म, लिङ्ग, वर्ण नभनी लोकतन्त्रको अनुभूति पारदर्शिता, सदाचार, प्रभावकारीता, सहभागिता, समता, वैधता र विधिको शासनको सूत्रमा गाँसेर नेतृत्व गर्दछ ।

आर्थिक असमानताको अन्त्य गर्दै शोषणरहित समाजको निर्माण गर्न राष्ट्रिय अर्थतन्त्रलाई आत्मनिर्भर, स्वतन्त्र तथा उन्नतशील बनाउँदै समाजवाद उन्मुख स्वतन्त्र र समृद्ध अर्थतन्त्रको विकास गर्न राज्यको ३ खम्वे अर्थनीतिमध्ये सहकारीलाई एउटा आर्थिक खम्बाको रूपमा अङ्गीकार गरिएको छ । राज्यको यही नीतिलाई आत्मसात गर्दै आर्थिक समृद्धिमा सहकारी अभियानले अग्रता दिइरहेको छ र भर्खरै सहकारी ऐन सम्बन्धी विधेयक पारित भई नयाँ सहकारी ऐन २०७४ आइसकेको छ । जनताको आर्थिक संगसंगै सामाजिक सम्बन्ध पनि गाँसिने भएकाले सहकारीलाई मानवीय क्रियाकलापसँग सम्बन्ध राख्ने अचुक हतियारको रूपमा लिन सकिन्छ । समाज परिवर्तनका कडीका रूपमा लिइने सहकारी अभियानका सुन्दर पक्षहरू भनेको समुदायमा आधारित व्यवसाय, प्रजातन्त्रको प्रवर्धन, खुला बजारको निर्माण, मानवीय प्रतिष्ठा उठाउन सहयोगी, विकासका लागि एक उत्तम प्रणाली पनि हो ।

सहकारीलाई एक उन्नत व्यवसायको रूपमा प्रवर्धन गर्न आवश्यक देखिन्छ । सेवाग्राहीहरूलाई स्तरीय सेवा दिनको लागि दिगो साकोसको निर्माण गर्नुपर्दछ । दिगो साकोस निर्माण गर्न र साकोस अभियानलाई उत्कृष्टता प्रदान गर्ने कार्यमा सहयोग पुर्‍याउन जनसचेतनले वित्तीय सक्षमता, प्रतिस्पर्धी क्षमता, सेवाद्वारा सन्तुष्ट सदस्यहरू तथा कर्मचारी

जस्ता महत्वपूर्ण विषयवस्तुमा ध्यान दिने गरेको छ । साकोसको दिगो संस्थागत विकासका लागि सुशासनलाई अनिवार्य शर्तका रूपमा लिइन्छ । कुनै पनि सहकारी संस्थाले सहकारीको सिद्धान्त, मूल्य, मान्यता, आचार र विधिभन्दा बाहिर गएर सदस्य संख्या बढाउँदैमा, पूँजीको आकार ठूलो पार्दैमा, आकर्षक भौतिक संरचना तयार पार्दैमा दिगो विकास हुन सक्दैन । बरु सदस्य, पूँजी, भौतिक पूर्वाधार, नेतृत्वको क्षमतामा मानवीय संसाधन आदिलाई समानुपातिक रूपमा विकास गर्ने कार्यमा सफलता प्राप्त गर्न सक्नुपर्दछ ।

**"सवल र सुरक्षित संस्था, समृद्ध सदस्य"** भन्ने वृहत परिकल्पना अङ्गीकार गरेको जनसचेतन आफू मात्र होइन नेपालको सहकारी अभियानले यो उँचाइ प्राप्त गर्नुपर्ने कुरामा दृढ छ । २१ औं शताब्दीको यो प्रतिस्पर्धी समाजमा वित्तीय प्रतिस्पर्धा र पहुँच अनिवार्य शर्तका रूपमा लिइन्छ । हामी सहकारी अभियन्ताहरूले आफ्नो संस्थालाई सबल र सुरक्षित बनाउँदै सदस्यहरूको समृद्धिमा अग्रसरता देखाउनै पर्दछ । सहकारीको अभिलाषा सदस्यहरूको प्रचुर आर्थिक विकास गरी गुणस्तरीय जीवन निर्माण गर्नु हो । यो अभियानलाई सार्थकतामा बदल्न हरेक सहकारी संस्थाहरूले आ-आफ्नो वित्तीय व्यवस्थालाई सुदृढ बनाउन आश्यक छ । जनसचेतन साकोसले वित्तीय व्यवस्थापन गर्दा आर्थिक स्थिरता कायम राख्ने, संस्थागत क्षमता वृद्धि गर्ने, कोषहरूको उचित संयोजन गर्ने, योजनाहरू निर्माण गर्ने, स्रोतहरूको सही ढंगले परिचालन गर्ने जस्ता कुरामा जोड दिँदै आएको छ ।

दोलखाली जनसमुदायको पहिलो रोजाइको सहकारी वित्तीय गन्तव्यको रूपमा संस्थालाई विकास गर्दै सदस्यहरूको जन्मदेखि मृत्युपर्यन्तसम्म सहकारी सेवा सुनिश्चितता गरी अगाडि बढिरहेको जनसचेतन आगामी दशकमा निरपेक्ष गरिबीबाट यसका सदस्यहरूलाई मुक्ति दिलाउने रणनैतिक सोच बनाइ अगाडि बढ्नेछ । सदस्यहरूको जीवनमा प्रत्यक्ष रूपमा सरोकार राख्ने उत्पादन, रोजगारी, व्यवसायिकता बृद्धि, स्वाथ्य, शिक्षा तथा पर्यावरण संरक्षणमा चेतना अभिवृद्धि गर्दै दिगो विकासका लक्ष्य प्राप्त गर्नमा भूमिका खेल्ने योजना तयार पारी लागू गरिनेछ ।

रजत जयन्तीको यो महत्वपूर्ण घडीमा संस्थापकहरू, सञ्चालक, पूर्व सञ्चालक, कर्मचारी व्यवस्थापन, शेयर सदस्यहरू, नियामक निकाय, राष्ट्रिय तथा अन्तर्राष्ट्रियस्तरका छाता संघ संस्थालगायत सबैको संस्था विकासमा अतुलनीय भूमिका रहेकोले सबैमा हार्दिक धन्यवाद र कृतज्ञता ज्ञापन गर्न चाहन्छु । रजत जयन्ती सफल बनाउन विभिन्न भूमिकामा रहेर योगदान गर्नुहुने सबैप्रति हार्दिक नमन गर्न चाहन्छु । समुदायको आर्थिक, सामाजिक र साँस्कृतिक विकास गरी गरिबी निवारणमा सहयोग पुऱ्याउने हाम्रो लक्ष्यप्रति सबैको सहयोग र सद्भावको अपेक्षा गर्दछु ।

धन्यवाद । जय सहकारी । जय जनसचेतन ।

# विषय सूची

## खण्ड १ : संस्थागत आलेख



## खण्ड २ : सहकारी आलेख

**खण्ड ३: साहित्यिक रचनाहरु**



**खण्ड ४: तस्वीरहरु**



# जनसचेतनका २५ वर्ष

## २५ वर्ष, ५० पाइला

| क्र.सं. | पाइला | गन्ती | प्रगति | |
|---|---|---|---|---|
| | | | असार २०५१ | असार २०७४ |
| **क** | **संगठन विस्तार** | | | |
| १ | सदस्य संख्या | जना | १०७ | २१,२९३ |
| २ | कार्यक्षेत्र | गाविस | ४ | दोलखा जिल्लाभर |
| ३ | कर्मचारी | जना | ० | ३२ |
| ४ | सेवाकेन्द्र | वटा | १ | ९ |
| ५ | सञ्चालक समिति | जना | ९ | १५ |
| ६ | उपसमितिहरू | वटा | २ | ४ |
| ७ | संस्थागत आवद्धता | वटा | ० | ८ |
| ८ | अन्य सहकारी स्थापनामा विशेष योगदान | वटा | ० | २५ |
| ९ | हाल जिल्ला तथा केन्द्रीय सहकारी संघहरूमा नेतृत्व | संस्था सं. | ० | ३ |
| **ख** | **पूँजी निर्माण** | | | |
| १० | वचत निक्षेप | रु. | ६६,७०० | ६४,६९,३०,३७३.९८ |
| ११ | ऋण प्रवाह | रु. | २५,८०० | ७०,८४,१७,९७०.४१ |
| १२ | कुल ऋणी (वयस्क सदस्यहरूमध्ये) | प्रतिशत | ५.५ | ८० |
| १३ | शेयर पूँजी | रु. | ११,८०० | ७,२७,१०,१००.०० |
| १४ | विभिन्न कोषहरू | रु. | २७५९.३५ | १०,२०,२०,७४३.१५ |
| १५ | कुल सम्पत्ति | रु. | ८५,५८४.८५ | ९०,३०,७३,१३४.०९ |
| १६ | जग्गा तथा भवन | रु. | ० | २,०८,२७,७७४.०४ |
| **ग** | **सामाजिक सेवा** | | | |
| १७ | क्याम्पस तह छात्रवृत्ति | जना | ० | 14 |
| १८ | उच्चमा.वि. छात्रवृत्ति | जना | ० | 78 |
| १९ | मा. वि. छात्रवृत्ति | जना | ० | 210 |
| २० | आजीवन सहारा | जना | ० | 52 |
| २१ | वृद्ध-वृद्धा सम्मान | जना | ० | 32 |
| २२ | जनसचेतन सहारा (लठ्ठी वितरण) | जना | ० | 150 |
| २३ | विद्यालय सम्मान | जना | ० | 4 |
| २४ | पूर्वसञ्चालक सम्मान | जना | ० | 14 |
| २५ | पत्रकार सम्मान | जना | ० | 4 |
| २६ | पुस्तकालय स्थापना | विद्यालय | ० | 18 |
| **घ** | **उत्कृष्ट सेवा** | | | |
| २७ | उत्कृष्ट कर्मचारी | जना | ० | 6 |
| २८ | उत्कृष्ट तरकारी कृषक | जना | ० | 1 |
| २९ | उत्कृष्ट कृषि व्यवसायी | जना | ० | 2 |
| ३० | उत्कृष्ट तरकारी वीउ उत्पादक | जना | ० | 1 |
| ३१ | असल ऋणी | जना | ० | 6 |

| क.सं. | पाइला | गन्ती | प्रगति | |
|---|---|---|---|---|
| | | | असार २०५१ | असार २०७४ |
| ३२ | एस.एल.सी. उत्कृष्ट छात्र | जना | ० | 8 |
| ३३ | एस.एल.सी. उत्कृष्ट छात्रा | जना | ० | 9 |
| ३४ | उत्कृष्ट व्यवसायी | जना | ० | 1 |
| ३५ | उत्कृष्ट वचतकर्ता | जना | ० | 4 |
| ३६ | उत्कृष्ट शेयर खरीदकर्ता | जना | ० | 4 |
| ३७ | उत्कृष्ट ऐच्छिक वचतकर्ता | जना | ० | 1 |
| ३८ | नमूना उद्यमी | जना | ० | 1 |
| ३९ | तलव ग्रेड वृद्धि | जना | ० | 2 |
| ४० | उत्कृष्ट सेवाकेन्द्र | जना | ० | 1 |
| ४१ | संस्थाले प्राप्त गरेको ACCESS ब्राण्ड | ब्राण्ड | ० | सिल्भर (दोस्रो पटक) |
| ४२ | राष्ट्रियस्तरका पुरस्कार तथा सम्मान | वटा | ० | १९ |
| **ङ.** | **प्रविधि विस्तार** | | | |
| ४३ | आधुनिक बैंकिङ सफ्टवेयर | वटा | ० | १ |
| ४४ | मोबाइल बैंकिङ सेवा | वटा | ० | १ |
| ४५ | कियोस्क टर्मिनलमा आधारित इलेक्ट्रोनिक्स पेमेन्ट सिस्टम | वटा | ० | १ |
| ४६ | निःशुल्क ए.बि.बि.एस. सेवा | वटा | ० | १ |
| **च** | **अध्ययन भ्रमण** | | | |
| ४७ | भ्रमण गरेका देशहरू | वटा | ० | १० |
| ४८ | भ्रमणमा आएका देशहरू | वटा | ० | ७ |
| ४९ | भ्रमणमा आएका सहकारीहरू | सख्या | | लगभग १००० |
| **छ** | **प्रचार प्रसार** | | | |
| ५० | टिभी तथा पत्रपत्रिकाहरूमा प्रकाशित सामग्री | पटक | ० | टि.भी. कार्यक्रम ७, पत्रिकाहरूमा ४० बढी |



# २०७४ असार मसान्तसम्मको स्थिति विवरण

## १. सदस्य संख्या

| क्र.स. | विवरण | शेयर सदस्य | बाल वचतकर्ता | जम्मा | प्रतिशत |
|---|---|---|---|---|---|
| १ | महिला | ८४४३ | २३४० | १०७८३ | ५०.६४ |
| २ | पुरुष | ७५७२ | २८९१ | १०४६३ | ४९.१४ |
| ३ | संस्थागत | ४७ | – | ४७ | ०.२२ |
| | जम्मा | १६०६२ | ५२३१ | २१२९३ | १०० |

## २. वित्तीय अवस्था

| क्र.स. | विवरण | रकम (रु) |
|---|---|---|
| 1 | शेयर पूँजी | 7,27,10,100.00 |
| 2 | संस्थागत पूँजी कोष | 7,80,16,863.45 |
| 3 | अन्य कोष | 2,40,03,879.7 |
| 4 | वचत निक्षेप | 64,69,30,373.98 |
| 5 | तरलता | 11,89,29,099.77 |
| 6 | ऋण लगानी | 70,84,17,970.41 |
| 7 | स्थिर सम्पत्ति | 2,70,79,111.54 |
| 8 | सञ्चालन वचत (नाफा) रु. | 3,10,92,487.58 |

## ३. वचत र ऋणका प्रकार तथा व्याजदर

| क्र.स. | वचतका प्रकार | ब्याजदर(%) |
|---|---|---|
| 1= | नियमित मासिक वचत | 9 |
| 2= | ऐच्छिक साधारण वचत | 6.5-7.5 |
| 3= | समृद्धि वचत | 9.5 |
| 4= | विशेष समृद्धि वचत | 10 |
| 5= | ऐच्छिक विशेष वचत | 7 |
| 6= | बाल वचत | 9 |
| 7= | दैनिक वचत | 7 |
| 8= | सदस्य सुरक्षाकोष वचत | 9 |
| 9= | आवधिक वचत १०० दिने-३ वर्षे | 9.-12 |
| 10= | शेयर लाभांश वचत | 5.5 |
| 11= | कर्मचारी सञ्चय कोष वचत | 9 |
| 12= | खुत्रुके वचत | 7 |
| 13= | गहना वचत | 6 |
| 14= | ग्राहक सुरक्षण कोष वचत | 6 |
| 15= | चाडवाड वचत | 6 |

## ४. अन्य सेवाहरू

- सेवा केन्द्रहरू ९ वटा
- निःशुल्क ए.बि.बि.एस. सेवा (सबै सेवा केन्द्रबाट)
- मोबाइल बैंकिङ सेवा
- मनिट्रान्सफर सेवा
- इलेक्ट्रोनिक पेमेन्ट सेवा
- लघुवित्त सेवा
- सदस्य सुरक्षा कोष सेवा
- सदस्य आजीवन साहारा सेवा
- किरिया खर्च तथा दैवी आपतविपत राहत सेवा
- छात्रवृत्ति सेवा (मा.वि. तह र उच्चमा.वि. तह)
- जनसचेतन सहारा लौरो वितरण सेवा
- तालिम तथा शिक्षा सेवा

## ५. सांगठनिक संरचना

- साधारण सदस्य (१६०६२ जना शेयर सदस्य)
- सञ्चालक समिति (१५ जना)
- लेखा सुपरीवेक्षण समिति (३जना)
- सल्लाहकार समिति (७ जना)
- ऋण उप समिति (३ जना)
- शिक्षा उप समिति (३ जना)
- धितो मूल्याङ्कन उप समिति (३ जना)
- महिला विकास उप समिति (७ जना)
- कर्मचारी व्यवस्थापन (३२ जना)



# संगठन विकासमा जनसचेतन

**भीम प्रसाद दाहाल**
अध्यक्ष

## १. पृष्ठभूमि

२०५० सालमा स्थापित जनसचेतन साकोस आज २५ औं वसन्तको पूर्वार्द्धमा छ। ३४ जना व्यक्तिले स्थापना गरेको यो संस्था जटिलताहरू रहेको विगत पार गर्दै स्वर्णिम भविष्यको रेखा कोरिरहेको छ । संस्थागत विकास गरी सदस्यहरूको आर्थिक तथा सामाजिक समृद्धि गर्ने एक महान लक्ष्यका साथ अगाडि बढिरहेको छ। जनसचेतनको विगत (स्थापना काल) कहाली लाग्दो थियो । वर्तमान आशालाग्दो छ र भविष्य शान्दार बनाउने कल्पना गरिएको छ। यस लेखमा यिनै विचारहरूको सेरोफेरोमा रहेर संस्थाको संगठनका विविध पक्षहरू लेखाजोखा गर्ने प्रयत्न गरिएको छ ।

## २.कार्यक्षेत्र

स्थापना कालमा नाम्दु, काब्रे, मिर्गे र गैरीमुदी गरी ४ वटा गाविसलाई कार्यक्षेत्र बनाइ सदस्यहरूलाई सेवा प्रदान गर्दै आएको यस संस्था विस्तार हुँदै जाने क्रममा सिङ्गो दोलखा जिल्लाभरि फैलिएको छ। सदस्यहरूको हित तथा कार्यबोझलाई ध्यानमा राखी एउटा मुख्य केन्द्र र ७ वटा सेवा केन्द्रहरूको स्थापना गरिएको छ । कार्यक्षेत्र विस्तारको क्रममा आवश्यक्ताअनुसार सेवाकेन्द्रहरू थप गर्दै जाने नीति अवलम्बन गरिएको छ। हाल सदस्यहरूले सेवा केन्द्रबाट बचत संकलन, ऋण वितरण तथा संकलन र रेमिटान्सको सुविधा प्राप्त गरिरहेका छन् । कार्यक्षेत्र विस्तारको कारण संस्थालाई आफ्नो सदस्यता वृद्धि गर्न, पर्याप्त पूँजी संकलन गर्न र लगानीका वैकल्पिक सोचहरू निर्माण गर्ने कार्यमा सहजता आएको छ भने धेरै जनसंख्या, भौगोलिक विकटता, विभिन्न सोच र दृष्टिकोण भएका मानिसहरूको प्रवेशले सहकारीका मूल्य र मान्यताअनुसार संस्था सञ्चालनमा चुनौति र समस्याहरू पनि थपिँदै गएका छन्  जसको सम्बोधनका लागि संस्थाले सोहीअनुसारको नीति पनि विकास गर्दै लगेको छ।

## ३. सदस्यता

यस संस्थामा ३ प्रकारको सदस्यता छन् जसमा २०७४ असार मसान्तसम्ममा वयस्क सदस्यहरू १६०१५, बाल सदस्यहरू ५२३१ र संस्थागत सदस्यहरू ४७ गरी जम्मा २१२९३ सदस्यहरू रहेका छन् । तिनको थप विवरण निम्नअनुसार छः

**क) व्यक्तिगत सदस्यताः** रु. १०० वा १०० ले भाग जाने रकम बचत गर्ने योग्यता पुगेका व्यक्तिहरू यस संस्थाका व्यक्तिगत सदस्य बन्न सक्नेछन् । यस अन्तर्गत २०७४ आषाढ मसान्तसम्ममा महिला ८४४३  (५२%) र पुरुष ७५७२ (४८%) गरी जम्मा १६०१५ जना सदस्य रहेका छन् ।

**ख) बाल बचतकर्ताः** यस संस्थाका शेयर सदस्यहरूका बालबालिकाहरूलाई उनीहरूको संरक्षणमा रहने गरी बचत गर्ने व्यवस्था गरिएको छ । बाल वचत दुई किसमको रहेको छ । पहिलोमा शेयर सदस्यसरह रु. १००।- वा १०० ले भाग जाने रकम मासिक रूपमा बचत खातामा जम्मा गरिन्छ । बालबालिका १६ वर्ष उमेर पुगेपछि शेयर सदस्य बन्न सक्छन् । दोस्रोमा माध्यामिक विद्यालयमा अध्ययनरत बालबालिकाहरूलाई बचत गर्ने बानीको विकास गर्ने उद्देश्यले शेयर सदस्यका छोराछोरीहरू मासिक रु. ५० वचत गर्छन् । हाल संस्थामा बाल वचतकर्तातर्फ महिला २३४० र पुरुष २८९१  गरी जम्मा ५२३१ जना रहेका छन् ।

**ग) संस्थागत सदस्यताः** यस संस्थामा अर्को सदस्यता संस्थागत सदस्यता हो । संस्थाको कार्यक्षेत्रभित्र बैंक तथा वित्तीय संस्थाको पहुँच नभएका क्षेत्रमा वित्तीय सेवा प्रदान गर्नको लागि प्रारम्भिक सहकारी संस्थाहरू, विद्यालय, सामुदायिक बन उपभोक्ता समिति आदिलाई सदस्यता प्रदान गरी सेवा प्रवाह गरिएको छ। यस संस्थामा हाल ४७ वटा संस्थाहरूले संस्थागत सदस्यता प्राप्त गरेका छन् ।

## ४. बैठकहरू

सञ्चालक समिति तथा उपसमितिका बैठक विनियममा उल्लेख गरे अनुसार आयोजना गरिन्छ । नियमअनुसार सञ्चालक समितिको बैठक २ बैठकबीच ४५ दिनभन्दा



बढीको अन्तर हुनुहुँदैन । तर वर्तमान सञ्चालक समितिले प्रत्येक महिनाको १ पटक बैठक बस्ने नीति अवलम्वन गर्ने गरेको छ । यसै गरी लेखा सुपरीवेक्षण समितिको बैठक वर्षमा कम्तिमा ४ पटक, ऋण उप-समितिको बैठक महिनामा ४ पटक र अन्य उप-समितिहरूको बैठक वर्षमा कम्तिमा २ पटक बस्ने व्यवस्था गरिएको छ । यसबीचमा संस्थाको नियमित बैठक २३४ पटक बसी सयौं निर्णयहरू गरिसकेको छ । तीमध्ये पनि संस्थाको ऐतिहासिक विकासक्रमलाई झल्को दिने केही महत्वपूर्ण निर्णयहरू तालिका १ मा प्रस्तुत गरिएको छ ।

**तालिका १ः ऐतिहासिक महत्वका केही निर्णयहरू**

| क्र.सं. | मिति | प्रस्तावहरू | प्रगति |
|---|---|---|---|
| १ | २०५०/६/२२ | संस्था स्थापना | ७ सदस्यीय तदर्थ समिति गठन |
| २ | २०५०/१०/२३ | प्रारम्भिक साधारण सभा सम्पन्न | ९ सदस्यीय कार्यसमिति निर्वाचित |
| ३ | २०५०/१२/०५ | उपसमितिहरू गठन ऋण लगानी | ऋण उपसमिति र शिक्षा उपसमिति गठन । रु. ५०००।- सम्म ऋण प्रदान गर्ने निर्णय । |
| ४ | २०५२/०४/१० | भवन निर्माण | काब्रे-६ बगरमा संस्थाको भवन निर्माण गर्ने निर्णय |
| ५ | २०५२/०५/१० | वैतनिक कर्मचारी तथा पारिश्रमिक निर्धारण | कोषाध्यक्ष पुष्करकुमार दाहाल मासिक पारिश्रमिक रु. ७००।- र कर्मचारी रघुनाथ दाहाल मासिक तलब रु. ८००।- दिने |
| ६ | २०५५/०४/२९ | कार्यक्षेत्र निर्धारण | टाढा भएको कारण गैरीमुदी गाविसलाई कार्यक्षेत्रबाट हटाउने |
| ७ | २०५५/०५/२२ | सञ्चालक समिति संख्या थप | नेपाल राष्ट्र बैंकबाट बैकिङ्ग कारोबारकालागि १० जना भन्दा बढी सञ्चालक समितिको आवश्यकता पर्ने भएकोले बैकिङ्ग कारोवार गर्नको लागि ९ जनाबाट २ जना थप गरी ११ जनाको समिति बनाउने |
| ८ | २०५५/११/१४ | सदस्यता विस्तार | यस संस्थामा सदस्यता लिन चाहने व्यक्तिलाई २४ सै घण्टा सदस्यता खुला राख्ने |
| ९ | २०६०/०२/१३ | अध्ययन सहयोग | क्यानडास्थित Coaddy International Institute मा समुदायमा आधारित विकाससम्वन्धी डिप्लोमा कोर्स गर्नका लागि रु. ४०,०००।- सहित अध्ययनको लागि यज्ञराज ढुंगेललाई पठाउने |
| १० | २०६०/०३/०६ | तलव भत्ता समायोजन | संस्थाका कर्मचारीको पद मिलान गरी तलव स्केल श्री ५ को सरकारसरह गर्ने |
| ११ | २०६०/०९/५ | वचत फिर्ता लिने<br>सदस्यता विस्तार | १. दश वर्ष बचत अवधि पुगेका सदस्यले ७५ प्रतिशत बचत फिर्ता लिन पाउने ।<br>२. ४३ प्रतिशत महिलाको संख्या बृद्धि गर्न प्रवेश शुल्कमा ५० प्रतिशत छुट ।<br>३. दलितलाई प्रवेश शुल्कमा ९५ प्रतिशत छुट । |
| १२ | २०६१/०६/३० | सदस्य सुरक्षा | सदस्यहरूको सुरक्षाका लागि सदस्यहरूले सुरक्षा कोषमा प्रतिवर्ष रु. २००।- बचत गरी मृत्युपश्चात रु. ३००००।- प्राप्त गर्ने |
| १३ | २०६२/०९/२६ | छानविन समिति गठन | १२ औं चुनावी साधारण सभासम्वन्धी कमी, कमजोरी पत्ता लगाई सुधार गर्न कमल दहालको संयोजकत्वमा ३ सदस्यीय उच्चस्तरीय अधिकार प्राप्त छानविन समिति गठन |
| १४ | २०६३/०१/२० | वार्ता समिति गठन | संस्थाका गतिविधिका बारेमा माओवादीसँग बसी छलफल गरी निष्कर्षमा पुग्न कमल दाहालको संयोजकत्वमा ३ सदस्यीय वार्ता समिति गठन |
| १५ | २०६५/०५/०६ | अध्ययन केन्द्र स्थापना | कार्यक्षेत्र भित्रका माविहरूमा बाल सहकारी अध्ययन केन्द्र स्थापना गरी प्रतिमहिना रु. २५ बचत गर्ने |

| क्र.सं. | मिति | प्रस्तावहरू | प्रगति |
|---|---|---|---|
| १६ | २०६७/०६/१६ | सदस्यता सम्वन्धि | ACCU को सहयोगी सदस्य (सर्पोट मेम्वर) लिने |
| १७ | २०६८/०४/१९ | कार्यक्षेत्र विस्तार | कार्यक्षेत्र विस्तार गरी जिल्लाभर गर्ने |
| १८ | १६/०५/२०६९ (२०१२/९/१) | एक्सेस ब्राण्ड | १ सेप्टेम्बर २०१२ मा ब्रोञ्जस्तरको ACCESS Brand को प्रमाणीकरण । |
| १९ | २०६९/०६/०३ | आजीवन सहारा भत्ता | ७५ वर्ष उमेर पुगेका संस्थाका शेयर सदस्यलाई प्रति महिना रु. ५००।- जनसचेतन आजीवन सहारा प्रदान गर्ने । |
| २० | २०७१/०८ | सेवा केन्द्र विस्तार | सेवा केन्द्रहरू विस्तार भइ जिल्लाभर ७ वटा केन्द्रको स्थापना र सेवा विस्तार । |
| २१ | २०७२/१०/०१ | अनलाइन सेवा विस्तार | सबै सेवा केन्द्रमार्फत अनलाइन सेवा विस्तार गर्नको लागि संस्थाको आफ्नै ईन्ट्रानेट स्थापना । |
| २२ | २०७३/०५/२४ | एक्सेस ब्राण्डिङको थप उपलब्धि | एक्सेस ब्राण्डिङ कार्यक्रममा ब्रोञ्जस्तरको ब्राण्डिङबाट सिल्भरस्तरको ब्राण्डिङ्मा स्तरोन्नति । |
| २३ | २०७३/०६/२२ | प्रविधि विस्तार | प्रतिस्पर्धी सेवाका लागि Mobile Banking तथा KISKO Machine जडान गरी सेवा सञ्चालन । |
| २४ | २०७४ भाद्र | सिल्भर ब्रोञ्ज नवीकरण | संस्थाले प्राप्त गरेका सिल्भरस्तरको अन्तर्राष्ट्रिय एक्सेस ब्राण्डको नवीकरण कायम । |

## ५. आवद्धता

ग्रामीण बस्तीमा स्थापित यो संस्थाको प्रभाव गाउँमा मात्र सीमित छैन । यसले आफ्ना गतिविधिहरू राष्ट्रिय तथा अन्तर्राष्ट्रियस्तरसम्म फैलाउन र विस्तार गर्न सक्षम भएको छ । संस्थाले हालसम्म जिल्ला, केन्द्र र अन्तर्राष्ट्रिय गरी जम्मा ८ वटा संस्थाहरूमा आवद्धता जनाइसकेको छ। संस्था आवद्धताको विवरण बक्स नं. १ मा प्रस्तुत गरिएको छ ।

**बक्स नं. १**

**जनसचेतनको आवद्धता**

1. एसियाली ऋण महासंघ सपोर्टर मेम्वर
2. नेपाल बचत तथा ऋण केन्द्रिय सहकारी संघ लि. (नेफ्स्कुन)
3. राष्ट्रिय सहकारी बैंक लि.
4. जिल्ला सहकारी संघ लि. दोलखा
5. जिल्ला बचत तथा ऋण सहकारी संघ लि. दोलखा
6. सेन्टर फर माइक्रो फाइनान्स (सी.एम.एफ)
7. साना किसान विकास बैंक लि.
8. फस्ट माइक्रो फाइनान्स डेभलपमेन्ट बैंक लि.

## ६. नेतृत्व विकास

विषयबस्तुको ज्ञान, अनुभव, दूरदर्शिता, क्रियाशीलता, खोज, अनुसन्धान गर्नसक्ने गुण तथा क्षमता कुशल नेतृत्वका विशेषता हुन् । सहकारी संस्था समुदायमा आधारित भएकोले सदस्यहरूको आवश्यक्ता, चाहना, बुझ्नसक्ने, पक्षपातरहित, सहयोगी, सेवाको भावना भएको, स्पष्टवक्ता, मृदुभाषी, धैर्य एवम् सहनशील, नैतिक, चरित्रवान र दृढ इच्छाशक्ति जस्ता गुण भएको व्यक्तिले नेतृत्व गरेमा सहकारी संस्थालाई दिगो बनाउन सकिन्छ। सहकारी संस्था आर्थिक कारोवार गर्ने महत्वपूर्ण निकाय भएकोले नेतृत्व सुशानयुक्त र पारदर्शी हुनु आवश्यक छ ।

जनसचेतन साकोस सफल र प्रभावकारी हुनुमा यसको स्थापनाकालदेखि नै कुशल र अनुभवी नेतृत्वकर्ता हुनुले नै हो । २५ वर्षसम्म आइपुग्दा विभिन्न समयमा यसको नेतृत्व चयन गर्ने असल र वैज्ञानिक पद्धतिहरूको विकास र अवलम्बन भएको छ। संस्थाको वर्तमान नेतृत्वको चयन गर्ने सन्दर्भमा पनि अन्य संघ-संस्थाहरूको भन्दा छुट्टै तरिका अवलम्वन गरी समावेशीता, दक्षता र शुद्धताको आधारलाई लिइएको छ जसको संक्षिप्त विवरण तलको खण्डमा प्रस्तुत गरिएको छ ।

### ६.१ नेतृत्व चयन रणनीति

संस्थाको नेतृत्व निर्माण रणनीति निम्नअनुसार मार्गनिर्देशित छः

**क. विज्ञता र सक्षमता**

- **विषयगत अनुभवः** सहकारी, कृषि, शिक्षा,



कानून, लेखा, आयआर्जन आदि सम्वन्धी ज्ञान, सीप तथा दक्षता भएका व्यक्तिहरू ।

- **व्यवस्थापन तथा निर्देशन क्षमताः** समिति, कर्मचारी, सदस्य, समाज तथा विभिन्न सरोकारवालाहरूबीचको सम्बन्ध र अन्तरसहयोगलाई राम्ररी व्यवस्थापन गर्नसक्ने तथा मातहतका सहयोगीहरूलाई प्रभावकारी निर्देशन दिनसक्ने ।

**ख. समावेशीता**

- **उमेर समूहः** २५ वर्ष उमेर पुगेका र सदस्यता लिएको ५ वर्ष पुगेका सदस्यहरू ।
- **भौगोलिकः** कार्यक्षेत्रका सबै भेगबाट सदस्य संख्याको अनुपातको आधारमा पुरुष तथा महिला प्रतिनिधित्व ।
- **लैंगिकः** चालु कार्यकालसम्मका लागि महिला प्रतिनिधित्व कम्तीमा २७ प्रतिशत ।
- **विचार समूहः** जुनसुकै विचार समूहका व्यक्तिहरू पनि प्रतिनिधित्व गर्नसक्छन् ।

**ग. शुद्धता र वैधता**

अध्यक्ष पदको लागि सञ्चालक समितिमा १ कार्यकाल पूरा गरेको, नियमित बचत गरेको, भाखा ननाघेको, प्रचलित कानून तथा संस्थाको विनियम बमोजिम अयोग्य नठहरिएको, कुनै उपसमितिमा एक कार्यकाल कार्य गरेको, संस्थाबाट कुनै कारवाहीमा नपरेको व्यक्ति ।

### ६.२ नेतृत्वले हासिल गरेका सफलताहरू

- कुशल तथा दूरदर्शी नेतृत्वका कारण यो संस्थाले ACCESS SILVER प्राप्त गर्न सफल हुनु ।
- संस्थापक नेतृत्व २० वर्षसम्म संस्थामा कार्यरत रहँदा कुनै नकारात्मक संकेत नदेखिनु ।
- वर्तमान सञ्चालक समिति २ कार्यकाल बिताइरहेको सन्दर्भमा बाहिरबाट नकारात्मक आँखाले हेरेको नपाइनु ।
- २४ वर्षको कार्यकालमा यो संस्थाको सञ्चालक समितिको २३४ वटा बैठकहरू सम्पन्न भएका छन् । बैठकका क्रममा निर्णय गर्दा कुनै पनि बैठकहरू विवादास्पद, कोरम नपुगेको, निर्णयमा पुग्न नसकेको भएन ।
- गरिएका निर्णयको कार्यान्वयन पक्ष राम्रो भएकोले नतिजा उत्कृष्ट भएको ।

### ६.३ नेतृत्वले भोग्नुपरेका अवरोधहरू

- राजनैतिक प्रभुत्व ।
- पूर्वाग्रही सरकारी नीति, अस्थिर राजनैतिक वातावरण आदिको कारण नेतृत्व चयन गर्ने प्रावधानमा ढुलमुले नीतिको कारण सहकारीको नेतृत्व विकासमा अवरोध ।
- द्वन्द्वकालमा तत्कालिन सरकार र विद्रोही पक्षका कारण देखा परेका अस्वस्थ वातावरणले नेतृत्वमा रहेका व्यक्तिहरूमाथि आक्रमण, हस्तक्षेप, कारवाही गर्ने जस्ता व्यवहारले संस्था सञ्चालनमा अवरोध ।
- सहकारीहरूबीचको अस्वस्थ प्रतिस्पर्धा र दोहोरो सदस्यता आदिले नेतृत्वमा प्रभाव ।

### ६.४ नेतृत्व निर्माणको आगामी तयारी

नेतृत्व औपचारिकता पूरा गर्ने खालको मात्र नभइ संस्थाप्रति बफादार, उत्तरदायी र जिम्मेवार हुनैपर्दछ । संस्थाको छविलाई उच्च राख्न सक्ने, अनुभवी र विचारशील व्यक्तिको पनि त्यतिकै आवश्यक्ता पर्दछ ।

जनसचेतनको भावी नेतृत्व तयार गर्नका लागि निम्न कदमहरू चाल्नुपर्ने हुन्छ :

- पूर्व नेतृत्व तालिम तथा अभ्यास सञ्चालन गर्ने ।
- नीति निर्माण, निर्देशन, अनुगमन, सल्लाह सुझाव दिनसक्ने जिम्मेवारी बोध भएका व्यक्तिहरूको प्रवेश हुने नीति विकास गर्ने ।
- क्षेत्र, लिङ्ग जाति, जनजाति सबैको प्रतिनिधित्व गर्नसक्ने सक्षम व्यक्तिहरू छनौट हुनसक्ने नीतिहरू विकास गर्ने ।
- सैद्धान्तिक एवम् प्राविधिक ज्ञान भएका व्यक्तिहरूको छनौट हुने नीति निर्माण गर्ने ।

## ७. कर्मचारी विस्तार

यसलाई व्यवस्थापन इकाइको रूपमा लिइन्छ । कर्मचारी कार्य सम्पादन गर्ने शक्ति हो । सञ्चालक समितिले निर्माण गरेका योजना एवम् नीतिलाई प्रभावकारी ढंगले सञ्चालन गरी उत्कृष्ट प्रतिफल निकाल्ने एक जिम्मेवार प्राप्त निकायका रूपमा कर्मचारीहरूलाई लिइन्छ । संस्थाका नीति जतिसुकै सुन्दर किन नहुन कार्यान्वयन पक्ष कमजोर भयो भने त्यसको प्रतिफल कुरूप बन्न पुग्छ । सदस्यहरूसँग सुख दुःखका सम्बन्धमा सरोकार राखी सेवा प्रदायक अंगका रूपमा कर्मचारीहरूलाई लिइन्छ । सहकारी संस्थाको सुन्दर पक्ष नै सुशासन हो । यसको प्रत्याभूति दिलाउने निकाय व्यवस्थापन हो । एउटा संस्थाले देखेका स्वर्णिम सपनाहरू साकार पार्ने, चुस्त, दुरुस्त रूपले कार्यसम्पादन गर्ने कार्य सहज छैन । त्यसैले योग्य, दक्ष, सक्षम, तालिमप्राप्त, खोज अनुसन्धान गर्ने आधुनिक प्रविधिमा पोख्त, दुरगामी सोच बोकेका विज्ञ कर्मचारीहरू संस्थागत विकासका पुरक बन्न सक्छन् । यही सत्यतालाई ख्यालमा राखी संस्थाले विविध योग्यता र क्षमता भएका कर्मचारीहरू व्यवस्थापन गर्ने

कर्मचारी नीतिसमेत निर्माण गरी कार्यान्वयनमा ल्याएको छ ।

संस्था स्थापना भएको २ वर्षसम्म यो संस्थाको सम्पूर्ण कार्य गर्ने जिम्मेवारी सञ्चालकहरूमा नै थियो । संस्थाको हिसाव किताव राख्ने, सदस्यहरूसँग लेनदेन गर्ने काम संस्थाका अध्यक्ष तथा कोषाध्यक्षले गर्दै आएकोमा २०५२ साल भाद्रबाट मासिक रु. ८००।- तलव दिने गरी रघुनाथ दाहाललाई नियुक्ति दिइ पहिलो कर्मचारीको रूपमा जिम्मेवारी दिइएको थियो । सदस्यहरूको वृद्धि, कार्यक्षेत्रको विस्तारलगायत संस्थाको कार्यमा वृद्धि भएका कारण विभिन्न समयमा आवश्यक्ता पर्ने कर्मचारीहरूको व्यवस्था गर्दै वर्तमानमा आइपुग्दा यस संस्थामा श्रेणीबिहीनदेखि कार्यकारी प्रमुखसम्म आठौं तहसम्मका जम्मा नियमित कर्मचारीहरू ३२ जना कार्यरत रहेका छन् जसले ९ वटा सेवा केन्द्रहरूमा सेवा प्रदान गरिरहेका छन् । यस संख्यामा नियमित कर्मचारी संख्या पुरुष १५ र महिला १७ जना रहेका छन् ।

आठौं तहसम्मका कर्मचारीहरूलाई स्थायी, अस्थायी, करार र प्रशिक्षार्थी कर्मचारी गरी चार किसिममा वर्गीकरण गरिएको छ । यी विभिन्न तहका कर्मचारीहरूको क्षमता अभिबृद्धि गर्नका लागि संस्थाले आधारभूत सीपहरूको विकासका साथै अवलोकत भ्रमण, राष्ट्रिय तथा अन्तर्राष्ट्रियस्तरका गोष्ठी तथा सभाहरूमा भाग लिने अवसरहरूको सिर्जना गरी दक्ष र सक्षम बनाउने गरेको छ। संस्थाभित्रै आन्तरिक प्रतिस्पर्धा, विभाग हेरफेर, एकअर्का बीचमा सीप एवम् क्षमता आदानप्रदान गर्ने अवसर र एउटा विभागमा काम गर्ने कर्मचारीले अर्को विभागमा काम गरिरहेको कर्मचारीबाट सहयोग समन्वय गरी सिकाई गर्ने कार्यहरू पनि संस्थामा विकास भएको छ । कर्मचार ीसम्बन्धी विस्तृत विवरण कर्मचारी नियमावलीमा समावेश गरिएको छ ।

१० वर्षमा जनसचेतनको विकास र वृद्धिको आकारलाई कुशलतापूर्वक व्यवस्थापन गर्न र सदस्यहरूको सन्तुष्टिको स्तरलाई थप अभिवृद्धि गर्न जनसचेतनको आगामी १० वर्षे व्यवस्थापन योजना निम्नअनुसार हुनेछ :

- **कुल कर्मचारी संख्या :** कम्तीमा १५० जना ।
- **संस्था सञ्चालन विधिः** पूर्ण रूपमा व्यवसायिक कर्मचारी व्यवस्थापनद्वारा संस्था सञ्चालन हुने ।
- **सेवाको स्तरः ह**रेक वस्तु तथा सेवाको स्तरमा वारेन्टी हुने छ । तोकिएको गुणस्तर र वारेन्टी अनुसार सेवा प्रवाह नभएमा सदस्यहरूलाई सो को क्षतिपूर्तिको व्यवस्था हुने व्यवस्थापन प्रणालीको विकास हुनेछ ।
- **सेवाकेन्द्रहरूः** पूर्ण रूपमा स्वचालित र पूर्वाधार सम्पन्न क्षेत्रीय कार्यालयसमेत स्थापना गरी सो को सेवा केन्द्रहरू व्यवस्थापन गरिनेछ ।

## ८. सहकारी आन्दोलनमा योगदान

जनसचेतन आफैं प्राथमिक संस्था भए तापनि स्थापनाको इतिहास र यसको नेतृत्वको कारण यसले आफ्नो कार्यक्षेत्र र अन्य जिल्लामा समेत सहकारीहरूको स्थापनामा प्रत्यक्ष अप्रत्यक्ष भूमिका निर्वाह गरेको छ । यसरी संस्थाको प्रेरणा र सहयोगमा स्थापना भएका संस्थाहरू २५ वटाभन्दा बढी देखिन्छन् । संस्था स्थापनाबाहेक संस्था सञ्चालनका नीति नियमहरू निर्माण, व्यवसायिक योजना निर्माणलगायतका योजनाहरूको अनुकरणबाट पनि धेरै संस्थाहरू लाभान्वित भएका छन् ।

## ९. संगठन विकासका विद्यमान अवसर तथा चुनौतिहरू

**क. अवसरहरू**

- संस्थाको कार्यक्षेत्र जिल्लाभर भए अनुसार सेवा विस्तार हुने सम्भावना ।
- एकीकरण गरी सदस्य समुदायलाई भरपर्दो र दिगो सेवा प्रवाह गर्दै जाने सम्भावना ।
- ३ खम्बे अर्थनीतिमा सहकारीलाई प्रमुख १ खम्बाको रूपमा उल्लेख गरिएकोले जिम्मेवारीका अवसरहरू अझ थपिने सम्भावना ।
- समुदायमा सहकारीप्रति विश्वसनीयता बढ्दै गएकोले सेवा प्रवाह अझ विस्तार हुने सम्भावना ।
- विभिन्न बैंक तथा वित्तीय संस्थाहरूसँग बाह्य ऋणमा पहुँच बढ्दै गएको ।
- सञ्चारमा पहुँच बढ्दै गएको ।
- कार्यक्षेत्रमा शिक्षित एवम् सचेत समुदाय बढ्दै गएको ।
- जिल्ला संघ, केन्द्रीय संघ, राष्ट्रिय संघ र अन्तर ाष्ट्रिय संघहरूसंग सञ्जाल विस्तार हुँदै गएको ।
- कार्यक्षेत्रभित्र धेरै व्यक्तिलाई सदस्यता बनाउन सक्ने सम्भावना रहेको ।
- सदस्य संख्याको आकारमा पूँजी वृद्धिको सम्भावना रहेको ।

**ख. चुनौतिहरू**

- कार्यक्षेत्रमा अत्याधिक बैंक तथा वित्तीय संस्थाहरूको उपस्थिति हुनु ।
- दोहोरो सदस्यता कायम रहनु ।
- अस्वस्थ प्रतिस्पर्धा हुनु ।
- राजनीतिक अवस्था अझै स्थिर भइनसक्नु ।
- वित्तीय बजार असन्तुलित हुनु ।



- समुदायका मानिसहरूको आम्दानीका स्रोत प्रसस्त नहुनु ।
- समुदायमा उद्यमशीलताको कमी ।
- प्राविधिक जनशक्तिको कमी ।
- भौगोलिक विकटता ।
- इन्टरनेट तथा टेलिफोन नियमित रूपमा सञ्चालन नहुनु ।

### १०. संगठन विस्तारका सिकाइहरू

- सदस्यतालाई सधैं खुला राखी चाहिएको बेलामा धेरैभन्दा धेरै व्यक्तिहरू आवद्ध हुनसक्ने नीतिको व्यवस्था गर्नुपर्ने ।
- पूँजीको आकार बृद्धि गरी सदस्यहरूको सबै वित्तीय आवश्यक्ताहरू परिपूर्ति गर्नुपर्ने ।
- सदस्य र संस्थाबीच मैत्रीपूर्ण वातावरण सिर्जना गरी दिगो सम्बन्ध स्थापना गर्ने ।
- प्रचार प्रसारको आधुनिक र उचित माध्यमको प्रयोगद्वारा सदस्यहरूलाई सही समयमा सही सूचना प्रवाह गर्नुपर्ने ।
- संस्थालाई नीति, विधि र प्रविधिद्वारा निर्देशित गरी सञ्चालनमा ल्याउनुपर्ने ।
- सदस्यहरूको समृद्धि निर्माणका लागि आवश्यक वस्तु तथा सेवाको विकास र सहजीकरण गर्नुपर्ने ।
- सदस्यमैत्री सेवा केन्द्रहरू स्थापना गरी स्थानीयस्तरका सेवाहरू प्रदान गर्ने ।
- संस्थालाई सदस्यहरूको सुरक्षित वित्तीय गन्तव्यको रूपमा स्थापित गर्नुपर्ने ।
- जानकार र संलग्न हुनसक्ने सञ्चालक र क्षमतावान तथा सन्तुष्ट कर्मचारी समूह निर्माण गर्नुपर्ने ।

### ११. आगामी दशक

संगठन निर्माणको भविष्य कोर्नु त्यति सहज छैन । तर हामीले विगत र वर्तमानको समीक्षा गर्दै भविष्य कस्तो हुन्छ भनेर कल्पना गर्न सकेनौं भने निर्देशित लक्ष्य हासिल गर्न सक्दैनौं । सपना देख्न सकेनौं भने गन्तव्य थाहा नहुन सक्छ । त्यसैले सपना गन्तव्यको केन्द्रविन्दु हो ।

संस्था सञ्चालनका क्रममा यसका परिकल्पना, ध्येय, लक्ष्य तथा उद्देश्यहरू स्पष्ट रूपमा किटान गरिएका छन् । ३ वर्षीय रणनीतिक योजनामा संस्थाले आफ्ना आगामी कार्यक्रम तथा योजनाहरू निर्माण गरेको छ । यी सबैका आधारमा विश्लेषण गर्दा आगामी दशक कसरी अघि बढ्न सक्छ भन्ने सन्दर्भमा केही गन्तव्यहरू यहाँ उल्लेख गर्न चाहन्छु ।

- सदस्य संख्या - ७६ हजार ।
- कुल पूँजी- १३ अरब ४१ करोड ।
- Access Branding को Platinum तहको ब्राण्ड प्राप्त हुनेछ ।
- पूर्ण रूपमा व्यवसायिक कर्मचारी व्यवस्थापन समूह निर्माण हुनेछ ।
- क्षेत्रीयस्तरका कार्यालय र आवश्यक पर्ने सुविधा सम्पन्न सेवा केन्द्रहरूको स्थापना र विस्तार हुनेछ ।
- दोलखालीहरूको पहिलो समुदायिक वित्तीय गन्तव्य हुनेछ ।
- धेरै सहकारीहरू समाहित भएको सदस्यहरूलाई पर्याप्त सुविधा दिनसक्ने सक्षम जनसचेतन हुनेछ ।
- अत्याधुनिक प्रविधि प्रयोग गर्ने सदस्यहरू भएको जनसचेतन हुनेछ ।
- निरपेक्ष गरिबीमा रहेका सदस्यहरूको संख्या कम्तीमा आधाले घट्नेछ ।

### १२. निष्कर्ष

सफलता, असफलता, विभिन्न कठिन र चुनौतिपूर्ण बाङ्गो-टिङ्गो बाटो हिंड्दै आज संस्थाले २५ बसन्त पार गरेको छ । कहालीलाग्दो आर्थिक, सामाजिक परिवेश संस्था स्थापनाको युग थियो । यसको मध्यकाल चुनौतिपूर्ण थियो । वर्तमान अवस्था विगतका कमी-कमजोरीबाट सिक्दै, सुधार गर्दै क्रियाशील बन्ने समय हो । आगामी दिन यस संस्थाका हजारौं सदस्यहरूको स्वर्णिम जीवन निर्माण गर्ने युग हुनेछ ।

आर्थिक समृद्धि निर्माण गर्न सदस्यहरूलाई व्यवसायी बनाइ उत्कृष्ट सेवा प्रदान गर्नु यसको लक्ष्य हो । पश्चिमा देशहरूझैं प्रगति चुम्न र सफलताका सपना पूरा गर्न अर्को २५ वर्षमा विदेशी भूमि चाहार्नु नपर्ने अवस्था आउने कुरामा विश्वस्त हुन सकिन्छ । अमेरिका, युरोप र जापानका युवाहरूले मनोरञ्जन तथा रोजगारीको लागि चुन्ने महत्वपूर्ण गन्तव्यस्थल नेपाल बनाउनका लागि जनसचेतनको भूमिका महत्वपूर्ण हुने नै छ । जल, जमिन र जडिबुटीको असंख्य पैदावारमा तातो रगत बोकेका, बल बुद्धि र विवेक भएका क्रियाशील तन्नेरीहरूलाई आफ्नै भूमिमा पसिना पोख्ने अवसर सिर्जना हुनेछ । जसका लागि आजको ३० लाख होइन करोडौं रूपैया लगानी गरी उद्योग व्यवसाय सञ्चालन गर्ने वातावरण बनाईनेछ । यस्ता कार्य गर्न भूमिका निर्वाह गर्ने एक सक्षम, सफल र दूरदर्शी संस्था निर्माणमा सवैको हातमा हात, काँधमा काँध मिल्नै पर्दछ । यो नै जनसचेतन संगठनको अन्तिम सफलता हुनेछ ।

# जनसचेतनका पच्चीस वर्षः इतिहास, उपलब्धि र चुनौतिहरू



**यज्ञराज ढुङ्गेल**
संस्थापक अध्यक्ष

## १. पृष्ठभूमि

त्यतिबेलाको दोलखा जिल्लालाई निहालेर हेर्ने हो भने गरिबी, अशिक्षा र अभावको चपेटामा कष्टकर जीवन बिताइरहेका, रोग, भोक, अशिक्षा र अभावको भुमरीमा पिल्सिएर सामन्ती शोषण र उत्पीडनको शिकार बनेका असहाय, गरीब र निमुखा जनताहरूको अनुहार झल्झली देख्न सकिन्छ । केही गर्न खोज्नेलाई सीप थिएन, सीप भए पनि श्रोत थिएन र सीप र श्रोत हुनेहरूको लागि पनि वातावरण थिएन । जनसंख्याको बढ्दो चाप, खाद्यान्न उत्पादनमा ऱ्हास, वन तथा वातावरण विनाश, चरम बेरोजगारी आदि कारणबाट यहाँका युवाहरू छट्पटाइरहेको अवस्था थियो त्यसबेला ।

आफूमा केही सीप भए पनि कुनै काम गरौं भनेर आँट गर्न हातमा पैसा हुँदैनथ्यो । संस्थागत ऋण पाउने कुनै सम्भावना थिएन । चाहे खाद्यान्नको खाँचो परोस्, चाहे बिमारी नै परोस वा परिवारमा कसैको मृत्यु होस्, साहुको शरणमा जानेबाहेक कुनै पनि उपाय नै हुँदैनथ्यो । साहुकहाँ जाँदा पनि सजिलै ऋण पाउन सकिँदैनथ्यो । आफूसँग राम्रो खेतबारी वा राम्रो भैंसी देखे मात्र साहुले ऋण दिन्थ्यो र ऋण पाए पनि व्याज असाध्य महंगो हुन्थ्यो । सामान्य चलन चल्तीको भाउ भनेको मासिक सयकडा ५ थियो । व्याज चर्को मात्र होइन ऋण लिएपछि साहुले घरवारी खाने हो कि भन्ने त्रासले सधैं चिन्तित हुनुपर्दथ्यो । यो अवस्था मैले २०३० सालदेखि नाम्दु र काब्रे गाउँमा स्कुलमा शिक्षण गर्दा प्रत्यक्ष रूपमा भोगेको र अनुभव गरेको वास्तविकता यस्तै थियो ।

मानिसहरूको यो अवस्था देखेर मेरो मनमा कुनै न कुनै उपाय गर्नुपर्छ भन्ने लाग्दथ्यो तर पञ्चायती शासकहरूले जनतालाई संगठित भएर आफ्ना समस्याहरूको बारेमा छलफल गर्ने र समाधान गर्ने कुनै किसिमको क्रियाकलाप गर्न बन्देज लगाएको हुनाले जनताको सहभागितामा कुनै किसिमको आर्थिक र सामाजिक कार्य गर्न सम्भव थिएन । किनकी त्यस बेलाका शासकहरूले यस्ता क्रियाकलापहरूलाई दण्डनीय कार्यको रूपमा लिन्थे र व्यवस्था विरोधी, राजा विरोधी र अराष्ट्रिय तत्व भन्दै कारवाही गर्दथे । तैपनि हामीले आफ्नो टोल छिमेकमा मर्दापर्दा केही नगद तथा जिन्सी सहयोग गर्ने व्यवस्था भने मिलाएका थियौं ।

२०४६ सालको जनआन्दोलनपछि पञ्चायती व्यवस्थाले कुण्ठित पारेका जनताका हक-अधिकारहरू निर्वाध रूपमा प्रयोग गर्न पाउने भए जसको लागि विभिन्न ऐन, नियमहरू निर्माण भए । यिनीहरूमध्ये सहकारी ऐन २०४८ को पनि प्रादुर्भाव भयो जसले स्थानीय तहमा संस्था खोली वचत संकलन गर्न पाउने र सो वचत सदस्यहरूलाई नै ऋण लगानी गर्ने अवसर प्रदान गऱ्यो । यसै सिलसिलामा देशका विभिन्न भागमा सहकारी संस्थाहरू खुल्ने क्रम सुरु भयो ।

## २. जनसचेतनको शुरुवात

दोलखा जिल्लाको जिरीमा दुईवटा संस्थाहरू २०४८ सालतिर नै खुलिसकेका रहेछन् । नेपाल वचत तथा ऋण केन्द्रीय सहकारी संघको स्थापना भएर देशभर सहकारी प्रवर्धन गर्ने उद्देश्यले ठाँउ ठाँउमा सहकारी शिक्षा शिविरको सञ्चालन गर्ने क्रममा २०५० साल भाद्र ५ गते चरिकोटमा आयोजना गरेको रहेछ । सो कार्यक्रममा मलाई पनि स्कुलको प्रधानाध्यापकको हैसियतमा आमन्त्रण गरिएको थियो । कार्यक्रमको उद्घाटन समारोहमा विभिन्न ठाउँहरूमा खुलेका सहकारी संस्थाहरूको बारेमा सुन्दा मलाई पनि एउटा सहकारी संस्था खोल्ने प्रेरणा मिल्यो । उद्घाटन समारोहपश्चात मलाई अन्यत्र काम परेको हुनाले शिविरमा बस्न पाइनँ तर आफ्नो विद्यालयमा पुगेर शिक्षक साथीहरूसंग सहकारी खोल्ने विषयमा विचार विमर्श गरें । हाम्रो स्कुल हनुमन्तेश्वर माविका १५ जना शिक्षकहरूवाट संस्था खोल्ने बारेमा सहमति भयो । यसै गरी जनज्योती प्राथमिक विद्यालयका प्र.अ. पुस्कर दाहाल हुनुहुन्थ्यो उहाँले पनि आफ्ना ६ जना शिक्षकहरूलाई संगठित गर्नुभयो । हामी २१ जनाको समूहलाई पशुपति चौलागाइँ, चन्द्र बहादुर दाहाल, विष्णु प्रसाद दाहाल, धर्मानन्द दाहाल, ज्ञानेन्द्र बहादुर खड्का आदि शिक्षक, समाजसेवी तथा किसान समेतको सहभागिता भयो । संस्थालाई विधिवत सञ्चालन



गर्न २०५० साल आश्विन २२ गते काब्रे बगरमा गोपिकृष्ण घिमिरेको संयोजकत्वमा प्रथम भेला गरियो जसमा २७ जनाको उपस्थिति थियो । यसै दिनलाई जनसचेतनको स्थापना दिवस मानिन्छ । यस संस्थाको नामाकरण गर्दा पनि केवल आर्थिक उद्देश्य मात्र नराखी समुदायमा हरेक किसिमको चेतना फैलाउने उद्देश्यले जनसचेतन राखियो । शुरुमा यस संस्थाको कार्यक्षेत्र काब्रे, नाम्दु, मिर्गे र गैरिमुदी चारवटा गाविस राखियो र यज्ञराज ढुंगेलको अध्यक्षतामा गोपिकृष्ण घिमिरे उपाध्यक्ष, पुण्यप्रसाद घिमिरे सचिव, पुस्कर कुमार दाहाल कोषाध्यक्ष र सदस्यहरूमा वोमहरि दाहाल, भीम प्रसाद दाहाल र हरिप्रसाद दाहाल रहेको ७ सदस्यीय तदर्थ समिति निर्माण भयो । दर्ता गर्ने समयमा यहाँ उपस्थित हुनेमा सवैजनाले साथ दिन सकेनन् किनभने उनीहरूलाई यो कार्यप्रति विश्वास भएन र केवल २२ जनामात्र दर्ता गर्न कम्मर कसे । तर जे भए पनि हामीलाई संस्था दर्ता गर्न २५ जना चाहिनेमा ३ जना नपुगेको हुनाले शुरु भेलामा उपस्थित नभएका साथीहरूलाई समेत आग्रह गरेर ३४ जना पुऱ्याएर २०५० साल मार्ग १ गते रु.३४०० शेयर पूँजी संकलन गरी जिल्ला सहकारी कार्यालय धुलिखेल, काभ्रेपलाञ्चोकमा गएर दर्ता गराइयो । दर्ता गर्ने संस्थापक सदस्यहरू निम्न अनुसार छन् ।

## ३. बाल्यकालमा जनसचेतन

जनसचेतनको स्थापना भएपछि यसलाई अगाडि बढाउन धेरै समस्याहरू देखापरे । पञ्चायतको बेलाको साझा संस्थामा भएको भ्रष्टाचार र अनियमितता, सहकारीप्रतिको अनविज्ञता तथा वचत गर्ने रकमको अभावको कारणले गर्दा मानिसहरू सहकारीमा प्रवेश गर्न डराएको महसुश भयो । हामी सञ्चालकहरू पनि सहकारीको बारेमा धेरै ज्ञान नभएको हुनाले भविष्यमा यस्तै हुन्छ भनेर ठोकुवा गर्न सक्ने क्षमता थिएन । तर जे होस्, सहकारी राम्रो हुन्छ भन्ने कुरालाई भने जोडतोडका साथ अगाडि बढायौं । त्यसबेला मानिसहरूलाई कुनै संस्थाको उदाहरण दिन वा प्रत्यक्ष रूपमा देखाउन पनि अहिलेका जस्ता राम्रा संस्थाहरू थिएनन् र कुनै व्यक्तिहरूलाई श्रोत व्यक्तिको रूपमा प्रयोग गरेर कुरा बुझाउन पनि त्यस्ता व्यक्तिहरू पाइँदैनथे । बरु पञ्चायतकालीन साझा संस्थाको भूतले मानिसहरूलाई तर्साइरहेको थियो । केही वर्षसम्म हामीले जस्तो जान्यौं त्यस्तै चलायौं । २०५२ सालसम्म संस्थाको कार्यालय कोषाध्यक्ष पुस्कर कुमार दाहालको घरको एउटा कोठामा सञ्चालन गरियो । २०५२ सालमा सबै सदस्यहरूबाट रु.७५ सहयोग लिएर काब्रे गाविस वडा नं ६ बगरको सार्वजनिक जग्गामा एक तले भवन निर्माण गरेर

**संस्थापक सदस्यहरू**

| स.नं. | नाम थर | ठेगाना | स.नं. | नाम थर | ठेगाना |
|---|---|---|---|---|---|
| १ | यज्ञराज ढुंगेल | काब्रे - ६ | २ | विष्णु प्रसाद चौलागाइँ | काब्रे - ६ |
| ३ | बाबुराम गिरी | नाम्दु - ४ | ४ | पुण्य प्रसाद घिमिरे | नाम्दु - ४ |
| ५ | गोपिकृष्ण शर्मा | काब्रे - ३ | ६ | पुण्य प्रसाद घिमिरे | काब्रे - २ |
| ७ | सुदर्शन ढुंगेल | काब्रे - ६ | ८ | पुस्कर कुमार दाहाल | काब्रे - ६ |
| ९ | बिर्ख बहादुर खडका | मिर्गे - ८ | १० | कुमार चौलागाइँ | काब्रे - ४ |
| ११ | चित्र प्रसाद भट्टराई | काब्रे - ९ | १२ | भीम प्रसाद दाहाल | काब्रे - ६ |
| १३ | भीम प्रसाद दाहाल | काब्रे - ६ | १४ | रत्न प्रसाद घिमिरे | काब्रे - ३ |
| १५ | छत्रप्रसाद दाहाल | काब्रे - ६ | १६ | राजेन्द्र प्रसाद ढुङ्गेल | काब्रे - ६ |
| १७ | दिपक कुमार वस्नेत | काब्रे - ३ | १८ | परितोष कुमार कर्ण | काब्रे - ४ |
| १९ | पुण्यप्रसाद न्यौपाने | काब्रे - ६ | २० | रामप्रसाद दाहाल | काब्रे - ४ |
| २१ | राधाकृष्ण दाहाल | काब्रे - ६ | २२ | वोमहरि दाहाल | मिर्गे - ५ |
| २३ | हरिप्रसाद दाहाल | काब्रे - ७ | २४ | वालकुमार दाहाल | काब्रे - ७ |
| २५ | धर्मानन्द दाहाल | काब्रे - ७ | २६ | विष्णुप्रसाद दाहाल | काब्रे - ७ |
| २७ | ज्ञानेन्द्र बहादुर खड्का | मिर्गे - ९ | २८ | ललित वहादुर कार्की | काब्रे - ४ |
| २९ | पशुपति चौलागाइँ | काब्रे - ४ | ३० | शिव प्रसाद ढुङ्गेल | नाम्दु - ६ |
| ३१ | मिन प्रसाद शिवाकोटी | काब्रे - ३ | ३२ | भवानी प्रसाद घिमिरे | नाम्दु - ४ |
| ३३ | घनश्याम घिमिरे | नाम्द्रे - ४ | ३४ | चन्द्र बहादुर दाहाल | काब्रे - ७ |

कार्यालय सारियो । भवन निर्माण गरेर कार्यालय सञ्चालन गरेपछि मानिसहरूमा संस्थाप्रतिको विश्वास जाग्न थाल्यो र सदस्यतामा उल्लेखनीय वृद्धि भयो ।

२०५३ साल आषाढ सम्ममा ५१० जना सदस्य भएका थिए तर सहकारीमा सदस्य संख्या बढी भए राम्रो हुन्छ भन्ने कुरा थाहा नभएर धेरै सदस्य भएमा सम्हाल्न सकिँदैन भन्ने डरले सदस्यता खुल्ला नगरी वर्षमा १०० जना मात्र थप गर्ने निर्णय गरियो जुन संस्थाका लागि ठूलो अवरोधको रूपमा सावित हुनपुग्यो । किनभने भरखर समुदायमा परिचित भएर सदस्यता बृद्धि हुन लागेको बेला सदस्यता बृद्धि रोक्दा संस्थाको गतिमा अवरोध पुग्न गयो र सदस्यता नपाउँदा समुदायका मानिसहरूले संस्थाप्रति नकारात्मक भावना देखाउन थाले । सदस्यता नपाएको आवेशमा अर्को संस्थाको जन्म समेत भयो । अर्को कुरा सहकारीको कार्यक्षेत्रको महत्वबारे थाहा नहुँदा संस्थाको कार्यक्षेत्रका ४ गाविसमध्ये गैरिमुदी गाविस टाढा भएको भनेर हटाइयो जसको कारण संस्थाले त्यस गाविसमा सदस्यता बृद्धि गर्ने अवसर गुमाउन पुग्यो । यसरी संस्थाको इतिहासमा २०५३ र २०५४ साल त्यति राम्रो हुन सकेन । बाल्यकाल अन्योल र अनविज्ञतामा नै बित्यो ।

## ४. माओवादी द्वन्द्वमा जनसचेतन

२०५० सालमा जनसचेतनको जन्म भयो भने त्यसको ठीक २ वर्ष पछि २०५२ सालमा माओवादी द्वन्द्व शुरु भयो । २०५४ सालदेखि यस संस्थामा माओवादीहरूको हस्तक्षेप शुरु भयो । उनीहरूले कहिले व्याज घटाउने, कहिले जगेडा कोष वितरण गर्ने, कहिले संस्था नै धराशायी पार्ने किसिमले व्याज अन्तर कायम गर्नुपर्ने आदि कुरामा निहुँ खोजेर संस्थामा निरन्तर हस्तक्षेप गरि नै रहे । अरु छिमेकी सहकारीहरूले जे जस्तो गरे पनि प्रश्न नउठाउने तर जनसचेतनका हरेक क्रियाकलापमा हस्तक्षेप गर्ने माओवादीको गैरराजनीतिक चरित्रको निकृष्ट नीति थियो । यस्ता क्रियाकलापहरू अन्य केही छिमेकी संस्थाहरूको अभिष्ठ पूरा गर्न पनि उनीहरूलाई प्रयोग गरिएको थियो । संस्थालाई असफल बनाउने माओवादीको नीतिले गर्दा जनसचेतनले धेरै समस्या भोग्नुपऱ्यो । उनीहरूको आदेशलाई संस्थाले अवज्ञा गरेपछि २०५७ सालको साधारणसभामा ४० जना बन्दुकधारीहरूले करिव २००० सदस्यहरूलाई वरिपरिबाट घेरेर व्याज घटाउने, १ प्रतिशत व्याज अन्तरमा संस्था चलाउनुपर्ने र संस्थामा जम्मा भएको जगेडाकोष वितरण गर्नुपर्ने भनेर मञ्चवाट घोषणा गरे । उनीहरूको घोषणलाई सदस्यहरूले प्रतिवाद गरेपछि उनीहरू त्यहाँबाट बाहिरिए । झण्डै ३ पटक सदस्यहरूलाई वचत फिर्ता गरिदिन्छौं भनेर संस्थामा बोलाए तर कुनै पटक पनि एकजना सदस्य पनि उपस्थित भएनन् । यसरी उनीहरूको दबावमा चल्नुपरे पनि समाजमा क्रमशः आफ्नो छवि उज्वल बनाउँदै अगाडि बढ्दै गयो । माओवादीहरूलाई यो कुरा सह्य नभएपछि उनीहरू एकपछि अर्को हस्तक्षेप गर्दै गए । २०६२ साल आश्विन १५ गते संस्थाको १२ औं साधारणसभाको आयोजना गरिएको थियो जसमा सञ्चालक समितिको निर्वाचनको समेत कार्यक्रम थियो । त्यस दिन निर्वाचन कार्यक्रम नसकिने भएको हुनाले १७ गते बिहानदेखि निर्वाचन शुरु भएर करिव १ बजेसम्म मतदान भयो र त्यसपछि मतगणना शुरु भयो । मतगणना चलिरहेको बखत ४,५ जना माओवादी कार्यकर्ताहरू निर्वाचन स्थलमा आएर यो निर्वाचन कसको आदेशले गऱ्यौ तुरुन्त रद्द गर भनेर मतदान अधिकृतलाई बाहिर निकालेर लैजान खोजेपछि सदस्यहरूले प्रतिकार गरेर जोगाए । संस्थाको निर्वाचन सम्पन्न भयो । उनीहरूको आदेश नमानेको भन्दै माओवादीले अध्यक्ष यज्ञराज ढुंगेल, उपाध्यक्ष ताराप्रसाद पन्त, सचिव भीम प्रसाद दाहाल र कोषाध्यक्ष पुस्कर कुमार दाहाललगायत १४ जना सञ्चालकहरू र सक्रिय सहस्यहरूलाई गोरु तिहारको दिन उनीहरूको इजलासमा ७ दिनभित्र उपस्थित हुनु भन्ने बारेको पुर्जी ठाउँ ठाउँमा टाँस गरे । तर हामीले उपस्थित हुन इन्कार गरेपछि उनीहरूले ज्यान मार्ने धम्की दिन थाले र त्यस बखत ज्यान जोगाउन मुस्किल परेको हुनाले हामी गाउँबाट पलायन हुन वाध्य भयौं । यस मामिलामा विभिन्न पत्रपत्रिकाहरूले महत्वपूर्ण भूमिका खेलेर हाम्रो ज्यानको संरक्षण गरे भने राष्ट्रिय मानव अधिकार आयोगले स्थलगत भ्रमण गरेर माओवादीहरूसँग भेटी हाम्रो ज्यान जोगाउने कोशिश गऱ्यो । तर उनीहरूले भेट्न नमानेको हुनाले ३,४ दिन जिल्लामा बिताएर मानव अधिकार आयोगका अधिकारीहरू काठमाडौ फिर्ता भए ।

हाम्रो बहिर्गमनवाट संस्थाका कारोवारहरू पूरै बन्द भए । सदस्यहरूलाई आवश्यक पर्ने सेवाहरू बन्द भएको हुनाले उनीहरूले माओवादीलाई र सञ्चालकहरूलाई गाउँमा बोलाएर संस्था सञ्चालन गर्न दबाव दिए । घर-घरवाट हामीलाई फिर्ता गर्न दबाव परेपछि माओवादीले सञ्चालक समितिमा आफ्नो पक्षका ४ जनालाई समावेश गर्ने शर्तमा ४९ दिनपछि हामीलाई फिर्ता बोलाए । उनीहरूले आफ्ना भनेका ४ जना मानिसहरू पनि संस्थाका इमान्दार सदस्यहरू भएका हुनाले उनीहरूबाट संस्थालाई कुनै समस्या परेन बरु फाइदा नै भयो ।



माओवादीहरूले यसरी सहकारी संस्थाहरूमा हस्तक्षेप गर्ने कुनै केन्द्रीय कार्यक्रम भएजस्तो लाग्दैनथ्यो किनभने उनीहरूले हामीसंग वहस गर्दा सहकारीका झिना मसिना कुराहरू उनीहरूलाई थाहा भएको आभाश आउँदैनथ्यो । तर स्थानीय तहका केही मानिसहरूको अभिष्ठ पूरा गर्न र जनसचेतनको विकासमा अवरोध गर्न उनीहरूवाट यस्ता कार्यक्रमहरू भएको प्रष्ट हुन्छ । माओवादीहरू कुनै सहकारी संस्थाको कार्यालयमा बैठक बस्थे र स्थानीय व्यक्तिहरूको सल्लाहअनुसार जनसचेतनलाई कस्तो आदेश जारी गर्ने भनेर पारित हुन्थ्यो र सोही बमोजिम उर्दी जारी हुन्थ्यो । यस क्रियाकलापले जनसचेतनलाई अस्तव्यस्त पारेर कुनै संस्थाहरू अगाडि जाने कोशिशमा थिए भन्ने पनि प्रष्ट हुन्छ । तर जनसचेतनले जस्तोसुकै आपत्ति र विपत्तिको बेला पनि आफ्ना नीति नियम सहकारी, मूल्य मान्यता र सिद्धान्तलाई छोडेन बरु जुनसुकै चुनौतिको पनि सामना गरेर अगाडि बढेको हुनाले कालान्तरमा यसले ठूलो सफलता हासिल गर्न सफल भयो ।

## ५. जनसचेतनको सुनौलो जवानी

२०५४ सालमा एसियाली ऋण महासंघ **(ACCU)** को प्राविधिक सहयोगमा नेपाल वचत तथा ऋण केन्द्रीय सहकारी संघ **(NEFSCUN)** को आयोजनामा एसियामा बचत तथा ऋण सहकारी संस्थाहरूको संस्थागत विकास **(Institutional Development of Credit Unions in Asia - INDECUA)** कार्यक्रम सञ्चालन भयो जसमा जनसचेतनले पनि भाग लियो । यस कार्यक्रममा भाग लिएपछि मात्र संस्थामा सदस्यहरूको अत्यधिक सहभागिता हुनुपर्ने, कार्यक्षेत्र ठूलो हुनुपर्ने, सदस्यहरूलाई आधुनिक प्रविधिवाट सेवा सुविधा प्रदान गर्नुपर्ने तथा सदस्यको विश्वासिलो, दिगो र भरपर्दो संस्थाको रूपमा विकास हुनुपर्ने आदि कुराहरू थाहा भयो र सो अनुसार नीति नियमहरू बनाउन थालियो । भीमेश्वर नगरपालिकाका ५ वटा वडाहरू कार्यक्षेत्र थपेर कार्यक्रम शुरु गरियो । सदस्यता बृद्धिमा अत्यधिक जोड दिइयो । **PEARLS Monitoring System** लागू गरी संस्थाको वित्तीय प्रणलीलाई स्वस्थ र बलियो बनाइयो । काब्रे बगरमा जग्गा किनेर २०६१ सालमा पक्की घर निर्माण गरियो जसको फलस्वरूप संस्था भौतिक र वित्तीय हिसावले झन् बलियो र भरपर्दो हुनसक्यो । २०५४ सालदेखि २०६४ सालसम्मको एक दशकलाई जनसचेतनको विकासमा सुनौलो युवावस्था हो भनेर भन्न सकिन्छ । यस समयमा यसले विभिन्न आर्थिक, सामाजिक, र राजनीतिक चुनौतिहरूको सामना गरी भविष्यका लागि परिकल्पना तथा ध्येय निर्माण गर्नसक्यो । २०५६ सालदेखि पञ्चवर्षीय तथा त्रिवर्षीय योजना निर्माण गरेर संस्थालाई योजनावद्ध रूपमा अगाडि बढाउन सक्यो । यस दशकमा संस्थाले आवश्यक अङ्ग-प्रत्यङ्गहरूको निर्माण गरेर आफू वयस्क भएको प्रमाणित गऱ्यो ।

## ६.जनसचेतन र सहकारी प्रवर्धन तथा विकास

जनसचेतनले आफ्नो विकासमा मात्र ध्यान दिएन दोलखा जिल्लामा सहकारी आन्दोलनलाई अगाडि बढाउन पनि महत्वपूर्ण भूमिका खेलेको छ । यसको स्थापनापछि यसैको प्रेरणावाट आसपासमा धेरै सहकारी संस्थाहरू खुले र विकसित भए । आज दोलखा जिल्ला पूरा सहकारीमय भएर देशभर प्रसिद्ध हुनुमा जनसचेतनले प्रत्यक्ष एवम् परोक्ष रूपमा योगदान पुऱ्याएको छ । जनसचेतनले संस्था सञ्चालनका नीति निर्माण गरी लागू गरेपछि देशका विभिन्न भागमा यी नीतिहरू अनुशरण गरी आफ्ना संस्थाहरूको नीति निर्माण गरेर संस्था सञ्चालन गरेका छन् । यसले अपनाएका प्रविधिहरूको पनि उत्तिकै अनुशरण गरिएको छ । साथै यस संस्थाका सञ्चालकहरू देशभर सहकारीको क्षमता अभिबृद्धि तालीम गर्न जाने भएको हुनाले नेपालको सहकारी प्रवर्धन र विकासमा यसको महत्वपूर्ण योगदान रहेको छ ।

## ७. राष्ट्रिय तथा अन्तर्राष्ट्रिय सम्वन्ध

जनसचेतनले शुरुदेखि नै देशका विभिन्न संघ संस्थाहरूसँग समन्वय र सम्पर्क गर्दै आएको छ । २०५१ सालमा यो संस्था नेपाल वचत तथा ऋण केन्द्रीय सहकारी संघमा आवद्ध भएर विभिन्न क्रियाकलापमा सहभागी हुँदै आएको छ भने दोलखा जिल्ला बचत तथा ऋण सहकारी संघको संस्थापक सदस्यको रूपमा रहेको छ साथै जिल्ला सहकारी संघ लि. दोलखाको पनि सदस्यता प्राप्त गरेको छ। लघुवित्त संस्थाहरूको क्षमता अभिबृद्धि गर्न स्थापित सि.एम.एफ. संग पनि यसको घनिष्ट सम्वन्ध रहेको छ । वित्तीय सहयोग आदान प्रदानका लागि साना किसान विकास वैंक र फष्ट माइक्रो फाइनान्स डेभलपमेण्ट बैंकसंग आवद्ध भएको छ भने राष्ट्रिय सहकारी वैंकको संस्थापक सदस्य रहेको छ ।

यस संस्थाले २०५२ सालदेखि एसियाली ऋण महासंघ **(ACCU)** सँग सम्वन्ध विस्तार गर्दै आएको र २०६८ सालमा यसको गरिमामय सहयोगी सदस्यता प्राप्त गर्न सफल भएको छ । यो संस्थाको विकासमा **ACCU** ले प्रविधिक सहयोग दिंदै आएको र हाल **ACCESS Branding** कार्यक्रम चलिरहेको हुनाले उसको योगदान

अतुलनीय रहेको छ । संस्थालाई यो अवस्थामा ल्याउने मुख्य भूमिका **ACCU** को नै रहेको हुनाले भविष्यमा पनि यस सम्वन्धलाई अझ प्रगाढ बनाउनु जरुरी छ । लघुवित्त संस्थाहरूको सञ्जाल **MIX Market** संग पनि यो संस्थाको अत्यन्त नजिकको सम्वन्ध रहेको छ । सन् २००७ देखि यसको **Website** मा हाम्रा सूचनाहरू राख्न शुरु गरिएको र हालसम्म निरन्तरता दिइएको छ । **MIX** को मापदण्ड अनुसार यस संस्थाको सूचना विश्लेषण गर्दा ५ तारामध्ये ४ तारा प्राप्त गरेको छ । यसले प्रष्ट रूपमा के देखाउँछ भने हाम्रो संस्थाको वित्तीय अवस्था राम्रो रहेको छ । जनसचेतनको नामलाई विश्वभर प्रचार प्रसार गर्ने यी २ वटा संस्थाहरूको योगदानको कुनै वयान गर्न सकिदैन ।

## ८. परिपक्व जनसचेतन

२०६५ सालदेखि जनसचेतनले अर्को एक कठिन र चुनौतिपूर्ण कार्यक्रममा भाग लियो, त्यो थियो **A-one Competittive Choice For excellence in Safety and Soundness (ACCESS Branding)** कार्यक्रम । यो कार्यक्रमले विश्वका सहकारी संस्थाहरूको दाँजोमा पुर्‍याउँछ र संस्थालाई दिगो, सक्षम, भरपर्दो बनाई समुदायमा पहिलो छनौटको स्थानमा स्थापित गर्दछ । सामान्यतया औसत संस्थाहरूले यस कार्यक्रममा भाग लिन सक्दैनन् । जुन संस्थाको आवश्यक मात्रामा सदस्य संख्या र पूँजीको मात्रा पुगेको छ त्यसले मात्र भाग लिन सक्तछ । जनसचेतनको यो पूर्वशर्त पुगेको हुनाले देशभरका अन्य ६ वटा संस्थाहरू संगसंगै यसले पनि भाग लिन सक्यो । २०६५ सालदेखि शुरु भएको यस कार्यक्रम अन्तर्गत कार्यालयको भौतिक सुधार, कर्मचारीको क्षमता अभिबृद्धि, विश्वासनीय लेखा प्रणालीको विकास, वित्तीय अनुशासन, सदस्यहरूलाई सेवा प्रदान गर्ने तौरतरिकामा व्यापक सुधार, सदस्यकेन्द्रित कार्यक्रमहरूको सञ्चालन, अत्याधुनिक प्रविधिको प्रयोग आदि महत्वपूर्ण कार्यक्रमहरूमा सफलतापश्चात अन्ततः २०६९ साल आश्विन २१ गते फिलिपिन्सको मनिलामा **ACCESS Bronze** (कास्य) प्राप्त भयो । शुरुमा **Bronze** प्राप्त गरेको यस संस्थाले २०७३ सालमा **ACCESS Silver** (रजत) प्राप्त गर्न सफल भयो । यो जनसचेतनको इतिहासमा बहुत महत्वर्पूण उपलब्धि हो जसले संस्थाको इज्जत प्रतिष्ठा बढाएको छ भने संस्थालाई अन्तर्राष्ट्रिय दाँजोमा पुर्‍याएको छ ।

**ACCESS Branding** भनेको के हो भन्ने प्रश्न उठ्न सक्तछ । यसमा संस्थाहरूलाई एक वर्षका लागि लोगो अथवा चिन्ह प्रदान गरिन्छ । लोगो चार तहको हुन्छ । सबभन्दा तल्लो तहको कास्य हुन्छ त्यसपछि चाँदी, सुन र हिरा हुन्छ । संस्थाको कार्यकुशलताको आधारमा लोगोको स्तर निर्धारण गरिन्छ । प्रत्येक वर्ष **ACCU** द्वारा नियुक्त गरेका विशेषज्ञहरूले संस्थाको परिक्षण गर्दछन् । यदि राम्रो गरेको पाइएमा त्यसभन्दा माथिल्लो तहको चिन्ह दिइन्छ भने खास प्रगति नभएमा सोही चिन्ह दिइन्छ तर प्रगति पहिलाभन्दा घटेको छ भने प्रदान गरेको चिन्ह खोसिन्छ ।

यो चिन्ह प्राप्त गरेपछि संस्थाले सदस्यको वचतको सुरक्षा, स्तरीय सेवा तथा सुविधा, दिगो, भरपर्दो र विश्वासिलो संस्था, आधुनिक प्रविधिको प्रयोग, कर्मचारीहरूको सेवा र सुविधामा सुधार तथा सदस्यहरूलाई छिटो र छरितो सेवा प्रदान आदि कुराको ग्यारेण्टी हुन्छ । संस्थालाई आन्तरिक, वाह्य र अन्तर्राष्ट्रिय तहबाट लेखापरिक्षण हुने भएको हुनाले यसमा अनियमितता हुने सम्भावना हुँदैन । सबै कुरा नियमानुसार चल्ने भएको हुनाले यो पारदर्शी र नियमित हुन्छ तथा समुदायमा यो विश्वासिलो र भरपर्दो हुन्छ । यो चिन्ह प्राप्त गर्नुको साथसाथै जनसचेतन एउटा परिपक्व संस्था बन्न पुगेको छ र दोलखा जिल्लाका आम जनसमुदायको आशाको केन्द्रविन्दुको रूपमा खडा भएकोछ । **ACCESS Branding** कार्यक्रम सञ्चालन गर्ने क्रममा संस्थालाई आवश्यक पर्ने सम्पूर्ण नीति नियमहरूको निर्माण गरी लागू गरिएको, दोलखा जिल्लाभरि कार्यक्षेत्र विस्तार गरिएको, सदस्य संख्यामा अत्याधिक वृद्धि भई झण्डै २२००० पुगेको, संस्थाको कूल पूँजी ९२ करोड पुगेको, संस्थाको वित्तीय संरचना मजवुत वनेको, सदस्यहरूको सुविधाका लागि मैनापोखरी बजारमा अत्याधुनिक सुविधा सम्पन्न कार्यालय निर्माण भइरहेको, जिल्लामा ८ वटा सेवा केन्दबाट र काठमाण्डौ सम्पर्क कार्यालयबाट सदस्यहरूलाई छिटो र छरितो सेवा प्रदान, **Online financial services, Mobile Banking**, आदि उल्लेखनीय कार्यहरू भएका छन् भने यसै वर्षदेखि **ATM** सेवा र लघुवित्त कार्यक्रम पनि सञ्चालन गर्ने योजना छ ।

माथिका क्रियाकलापहरूले यो प्रमाणित गर्दछन् कि अब जनसचेतनले आफूलाई दोलखा जिल्लाभरको एउटा दीर्घकालीन अटल रूपमा सञ्चालन हुन सक्ने सदस्यहरूको भरपर्दो, विश्वासिलो र सुविधा सम्पन्न संस्थाको रूपमा आफूलाई उभ्याएको छ ।

## ९. उल्लेखनीय उपलव्धिहरू

१. संस्थाले बिगत २५ वर्षमा विभिन्न उकाली र



ओरालीहरू पार गर्दै अनेकन चुनौतिहरूको सामना गर्दै सहकारीमा आएका विकृति, विसंगतिहरूबाट अलग रहेर आफ्नो सतर्कता र बुद्धिमतापूर्वक विशुद्ध रूपमा सहकारी मूल्य मान्यता र सिद्धान्तमा आधारित भएर सञ्चालन हुनसक्यो । यसैगरी यस अवधिमा आफ्नो दीर्घकालिन लक्ष्य निर्धारण गरी आफ्नो गन्तव्य निर्दिष्ट गर्न सफल भयो । यसबाट आफू देशभरको नमुना संस्था बन्नको लागि र राष्ट्रिय तथा अन्तर्राष्ट्रिय क्षेत्रमा चर्चित हुनको लागि ठूलो अवसर प्राप्त भयो ।

२. आफ्नो कार्यक्षेत्रभित्रका कमजोर आर्थिक अवस्था भएका तथा सामाजिक रूपमा पिछडिएको वर्गलाई सदस्यता प्रदान गरी वित्तीय सेवामा पहुँच, चेतनाको विकास, शिक्षामा समान अवसर प्रदान गरी उनीहरूको रहनसहन खानपान र परम्परामा परिवर्तन गरी आर्थिक र सामाजिक अवस्था उकास्न सफल भएको छ । आज धनी र गरीवबीचको भेदभाव, जातीय असमानता, लिङ्गीय भेदभाव आदि जस्ता आर्थिक र सामाजिक विसंगतिहरूको अन्त्य भएको छ । संस्थाले सबैका बालबालिकाहरूलाई पढ्न र लेख्न पाउने अधिकार, उच्च शिक्षा हासिल गर्ने अधिकार र आफ्नो क्षमता अनुसार काम गर्न पाउने अवसर प्रदान गर्न सफल भएको छ साथै बालकदेखि बृद्धसम्म सबै उमेरका मानिसहरूको हेरचाह गर्ने जीवनभरको साथी वनेको छ ।

३. संस्था सञ्चालनका सिद्धान्तहरूको पालना, आधुनिक प्रविधिहरूको प्रयोग, मानव संसाधनको विकास, भौतिक संचरनाको पर्याप्तता, सदस्यहरूको आवश्यकता अनुसारका उत्पादन तथा सेवाहरूको निर्माण र प्रयोग, आदिबाट संस्थालाई चुस्त र सदस्यमैत्री बनाउन सफलता हासिल भएको छ ।

४. दोलखा जिल्लाको सहकारी आन्दोलनलाई अगाडि बढाउन संस्थाले अभिभावकको रूपमा आफूलाई स्थापित गरेको छ । आज दोलखा जिल्लामा करिव ५०० वटा सहकारी संस्थाहरू र ५ वटा जिल्ला संघहरू स्थापना भएका छन् जसमा २२५ भन्दा माथि वचत तथा ऋण सहकारी संस्थाहरू मात्र छन् । दोलखा जिल्लाको कुनै गाविस यस्तो छैन जहाँ सहकारी संस्था नहोस् । यसरी यस जिल्लालाई सहकारीमय बनाउन सहकारी संस्थाको प्रवर्धनमा जनसचेतनको सफलताको प्रभाव नै मुख्य कारण हो । त्यसकारण यस संस्थाको अगुवाइमा दोलखाको सहकारी आन्दोलन अगाडि बढेको कुरा दावाका साथ भन्न सकिन्छ र संस्थाले जिल्लाभर कार्यक्षेत्र पाउनु यसको प्रमाण पनि हो ।

५. जनसचेतन सहकारी अध्ययनका लागि देशभरिकै श्रोतकेन्द्रको रूपमा स्थापित हुनसकेको छ । पूर्व मेचीदेखि पश्चिम महाकालीसम्मका सहकारीकर्मीहरू यस संस्थामा अवलोकन गर्न आउँछन् र यहाँका असल क्रियाकलापहरू वा कार्यक्रमहरू आफ्नो संस्थामा लागू गर्दछन् । यस संस्थाका सञ्चालकहरू देशका विभिन्न भागहरूमा सहकारी प्रशिक्षकको रूपमा गएर तालीम सञ्चालन गर्ने भएकोले यसले अवलम्वन गरेका सफल सहकारी सञ्चालनका तरिकाहरू, प्रविधिहरू उत्पादन तथा सेवाका किसिमहरू देशभर फैलिएका छन् । त्यसकारण देशकै सहकारी आन्दोलनलाई सही दिशा दिने काममा पनि जनसचेतनको ठूलो भूमिका छ ।

६. जनसचेतनको सवैभन्दा महत्वपूर्ण उपलव्धि हो एसियाली ऋण महासंघ **ACCU** वाट **ACCESS Brand** प्रप्त गर्नु । यस सफलताले जनसचेतनको विश्वासनीयता बढाएको छ र सदस्यहरूलाई आफूले जम्मा गरेको रकमको ग्यारेण्टी गरेको छ । यसबाट सदस्यहरूको सेवा सुविधामा बृद्धि हुनुको साथै दीर्घकालसम्म अनवरत रूपमा सेवा दिनसक्ने विश्वासिलो र भरपर्दो संस्थाको रूपमा खडा हुन सफल भएको छ । यो उपलव्धिले संस्थाको प्रतिष्ठा बढेको मात्र होइन दोलखा जिल्लाको इज्जत र सम्मान बढाएको छ र नेपाली सहकारी आन्दोलनको गौरवमय इतिहासको निर्माण गरेको छ । यो उपलव्धीवाट जनसचेतन मात्र होइन, दोलखावासीहरू मात्र होइन देशभरिका समस्त सहकारीकर्मीहरूले गौरव गर्नु पर्दछ ।

७. यस संस्थाले हरेक समुदाय, क्षेत्र, वर्ग र उमेर समूहका सदस्यहरूका लागि उपयुक्त खालका उत्पादन तथा सेवाहरूको छनौट गरी सबैलाई आवश्यकता अनुसार सेवा प्रदान गरेको छ । विद्यार्थीहरूलाई पढ्नको लागि, युवा युवतीहरूलाई व्यापार व्यवसाय गर्नको लागि, बृद्ध बृद्धाहरूलाई आफ्नो जीवनको उत्तरार्धमा सुखी एवम् सम्मानित जीवनयापन गर्नका लागि उपयुक्त सेवाहरू प्रदान गर्दै आएको छ । खासगरी गरीब विद्यार्थीहरूका

लागि उच्च शिक्षा ऋण र बृद्धहरूका लागि नियमित मासिक वचत र जनसचेतन आजीवन सहाराले हामीले दिने उत्कृष्ठ सेवा र सुविधाको नमुना प्रदर्शन गर्दछन् ।

हामीले संस्थाका यी उपलब्धिहरूबाट निश्चित रूपमा गर्व गर्नुपर्दछ । दोलखा जस्तो दुर्गम जिल्लाको एउटा सानो गाउँमा स्थापित भएर पनि यस्ता कार्यहरू गर्नसक्नु हामी सञ्चालकहरू, कर्मचारीहरू, सदस्यहरू र आम समुदायको ठूला मेहनत र परिश्रमको कमाइ हो । तर हामीले यी उपलव्धिहरूवाट सन्तोष मानेर बस्यौं भने संस्थाका यस अगाडिका पाइलाहरू अवरुद्ध हुने मात्र होइन नयाँ नयाँ चुनौतिहरूले हाम्रो गन्तव्यमा अवरोध गर्नेछन् । त्यसकारण संस्थाका प्राप्त उपलव्धिहरूको रक्षा गर्नु र आउने चुनौतिहरूको पहिचान गरी तिनीहरूको सामना गर्नु आज हामी सबैको कर्तव्य हुनआएको छ । आगामी दिनहरूमा संस्थालाई आइपर्न सक्ने चुनौतिहरूको बारेमा पनि चर्चा गर्नु आवश्यक छ ।

## १०. चुनौति र अवसरहरू

१. आज सहकारीमा बिभिन्न विकृति र विसंङ्गतिहरू देखा पर्न थालेका छन् । सहकारी मूल्य र मान्यता विपरित काम गरेर व्यक्तिगत लाभ लिने, सञ्चालकहरूले आफ्नो रोजगारीको रूपमा सहकारीलाई प्रयोग गरेर जागिरे प्रबृत्ति देखाउने, सदस्यहरूलाई तत्काल फाइदा दिने नाउँमा संस्थागत पूँजी कमजोर पारेर संस्थालाई नै धरासयी बनाउने, करवाट जोगिने नाममा सदस्यहरूलाई व्याकडोरबाट सुविधा दिने, कार्यक्षेत्र बाहिरका मानिसहरूलाई सदस्यता दिने, सदस्यहरूको मोटो रकम लिएर भाग्ने, सहकारीको सम्पत्तिलाई व्यक्तिगत सम्पत्तिसरह प्रयोग गर्ने आदि विकृतिहरू सहकारी क्षेत्रमा प्रसस्त देखापर्न थालेका छन् । यी विकृतिहरूवाट जोगाएर संस्थालाई स्वच्छ तरिकाले सञ्चालन गर्नु आजको पहिलो चुनौति हो ।

२. संस्थाको कार्यक्षेत्र दोलखा जिल्लाभरि भएको हुनाले जिल्लाका सबै भागमा समानुपातिक रूपमा सेवा विस्तार गरी खासगरी उत्तरी भेगका गरीव र पिछडिएको वर्गलाई संस्थामा आवद्ध गराउनु दोश्रो चुनौतिको रूपमा लिनु पर्दछ ।

३. पहिलाभन्दा आज दोलखा जिल्लाको वित्त बजार ज्यादै जटिल बनेको छ । प्रतिस्पर्धीहरूको रूपमा सहकारी संस्थाहरू मात्र नभएर विभिन्न बैंकहरू, लघुवित्त संस्थाहरूले पनि जिल्लामा प्रवेश गरेका छन् । उनीहरूका सेवा सुविधामा पनि विविधता आएको छ र संस्थाले दिने सेवाहरू भन्दा उनीहरूले आकर्षक सेवा प्रदान गर्न सक्तछन् । यस परिप्रेक्ष्यमा हाम्रो संस्थाले दोलखाको वित्त बजारमा अनुकूलित भएर प्रतिस्पर्धा गर्न संस्थालाई सक्षम बनाउन तथा सदस्यहरूको पहिलो रोजाइको संस्थामा विकास गर्न विशिष्ट खालको रणनीतिको आवश्यकता पर्दछ । यो कामलाई पनि चुनौतिको रूपमा स्वीकारेर अगाडि बढ्नु पर्दछ ।

४. संस्थाले आजसम्म हासिल गरेका उपलब्धि र ख्यातीलाई जोगाएर राख्नु तथा हालसम्म स्थापित राष्ट्रिय र अन्तर्राष्ट्रिय संघ संस्थाहरूसँगको सुमधुर सम्वन्धलाई अझ सुदृढीकरण गर्नु पनि त्यतिकै चुनौतिपूर्ण कुरा छ ।

५. संस्थाले प्रप्त गरेको **ACCESS Brand** अहिले यो रजतस्तरको छ । सबै कमी कमजोरीलाई हटाएर यसको स्तरलाई स्वर्ण हुँदै हिरक बनाउनु पर्दछ । यो कार्य असाध्य चुनौतिपूर्ण पनि छ र हिरक उपाधि प्राप्त गरेपछि कुनै किसिमका चुनौतिले पनि यसलाई छुन सक्तैन ।

हामीले माथिका चुनौतिहरूको सामना गर्न समयमा नै उपयुक्त रणनीतिहरू निर्माण गरी प्रत्येक चुनौतिसँग सामना गर्ने क्षमता अभिबृद्धि गर्नु नै आजको आवश्यकता हो ।

संस्थाको २५ वर्ष प्रवेश अर्थात रजत जयन्ती महोत्सवको अवसरमा विगतदेखि यस संस्थाको विकासमा योगदान गर्नुहुने सबै सदस्यहरू, पूर्व तथा वर्तमान सञ्चालकहरू, कर्मचारीहरू, शुभचिन्तकहरू, जिल्ला तथा राष्ट्रिय संघ संस्थाहरू, सरकारी तथा गैर सरकारी निकायहरू तथा दोलखा जिल्लाका आम जनसमुदायमा हार्दिक आभार व्यक्त गर्न चाहन्छु र यस संस्थालाई विभिन्न आर्थिक र प्राविधिक सहयोग पुऱ्याई यस अवस्थामा उभ्याउन सफल बनाउने एसियाली ऋण महासंघ **ACCU Thailand** र नेपाल वचत तथा ऋण केन्द्रीय सहकारी संघ लि. **(NEFSCUN)** लाई विशेष धन्यवाद दिन चाहन्छु ।

जय जनसचेतन **!!** जय सहकारी **!!**



# जनसचेतनमा बिताएका बीस वर्ष



**पुष्कर कुमार दहाल**
संस्थापक कोषाध्यक्ष

विश्व सहकारी इतिहास हेर्ने हो भने सन् १८४४ मा बेलायतको रोचडेल शहरमा १ महिलासमेत २८ जना मजदुरहरूबाट शुरुवात भएको सहकारी आज विश्वभरि फैलिएको छ । नेपालमा वि.सं. २०१३ सालमा चितवनको बखानपुरमा चैत्र २० गते सहकारी कोष भनेर स्थापना गरेको रेकड पाइन्छ । सहकारीले विभिन्न नाम लिंदै आए पनि यसले जनतालाई कुनै किसिमको उल्लेख्य सेवा गर्न सकेको थिएन । २०४६ सालको जनआन्दोलनपछि बनेको सरकारले विश्वभरि सहकारी आन्दोलनले जनतालाई आर्थिक, सामाजिक एवम् साँस्कृतिक रूपमा सहयोग गरेको महसुस गरी नेपालमा पनि सहकारी ऐन २०४८ लागू गरी गाउँ गाउँमा सहकारी संस्थाहरू खुल्ने अभियान सञ्चालन भयो ।

दोलखा जिल्लामा २०४८/०४९ सालतिर नै दोलखाको जिरीमा अरनिको बचत तथा ऋण सहकारी संस्था र फ्रेण्डसीप बचत तथा ऋण सहकारी संस्था खुलेका रहेछन् । यिनै संस्थाहरूको आयोजनामा नेपाल बचत तथा ऋण केन्द्रीय सहकारी सहकारी संघ लि. (नेफ्स्कून) द्वारा सदरमुकाम चरिकोटमा १ दिने प्रशिक्षण कार्यक्रम आयोजना गरिएको रहेछ । उक्त दिन तत्कालिन हनुमन्तेश्वर उ.मा.वि. का प्रधानाध्यापक श्री यज्ञराज ढुङ्गेलज्यू पनि विद्यालयको काम लिएर चरिकोट जानुभएको रहेछ । त्यसैबेला उहाँलाई पनि त्यो कार्यक्रममा सहभागी हुने असवर मिलेछ । नेफ्स्कुनबाट आउनुभएका प्रशिक्षकहरूले सहकारीका बारेमा विभिन्न कुराहरू राख्नुभएपछि त्यसबाट प्रभावित भएर यज्ञराज सरले काब्रे गाविसको बगरमा चिया खाँदा उक्त कार्यक्रममा भएका कुराहरूबारे चर्चा शुरु गर्नुभयो । उहाँले विद्यालयमा सहकारी खोल्न सके राम्रो हुने रहेछ, हामी पनि मिलेर यो काम गरौं भन्ने प्रस्ताव राख्नुभयो । उहाँका कुरा सुनेपछि हामीलाई पनि चित्त बुझेपछि ल हुन्छ सुरु गरौं, कहिलेबाट र कसरी गर्ने भन्ने विषयमा छलफल भयो ।

त्यसपछि यज्ञराज सरले यो हामी मात्र होइन काब्रेका सबै साथीहरूलाई बोलाएर गर्नुपर्छ, सम्भव भएसम्म सबैलाई बोलाऔं र यही बगरमा बसी छलफल गरौं भन्नुभयो । त्यसपछि २०५० सालको असोज २२ गते बिहान काब्रेको बगरमा बस्ने गरी सबैलाई खबर गरियो । त्यसै दिन ३० जनाको उपस्थितिमा गोपीकृण शर्माको अध्यक्षतामा बसेको बैठकले यज्ञराज ढुङ्गेलको संयोजकत्वमा सात सदस्यीय तदर्थ समिति पनि गठन गर्‍यो जसमा म कोषाध्यक्ष रहेको थिएँ ।

शुरुमा संस्थाको कार्यक्षेत्र काब्रे, नाम्दु, मिर्गे र गैरीमुदीसमेत ४ गाविस तोकियो । रकम सम्बन्धमा मासिक बचत रु.१००, शेयर रु.१००, प्रवेश शुल्क रु.२५, वार्षिक शुल्क रु. ५० र अन्य रु. १० गरी सदस्यता शुल्क रु. २८५ उठाउने निर्णय भएको थियो ।

यसरी ३० जनाको उपस्थितिले जिम्मा दिएको तदर्थ समितिमा अब संस्थाको नाम के राख्ने, कसरी चलाउने भनी धेरै बेरसम्म छलफल भएको थियो । जनताबाट रकम लिएर संस्था चलाउनुपर्ने भएकोले संस्थाको नाम 'ज' बाट आउने शब्दबाट राख्नुपर्छ, कुन नाम राम्रो हुन्छ त्यही नाम राख्नुपर्छ भन्ने सबैको सल्लाह भयो । समितिका सचिव पुण्यप्रसाद घिमिरेले जनसचेतन (जनतालाई सचेत गराउने) बचत तथा ऋण सहकारी संस्था लि., काब्रे ६, बगर भन्ने राखौं भनेर प्रस्ताव गर्नुभएपछि सबैबाट समर्थन भई संस्थाको नामाकरण गरियो ।

संस्था दर्ता गर्ने बेलामा ६ जना साथीहरू आएर हामीलाई पनि संस्थापक सदस्य बनाइदिनुहोस्, लागेको रकम आजै दिन्छौं भनेपछि ६ जना थप भइ ३६ जना संस्थापक सदस्य बनाउने निधो भयो । पछि संस्था दर्ता गर्ने बेलामा अचानक २ जनाले संस्थामा हामी सदस्य बन्दैनौं, हाम्रो नाम खारेज गरिदिनुस् भनेपछि जम्मा ३४ जना मिलेर



**धर्मानन्द र विष्णु दाईले कुरा ठीकै हो, हामीले मासिक बचत गर्न गाह्रो हुन्छ होला, हामीले कहिलेकाहीँ चिसो पानी, तास खेल्ने जस्ता काम गर्ने गरेका थियौं, तर आजैबाट त्यो काम छोडी दिन्छौं, मासिक १०० बचत गर्न सक्छौं भनी आँट कस्नुभयो।**

संस्था दर्ता भयो । त्यसबेला हरिप्रसाद दाहालले मलाई २३ नम्बरमा राखिदिनुपर्‍यो भन्नुभएपछि उहाँलाई २३ नम्बरमा दर्ता गरिएको थियो । ९ नम्बरमा भने क्रमशः राखिएको थियो। संस्था दर्ता गर्ने बेलामा ३४ जना सदस्यको नामावली र विधान लिएर संस्थापक अध्यक्ष यज्ञराज ढुङ्गेल जानुभो र काभ्रेपलाञ्चोकको धुलिखेलमा दर्ता नं ८१/०५०/५१ मा संस्था दर्ता गराउनुभएको थियो ।

संस्था दर्ता भएपछि हामी सबैलाई खुशी लाग्नु स्वभाविक नै थियो । तर सहकारीको नामसमेत नसुनेका हामी काभ्रेबासीहरू २५ जना शिक्षक, ३ जना कर्मचारी, २ जना व्यापारी, ३ जना कृषक र १ जना सामाजिक कार्यकर्तासमेत ३४ जनालाई के गर्ने, कसरी सहकारी चलाउने केही मेलोमेसो थिएन । शुन्यबाट सहकारीको शुरुवात गर्‍यौं । ३४ जनामध्ये सबैजना एकै प्रकारको क्षमता वा हैसियत नभएको कारणले सबैजनाले मासिक १०० रूपैया बचत गर्न सक्छौं कि सक्दैनौं भन्ने शंका थियो । अझ शिक्षक, कर्मचारी, व्यापारीले त रु.१०० ले बचत गर्न सक्लान् तर किसान तथा अन्यले के गर्लान् भनेर सोच्नु परेको थियो । त्यसपछि ३ जना किसानसँग म आफैंले घरमा गएर बचतको बारेमा सोधैं । धर्मानन्द र विष्णु दाईले कुरा ठीकै हो, हामीले मासिक बचत गर्न गाह्रो हुन्छ होला, हामीले कहिलेकाहीँ चिसो पानी, तास खेल्ने जस्ता काम गर्ने गरेका थियौं, तर आजैबाट त्यो काम छोडी दिन्छौं, मासिक १०० बचत गर्न सक्छौं भनी आँट कस्नुभयो । त्यसपछि ज्ञानेन्द्र भाइलाई पनि त्यसै गरी मासिक बचत कसरी गर्छौ भनेर सोध्दा उनले म तास, रक्सी छाडिदिन्छु बरु डोका, नाम्ला थुन्से, चित्रा बुन्दै बेचेर भएपनि मासिक रु.१०० जम्मा गर्छु भनेर बाटो देखाएपछि सबैले बचत गर्न सक्छन् भन्ने विश्वासका साथ घरमा आएँ र बचत गराउने क्रम चल्दै गयो ।

त्यसपछि दिनानुदिन गाउँका मानिसहरूले जिज्ञासा राख्न थाले । उनीहरूले सहकारी संस्था खुलेको छ भन्छन् के हो ? यसले के गर्छ ?हामी पनि त्यसमा सदस्य बन्न पाइन्छ कि पाइँदैन ? भनेर सोध्न लागे । सदस्य बन्न चाहनेहरूलाई सदस्य बनाउने काम अगाडि बढ्दै गयो । सदस्यता वृद्धि भयो । रकम १०/१५ हजार हुन लाग्यो । म आफैं अचम्म मान्न लागैं । के गर्ने होला, सदस्य बनाउँदा ३४०० रूपैया बचतबाट शुरु गरेको, आज हेर्‍यो झन् बढ्छ, भोलि हेर्‍यो झन बढ्छ, यसरी पैसा बढेको देखेपछि सदस्यलाई पनि ब्याज दिनुपर्ला, बैंकले दिएको ब्याजले मात्र बचतलाई ब्याज दिन त पक्कै पुग्दैन होला भन्ने जिज्ञासा लाग्दै गयो । त्यसपछि यज्ञराज सरलाई भेटेर अब ऋण लगानी गर्नुपर्छ होला, पैसा धेरै हुन लाग्यो, के गर्ने भनेर सल्लाह गरें । अध्यक्षज्यूले कसैले ऋण खान्छन् कि भनेर सोध्नुपर्छ, यदि माग भयो भने ऋण दिनुपर्छ भन्नुभयो । त्यसपछि मैले धेरैलाई ऋण लिनको लागि सोधें तर कसैले पनि आँट कसेनन् ।

बल्लबल्ल ललित बहादुर कार्की सरले ठीकै छ नि त रु.१५००। ऋण म चलाउँछु भनेपछि पहिलो ऋण लगानी भयो र पहिलो ऋणी ललित सर हुनुभयो । उहाँले ऋण लिएर काम गर्न शुरु गरेपछि दोस्रो ऋणी कुमार चौलागाइँले मलाई पनि ४५०० ऋण दिनुस्, बोका खसी पाल्नुपर्‍यो भनी ऋण माग गर्नुभयो र ऋण चलाउनुभयो । त्यसपछि अरुले पनि ऋण लैजाने क्रम चल्न थाल्यो। शुरुमा घरका एकजना मात्र सदस्य भएकाको सदस्यहरूका घरमा भएका सबैलाई सदस्य बनाउने काम पनि शुरु भयो । त्यसपछि संस्थामा २०/३० हजार रूपैया जम्मा भएपछि अध्यक्षज्यूलाई मैले पैसा त धेरै जम्मा हुने रहेछ, अब एउटा गाडी (बस) किनौं र काम गरौं भनें। मेरो कुरा सुनेर अध्यक्षज्यूले हाँस्नुभयो र ठीकै छ काम गर्दै जाउँ न, पछि किनौंला भन्नुभयो । त्यसबेलासम्म हामी दुवै जनालाई सहकारीको सिद्धान्त, मूल्य र मान्यताबारे खासै थाहा थिएन ।

जे होस्, काम सुचारु चल्दै गयो। तर काम भने निकै जटिल थियो । मलाई राति निद्रा पनि लाग्दैनथ्यो । मनमा विभिन्न कुराहरू खेल्थ्यो । गाउँका सोझा सीधा, बेलामा खान, लाउन नपाउने सदस्यहरूले हाम्रो विश्वासमा बचत जम्मा गरेका थिए । संस्था स्थापना भएको २-३ वर्षसम्म





**त्यसपछि वर्षमा एकपटक विज्ञापन गरेर निश्चित मानिसहरू छानेर मात्र सदस्यता दिन थालियो । संस्थाले खुल्ला रूपमा सदस्य बनाउन रोकेपछि अन्यत्र पनि सहकारी संस्थाहरू खुल्ने क्रम चल्यो । अन्य ठाउँमा जनसचेतन जस्तै 'ज' बाट नामाकरण गरी संस्थाहरू खुले । त्यसक्रममा जनमुखी, जनचेतना, जनजागरण, जनउपकार, जनउत्थान, जनकल्याण, जनप्रभात आदि नामबाट चारैतिर संस्थाहरू खुले ।**

मैले मेरो घरमा अफिस राखेर झोला भिरेर प्रत्येक सदस्यको घर र बाटोमा भेटेर भए पनि बचत उठाउने काम गरेँ ।

संस्थाको आकार दिन प्रतिदिन बढ्दै गयो । रकम हजारबाट लाख हुन थाल्यो । सदस्य सयबाट हजार हुन लागे । त्यसपछि खुल्ला रूपमा सदस्य बनाउँदै आएकोमा यसलाई नियन्त्रण गर्दै जानुपर्छ भन्ने सबैजनाको सुझाव आयो । त्यसपछि वर्षमा एकपटक विज्ञापन गरेर निश्चित मानिसहरू छानेर मात्र सदस्यता दिन थालियो । संस्थाले खुल्ला रूपमा सदस्य बनाउन रोकेपछि अन्यत्र पनि सहकारी संस्थाहरू खुल्ने क्रम चल्यो । अन्य ठाउँमा जनसचेतन जस्तै 'ज' बाट नामाकरण गरी संस्थाहरू खुले । त्यसक्रममा जनमुखी, जनचेतना, जनजागरण, जनउपकार, जनउत्थान, जनकल्याण, जनप्रभात आदि नामबाट चारैतिर संस्थाहरू खुले । यसरी संस्थाहरू धेरै खुल्नु ठीक हो कि बेठीक हो यसलाई कसी लगाउने हतियार हामीसँग थिएन । यहाँ मात्र नभएर देशैभरि धेरैको संख्यामा सहकारी खुलेका थिए ।

सहकारीको आकार वृद्धिसँगै हामीले सहकारीका बारेमा खोज तथा अध्ययन गर्न थाल्यौं । राष्ट्रिय तथा अन्तर्राष्ट्रिय क्षेत्रमा सञ्चालित सहकारी संस्थाहरू कसरी चलेका छन्, त्यसको बारेमा संस्थाका अध्यक्ष यज्ञराज ढुङ्गेलज्यूले गहन अध्ययन गर्न थाल्नुभयो । यस क्रममा उहाँले देशका विभिन्न भागमा र विदेशमा समेत सहकारीको विभिन्न कार्यक्रम, तालिम, गोष्ठी, सेमिनारमा भाग लिन थाल्नुभयो । संस्थाको तर्फबाट यज्ञराज सरलाई तालिममा लाग्ने २०-४० हजार रूपैया खर्च व्यहोरेर क्यानडाको कोडी युनिभर्सिटीमा तालिमको लागि पठाउने निर्णय भयो । उहाँले क्यानडामा ६ महिनासम्म सहकारी क्षेत्रको अध्ययन गरेर आउनुभयो । त्यसपछि संस्था सञ्चालनमा धेरै परिवर्तनहरू आए । उहाँले क्यानडामा सिक्नुभएका कुराहरूलाई संस्थामा लागू गर्दै गयौं ।

त्यसपछि हामीले संस्थामा सदस्य धेरै बनाउनु हुँदैन भन्ने मान्यतामा परिवर्तन गऱ्यौं । उहाँले संस्थाको मेरुदण्ड सदस्य भएको कुरा बताउँदै सदस्य संख्या र पूँजी वृद्धि गर्दै जानुपर्ने तर्क राख्नुभएपछि सदाबहार सदस्य बन्न खुल्ला गर्ने निर्णय भयो । सदस्यता खुल्ला गरेपछि सञ्चालक, कर्मचारी सबै लागेर सदस्य बृद्धि गर्ने अभियानसमेत चलायौं ।

सदस्य बनाउने क्रममा सदस्य अनिवार्य बन्नैपर्छ भनी जबर्जस्ती पनि सदस्य बनाउन लागियो । यसरी जबर्जस्ती सदस्य बनाउँदा यहाँ म एउटा घटना सम्झन चाहन्छु - एकदिनको कुरा हो, यज्ञ सर र म रुद्रे भन्ने खेतमा धानको बिटा लगाइरहेका थियौं, यज्ञ सरलाई भेट्न भनी मेरा मामा धनप्रसाद लामीछाने आउनुभएको रहेछ । यज्ञ सरले मलाई 'ए पुस्कर आज शिकार मिल्यो त यहाँ आइज त' भनेर बोलाउनुभयो । त्यसपछि म गएँ र यज्ञ सरले हामीले सबैलाई सदस्य बनायौं, यो बुढो हामीले भनेको नमान्ने, त हात समात, म पैसा झिक्छु भनेपछि मामा हिंड्न खोज्नुभयो । मैले मामालाई समातें र यज्ञ सरले खल्तीमा हात हालेर पैसाको बिटो निकाल्नुभयो र सदस्य बन्न लाग्ने २८५ रूपैया निकालेर बाँकी पैसा खल्तीमा नै राखिदिनुभयो । मामा हामीसँग रिसाउनुभयो र त्यसपछि उहाँले जथाभावी गाली गरेर त्यहाँबाट हिंड्नुभयो । त्यसै दिन हामीले उहाँलाई सदस्यता नं. ११४ मा दर्ता गरी सदस्य बनायौं । त्यसपछि उहाँ हाम्रो सामुन्नेमा धेरै समय देखा पर्नुभएन ।

यस्ता उदाहरणहरू सयौं छन् । कसैलाई जबर्जस्ती सदस्य बनाएका थियौं भने कसैले पैसा छैन भन्दा आफ्ना खल्तीबाट पैसा दिएर पनि सदस्य बनाएका उदाहरण थुप्रै छन् । गाउँमा बस्ने मानिसहरूको आयस्रोत खासै केही थिएन । जीवन धान्न समेत धौ-धौ थियो । पुरुषहरू घेरा



**कसैलाई जबर्जस्ती सदस्य बनाएका थियौं भने कसैले पैसा छैन भन्दा आफ्ना खल्तीबाट पैसा दिएर पनि सदस्य बनाएका उदाहरण थुप्रै छन् ।**

फाटेका टोपी र टालेको दौरा लगाउँथे भने महिलाहरू टालेका गुन्यु लगाउँथे । अधिकांश मानिसहरू खाली खुट्टा हिंड्थे । पढ्न र पढाउन नसकेको अवस्था थियो । गाउँलेहरू पैसाको मुख देख्नका लागि घर छाडेर भारी बोक्न भारतको सिक्किम, खर्साङ, दार्जलिङ्गतिर जानुपर्ने अवस्था थियो । गाउँमा त्यस्तो वातावरणमा हुर्केका मानिसहरू विस्तारै-विस्तारै भए पनि सहकारीमा सदस्य बन्नुपर्ने रहेछ भनेर आकर्षित हुँदै गएका छन् । शुरुमा एकजना सदस्य बन्न नसक्ने परिवारहरू अहिले ओल्लो घर-पल्लोघर, माथिल्लो घर-तल्लो घरको उन्नति, प्रगति देखेपछि आफ्नो परिवारका सबैलाई सदस्य बनाइरहेका छन् भने संस्थाबाट ऋणको



**पढ्न नपाएकाहरूले आफ्ना बच्चालाई बोर्डिङ स्कुल पढाउन थालेका छन् । सामान्य पढाउने खर्च समेत जुटाउन नसक्नेहरूले आफ्ना छोराछोरीलाई अमेरिका, बेलायत, अष्ट्रेलिया, जापान, भारत र अन्य मुलुकमा पढाएर डाक्टर, इन्जिनियर, वैज्ञानिक बनाउँदै छन् । यी सबै काम गर्न सहकारीले आँट दिएको छ ।**

रूपमा पैसा झिकी कोही गाडी मालिक, कोही उद्योगपति, कोही व्यापारी, साहु, कोही विविध आयआर्जनका काम गरिरहेका छन् । घेरा फाटेको टोपी लगाउनेहरू ढल्के टोपी लगाउन थालेका छन् । टालेका गुन्यु लगाउनेहरू काँधमा सारी हालेर हिंड्न थालेका छन् । खाली खुट्टा हिंड्नेहरू महँगा जुत्ता लगाउन थालेका छन् । पढ्न नपाएकाहरूले आफ्ना बच्चालाई बोर्डिङ स्कुल पढाउन थालेका छन् । सामान्य पढाउने खर्च समेत जुटाउन नसक्नेहरूले आफ्ना छोराछोरीलाई अमेरिका, बेलायत, अष्ट्रेलिया, जापान, भारत र अन्य मुलुकमा पढाएर डाक्टर, इन्जिनियर, वैज्ञानिक बनाउँदै छन् । यी सबै काम गर्न सहकारीले आँट दिएको छ। ३४ जनाबाट शुरु भएको जनसचेतनमा आज २१ हजार बढी सदस्य पुगिसकेका छन् भने यो वृद्धिको क्रम अझ बढ्दो छ । पूँजी बढेर केही समयमै अर्ब पुग्न लागिसकेको छ ।

फेरि एकपटक म मामा धनप्रसाद लामीछानेले सदस्य भएको धेरैपछि भनेको केही कुराहरू यहाँ उल्लेख गर्न चाहन्छु । हामीले सदस्य बनाएपछि उहाँले बचत गर्दै जानुभयो । यसै क्रममा बचत गर्दै जाँदा खातामा १५ हजार रूपैया जम्मा भएपछि उहाँले भन्नुभयो - तिमीहरूले जवर्जस्ती खोसेको पैसा राक्षसले खोसेको होइन रहेछ, ईश्वरले खोसेको रहेछ, त्यसकारण मैले पहिला जानी नजानी तिमीहरूलाई गाली गरेको भए पनि माफ गरिदिनु, म त बुढो भइहालें, तिमीहरूलाई म आशिष दिन्छु, तिमीहरूले जे काम आँटे पनि सफल होस्, बोलेको बचन खेर नजाओस् । यही आशिष लागेर पनि होला पहिला पहिला खान, लाउन, हिंड्न, पढ्न नसक्ने अवस्थाका हामी गाउँले जीवन अहिले सबै चिजले सम्पन्न हुँदै गइरहेको अवस्था छ । मानिसहरूलाई सहकारीले कुनै न कुनै हिसावले सहयोग पुऱ्याएको छ र मद्दत गर्दै आएको छ । आजका दिनसम्म आइपुग्दा सहकारी अन्तर्राष्ट्रियस्तरमा पहिचान मात्र भएको हैन अग्रपङ्क्तिमै पुगेको छ ।

सहकारीलाई आजको अवस्थासम्म ल्याइ पुर्‍याउनका लागि २० वर्षसम्म कोषाध्यक्षको पदमा रही काम गरियो र हाल संरक्षकको रूपमा सल्लाह दिँदै आइरहेको छु । यस बीचका थुप्रै अनुभवहरू कुनै दिन विस्तारमा छुट्टै लेख्ने प्रयत्न गर्नेछु । सहकारी अभियान निरन्तर अघि बढिरहोस् । यसको माध्यमबाट सबै सदस्यहरूले सुख, शान्ति र समृद्धि पाउन्, यही शुभकामना व्यक्त गर्दछु ।

जय सहकारी !



# जनसचेतनका सञ्चालकहरू: स्थापनादेखि रजत जयन्तीसम्म



**हेमन्त चौलागाईँ**
उपाध्यक्ष

**१. लेखको उद्देश्य**

श्री जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि. २४ वर्ष पूरा गरी २५ वर्षमा प्रवेश गरी आफ्नो रजत जयन्ती समारोहको सन्दर्भमा प्रकाशन हुन लागेको 'जनसचेतन रजत स्मारिका २०७४' मार्फत संस्थाको स्थापनादेखि हालसम्मका सञ्चालकहरूको पृष्ठभूमि, संरचना, गठन प्रक्रिया, यसको प्रभावकारिता र आगामी दिनमा यसको थप सुदृढीकरणमा ध्यान दिनुपर्ने सवालहरूमा सदस्य तथा सरोकारवालाहरूबीच सार्वजनिक बहस भइ सुधारमा सहयोगी बन्न सकोस् भन्ने मनसायले यो लेख तयार पारिएको छ ।

**२.सञ्चालक समितिका दश कार्यकालहरू**

**क. तदर्थ समिति**

२०५० सालतिर दोलखा जिल्लामा आधुनिक सहकारी अभियानको शुरुवात भइसकेको थियो । २०४८ सालमा सहकारी ऐन लागू भएपछि जिल्लामा सहकारी संस्था खुल्ने क्रमको शुरुवात भयो । जिल्लाका जिरीलगायतका स्थानमा सहकारी संस्थाहरू खुल्न थालेपछि काब्रे गाविस र आसपासका विद्यालयका शिक्षकहरूमध्ये हनुमन्तेश्वर माध्यमिक विद्यालय काब्रेका प्रधानाध्यापक यज्ञराज ढुङ्गेलको अगुवाइमा जनसचेतन बचत तथा ऋण सहकारी संस्था लिमिटेडको मिति २०५० साल असोज महिनाको २२ गते शुक्रबार (८ अक्टोबर १९९३) स्थापना भयो र सोही दिन ७ सदस्यीय एक तदर्थ समितिको गठन गरियो । यस तदर्थ समितिमा अध्यक्ष यज्ञराज ढुङ्गेल, उपाध्यक्ष गोपीकृष्ण शर्मा, सचिव पुण्य प्रसाद घिमिरे, कोषाध्यक्ष पुस्कर कुमार दाहाल र सदस्यहरू हरि प्रसाद दाहाल, बोमहरी दाहाल, तथा भीमप्रसाद दाहाल (स.नं.१३) रहेका थिए । यिनीहरूमध्ये सबै शिक्षक थिए । संस्थाका संस्थापकहरूमध्ये पनि २५ जना शिक्षक नै थिए । संस्था स्थापनाकालमा केही व्यक्ति किसान र अन्य पृष्ठभूमिका भए पनि तदर्थ समितिमा रहन सकेनन् । संस्थापकहरूमा कोही पनि महिला नभएका कारण तदर्थ समितिमा रहने कुरै भएन ।

**ख. पहिलो कार्यकाल**

संस्थाको प्रारम्भिक साधारण सभा २०५० माघ २३ गते सम्पन्न भयो । यसले पनि यज्ञराज ढुङ्गेलको अध्यक्षतामा ९ सदस्यीय सञ्चालक समितिको निर्वाचन गऱ्यो । जसमा उपाध्यक्ष भवानी प्रसाद घिमिरे, सचिव पुण्य प्रसाद घिमिरे, कोषाध्यक्ष पुस्कर कुमार दाहाल, सदस्य गोपीकृष्ण शर्मा, सदस्यहरूमा नाम कुमारी शिवाकोटी, कृष्ण कुमार लामा, बोमहरी दाहाल, सदस्य विष्णु प्रसाद दाहाल रहनुभएको थियो । तदर्थ समितिको उपाध्यक्ष रहेका गोपीकृष्ण शर्मा यस साधारण सभाबाट सदस्य भएका छन् भने संस्थापकमध्येका एक भवानी प्रसाद घिमिरे उपाध्यक्ष बनेका छन् । अध्यक्ष, उपाध्यक्ष, सचिव र कोषाध्यक्षलगायत सदस्यहरू बोमहरी दाहाल, विष्णु प्रसाद दाहाल र गोपीकृष्ण शर्मा संस्थापक हुन् भने अन्य सञ्चालक त्यसपछि सदस्य बनेका हुन् । यस साधारण सभाले भने एकजना महिला सदस्यलाई पनि सञ्चालकमा निर्वाचित गरेको छ । यस संस्थामा सञ्चालक बन्ने नाम कुमारी शिवाकोटी पहिलो महिला सञ्चालक हुन् । २०५१ साल भाद्र २४ गतेबाट सचिव पुण्य प्रसाद घिमिरेले छोडी लेखा समितिको सचिव रहेका हरि प्रसाद दाहाल सञ्चालक समितिको सचिवमा निर्वाचित भए । यस साधारण सभाले तदर्थ समितिमा रहेका छ जनालाई सञ्चालकमा निरन्तरता दियो । यस सञ्चालक समितिमा शिक्षकबाहेक एकजना व्यापारी पनि थपिए । लेखा समितिको संयोजकमा भने प्रतिष्ठित समाजसेवी चन्द्रबहादुर दाहाल चुनिए भने सचिवमा हरिप्रसाद दाहाल र सदस्य धर्मानन्द दाहाल निर्वाचित भएका थिए ।

**ग. दोस्रो कार्यकाल**

मिति २०५२ साल फागुन २१ गतेको साधारण सभाले पुनः यज्ञराज ढुङ्गेलको अध्यक्षतामा ९ सदस्यीय सञ्चालक

समितिको चयन गऱ्यो । यसमा ६ जना अघिल्लो सञ्चालक समितिमा रहेका व्यक्ति छन् भने तीन जना नयाँ सञ्चालक थपिएका छन् । नयाँ थपिएका मध्ये एकजना महिला रोच कुमारी चौलागाइँ हुन भने अरु दुईजना केशव प्रसाद दाहाल र केदार प्रसाद दाहाल रहेका छन् । यिनीहरूमा पनि ७ जना शिक्षक छन्, एकजना व्यापारी र एकजना सामाजिक कार्यकर्ता हुन् । मुख्य पदहरूमा पुरानै व्यक्तिले निरन्तरता दिएका छन् । अघिल्लो कार्यकालमा सञ्चालक रहेका कृष्ण कुमार लामा यस पटक लेखा समितिमा रहेका छन् । यस अवधिमा लेखा समितिमा संयोजक धर्मानन्द दाहाल र सचिवमा नारायण प्रसाद दाहाल चयन भएका छन् ।

**घ. तेस्रो कार्यकाल**

पौष महिनाभित्र वार्षिक साधारण सभा सम्पन्न गर्नुपर्ने कानुनी व्यवस्था भएको र सञ्चालक समितिको पदावधि फागुन महिनामा सकिने परम्परा रहँदै आएकोमा सबै सञ्चालकले राजीनामा दिई समयावधिभित्रै साधारण सभा गरी नयाँ सञ्चालक समितिको चयन गर्न भन्दै २०५२ साल फागुन २१ गते निर्वाचित सञ्चालक समिति छ महिनामा नै विगठन गरी २०५३ साल भाद्र १५ गते साधारण सभा सम्पन्न गरी नौ सदस्यीय नयाँ सञ्चालक समितिको निर्वाचन गरियो । यस साधारण सभाले पनि यज्ञराज ढुङ्गेललाई नै अध्यक्षमा निर्वाचित गऱ्यो । अघिल्लो साधारण सभाबाट निर्वाचित सचिव हरि प्रसाद दाहालको स्थानमा लेखा समितिका सचिव रहेका नारायण प्रसाद दाहाललाई ल्याइयो । यस निर्वाचनबाट अन्य सञ्चालक भने आ-आफ्नो पदमा कायमै रहे । शिक्षक, व्यापारी, सामाजिक कार्यकर्तासहित एकजना निजामती कर्मचारी सञ्चालक समितिमा थपिए । यस कार्यकालको लेखा समितिमा अघिल्लो कार्यकाल संयोजक रहेका धर्मानन्द दाहाल नै संयोजक र कृष्ण कुमार लामा सदस्य भए भने लेखा समितिको सचिवमा संस्थापक सदस्य बाल कुमार दाहाल चयन भए । लेखा समिति पनि पुरै शिक्षककै नेतृत्वमा गयो ।

**ङ. चौथो कार्यकाल**

संस्थाको पाँचौं वार्षिक साधारण सभा २०५५ साल असोज १० गते सम्पन्न भयो । यस साधारण सभाले पनि यज्ञराज ढुङ्गेलकै नेतृत्वमा नौ सदस्यीय सञ्चालक समितिको निर्वाचन गऱ्यो । यस साधारण सभाबाट यसअघि सचिव रहेका नारायण प्रसाद दाहालले एक तह बढुवा लिई उपाध्यक्षमा फड्को मारे । उपाध्यक्ष रहेका भवानी प्रसाद घिमिरे शिक्षकको जागिर छोडी राजनीतिमा आए तर यसमा अपेक्षाकृत सफलता मिल्न सकेन । तत्पश्चात संस्थामा केही समय जागिरे जीवनसमेत बिताइ उनले सञ्चालक र कर्मचारी दुवैबाट बिदा लिए । यसपटक सञ्चालक समितिको सचिवमा हनुमन्तेश्वर उच्च माविका शिक्षक भीम प्रसाद दाहाल चयन भए । कोषाध्यक्षमा पनि पूर्ववतः पुस्कर कुमार दाहाल निर्वाचित भए । सदस्यमा बोमहरी दाहाल र रोचकुमारी चौलागाइँ (यस अघि प्रेमकुमारी नाम उल्लेख गरिएको) ले निरन्तरता पाए । तर सञ्चालक समितिमा तीन जना नयाँ अनुहार आए । तारा प्रसाद पन्त, गोपालध्वज श्रेष्ठ र घनश्याम घिमिरेले सञ्चालक सदस्यको हैसियतमा प्रवेश पाए । यस समितिमा ६ जना शिक्षक थिए । यस अघिसम्म शिक्षकको परिचय पाएका कोषाध्यक्ष पुस्कर कुमार दाहालले भने काब्रे गाउँ विकास समितिको अध्यक्ष जितेर जनप्रतिनिधिको पहिचान बनाए । यस अवधिमा सञ्चालक समितिमा एकजना मात्र महिला सञ्चालक निर्वाचित भए । यसअघि सञ्चालक रहेकी नाम कुमारी शिवाकोटीले सञ्चालक हुनबाट यहींदेखि बिदा लिएकी छन् । यस साधारण सभाले धर्मानन्द दाहाललाई नै तेश्रो कार्यकालका लागि लेखा समितिको संयोजक छान्यो । लेखा समितिको सचिव रहेका बाल कुमार दाहाल र सदस्य कृष्ण कुमार लामालाई यस साधारण सभाले बिदा गऱ्यो भने माधव प्रसाद दाहाल (स.नं. १४१) लाई सचिव र माधव प्रसाद दाहाल (स.नं. ३८६) लाई सदस्यमा स्वागत गऱ्यो ।

**च. पाँचौं कार्यकाल**

मिति २०५७ साल असोज १४ गते सम्पन्न सातौं साधारण सभा तथा पाँचौं सञ्चालक समितिको निर्वाचनबाट पुनः यज्ञराज ढुङ्गेलको अध्यक्षतामा ११ सदस्यीय सञ्चालक समितिको निर्वाचन भयो । यसबाट उपाध्यक्ष नारायण प्रसाद दाहालले बिदा लिए र तारा प्रसाद पन्तले उपाध्यक्ष पद ग्रहण गरे । सचिव र कोषाध्यक्षमा पनि पुरानै अनुहारले निरन्तरता पाए । यसअघि सञ्चालक समितिमा रहिसकेका गोपालध्वज श्रेष्ठले पुनः सोही पदमा निरन्तरता पाए भने हेमन्त चौलागाईं, कमल दाहाल, होम प्रसाद आचार्यसहित ३ जना नयाँ महिला अनुहार आए । रूपा दाहाल, गोमा दाहाल, र मन्दिरा दाहालको आगमनसंगै यसअघि तीन कार्यकाल



सञ्चालक भएकी रोचकुमारी चौलागाईंले सदस्यबाट नै बिदा लिइन् । यस साधारण सभाबाट सञ्चालक समितिमा महिला सहभागितामा केही बृद्धि भयो । लेखा समितिको संयोजकमा रही तीन कार्यकाल सेवा गरेका धर्मानन्द दाहालले विदा लिएसंगै उक्त पदमा सामाजिक कार्यकर्ता ऋषिकेश उप्रेतीको उदय भयो । संगै लेखा सचिवमा माधव प्रसाद दाहाल (स.न..३८६) र सदस्यमा संस्थापक सदस्यसमेत रहेका राजेन्द्रप्रसाद ढुङ्गेल निर्वाचित भए ।

### छ. छैटौं कार्यकाल

अघिल्ला साधारण सभाबाट विनियम संसोधन गरी सञ्चालक समितिको कार्यकाल पाँच वर्षको बनाइयो  र संस्थाको १२ औं साधारण सभा तथा छैठौं सञ्चालक समितिको निर्वाचन २०६२ साल असोज १५ गते सम्पन्न भयो । यस निर्वाचनले पनि यज्ञराज ढुङ्गेलको नेतृत्वमा १५ सदस्यीय सञ्चालक समितिको चयन गर्‍यो । पाँचवटै पदाधिकारीमा अघिकै निरन्तरता कायम राख्दै २०५५ मा सम्पन्न पाँचौं साधारण सभाबाट उपाध्यक्ष निर्वाचित भई एक कार्यकाल बिदा लिएका नारायण प्रसाद दाहालको सञ्चालक सदस्यको रूपमा पुनरागमन भएको छ । गोपालध्वज श्रेष्ठले तेश्रो कार्यकालमा पनि सदस्यका रूपमा आफूलाई निरन्तरता दिएका छन भने एक कार्यकाल सञ्चालक छोडेकी रोचकुमारी चौलागाइँले पनि आफूलाई पुनः सञ्चालक सदस्यको रूपमा उभ्याएकी छन् । यस कार्यकालको चौथो वर्षसम्म सञ्चालक रही सो पदबाट मिति २०६६ भाद्र १२ गते राजीनामा दिएर कमल बहादुर दाहाल संस्थाको व्यवस्थापकमा नियुक्त भए । यस निर्वाचनबाट रत्न प्रसाद शिवाकोटी र शिव प्रसाद खतिवडा नयाँ अनुहारको रूपमा देखापरे । यसै साधारण सभाबाट पहिलोपटक सञ्चालक समितिको सदस्यमा निर्वाचित विन्दुदेवी दाहालले असन्तुष्टि जनाउँदै सञ्चालक सदस्य निर्वाचित भएको १७ महिना पुरा नहुँदै मिति २०६३ फागुन २८ गते पदबाट राजीनामा दिइन् । यस पटकको निर्वाचन जनसचेतनको इतिहासमा अलि बढी दुःखद नै रह्यो । सञ्चालक समितिको निर्वाचन परिणामप्रति असन्तुष्टि जनाउँदै एक समूह (तत्कालिन नेकपा माओवादी) ले संस्थामा आक्रमण गर्ने र सञ्चालक र केही कर्मचारी तथा केही सदस्यलाई कालो सूचीमा राखी भौतिक कारवाही गर्नेसम्मको चेतावनी दिएपछि संस्था केही दिनसम्म न बन्द न खुलाको अवस्थामा थियो । केही कर्मचारीबाट जेनतेन संस्थाको ढोका खुला राख्ने काम भयो र सामान्य कारोवार मात्र सञ्चालन भयो । यस क्षेत्रका नागरिकहरूको आर्थिक तथा सामाजिक रूपान्तरणको एउटा महत्वपूर्ण साधन बनिसकेको जनसचेतन सञ्चालन गर्ने कार्यलाई आत्माबोध गर्दै ४ जना शेयर सदस्यलाई मिति २०६३ फागुन २८ गते सञ्चालक समितिमा मनोनयन गरियो । यही कार्यकै लागि मात्र विनियम संसोधन गरी सञ्चालक समिति १५ सदस्यीय बनाइएको थियो । यसरी मनोनित सञ्चालकहरूमा क्रमशः राधाकृष्ण दाहाल, गगन चर्माकार, दिनानाथ ढुङ्गेल र पम्वेलमु शेर्पा हुन् । मनोनित सञ्चालकमध्ये राधकृष्ण दाहाल उपाध्यक्षमा पराजित भएका हुन् । यस मनोनयनपछि  भौतिक कारवाहीको लागि प्रकाशित कालो सूची पनि सेतोमा परिणत भयो र संस्था सामान्य रूपमा सञ्चालनमा आयो ।  यस साधारण सभाबाट लेखा समितिमा संयोजक धर्मानन्द दाहाल नै भए भने मीन प्रसाद दाहाल सचिवमा निर्वाचित भए । यसअघि लेखा समितिमा रही कार्य गरेका र बिदा भएका कृष्ण कुमार लामा पुनः लेखा समिति सदस्यमा आए ।

### ज. सातौं कार्यकाल

२०६७ साल असोज २२ गते संस्थाको १७ औं साधारण सभा तथा सातौं सञ्चालक समितिको लागि निर्वाचन भयो । यस निर्वाचनले सातौं कार्यकालको लागि पनि यज्ञराज ढुङ्गेललाई नै नेतृत्व सुम्पियो । उपाध्यक्ष पदबाट तारा प्रसाद पन्तले बिदा लिएसंगै १५ सदस्यीय सञ्चालक समितिको उपाध्यक्षमा यसअघि तीन कार्यकाल सचिव रहेका भीम प्रसाद दाहाल निर्वाचित भए । दुई कार्यकाल निरन्तर सञ्चालक सदस्य रहेका हेमन्त चौलागाइँले सचिवको जिम्मेवारी समालिरहँदा कोषाध्यक्षमा पुस्कर कुमार दाहालको निरन्तरता अध्यक्षमा यज्ञराज ढुङ्गेलको सरह नै रह्यो । यस साधारण सभाबाट संस्थामा सह-सचिवको व्यवस्था गरियो । यो पदमा पहिलोपटक नारायण प्रसाद दाहाल आसिन भए । यस निर्वाचनबाट सञ्चालक समितिलाई लैंगिक, जातीय र भौगोलिक दृष्किोणबाट अलि बढी समावेशी बनाइएसंगै सोही अनुरूपको सञ्चालक समितिको निर्वाचन गरियो । यसअघि सञ्चालक भइसकेका केशव प्रसाद दाहाल पुनः सदस्यमा आए । साथै रजुना शर्मा, पुस्पराज भट्टराई, नवराज खड्का, कल्पना उप्रेती, पूर्ण बहादुर कुँवर, स्वस्थानी कुँवर र रिने शेर्पा नयाँ अनुहार सञ्चालकमा निर्वाचित भए । यसअघि एक कार्यकाल सञ्चालक भइ बिदा लिएकी मन्दिरा दाहालले पनि सञ्चालक सदस्यमा स्थान पाइन् । तीन कार्यकालसम्म सञ्चालक रहिसकेका गोपालध्वज श्रेष्ठ यस साधारण सभाबाट लेखा समितिको संयोजकमा आए । सचिवमा मीन प्रसाद दाहाल र सदस्यमा कृष्ण कुमार लामा

निर्वाचित भएसंगै अघिल्लै कार्यकालको निरन्तरता भयो ।

**झ. आठौं कार्यकाल**

२०७० साल कार्तिक १ गते सम्पन्न २० औं साधारण सभा तथा आठौं सञ्चालक समितिको निर्वाचनबाट संस्थाको नेतृत्वमा ठूलो परिवर्तन आयो । स्थापना कालदेखि सातौं कार्यकालसम्म निर्वाचित भई बीस वर्षसम्म निरन्तर रूपमा नेतृत्व प्रदान गर्दै आएका अध्यक्ष यज्ञराज ढुङ्गेल र कोषाध्यक्ष पुस्कर कुमार दाहालले संगसंगै बिदा लिए । यज्ञराज ढुङ्गेलको स्थान संस्थाका संस्थापक सदस्यसमेत रहेका सचिव र उपाध्यक्षको जिम्मेवारी कुशलतापूर्वक पार गर्दै लामो कोर्स पुरा गरेका भीम प्रसाद दाहालले लिए । उपाध्यक्षमा सचिव रहेका हेमन्त चौलागाईं बढुवा भएसंगै सचिवमा लेखा समितिमा सचिव रही लामो अनुभव संगालेका मीन प्रसाद दाहाल आए। एक कार्यकाल सञ्चालक रहेका राधाकृष्ण दाहाल सह-सचिवमा निर्वाचित भए भने कोषाध्यक्षको जिम्मेवारी  नारायण प्रसाद दाहालले लिए । रोचकुमारी चौलागाईं, पूर्ण बहादुर कुँवर, स्वस्थानी कुँवर, गगन बहादुर विशंखे, रिने शेर्पा र रजुना शर्माले निरन्तरता पाए । यसबाट भरत के.सी., शम्भु प्रसाद दाहाल र कृष्ण प्रसाद रिमाल सञ्चालक सदस्यको रूपमा नयाँ अनुहार भित्रिए । नाम्दु कार्यक्षेत्रबाट महिला सञ्चालक खाली भएकोमा २०७१ असोज २७ गते सम्पन्न २१ औं वार्षिक साधारण सभाबाट सीमा लामालाई निर्वाचित गरियो । यस सञ्चालक समितिमा पनि महिला सञ्चालकको संख्या चार रहेको थियो । लेखा समिति संयोजकमा दोश्रो कार्यकालका लागि पुनः गोपालध्वज श्रेष्ठलाई नै जिम्मेवारी दियो । सचिवमा टिकाराम घिमिरे र सदस्यमा पुष्पराज दाहाललाई निर्वाचित गरियो ।

**ञ. नवौं कार्यकाल**

संस्थाको २३ औं वार्षिक साधारण सभा तथा नवौं सञ्चालक समितिको निर्वाचनबाट पुनः दोस्रो कार्यकालका लागि भीम प्रसाद दाहाललाई निर्वाचित गरियो । उपाध्यक्षमा हेमन्त चौलागाईं र सचिवमा मीन प्रसाद दाहाल पनि सोही पदमा कायम भए भने कोषाध्यक्ष रहेका नारायण प्रसाद दाहाल सह-सचिवमा रहे । दुई कार्यकाल संस्थाको सञ्चालक रही व्यवस्थापकको समेत जिम्मेवारी समालिसकेका कमल दाहाल कोषाध्यक्षमा निर्वाचित भएका छन् । रोचकुमारी चौलागाईं, स्वस्थानी कुँवर र भरत के.सी. पुराना अनुहार हुन् भने शिवराम ढकाल, शरदचन्द्र सापकोटा, चक्र बहादुर वि.क., फुलकाजी तमाङ, टंक बहादुर सुनुवार,



**कार्यकालको हिसावले सबैभन्दा धेरै नारायण प्रसाद दाहालले काम गरेको देखिन्छ। उनी लेखा समितिमा एक कार्यकाल र सञ्चालक समितिमा ६ पटक निर्वाचित भएका छन्। अध्यक्षबाहेक सञ्चालक समितिका सबै पद ग्रहण गर्ने व्यक्ति उनै हुन।**

सुमिता शिवाकोटी र अस्मिता दाहाल पहिलोपटक संस्थामा सञ्चालक भएका व्यक्ति हुन्। गोपालध्वज श्रेष्ठ तेश्रो पटक लेखा समितिको संयोजक बनेका छन् जसमा राधाकृष्ण दाहाल सचिव र पुस्पराज दाहाल सदस्य रहेका छन्। हाल यही सञ्चालक समिति र लेखा समिति विद्यमान् छ ।
संस्थामा अध्यक्षको रूपमा यज्ञराज ढुङ्गेल र कोषाध्यक्षमा पुस्कर कुमार दाहालले सात कार्यककाल अर्थात २० वर्ष निरन्तर नेतृत्व गरे । उनीहरूपछि कार्यकालको हिसावले सबैभन्दा धेरै नारायण प्रसाद दाहालले काम गरेको देखिन्छ। उनी लेखा समितिमा एक कार्यकाल र सञ्चालक समितिमा ६ पटक निर्वाचित भएका छन् । अध्यक्षबाहेक सञ्चालक समितिका सबै पद ग्रहण गर्ने व्यक्ति उनै हुन । उनी सबैभन्दा पहिला लेखा समितिको सचिव भए भने त्यसपछि सञ्चालक समितिको सचिव, उपाध्यक्ष, सदस्य, सह-सचिव, कोषाध्यक्ष हुँदै पुनः सह-सचिवको जिम्मेवारीमा छन्। रोचकुमारी चौलागाईं सबैपटक सञ्चालक समितिको सदस्य मात्र भएकी छन । चौलागाईं पनि हाल सम्ममा ६ पटक सञ्चालक भइसकेकी छन् । तीनपटक सचिव, एक पटक उपाध्यक्ष भई दोस्रो कार्यकाल अध्यक्षको जिम्मेवारीमा रहेका भीम प्रसाद दाहाल संस्थाका संस्थापक सदस्य र पहिलो पुस्ताका सहकारी नेता हुन । हाल सञ्चालकमा रहेकामध्ये उनी नै एकमात्र संस्थापक सदस्य हुन् । दुई कार्यकाल १० वर्ष सञ्चालक, एक कार्यकाल सचिव र दोश्रो कार्यकाल उपाध्यक्षको जिम्मेवारीमा रहेका हेमन्त चौलागाईं यही संस्थाको प्रतिनिधित्व गर्दै लामो समयसम्म जिल्ला वचत संघको नेतृत्व गरी हाल जिल्ला सहकारी संघको अध्यक्षको जिम्मेवारी निर्वाह गरिरहेका छन्। तदर्थ समिति गठनदेखि हालसम्मका सञ्चालकहरूमा हरी प्रसाद दाहाल र रत्न प्रसाद शिवाकोटीको निधन भइसकेको छ भने भीम प्रसाद दाहाल (स.नं १३), केदार प्रसाद दाहाल, माधव प्रसाद दाहाल (स.नं.३८६) र गोमा दाहालले सदस्यता त्याग



गरेका छन् ।

संस्थाको तदर्थ समितिदेखि हालसम्मका सञ्चालकहरूको पृष्ठभूमि हेर्दा सञ्चालकहरू समाजका प्रतिष्ठित व्यक्तिहरू देखिन्छन् । विद्यालयका प्रधानाध्यापकहरू, शिक्षकहरू, निर्वाचित जनप्रतिनिधिहरू, सामाजिक कार्यकर्ता, व्यापारी समाजसेवी आदि मानिसहरू जसले समाजमा ठूलो विश्वास आर्जन गरेका छन् त्यस्ता व्यक्ति भएका कारण नै समाजका मानिसहरूले संस्थामा सदस्यता लिएका छन् । ग्रामीण क्षेत्रमा स्थापित यस सहकारीमा यति धेरै सदस्य र पूँजी निर्माण हुनु भनेको सञ्चालक माथिको विश्वासनै मुख्य हो ।

**३. सञ्चालक समितिमा समावेशी प्रतिनिधित्व**

**क. लैंगिक तथा जातीय प्रतिनिधित्व**

**सञ्चालक समितिमा लैंगिक तथा जातीय प्रतिनिधित्वको तथ्यांकलाई हेर्दा तदर्थ समितिदेखि हालसम्म जम्मा ११४ जना सञ्चालकले नेतृत्व लिएका छन् । जसमा ९० जना पुरुष र २४ जना महिला रहेका छन् । महिला जम्मा २१% मात्र नेतृत्वमा आएको देखिन्छ । ब्राह्मण/क्षेत्री समुदायबाट ९८ जना (७९%), जनजाति १२ जना (१०.५%) र दलितबाट जम्मा ४ जना (३.५%) नेतृत्वमा पुगेका छन् । जम्मा संख्यामा ११४ जनाले नेतृत्व गरेको देखिएता पनि खासमा हालसम्म ५१ जना (४४.७%) सञ्चालकको मात्र प्रतिनितिधित्व भएको छ । बाँकी ६३ (५५.३%) जनाले पटक-पटक गरी सञ्चालक समितिमा सहभागिता जनाएका छन् ।** महिलाहरूमा जम्मा २४ जनाले सञ्चालक समितिमा प्रतिनिधित्व गरेको देखिएता पनि खासमा १२ जना महिलामात्र हालसम्म नेतृत्वमा पुगेका छन् । जनजातिमा वास्तविक रूपमा ७ जना व्यक्तिले प्रतिनिधित्व गरेका थिए । दलित नेतृत्वको कुरा गर्ने हो भने जम्मा २ जनाले मात्र स्थान पाएका छन् । तीन कार्यकालसम्म एकजनाले सहभागिता जनाए भने २०७३ बाट दलित प्रतिनिधिमा परिवर्तन भएका छन् । मुख्य नेतृत्व अर्थात पदाधिकारीमा हालसम्ममा ब्राह्मण/क्षेत्री समुदायका पुरुषबाहेक कोही पनि पुगेको देखिँदैन । महिला, दलित र जनजातिबाट सदस्यमा मात्र सहभागिता भएको छ । यसरी हेर्दा संस्थाको सञ्चालक समिति पूर्ण समावेशी संरचनामा पुग्न अझै प्रयन्त गर्नुपर्ने देखिन्छ । यद्यपि माथिको प्रतिनिधित्वलाई समावेशी सन्तुलनको सवालसंग जोड्नका लागि निम्न तथ्यांक र सवाल पनि संगसंगै हेर्नु आवश्यक छ, जुन केलाएर हेर्न बाँकी छः

- सहकारीको कार्यक्षेत्रमा कुल लैंगिक तथा जातीय जनसंख्यामध्ये कति प्रतिशतले सदस्यता लिए ? के सदस्यताको पहुँचमा असन्तुलन देखिन्छ ?
- सदस्यता लिएका कुल लैंगिक तथा जातीय जनसंख्याको प्रतिशत कति छ ? उक्त अनुपातअनुसार सञ्चालक समितिको संरचना कत्तिको सन्तुलन छ ?
- सहकारीमा कस्तो समावेशीता किन हुनुपर्छ ? त्यतातिरको सन्तुलन कसरी विकास भइरहेको छ ?

माथिको विश्लेषणलाई तलको तालिकामा प्रस्तुत गरिएको छः

**तालिका १ः सञ्चालक समितिको समावेशी स्वरूप**

| क.सं. | कार्यकाल | | समावेशी संरचना | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| | देखि | सम्म | जम्मा | पुरुष | महिला | ब्राह्मण/क्षत्री/अन्य | जनजाति | दलित |
| १ | २०५०/६/२२ | २०५०/१०/२३ | ७ | ७ | ० | ७ | ० | ० |
| २ | २०५०/१०/२३ | २०५२/११/२१ | ९ | ८ | १ | ८ | १ | ० |
| ३ | २०५२/११/२१ | २०५३/५/१५ | ९ | ७ | २ | ९ | ० | ० |
| ४ | २०५३/५/१५ | २०५५/६/१० | ९ | ८ | १ | ८ | १ | ० |
| ५ | २०५५/६/१० | २०५७/६/१४ | ९ | ८ | १ | ८ | १ | ० |
| ६ | २०५७/६/१४ | २०६२/६/१५ | ११ | ८ | ३ | १० | १ | ० |
| ७ | २०६२/६/१५ | २०६७/६/२२ | १५ | ११ | ४ | १२ | २ | १ |
| ८ | २०६७/६/२२ | २०७०/७/१ | १५ | ११ | ४ | १२ | २ | १ |
| ९ | २०७०/७/१ | २०७३/७/२७ | १५ | ११ | ४ | १२ | २ | १ |
| १० | २०७३/७/२७ | हालसम्म | १५ | ११ | ४ | १२ | २ | १ |
| जम्मा | | | ११४ | ९० | २४ | ९८ | १२ | ४ |
| प्रतिशत | | | १०० | ७९ | २१ | ८६ | १०.५ | ३.५ |

**ख. पेशागत विवरण**

सञ्चालकहरूको पेशागत संलग्नतालाई हेर्ने हो भने ११४ जना जम्मा सञ्चालकमध्ये ७३ जना शिक्षक (६४%), २५ जना सामाजिक कार्यकर्ता (राजनीतिक कार्यकर्ता, गैससकर्मी आदिः २२%) ७ जना किसान (६.१%), ६ जना निजामति कर्मचारी (५.३%) र ३ जना (२.६%) व्यापारी पृष्ठभूमिका रहेका छन्। यसरी हेर्दा स्थानीयस्तरमा सञ्चालित सहकारी हुन् वा सामुदायिक वन हुन् वा राजनीतिक दल, जहाँ पनि शिक्षकहरूकै बाहुल्यता देखिन्छ । शिक्षकहरू स्वभाविक रूपमा बुद्धिजीवी कहलाइएका हुन्छन् । उनीहरूलाई रोजगारीको अवसर पनि स्थानीयस्तरमा मिल्ने गर्दछ । उनीहरू समाजका विश्वाशिला र भरपर्दा स्थानीय बुद्धिजीवि हुन्। शिक्षकहरूले सामाजिक विश्वास जितेका कारण पनि सहकारी सफल भएको हो । समाजका अरु व्यक्तिहरूले नेतृत्व गरेको भन्दा शिक्षकको नेतृत्वलाई सर्वस्वीकार्य रूपमा लिइयो । समुदायस्तरमा सञ्चालित सामुदायिक संगठनहरू सफल हुनुको पछाडिको मुख्य कारण पनि यही नै देखिन्छ।

**ग. सञ्चालक समितिमा दोहोरिएको नेतृत्व**

नेतृत्व कसले बढी लियो भन्ने अवस्थालाई हेर्दा अध्यक्षमा यज्ञराज ढुंगेलले तदर्थ समिति समेत गरी ८ पटक अध्यक्ष बन्नुभएको थियो भने हालका अध्यक्ष भीम प्रसाद दाहालले दोस्रो कार्यकाल नेतृत्व गरिरहेका छन्। त्यस्तै उपाध्यक्षमा भवानी प्रसाद घिमिरेले ३ पटक जिम्मेवारी लिएका छन, तारा प्रसाद पन्तले २ पटक र हेमन्त चौलागाइँले दोश्रो कार्यकालका लागि काम गरिरहेका छन् । सचिव पदमा भीम प्रसाद दाहालले ३ कार्यकाल बिताएका छन् र हाल दोश्रो कार्यकालका लागि मीन प्रसाद दाहालले काम गरिरेका छन्। त्यस्तै सह-सचिवमा नारायण प्रसाद दाहालले २ कार्यकाल जिम्मेवारी पाएका छन् । स्थापनाकालदेखि कोषाध्यक्षको जिम्मेवारी लिएका पुस्कर कुमार दाहालले ८ पटकसम्म सो जिम्मेवारीलाई निरन्तरता दिए । उनीबाहेक यो पदमा हालसम्म कसैले दोहोऱ्याउने अवसर पाएका छैनन् । सदस्यमा १४ जना व्यक्तिले २ देखि ६ कार्यकालसम्म पनि जिम्मेवारी लिएको देखिन्छ। अध्यक्षमा २ जना व्यक्तिले १० कार्यकाल नेतृत्व लिए भने उपाध्यक्षमा हालसम्म ३ जनाले मात्र दोहोऱ्याउने अवसर प्राप्त गरेका छन्। सचिवमा ५ कार्यकालसम्म २ जनाले काम गरेका छन् । सह-सचिवमा एक जनाले २ कार्यकाल काम गरेका छन् । त्यसैगरी कोषाध्यक्षमा एकै व्यक्तिले ८ कार्यकालसम्म काम गरे र त्यसपछि कुनैले पनि दोहोऱ्याउने अवसर पाएक छैनन्। सदस्यमा भने १४ जना व्यक्तिले जम्मा ३९ पटक दोहोऱ्याएको देखिन्छ। यो संख्या सालाखाला १ जना बराबर ३ पटक हुन जान्छ। २३ जना सञ्चालकले २ कार्यकाल, ६ जनाले ३ कार्यकाल, १ जनाले ५ कार्यकाल, १ जनाले ६ कार्यकाल र २ जनाले ८ कार्यकालसम्म काम गरेको देखिन्छ।

पुरानो नेतृत्वप्रतिको विश्वास, नयाँ नेतृत्वको लागि तयार नहुनु, नेतृत्व लिन सक्ने युवा शक्ति विदेश पलायन हुनु, नेतृत्व लिएपछि के हुन्छ भन्ने कुरा सदस्यले ध्यान नदिनु, सदस्यहरूमा प्रतिस्पर्धी भावना नहुनु जस्ता कुराले नेतृत्व बारम्बार दोहोरिरहने अवस्था आएको हो । यसले नयाँ नेतृत्व विकास गर्ने विषयलाई ओझेलमा पारे पनि पुरानो नेतृत्वले काम गरिरहँदा अनुभबहरू बटुलिने र क्षमतामा पनि बृद्धि हुँदै जाने हुन्छ र संस्थालाई सही नेतृत्व प्रदान गर्न मद्दत नै पुगेको छ।

यद्यपि माथिको प्रतिनिधित्वलाई समावेशी सन्तुलनको सन्दर्भमा हेरिरहँदा नेतृत्व कुन अवस्थामा, कस्तो प्रक्रियाबाट, कुन हदसम्म दोहोरिनु स्वीकार्य हो ? नेतृत्व चक्र कसरी वैज्ञानिक बनाउने ? भन्ने सवाल पनि संगसँगै बहसमा ल्याउनु आवश्यक हुन्छ।

**५. सञ्चालकहरूको गठन र परिचालनका अनुभवहरू**

**क. समिति गठन**

तदर्थ समिति गठनदेखि हालसम्म १० वटा सञ्चालक समिति गठन प्रक्रियालाई हेर्दा अधिकांश समिति सर्वसम्मत रूपमा चयन भएका छन्। सञ्चालक समितिका २ वटा निर्वाचनमा केही पदको लागि मतदान प्रक्रियाद्वारा सञ्चालक समिति चयन गरिएको भन्दा बाहेक सबै सञ्चालक समिति सर्वसम्मत चयन भएका थिए । कतिपय पदाधिकारीको पदका लागि जस्तै अध्यक्ष र कोषाध्यक्ष साथै केही सदस्य पदका लागि कुनै निर्वाचनमा पनि एक -एकजनाको भन्दा बढीको दरखास्त नै परेन। अन्य केहीमा दरखास्त परे पनि सहमतिमा आवश्यकभन्दा बढीका दरखास्तहरू फिर्ता लिई सर्वसम्मत गरियो।

निर्वाचन गर्दा पराजित हुने सदस्यमा प्रतिशोधको भावना रहिरहने र संस्थाप्रतिको हार्दिकता घटेर संस्था र सदस्यबीचको दूरी बढेर जान्छ र अन्ततोगत्वा कतिपय परि स्थितिमा संस्था नै त्याग्ने र अर्को संस्था जन्माउनेसम्मका

 

घटनाहरू पनि देखिएका छन्। सर्वसम्मत निर्वाचन प्रणालीले प्रतिस्पर्धाबाट नेतृत्व छान्ने प्रक्रियालाई अस्वीकृत गर्दछ जसले सक्षम नेतृत्व नआउन पनि सक्छ। सहकारी आफैंमा लोकतान्त्रिक पद्धतिलाई संस्थागत गर्ने थलो हो । यति हुँदाहुँदै पनि हाम्रो सन्दर्भमा सर्वसम्मत निर्वाचन प्रणाली नै प्रभावकारी हुने धेरैपटकका अभ्यासले देखाएका छन् ।

**ख. परिचालन**

सामान्यतया सञ्चालक समितिहरू सक्रिय रूपमा सञ्चालन भए । सञ्चालक समितिका केही सदस्यहरू अपेक्षाकृत सक्रिय हुन नसके पनि समग्रमा सञ्चालक समिति सक्रिय रह्यो । अघि सारेका योजनाहरू अधिकांश पूरा भए। तर उपसमितिहरू सबैजसो चल्न सकेनन्। कतिपय उपसमितिले एक बैठक पनि नबसी कार्यकाल सम्पन्न गरेका छन्। उपसमिति धेरै संख्यामा गठन गरेर संस्थालाई भार थप्नुभन्दा आवश्यक्ताअनुसार थोरै उपसमिति गठन गरी तीनलाई परिचालन गर्दा ठीक हुने हाम्रो अनुभव छ। उपसमिति गठन र परिचालनले सञ्चालक समितिले अघि सारेका कार्यक्रम कार्यान्वयनमा सहयोग पुगेको छ।

**६.निश्कर्ष**

संस्था सञ्चालनका क्रममा केही उतारचढाव आए। विशेष गरी २०६२ सालको सञ्चालक समितिको निर्वाचनको सन्दर्भलाई लिएर संस्थाले ठूलो चुनौतिको सामना गर्नुपर्‍यो। बुद्धिमतापूर्ण तरिकाले त्यस समस्याको समाधान गर्न सकिएकोले आज संस्था यहाँसम्म आइपुग्न सफल भएको छ । सञ्चालक समितिको नवौं कार्यकालसम्मको निर्वाचनको घटनालाई हेर्दा अधिकांश निर्वाचन सर्वसम्मत भएका छन् भने सदस्य पदमा कुनै पटक प्रत्यक्ष मतदान प्रक्रियाबाट सञ्चालक समिति निर्वाचित भएका छन्। सबै खाले बाधा, व्यवधानहरूलाई कुशलतापूर्वक व्यवस्थापन गर्दै संस्था यस अवस्थासम्म आइपुगेको छ। यतिखेर संस्था २१ हजार ५ सय भन्दा बढी सदस्यहरूलाई आवद्ध गर्दै, झन्डै ९३ करोडको पूँजी परिचालन, १ मुख्य कार्यालय, ७ वटा सेवाकेन्द्र र १ सम्पर्क कार्यालयमार्फत ३२ जना कर्मचारीले सदस्यहरूलाई सेवा दिइरहेका छन्। एसियाली ऋण महासंघबाट एक्सेस सिल्भर ब्राण्ड दिलाई आगामी दिनमा एक्सेस गोल्ड र प्लाटिनमसम्मको यात्रा तय गरी सञ्चालकहरूले यस संस्थालाई समाजको एक अभिन्न अंगको रूपमा स्थापित गराउन सफल भएका छन्। यति हुँदाहुँदै पनि मुख्यतया संस्थाको बढ्दो छवि र दायित्व, समावेशी प्रतिनिधित्व र सक्षम नेतृत्वको छनौटबीच कसरी सन्तुलन गर्दै लैजाने भन्ने विषयमा आगामी दिनमा अझ प्रष्ट र प्रभावकारी रणनीति बनाएर अघि बढ्नु आवश्यक भइसकेको छ।

**अन्तमा,**

संस्थालाई यो अवस्थासम्म ल्याइपुऱ्याउन योगदान गर्नुहुने आदरणीय अग्रज यज्ञराज ढुङ्गेल र पुस्कर कुमार दाहाललगाएत सञ्चालक, कर्मचारी, शेयर सदस्य र सरोकारवाला सबैमा हार्दिक सलाम गर्दै सहकारी अभिवादन व्यक्त गर्दछु।

***जय सहकारी !!! जय जनसचेतन !!!***



# सहकारी संस्थाको प्रवर्धनमा लेखा सुपरीवेक्षण समितिको भूमिका

**गोपालध्वज श्रेष्ठ**
संयोजक, लेखा सुपरीवेक्षण समिति

## १. लेखा समितिको महत्व

'One for all and all for one' अर्थात एकले थुकी सुकी सबैले थुकी नदी, 'United we bargain, Divided we lose' एकतामा प्राप्ती र विभाजनमा क्षतिको सिद्धान्तबाट निर्दिष्ट सहकारी संस्थाहरू शेयर सदस्यहरूको सहकार्यमा आधारित सेवामूलक वित्तीय संस्था हो । यसले शेयर सदस्यहरूबाट शेयर तथा बचत निक्षेप संकलन गरी सदस्यहरूको मागमा आधारित सुरक्षित ऋण प्रवाह गरेर विशेषतः बचत तथा ऋणको सेवा प्रदान गरे तापनि अन्य सामाजिक सुरक्षाका कार्यक्रमहरूमार्फत आफ्ना गतिविधिहरू सदस्यमाझ पुऱ्याउँदै आइरहेको छ । प्रदान गरिएका सेवाहरू नेपाल सरकारको प्रचलित सहकारी ऐन, कानून, मापदण्ड र साधारणसभाको मर्मअनुसार भए नभएको रेखदेख र लेखाजोखा गरी नभएमा सञ्चालक समितिलाई गर्न गराउन सिफारिस गर्ने निकायको रूपमा नेपाल सरकारको सहकारी ऐन, कानून र सहकारी मापदण्डमा हरेक सहकारीमा तीन सदस्यीय लेखा सुपरीवेक्षण समितिको व्यवस्था गरिएको छ ।

लेखा परीक्षण समिति र सञ्चालक समिति दुवैको छनौट साधारण सभाबाट भए तापनि व्यवहार र कार्यगत स्वभावमा पृथक तर परिणाममा एक अर्काका परिपूरक निर्वाचित एकाइ हुन् । एकले अर्काका कार्यलाई नजीकबाट अवलोकन गर्छ र संस्थाको गतिविधिमा सुशासन प्रदान गर्दछ । संस्था सञ्चालनका प्रक्रियालाई नियमितता प्रदान गर्ने कार्य सञ्चालक समितिले गर्दछ भने सो कार्य विधिगत र प्रक्रियागत भए नभएको परीक्षण गर्ने कार्य लेखा सुपरीवेक्षण समितिले गर्दछ । लेखा समितिले संस्थामा वाचडगको भूमिका निर्वाह गर्दछ । तर, हाम्रो परिवेशमा यस समितिको जिम्मेवारीलाई साँघुरिएको घेराबाट हेर्दा र सोही मुताविक भूमिका निर्वाह गर्दा नेपाली सहकारीको इतिहासमा सानातिना र दीर्घकालिन असर पर्ने घटनाहरू पनि भएका छन् । आपसी परिपूरक भूमिकालाई समझदारीपूर्वक निर्वाह गर्न यस्ता मतभेदहरू समयमै समाधान गर्नुपर्छ ।

## २. लेखा सुपरीवेक्षकलाई हुनुपर्ने आधारभूत जानकारीहरू

बचत तथा ऋण सहकारी संस्थाको प्रभावकारी सुपरीवेक्षणको लागि सुपरीवेक्षकलाई निम्न विषयहरूमा जानकारी हुनु आवश्यक हुन्छः

» सहकारीको अन्तर्राष्ट्रिय सिद्धान्त, मूल्य तथा मान्यताहरू ।
» संस्थाको परिकल्पना, ध्येय र उद्देश्यहरूको जानकारी ।
» सहकारीका विशेषताहरू ।
» सहकारीमा बारम्बार प्रयोग हुने शव्दावलीहरू ।
» वित्तीय संस्थाहरू र बचत तथा ऋण सहकारी संस्थावीच फरक ।
» सहकारी सञ्चालन सम्वन्धी अन्तर्राष्ट्रिय सिद्धान्तहरू ।
» बचत तथा ऋण सहकारी अभियानको इतिहास ।
» आफ्नो संस्थाको पृष्ठभूमि तथा इतिहास ।
» संस्थाबाट प्रदान गरिएका सेवाहरू ।
» सुपरीवेक्षण समितिका दायित्वहरू ।
» संस्थाका कर्मचारीको संरचना र भूमिका तथा कार्य सम्पादनको स्तर ।
» लेखा परीक्षणका प्रविधिहरू ।
» बैठकको तयारी र कार्य योजना ।
» गल्ती सँच्चाउने विधि ।
» आर्थिक सुचकाङ्कको अनुगमन विधि ।
» आपसी स्वार्थले निम्त्याउने विवाद व्यवस्थापन गर्ने तरिका ।
» संस्थाको विनियम, नीतिहरू र निर्णयहरू ।
» संस्थाले निर्वाह गर्नुपर्ने कानूनी दायित्व ।
» ऋण लगानीमा हुनसक्ने जोखिम व्यवस्थापन ।
» ऋण असुली प्रकृया ।
» संस्थाको सम्पत्तिको सुरक्षा व्यवस्था ।



### ३. लेखा सुपरीवेक्षण समितिको जिम्मेवारीहरू

#### क. एकरूपता, संगति तथा सन्तुलनको परीक्षण

» सहकारी सञ्चालनको कानूनी आधार र प्रावधान ।
» सहकारीको दीर्घकालीन व्यवस्थापन ।
» योजना, योजना कार्यान्वयनको प्रभावकारिता र पारदर्शिता ।
» सहकारी वृद्धि र विकासको राष्ट्रिय र अन्तर र्राष्ट्रिय स्तर ।
» वित्तीय जोखिमको सुरक्षित अवस्था ।
» प्रभावकारी प्रवोधिकरण ।

#### ख. अध्ययन, विश्लेषण गर्ने क्षेत्रहरू

» साधारण सभाबाट भए गरेका निर्णयहरूको कार्यान्वयनको अवस्था र प्रभावकारिता ।
» सञ्चालक समिति र अन्य उपसमितिका निर्णय प्रक्रिया र कार्यान्वयनको अवस्था तथा प्रभावकारिता ।
» उत्पादित सेवाको गुणस्तरीयता ।
» मानव संसाधनको अवस्था र त्यसको प्रभावकारी गतिशीलता ।
» उत्पादित सेवाको बजार व्यवस्थापन र सदस्यको सन्तुष्टि ।
» नियमनकारी निकायको सुझावको कार्यान्वयनको अवस्था ।
» वित्तीय सुरक्षण ।
» जोखिम व्यवस्थापन ।
» आर्थिक लेखा अभिलेख पद्धति र प्रभावकारिता ।
» राष्ट्रिय र अन्तर्राष्ट्रिय मापदण्डमा संस्थाको स्तरीयता ।
» सदस्यहरूको गुनासो व्यवस्थापन ।

#### ग. अपनाउनु पर्ने विधिहरू

» सहकारी ऐन, नियम, कानून, मापदण्ड र विनियमको अध्ययन ।
» योजना निर्माण र जिम्मेवारी बाँडफाँड ।
» सहकारी अभिलेख र क्रियाकलापको सूक्ष्म अध्ययन, तुलना र अन्तर ।
» छलफल ।
» अभिलेखीकरण ।
» प्रतिवेदन र सो को प्रवोधिकरण ।

लेखा समितिले सहकारीको सेवाको स्तर, उत्पादन विधि र त्यसको वित्तीय व्यवस्थापनको अवस्थाको विश्लेषण समय समयमा प्रक्रियागत ढंगबाट सम्पादन गरी सही तवरबाट गल्ती सँच्याउने र सो को प्रवोधिकरण भएमा संस्थाको छवि उच्च रही आम जनमानसमा सकारात्मक धारणाको विकास भइ राष्ट्रिय अर्थतन्त्रमा एक खम्वाको भूमिका निर्वाह गर्न सक्नेछ ।

### ४. जनसचेतनमा मेरो अनुभव

सहकारीको आन्तरिक सुपरीवेक्षणको अनुभव र सैद्धान्तिक ज्ञानको अभावमा पनि जनसचेतनमा जुन भूमिका निर्वाह गर्ने र सिक्ने अवसर पाइ एकखालको सफलता पनि प्राप्त गरियो, त्यसको सबै श्रेय जनसचेतन साकोसप्रति समर्पण गर्न चाहान्छु । अघिल्ला सुपरीवेक्षण समितिको बैठकका निर्णयलाई शुरुका दिनमा हाम्रा कामकारवाहीको मार्ग निर्देशनको रूपमा अपनाइए तापनि पछिल्ला गतिविधि सहकारीका मापदण्डको अधीनमा रही आन्तरिक सुपरीवेक्षण गर्दा सम्वद्ध सबैबाट प्राप्त भएका सहयोगी भूमिका अविस्मरणीय र अनुकरणीय छन् । कर्मचारी तथा सञ्चालकहरूबाट आन्तरिक परीक्षणले संस्था सञ्चालनमा औंल्याइएका कमी-कमजोरी हटाउन सञ्चालक समितिको वैठकमा नियमित छलफलको विषय बनाएर संस्थागत रूपमा लेखा सुपरीवेक्षण समितिको भूमिकालाई महत्व दिएकोले जनसचेतनलाई अहिलेको उँचाइमा पुग्न सहयोगी बनेको छ ।

यसैगरी शेयर सदस्यको सञ्चित रकम जनसचेतनमा राष्ट्रिय र अन्तर्राष्ट्रिय आँखाले सूक्ष्म परीक्षण गर्दा सुरक्षित पाइएको छ । दैनिक गतिविधि नीति र कार्यविधि अनुसार छन् । सदस्य सेवा र त्यसको गुणस्तर समयसापेक्ष छ । ऋण प्रवाह सुरक्षित छ । आंशिक भाखा नाघेका ऋणीसमेत ऋण नीतिको दायराभित्र आउने क्रम जारी छ भने विगतमा रहेका केही अप्ठ्यारा ऋणको असुलीसमेत व्यवस्थित हुने क्रममा रहेका छन् । बचतबाट नै आर्थिक सम्पन्नताको प्राप्ति हुने भएकोले खर्च भई बाँकी बचत रकमलाई बचतमा जम्मा गरी लाभ लिएमा जनसचेतनले देखेको सपना र सदस्यले देखेको सपना पुरा हुने कुरामा कुनै दुविधा देखिंदैन ।

आगामी दिनमा संस्थालाई अझ प्रभावकारिता प्रदान गर्न लेखा सुपरीवेक्षण समितिप्रति पूर्ण जवाफदेही रहने गरी एक लेखा अधिकृतको व्यवस्था गरी दैनिक रूपमा संस्थाको गतिविधिको परीक्षण गर्न कार्यालयीय व्यवस्थापनसमेत हुनुपर्ने आवश्यक्ता महशुस गरिएको छ ।



# जनसचेतनको भौतिक व्यवस्थापन

**मीन प्रसाद दाहाल**
सचिव

प्रत्येक संगठन सञ्चालनका लागि भौतिक र अभौतिक वस्तुहरूको आबश्यक्ता पर्दछ । भौतिक वस्तु अन्तर्गत जग्गा, कार्यालय भवन, फर्निचर, सेवा केन्द्र तथा सम्पर्क कार्यालय, यातायातका साधन र विद्युतीय सामग्रीहरू पर्दछन् । कार्यालय सञ्चालन गर्ने, आफ्ना सदस्यहरूलाई सेवा प्रदान गर्ने, भौतिक साधन र स्रोतको उचित परिचालन गरी तन-मन कर्मले संस्थाको काममा रात दिन नभनी खट्ने कर्मचारी र अवैतनिक सञ्चालकहरू संस्थाका अभौतिक साधनहरू हुन् । आजको वैज्ञानिक युगमा विज्ञान र प्रविधिले आविष्कार गरेका कम्प्युटर, ईमेल-इन्टरनेट र टेलिफोन जस्ता विद्युतीय सामग्रीहरू पनि भौतिक विकासका सूचकहरू हुन् । यहाँ संस्थाले जोडेका यिनै पूर्वाधारहरूमध्ये केही उल्लेख्य वस्तुहरूको चर्चा गरिन्छ ।

## १. जग्गा तथा भवन

संस्था स्थापना भएको २ वर्षपछि २०५२ सालमा दोलखा जिल्ला काब्रे गाउँ विकास समितिको वडा नं. ६ मा रहेको सार्वजनिक जग्गामा त्यस बेलाका शेयर सदस्यबाट जनही रु.७५।- का दरले सहयोग लिइ संस्थाले आफ्नै २ तले भवन निर्माण गरेको थियो । यो भवनको गारो, ढुङ्गा, माटो र छानो जस्तापाताले बनेको थियो । यो भवनमा एउटा सानो सभाहल र ३ वटा कार्यालय सञ्चालन गर्ने कोठाहरू थिए । यो भवन सार्वजनिक रूपमा तालिम तथा गोष्ठीहरू सञ्चालनमा उपयोग भइरहेको थियो । २०७२ सालको बिनाशकारी भूकम्पबाट यो भवनको पूर्णरूपमा क्षति भयो ।

२०६१ सालमा दोलखा जिल्ला तत्कालीन काब्रे गाउँ विकास समितिको वडा नं ४ मा रु. ६०,०००।- मा २७५ वर्ग मिट जग्गा खरिद गरी २ तले पक्की भवन निर्माण गरिएको छ । उक्त भवन रु. १,४९,२९६ लागतमा निर्माण भएको थियो । हाल वैत्यश्वर गाउँ पालिका अन्तर्गत एउटा सेवा केन्द्रको कार्य सञ्चालन भइरहेको सो भवनमा एउटा बैठक कक्ष, एउटा पाहुना कोठा, काउन्टर र ३ वटा कार्यकक्ष गरी जम्मा ६ कोठाहरू छन् । यस भवनको अगाडि एउटा



**शेयर सदस्यबाट जनही रु.७५।- का दरले सहयोग लिइ संस्थाले आफ्नै २ तले भवन निर्माण गरेको थियो । यो भवनको गारो, ढुङ्गा, माटो र छानो जस्ता पाताले बनेको थियो । यो भवनमा एउटा सानो सभाहल र ३ वटा कार्यालय सञ्चालन गर्ने कोठाहरू थिए ।**

प्रतिक्षलयको पनि निर्माण गरिएको छ । यसमा काउन्टर अगाडि सदस्यहरू बस्ने कोठा पनि छ ।

हाल २०७०/०७१ सालमा वैत्यश्वर गाउँपालिका वार्ड नं ५ मैनापोखरी बजारमा रहेको १३० वर्ग मिटर जग्गामा ४ तले पक्की भवन निर्माण भएको छ। उक्त भवन संस्थाको केन्द्रिय कार्यालय हो। केन्द्रिय कार्यालयमा बचत, ऋण, मनी ट्रान्सफर, सदस्य सहायता डेस्क, टेलरहरू, मुख्य कार्यकारी अधिकृत कक्ष, आर्थिक तथा प्रशासन कक्ष, ऋण विभाग,अध्यक्षको कक्ष, सञ्चालक समिति कक्षहरू र हलको रूपमा सञ्चालन भइरहेको छ। सामाजिक संघ संस्थाहरूले पनि संस्थाको नीतिभित्र रही उक्त हल उपयोग गरिरहेका छन् । केन्द्रिय कार्यालय आधुनिक फर्निचर र विद्युतीय सामग्री साथै इन्टनेट सुविधा सम्पन्न छ ।

## २. सेवा केन्द्र तथा सम्पर्क कार्यालय

अहिले जनसचेतन साकोसले दोलखा जिल्लाभरि आफ्नो कार्यक्षेत्र विस्तार गरेको छ । प्रत्येक क्षेत्रका सदस्यहरूलाई छिटो छरितो तवरले सेवा प्रदान गर्न कालिन्चोक गाउँपालिकाको सुन्द्रवतीमा, भीमेश्वर नगरपालिकाको चरिकोटमा, मेलुङ गाउँपालिकाको पवटी, वैत्यश्वर गाउँपालिकाको नाम्दु, काब्रे र मिर्गे साथै जिरी नगरपालिकाको ठुलोपातलमा सेवा केन्द्रहरू स्थापना गरी सेवा प्रदान गरिएको छ । त्यस्तै कामको सिलसिलामा काठमाडौं बसोबास गर्ने शेयर सदस्यहरूको हितलाई



ध्यानमा राखी उनीहरूलाई छिटो छरितो तवरले सेवा प्रदान गर्न भक्तपुरको कौशलटारमा एउटा सम्पर्क कार्यालयको स्थापना गरिएको छ। काठमाडौं सम्पर्क कार्यालयबाट साना ऋण वितरण, सम्पूर्ण ऐच्छिक खाताका कार्यहरू र ऋण बुझ्ने कार्यहरू सञ्चालन गरिन्छ। सेवा केन्द्रहरू र सम्पर्क कार्यालय सञ्चालन भएका कार्यालयहरू भाडामा लिएर सञ्चालन गरिएका छन्।

### ३. कार्यालय सामग्रीहरू

सबै केन्द्रहरूमा आधारभूत सामग्रीहरूको परिमाण २०० भन्दा बढी रहको छ जसमा दराज, टेबल, कुर्सी, सोफा, सेफ, र्‍याक, बेञ्च, क्लिनर आदि सामग्रहिरू रहेका छन्।

यसैगरी विद्युतीय सामग्रीहरू १०० भन्दा बढी छन् जसमा कम्प्युटर, ल्यापटप, टेलिफोन, प्रोजेक्टर, टिभी, प्रिन्टर, फाटोकपी, स्क्यानर, क्यामेरा, जेनेरेटर, इन्भर्टर, नगद गन्ने मेसिन, सिसी टिभी आदि रहेका छन्। यातायाततर्फ २ वटा मोटर साइकल मात्र रहेका छन्।

### ४. भौतिक व्यवस्थापनका सबल पक्षहरू

- पक्की भवन भएकोले संस्थाको सम्पति सुरक्षामा सजिलो।
- आवश्यक साधन र स्रोत भएकोले छिटो, छरितो काम सम्पादन गर्न सजिलो।
- कम्प्युटर प्रणलीबाट लेखा राखिएको छ।
- सेवा केन्द्र तथा सम्पर्क कार्यालय भएकोले सदस्यहरूले आफ्नै अनुकूलतामा सेवा सुविधा लिन पाएका छन्।
- संस्थाप्रतिको आकर्षण बढेको छ।
- संस्थाको जुनसुकै कार्यालयको लेखा तुरुन्तै केन्द्रमा हेर्न सजिलो।

### ५. चुनौतिहरू

- सेवा केन्द्रमा भाडामा कार्यालय सञ्चालन भएको पर्याप्त सुविधा दिन कठिनाइ।
- सबै केन्द्रमा चाहेजति सामग्रीहरू उपलब्ध गराउन अझै बाँकी।
- प्रविधिहरू नयाँ थप हुँदै जानु।

### ६. गर्नुपर्ने कार्यहरू

१. सेवा केन्द्रमा  आफ्नै कार्यालय भवन बनाउनुपर्ने।
२. यातायातका साधनहरू वृद्धि गर्नुपर्ने।
३. केन्द्रिय कार्यालय परिसरमा गाडी पार्किङ्गको व्यवस्था हुनुपर्ने।
४. फर्निचर तथा कार्यालय सामानहरू अध्यावधिक गर्दै लानुपर्ने।



# एक्सेस गोल्डको गन्तव्यतिर जनसचेतन

**कृष्ण कुमार श्रेष्ठ**
प्रमुख कार्यकारी अधिकृत

## १. आरम्भ

नेपालमा एक्सेस ब्राण्डिङ कार्यक्रमको अवधारणा वि.स. २०६५ सालमा आएको हो । एसियाली ऋण महासंघ (ACCU) ले नेफ्स्कुनमार्फत नेपालका प्रारम्भिक बचत तथा ऋण सहकारी संस्थाहरूमा यो कार्यक्रम त्यतिखेरबाट सञ्चालन गरिरहेको छ । बचत तथा ऋण सहकारी संस्थाहरूलाई समुदायको सुरक्षित वित्तीय गन्तव्यको रूपमा स्थापित गरी गुणस्तरीय सेवा प्रदान गर्न सक्षम बनाउने हेतुले यो कार्यक्रम तयार भएको छ । नेपालमा वचत तथा ऋण सहकारी संस्थाहरूको बृद्धि र विकाससंगै यसलाई पर्याप्त मात्रामा नियमन, नियन्त्रण र प्रवर्द्धन गर्न सम्बन्धित निकायहरूबाट आवश्यक मात्रामा ध्यान पुऱ्याउन नसकिरहेको परिप्रेक्ष्यमा एक्सेस ब्राण्डिङ कार्यक्रम एउटा प्याकेजको रूपमा आएको छ जसले वचत तथा ऋण सहकारी संस्थाहरूलाई सबल, सुरक्षित र सदस्यहरूलाई समृद्ध बनाउनको लागि समाधान तथा उपायको रूपमा काम गर्ने गर्दछ ।

## २. के हो एक्सेस ब्राण्डिङ ?

एक्सेस ब्राण्डिङ कार्यक्रम व्यालेन्स स्कोर कार्डको सिद्धान्तमा आधारित वचत तथा ऋण सहकारी संस्थाहरूको गुणस्तर सुनिश्चितता सम्बन्धी अन्तर्राष्ट्रियस्तरको प्रमाणीकरण गर्ने कार्यक्रम हो । ACCESS को पूरा रूप A1 Competitive Choice for Excellence in Service and Soundness हो । गुणस्तर परीक्षणको लागि यसले विभिन्न ८६ वटा सूचकाङ्कहरूबाट संस्थाको ४ वटा आन्तरिक पक्षहरूको विश्लेषण गर्दछ । पहिलो वित्तीय पक्ष, दोश्रो सदस्यपक्ष, तेश्रो आन्तरिक व्यवसाय प्रक्रिया पक्ष र चौथौ सिकाइ तथा समृद्धि पक्ष । वित्तीय पक्षले संस्थालाई सबल र सुरक्षित बनाउन, सदस्य पक्षले गुणस्तरीय वस्तु तथा सेवा र सदस्यहरूको सन्तुष्टि कायम गर्न, आन्तरिक व्यवसाय



**जनसचेतनले शुरु गरेको एक्सेसको त्यो यात्रा आज एक्सेसको सिल्भरस्तरको ब्राण्डिङसम्म पुगेको छ । जनसचेतनको अबको यात्रा एक्सेस गोल्ड हुँदै प्लाटिनमसम्म पुग्ने हो ।**

परिवेशले कार्यगत सक्षमता र प्रतिस्पर्धी अवस्था कायम राख्न र सिकाई समृद्धि पक्षले जानकार र संलग्न सञ्चालक तथा सक्षम र सन्तुष्ट कर्मचारीहरू बनाउको लागि आवश्यक मार्गनिर्देशन गर्दछ ।

## ३. एक्सेस ब्राण्डिङ कार्यक्रममा जनसचेतनको यात्रा आरम्भ

जनसचेतन वचत तथा ऋण सहकारी संस्था नेपालमा एक्सेस ब्राण्डिङ कार्यक्रमको पहिलो व्याचमा सहभागी संस्था हो । वि.स.२०६५ सालदेखि नै जनसचेतनको सहभागीता उक्त कार्यक्रममा रहँदै आएको छ । पहिलो व्याचमा जनसचेतनलयागत काभ्रेपलाञ्चोक जिल्लाका ३ वटा र भक्तपुर जिल्लाका ३ वटा गरी जम्मा ७ वटा वचत तथा ऋण सहकारी संस्थाहरू सहभागी थिए । उक्त ७ वटा वचत तथा ऋण सहकारी संस्थाहरूमध्ये सन् २०६९ साल भाद्रमा फिलिपिन्सको मनिलामा आयोजित ACCU फोरममा ५ वटा मात्र संस्थाहरूले ब्रोञ्जस्तरको ब्राण्ड पाउन सफल भएका थिए । लगातारको मेहनतका बावजुद २०७४ साल असारसम्म आइपुग्दा पहिलो ब्याचका ७ वटै संस्थाहरूले उक्त ब्राण्ड पाउन सफल भइसकेका छन् ।

एक्सेस ब्राण्डिङ कार्यक्रमको पहिलो अभिमुखीकरण कार्यक्रम काभ्रेपलाञ्चोक जिल्लाको धुलिखेलमा भएको थियो । सो कार्यक्रममा १० वटाभन्दा बढी संस्थाहरूले सहभागिता



जनाएका थिए । एक्सेस ब्राण्डिङ कार्यक्रममा भाग लिनको लागि शुल्क बुझाउनु पर्दथ्यो । कार्यक्रममा बाँडिएको अंग्रेजी र नेपाली भाषाका हाते पुस्तिका प्राप्त गरिसकेपछि कतिपय संस्थाहरूलाई अध्ययन गरेर आफैं लागू गर्न सकिन्छ भन्ने लाग्यो र उनीहरूले शुल्क तिरेर सो कार्यक्रममा सहभागिता जनाएनन् । लेखेको कुरा अध्ययन गर्दैमा सबै कुरा लागू गर्न सकिँदैन, यसको लागि नियमित अनुगमन, शिक्षण र सहजीकरण आवश्यक हुने ठहर गर्दै जनसचेतनलगायत ७ वटा सहकारी संस्थाहरूले शुल्क तिरेर यो कार्यक्रममा सहभागिता जनाए । जनसचेतनले शुरु गरेको एक्सेसको त्यो यात्रा आज एक्सेसको सिल्भरस्तरको ब्राण्डिङसम्म पुगेको छ । जनसचेतनको अबको यात्रा एक्सेस गोल्ड हुँदै प्लाटिनमसम्म पुग्ने हो ।

### ४. संस्थाहरूको सहभागिता र ब्राण्डिङ

एक्सेस ब्राण्डिङ कार्यक्रममा सहभागी भएपश्चात संस्थाको गुणस्तरमा आउने परिवर्तनले गर्दा धेरै वचत तथा ऋण सहकारी संस्थाहरू हिजोआज यो कार्यक्रममा सहभागी हुने उद्देश्य राख्दछन् । यद्यपि यो कार्यक्रममा सहभागिता जनाई संस्थालाई निर्धारित अनुशासनमा राख्ने कुरा भने फलामको चिउरा चपाउनु जतिकै गाह्रो विषय हो । कार्यक्रममा सहभागिता जनाउने बित्तिकै ब्राण्ड पाउने पक्का हुँदैन । यसका सूचकाङ्कहरूले तोकेको मापदण्ड संस्थामा पुऱ्याएपछि मात्र ब्राण्ड प्रमाणीकरण हुन्छ ।

हाल नेपालमा ४७ वटा संस्थाहरूले एक्सेस ब्राण्डिङ कार्यक्रममा सहभागिता जनाइरहेका छन् । २०७४ असारसम्मको तथ्याङ्कको आधारमा नेपाल तथा वाह्य राष्ट्रहरूबाट जम्मा २२ वटा वचत तथा ऋण सहकारी संस्थाहरूले एक्सेस ब्राण्डको प्रमाणीकरण पाउने भएका छन्। जसमध्ये एक्सेस सिल्भरस्तरको ब्राण्ड जनसचेतनलगायत नेपालका ४ वटा र फिलिपिन्सका २ वटा गरी ६ वटा संस्थाहरू र एक्सेस ब्रोञ्जस्तरको ब्राण्ड नेपालका १५ वटा र इण्डोनेशियाको १ वटा गरी १६ वटा संस्थाहरू रहेका छन् ।

### ५. एक्सेस ब्राण्डिङ्मा सहभागितापछि जनसचेतनमा आएका परिवर्तनहरू

एक्सेस ब्राण्डिङ कार्यक्रममा सहभागिता जनाइसकेपछि जनसचेतन वचत तथा ऋण सहकारी संस्थामा धेरै परिवर्तनहरू भएका छन् । मुख्य-मुख्य कुराहरूलाई बुँदागत रूपमा उल्लेख गरिएको छ ।

- » भाखा नाघेको ऋण नियन्त्रण गरी जोखिम न्यूनीकरण ।
- » संस्थागत पूँजीको अनुपात बृद्धि गरी संस्थागत विकासमा अग्रसर ।
- » वित्तीय संरचनालाई प्रभावकारी बनाउन मासिक रणनीतिहरू तयार गर्ने प्रणालीको अभ्यास ।
- » बजारको प्रवृत्तिलाई समयमै सम्वोधन गर्ने प्रणालीको अभ्यास ।
- » सदस्यहरूको वचत र शेयरलाई ग्यारेन्टी गर्नसक्ने क्षमताको विकास ।
- » संस्थाका वस्तु तथा सेवाहरूलाई प्रस्तुतीकरण गर्ने शैलीमा परिवर्तन ।
- » सदस्यहरूलाई समृद्ध बनाउने वस्तु तथा सेवाहरूको विकास ।
- » सदस्यहरूको सन्तुष्टीस्तर सर्वेक्षण गर्दै आवश्यक्तामा आधारित सेवाहरूको विकास ।
- » तीव्र गतिमा सदस्यता बृद्धि ।
- » सन्तुलित रूपमा कारोवार बृद्धि ।
- » संस्थाको नीति तथा योजनाहरूमा सदस्यहरू सहभागिता अभिबृद्धि गर्ने प्रणालीको अभ्यास ।
- » सदस्यमैत्री कार्यालय भवन तथा सेवा केन्द्रहरू स्थापना ।
- » प्रविधिमा आधारित सेवाहरूको विस्तार ।
- » नीति र विधिहरू पर्याप्त विकास गरी विधिद्वारा संस्था सञ्चालन ।
- » बैधानिक दायित्वहरू पूर्ण रूपमा पालना ।
- » सञ्चालकहरूमा वित्तीय अनुशासन कायम ।
- » सञ्चालक समितिमा महिला सहभागिता बृद्धि ।
- » सक्षम व्यवस्थापन निर्माण गरी संस्था सञ्चालन गर्ने जिम्मेवारी हस्तान्तरण ।

### ६. अवको यात्रा कतातिर ?

जनसचेतनले संस्थालाई पूर्ण रूपमा सवल र सक्षम बनाउँदै सदस्य समुदायलाई समृद्ध बनाउने तर्फको यात्रा प्रारम्भ गरिसकेको छ । यो यात्राको गन्तव्य विन्दुसम्म पुग्दा जनसचेतन दोलखाली जनसमुदायको भरपर्दो वित्तीय समाधानको केन्द्र हुनेछ भने सदस्यहरूको समृद्धिको स्तर धेरै फराकिलो हुनेछ । यसका लागि समयसंगै अगाडि बढ्दै वित्तीय बजारमा प्रतिस्पर्धी अवस्था कायम राख्नको लागि

नयाँ नयाँ विधि र प्रविधिहरू अवलम्बन गर्दै जनसचेतन अगाडि बढ्ने छ । उल्लेखित कल्पना र योजनाहरू पुरा गर्नको लागि जनसचेतन एक्सेस गोल्ड हुँदै प्लाटिनमसम्मको गन्तव्यमा पुग्नै पर्दछ ।

**७. एक्सेस गोल्डको गन्तव्यका लागि आवश्यक तयारी**

**क) कर्मचारी व्यवस्थापनको तयारी**

कर्मचारी व्यवस्थापनले निम्न तयारी गर्न आवश्यक देखिन्छ:

- » सदस्यहरूको जानकारी विवरण (KYM) लाई पूर्ण रूपमा अद्यावधिक गरी सदस्यहरूको पूर्ण विवरण सुरक्षित गर्ने ।
- » भाखा नाघेको ऋण १% भन्दा कममा झार्ने ।
- » संस्थागत पूँजीको अनुपात कम्तिमा १०% पुग्ने गरी संस्था सञ्चालन गर्ने ।
- » कानुनी बाधा व्यवधानमुक्त रहने गरी दैनिक कार्यसञ्चालन गर्ने ।
- » नीति नियमको जानकारी मात्र हैन त्यसभित्रबाट सदस्यहरूलाई समाधान दिनसक्ने क्षमताको विकास गर्ने ।
- » योग्य, सक्षम, अनुभवी र व्यवसायिक केही जनशक्ति थप गर्ने ।
- » विद्यमान कर्मचारीहरूले आफ्नो ज्ञान, सीप र क्षमतामा थप विकास गर्ने ।
- » सदस्य र समुदायको आवश्यक्ताको पहिचान गर्न नियमित सुझाव संकलन तथा सर्वेक्षण गर्ने ।
- » सेवा दिँदा सदस्यहरूलाई ढुक्क र सन्तुष्ट बनाउने ।
- » सदस्यहरूलाई सेवा दिँदा ***"Service with smile"*** लाई सधैं अवलम्बन गर्ने ।
- » गर्न नमिल्ने र नसकिने कुराहरूलाई NO भन्ने बानीको विकास गर्ने ।

**ख) सञ्चालकहरूको तयारी**

- » सदस्य सुरक्षा नीति तयार पारी संस्थाका सदस्यहरूलाई हरतरहले सुरक्षित महसुस गराउने ।
- » सदस्यहरूको समृद्धि मापन गर्ने मापदण्डहरू निर्माण गरी हरेक ५/५ बर्षमा सदस्यहरूको समृद्धिस्तर मापन गर्ने प्रणालीको विकास गर्ने ।
- » भाखा नाघेको ऋण नियन्त्रण र संस्थागत पूँजीको अनुपात बृद्धि गर्ने ।
- » सदस्यहरूलाई छिटो छरितो सेवा प्रदान गर्नको लागि आवश्यक पूर्वाधारको व्यवस्था गर्ने ।
- » अनुभवी, सक्षम र दुरदर्शी सदस्यहरू समितिमा आउने स्पष्ट खाका तयार पार्ने ।
- » सदस्यहरूलाई आवश्यक थप वस्तु तथा सेवाहरूको विकास गर्ने ।
- » संस्थाको साखलाई पर्याप्त मात्रामा आ-आफ्नो क्षेत्रमा प्रचार प्रसार गर्ने ।
- » सदस्यहरूलाई पर्याप्त मात्रामा सहकारी, वित्त र व्यवसायिक शिक्षा प्रदान गर्ने योजना बनाई लागू गर्ने ।
- » आन्तरिक नियन्त्रण प्रणालीलाई शसक्त बनाउने नीति तयार पार्ने ।

**ग) सदस्यहरूको तयारी**

- » संस्थाका गतिविधि तथा कार्यक्रमहरूमा सहभागिता जनाउने ।
- » संस्थाको वस्तु तथा सेवाहरूको पूर्ण रूपमा प्रयोग गर्ने ।
- » तोकिएअनुसार किस्ताबन्दीमा सावाँ,व्याज बुझाउने, भाखा ननघाउने ।
- » नियमित रूपमा नबिराइकन मासिक बचत गर्ने । अन्य ऐच्छिक तथा आवधिक बचतहरू पनि गर्दै जाने ।
- » संस्थाप्रति कुनै गुनासो, सल्लाह वा सुझाव भएमा तुरुन्त भरपर्दो माध्यमबाट जानकारी गराइहाल्ने ।
- » संस्थाको निर्णय प्रक्रियाहरूमा सहभागिता जनाउने ।
- » आफ्नो छर-छिमेकमा सदस्य बन्न बाँकी रहेका व्यक्तिहरूलाई संस्थामा आवद्ध हुन प्रेरित गर्ने ।

संस्थालाई दिगो बनाउनको लागि भूमिका खेल्ने शेयर सदस्य, सञ्चालकहरू र कर्मचारी व्यवस्थापनले उचित तयारी आजैबाट गर्न सकियो भने जनसचेतन वचत तथा ऋण सहकारी संस्थाको एक्सेस गोल्डतर्फको यात्रा गन्तव्यमा पुग्ने कुरामा कसैको दुई मत नहोला । एक्सेस गोल्डस्तरको ब्राण्डिङमा संस्थालाई पुऱ्याई यसका सदस्यहरूलाई थप गुणस्तरीय सेवा प्रदान गरी लाभाविन्त बनाउन सबै लागौं !!!

***जय सहकारी । जय जनसेचतन ।***



उद्यमीको कथाः

# बैंकको विकल्प जनसचेतन



संकलक : अर्जुन दाहाल 'अपवाद'

म मिल व्यवसायी हुँ । व्यवसायमा सहयोग पनि गर्ला, आफ्नो रकम पनि थपिइरहन्छ भनेर सदस्य बनेको हुँ । शुरुमा धान कुट्ने र पिठो पिँध्ने मिल मात्रै थियो । पछि चिउरा कुट्ने, तेल पेल्ने लगायतका मिल थपें । व्यवसायबाट महिनामा एक डेढ लाख रूपैंयासम्म आम्दानी हुन्छ ।

परिवारका सबैजना जनसचेतनमा सदस्य छौं ।



*गीता प्रसाद दाहाल, काभ्रे, सदस्य नं. ३१९*

व्यवसाय शुरु गर्नका लागि कृषि विकास बैंकबाट ऋण लिएको थिएँ । बैङ्कमा शुरुमा २३ हजार रूपैंया ऋण लिएँ । ५ लाख रूपैंयासम्म बैङ्कबाट लिएँ । बैङ्कको प्रक्रिया झन्झटिलो थियो । त्यसपछि जनसचेतनमा ऋणका लागि प्रस्ताव गरें । जनसचेतनले प्रस्ताव स्वीकार गर्‍यो । जनसचेतनबाट ऋण लिएर व्यवसाय अगाडि बढाएँ । काम गर्दै जाँदा २० लाख रूपैंयासम्म ऋण लिएँ । यसका कारण व्यवसाय अगाडि बढाउनका लागि सहयोग मिलेको छ ।

म सदस्य बनेको ५४ सालतिर होला जस्तो लाग्छ । १०० भित्रै पर्न खोजेको, मिलेन । मैनापोखरीमा कोषाध्यक्ष पुष्कर दाहाल आउनुभो । त्यहीं पैसा दिएर बनेको हुँ ।

अहिले व्यवसायमा ३ जनाले रोजगार पाइरहेका छन । व्यवसायकै कामका लागि एउटा गाडी किन्नुपर्छ कि भनेर सोचिरहेको छु । मिलबाट आउने आम्दानीबाटै परिवार र अन्य खर्च चलाउने गरेको छु ।

हामीले व्यवसायका लागि ठुलो ठुलो रकम लिनुपर्छ । त्यसका लागि सहकारीको व्याज बैंकजस्तै सस्तो हुनुपर्छ । जनसचेतन ठूलो संस्था हो । यसले दिने सबै सुविधा बैंकको

**"जनसचेतनबाट ऋण लिएर व्यवसाय अगाडि बढाएँ । काम गर्दै जाँदा २० लाख रूपैंयासम्म ऋण लिएँ । यसका कारण व्यवसाय अगाडि बढाउनका लागि सहयोग मिलेको छ ।**

जस्तै हुनुपर्छ । यसका सदस्यहरूले सहकारी छोडेर बैङ्कतिर धाउने अवस्था हुनुहुन्न ।

देशमा अहिले बेरोजगारीको समस्या चर्को छ । संस्थाले अगुवाई गरेर ४, ५ सय व्यक्तिलाई रोजगार दिन सक्ने उद्योग स्थापना गर्नुपर्छ । संस्थाका कर्मचारीहरूको व्यवहार राम्रो हुनुपर्छ । संस्थामा ऋण लिनका लागि आवेदन गरेर कागजात पुगेपछि धेरै सोधखोज नगरे हुन्थ्यो । मानिसका अगाडि लाइन लागेर जवाफ दिनुपर्ने अवस्थाले अन्य मानिसहरूले हामीलाई शंकाको दृष्टिकोणले हेर्छन् ।

(कुराकानीमा आधारित)

**उद्यमीको कथाः**

# थमायो जनसचेतनले

म जनसचेतनमा २०६१/६२ सालतिर सदस्य बनेको हुँ । जनसचेतमा सदस्य बन्न पाए ऋण खान पाइन्छ भनेर सदस्य बनें । सदस्य बन्नु भनेको ऋण खानमात्रै नभएर आफ्नै लागि रहेछ भन्ने लाग्छ आजकाल ।

१३ वर्षको उमेरमा बिबाह भयो । १६ वर्षमा छोरो जन्मियो । त्यसको ३ वर्षपछि छोरी जन्मी ।



*गोमा खडका, काभ्रे, सदस्यता नं. ३५२९*

जेठी दिदीको बिबाह हुने भयो । माइली दिदीको पहिल्यै बिबाह भैसकेको थियो । एकै लगनमा २ छोरीको बिबाह गरिदिन पाए खर्च जोगिने परिवारलाई लागेको थियो । मलाई पनि माग्न छिमेकी गाविसका केटा आए । मेरो बिबाहको कुरा छिनियो । अहिलेजस्तो भए बालबिबाहमा कानुन लाग्थ्यो होला !

मेरो मैनापोखरी बजारमा फेन्सी व्यवसाय छ । पसल गरेको करीब १० वर्ष भय ो । शुरुमा ७० हजार लगानी गरेको थिएँ । पसलमा अहिले १५ लाख रूपैंया बढीको सम्पत्ति छ । मेरो आफ्नो मासिक बचत रु. २०० का दरले गर्छु । ५ वर्ष भयो रु. २०० का दरले बचत गर्न लागेको । छोरा सुमन काठमाण्डौको गोल्डेन गेट कलेजमा कक्षा ११ मा व्यवस्थापन विषय लिएर अध्ययन गर्दैछ । छोरी सुमित्रा हनुमन्तेश्वर उच्च माध्यामिक विद्यालयमा कक्षा ९ मा अध्ययन गर्छिन् । आफ्नो रु.२०० र छोराछोरीको रु. सय सय गरी महीनामा रु चारसयको दरले बचत हुन्छ ।

पसल शुरु गरेको १ महिनापछि श्रीमान्को मृत्यु भयो । छोराछोरी सानै थिए । परिवार तथा गाउँलेहरूले यसले अब घर गरिखान्न भनेर कुरा काट्न लागे । पसलमा सामान थप्नका लागि ऋण कसैले पत्याएनन् । स्थानीय जनसचेतन सहकारीका कर्मचारीहरू नै जमानी बसेपछि सहकारीले मलाई ५० हजार रूपैंया ऋण पत्यायो । त्यसपछि मेरो व्यापारलाई देखेर अरु सहकारीहरूले पनि ऋण पत्याउन लागे । परिवारले पैसा लिएर (पोइल) हिँड्छे, नदिनु भनेछन् । निकै मुस्किलले पैसा पाइयो । कसैले यसरी टिकेर गरिखान्छे भन्ने त सोचेकै थिएनन् ।



**पसल गर्नैका लागि त्यसपछि १ लाख रूपैंया ऋण निकालें । त्यसपछि डेढ लाख निकालें । पछिल्लोपटक ५ लाखसम्म निकालेको छु । व्यापारबाट मासिक ३० हजार जतिको कारोबार हुन्छ र नाफा १० हजार जति हुन्छ ।**

पसल गर्नैका लागि त्यसपछि १ लाख रूपैंया ऋण निकालें । त्यसपछि डेढ लाख निकालें । पछिल्लोपटक ५ लाखसम्म निकालेको छु । व्यापारबाट मासिक ३० हजार जतिको कारोबार हुन्छ र नाफा १० हजार जति हुन्छ । किस्तामा कहिल्यै पनि हर्जाना लागेको छैन ।अबको सोचाइ भनेको यही व्यवसाय बढाउने, ऋण तिर्ने र छोराछोरी पढाउने हो । पसलबाट नै सबै खर्च र बचतको लागि पुगिरहेको छ ।

संस्थाले धितो (पुर्जा बेगर) बिना नै ऋण दिने नियम बनाए हुन्थ्यो जस्तो लाग्छ । भविष्यमा जनसचेतन राम्रो हुँदै जाओस्, हामीहरूलाई सक्दो ऋण दिन सकोस् भन्ने लाग्छ । बीमाको पनि व्यवस्था भए राम्रो हुन्थ्यो । अहिलेसम्म सहकारीले राम्रै गरिरहेको छ । मैले पूर्जाबिना नै ऋण लिएको छु । एउटा ऋणको लागि धेरै पटक बोलाउनुहुन्छ । एकैपटकमा काम भए हुन्थ्यो जस्तो लाग्छ ।

***(कुराकानीमा आधारित)***



उद्यमीको कथाः

# किसानको साथी जनसचेतन

पहिला दाई सदस्य बन्नु भाको थियो। दाई बन्नुभएपछि हामीलाई पनि भैहाल्छ भन्ने लाग्थ्यो । पछि हामी भिन्नु भएपछि पैसा भाग लगाइयो । २–२ हजार भागमा आयो । मैले घरमा ऋण पनि लिइनँ र बचत भएको त्यो पैसा पनि लिइनँ । दाईहरू सबैजनाले बचत गर्नुभयो । बाँकी म मात्र रहें । अरु सबैजना बचत गर्दा रहेछन् । अब म पछि पर्न भएन, मैले पनि बचत गर्नुपऱ्यो भन्ने लाग्यो । अनि मैले पनि बचत गर्न शुरु गरें ।



*शिव कुमार दाहाल, काब्रे, सदस्यता नं. ९७१*

परिवारमा आमा, दुईवटा बच्चा र हामी दुईजना गरी जम्मा ६ जना छौं । सहकारीमा सदस्य म र श्रीमती  मात्र छौं । आमाको पहिला सदस्यता बनाइएन अहिले ६० वर्ष पुगेपछि सदस्य बन्न नमिल्ने रहेछ । त्यही भएर आमा सदस्य हुनुहुन्न । जनसचेतनमा मासिक दुई-दुई सयको दरले चार सय वचत गर्छौं । ३ जना छोराहरू पनि बचत गर्छन् । यस ठाउँमा रहेका अन्य सहकारीमा पनि बचत गर्ने गरेको छु । सबैतिर गरेर मासिक पच्चीस सय रूपैंया जति वचत गर्छु । म तरकारी खेती गर्छु । यस कामका लागि जनसचेतन बाट २ लाख रूपैंयासम्म ऋण लिएको छु । मैले तरकारी खेती गर्न लागेको २०६१-६२ बाट हो ।

म पढ्दै गर्दा मेरो बुबा बित्नुभयो अनि पढ्नको लागि खर्च भएन । त्यसपछि काठमाडौमा नर्सरीमा काम गर्न थालें । अनि त्यहाँबाट घर फर्कंदा यहाँ रिने शेर्पा दाईले त्यहाँ जस्तै टनेल बनाएर गोलभेडा खेती गर्नुभएको रहेछ । अनि सोचें गाउँमा नर्सरी राखेर कसरी चल्छ होला भनेर । मैले उहाँसँग गएर सोधें, दाई तपाईंले यो टनेल के को लागि बनाउनुभएको म पनि काठमाडौमा यस्तैमा काम गर्छु भनें । अनि उहाँले भन्नुभयो, भाई मैले यहाँ नर्सरी बनाउन लागेको होइन । मैले त गोलभेडा खेती गर्न लागेको भन्नुभयो । अनि मैले भनें, यहाँ यो फल्छ त ? अनि उहाँले भन्नुभयो यो शुरुवात हो भाई फल्छ, म फलाएर

> **मैले गोलभेडा खेती गरेको लगभग १०/११ वर्ष भयो। आफ्नै ठाउँमा जोश जाँगरका साथ लाग्यो भने बाँच्न सकिँदो रहेछ भन्ने शिक्षा मैले यस खेतीबाट पाएको छु। नाफाको भने कुनै भर हुँदैन। मैले त्यही ठाउँमा ४/५ लाखसम्म पनि कमाएँ।**

देखाउँछु । त्यसपछि म पनि गर्छु भन्ने लाग्यो । तर मसँग पैसा थिएन । दाईले टनेलको एउटा गोठ बनाएको थियो । दोलखा जिल्लामा कहीं पनि गोलभेडा खेती नभएको; एउटा केदार बुढाथोकीको थियो । अनि मैले हाम्रोमा पनि गोलभेडा फल्छ त दाई भनेर फेरि सोधें । अनि उहाँले पनि राम्रोसँग फल्छ भन्नुभयो ।

त्यसपछि रिने दाईसँग चारवटा गोठ बनाउँछु त्यसको खर्च कति लाग्छ भनेर सोधें । अनुमानित २५ हजार जति लाग्छ भन्नुभयो । त्यसपछि घरमा गएर बारीको भरखर सुत्लो लागेको मकै काटें । मसँग पैसा थिएन । गाउँमा पैसा माग्ने आँट आएन । सहकारीमा जाँदा पनि मलाई ऋण दिन्छ भन्नेमा शंका लागेको थियो ।

जनसचेतनमा वचत गरेको थिएँ । त्यसैकारण पैसा माग्न त्यहीं गएँ । धेरै माग्यो भने संस्थाले मलाई ऋण नै दिँदैन भन्ने लाग्यो । ५ हजार माग गरें । ऋण पाएपछि रूपैया लगेर पसलमा दिएँ। नपुगेको उधारो लेखेर प्लास्टिक ल्याएँ र मैले चारवटा टनेल शुरु गरें । शुरुको अवस्थामा

मैले ४०-५०हजार आम्दानी गरें। दोस्रो वर्ष २० वटा टनेल बनाएँ। त्यसमा २० लगभग २ हजार २५ विरुवा रोपें। गर्दै जादाँ डेढ दुई लाखको गोलभेडा बेचें। त्यसरी नै मेलै गोलभेडा खेती शुरु गरें। बैशाखदेखि मंसिरसम्म खेती गर्छु



**सहकारीले व्यवसाय हेरेर ऋण लगानी गर्दियोस् जस्तो लाग्छ। आम्दानीको लागि ६ महिना, वर्ष दिन कुर्नुपर्ने हुन्छ। किस्ता शरु ६ महिनाबाट भए हुन्थ्यो। अनि कृषि उत्पादनका लागि बजार व्यवस्थापन गरिदिए राम्रो हुन्थ्यो।**

अनि मिस्त्री काम पनि गर्छु।

मैले गोलभेडा खेती गरेको लगभग १०/११ वर्ष भयो। आफ्नै ठाउँमा जोश जाँगरका साथ लाग्यो भने बाँच्न सकिँदो रहेछ भन्ने शिक्षा मैले यस खेतीबाट पाएको छु। नाफाको भने कुनै भर हुँदैन। मैले त्यही ठाउँमा ४/५ लाखसम्म पनि कमाएँ। त्यो चाहिं बजारको अवस्था हेरेर हुन्छ। बजारको राम्रो व्यवस्था पनि छैन। अहिले गोलभेडा खेती धैरै हुन लागेको छ। दोलखा जिल्लामा धेरै मात्रामा गोलभेडा फल्छ तर जिल्लाभरिको गोलभेडा जाने ठाउँ भनेको चरिकोट मात्रै हो। अहिले गोलभेडाको विकल्प काउली, रायो, केराउ अरु पनि खेती गर्न लागेको छु।

मैले तरकारी खेतीकै लागि जनसचेतनबाट पैसा निकालेको छु र खर्च पनि त्यहीं गरेको छु। मैले त्यहाँबाट दुई लाखसम्म ऋण निकालेको छु। मैले लगभग ९/१० वर्ष भयो तरकारी खेती गर्न लागेको। मेरो बुबा बित्नु भयो, घरमा आमा र बच्चा-बच्ची भएपछि घर छोड्ने कुरा भएन। अनि विकल्पको रूपमा यही तरकारी खेती शुरु गरैं। मेरो तरकारी खेतीबाट जीविका चलेको छ।

कृषिमा ऋण निकाल्ने बित्तिकै तिर्नको लागि उत्पादन भएको हुँदैन। ऋण निकालेको एक महिनामा नै व्याज शुरु भैहाल्छ। त्यसले गर्दा हर्जाना धेरैपटक तिर्नु परेको छ। व्यवसायीहरूका लागि व्यवसायले ऋण तिर्नसक्ने खालको नियम नभएर बढी हर्जाना तिर्नु परेको छ।

सहकारीले व्यवसाय हेरेर ऋण लगानी गर्दियोस् जस्तो लाग्छ। आम्दानीको लागि ६ महिना, वर्ष दिन कुर्नुपर्ने हुन्छ। किस्ता शरु ६ महिनाबाट भए हुन्थ्यो। अनि कृषि उत्पादनका लागि बजार व्यवस्थापन गरिदिए राम्रो हुन्थ्यो। तरकारी खेती वा अरु कुनै व्यवसाय होस्, त्यसको लागि प्राविधिक ज्ञान दिए राम्रो हुन्थ्यो। विभिन्न किसिमका अवलोकन भ्रमणमा लैजाने, बजार अनुगमन, बजार व्यवस्थापनको ग्यारेन्टी, गाडीको व्यवस्था जस्ता कुराहरूमा सहकारीले ध्यान पुऱ्याउनुपर्ने देखिन्छ।

***(कुराकानीमा आधारित)***





# ऋण लिन सिकाउने मेरो पहिलो गुरुः जनसचेतन



**बिनोद ढुङ्गेल, सदस्यता नं. ७२९**

२०५७ सालको बैशाख महिना, काठमाडौं अनामनगरको चिसो ढुसी र पसिनाको बासना आउने कोठा ३ बाबु -छोरा र एउटी छोरी अत्यन्तै गम्भीर मुद्रामा थियौं । गम्भीर हुनुको खास कारण थियो मैले खाइरहेको रु २००० को जागिर छोड्नु । बुबा गाउँबाट आउनुभएको थियो । मैले त्यो २००० को जागिर छोड्दा ३–३ वटा छोराछोरीलाई पढाउन खर्च पठाउनु झन् समस्या पर्ने भाव बुबाको अनुहारमा स्पष्ट थियो । तर मैले पढाइ बिग्रियो भनेर जागिर नखाने निर्णयबाट पछि हट्ने कुरै गरिनँ । त्यत्तिकैमा बुबा गाउँ फर्किनुभयो । हामी ३ जना त्यही निस्सासिने कोठामा जीवनमा केही गर्न नसक्ने हार र असफलता नै जीवनको पर्याय हो कि भन्ने निष्कर्ष निकाल्दै दिन बिताउन थाल्यौं ।



*संस्थाबाट ऋण लिई खरिद गरेको पहिलो मेसिन*

> **त्यतिखेरै मलाई मेरा साइलो वुवा स्व. चन्द्रराज ढुंगेलले पहिलो दिन जागिरमा जाँदा ढोकामा पुग्नै लाग्दा भनेको एउटा वाणी याद आयो छोरा तँलाई मैले जागिर खान पठाएको हैन अरुलाई कसरी जागिर दिनुपर्छ भनेर सिकाउन पठाएको छु साहु हुन सिकेर आउनू ।**

साउन महिना हुनुपर्छ, पानी परिरहेको थियो । बिहानै आदरणीय बिष्णु दाहाल दाजु साइकलमा रुझ्दै बुबालाई भेट्न अनामनगरस्थित हाम्रो कोठामा आउनुभयो । विशेष काम त के थियो हामीलाई थाहा हुने कुरै भएन तर कुरा चल्दै जाँदा बिष्णु दाईले 'केटा के गर्छन् दाजु' ? भनी प्रश्न गर्नुभयो । बुबालाई पनि हामीले केही नगरी बसेकोमा चित्त बुझेको थिएन र उत्तर पनि कडा शैलीमा नै दिनुभयो । के गर्नु ? बिहान बेलुका खान्छन्, बस्छन् । दाईले फेरि थप्नुभयो, यो उमेरमा पनि केही गर्दैनन् दाजु ? बुबालाई झन् हामीप्रति आक्रोश थप्ने काम भयो अनि भन्नुभयो, कसैले कोठामा खोज्दै जागिर दिन आउँदैन तेरा भाइहरू कोठाबाट निस्कँदैनन् । आफैं केही गर्ने सीप पनि छैन ।

एकछिनको सन्नाटापछि बिष्णु दाईले भन्नुभयो, दाई अलिकति पैसा तपाइँ हाल्नुहोस् अलिकति पैसा म हाल्छु, एउटा प्रेस राखौं । यो कुरा सुनेर मलाई भित्रैवाट जोश भरिएर आयो । शायद त्यो जोश कहिलेकाहीं रामहरि दाजुको प्रेसमा मेसिनले छापेको देख्दा रमाइलो लाग्ने प्रेसको सञ्चालक आफू स्वयम् हुनेमा थियो । त्यतिखेरै मलाई मेरा साइँला बुबा स्व. चन्द्रराज ढुङ्गेलले पहिलो दिन जागिरमा जाँदा ढोकामा पुग्नै लाग्दा भनेको एउटा वाणी याद आयो, छोरा तँलाई मैले जागिर खान पठाएको हैन अरुलाई कसरी जागिर दिनुपर्छ भनेर सिकाउन पठाएको छु, साहु हुन सिकेर आउनू । यो वचन मैले अर्काकोमा नोकरी गरेको करीव ५ वर्ष मेरो मनको कुनामा सजाएर राखेको थिएँ र बुबाले प्रेस राख्छौ त ? भन्दा बाहिर निकालें र साहु हुने निधो गरें । सानैमा बुबाले माया गरेर बोलाउने बिर्खे साहु अब म साँच्चै बिनोद साहु हुने अठोट गरें ।

त्यो दिनको घटनाले मलाई धेरै उत्साहित बनाइरहेको थियो । त्यहीबीचमा बुबा स्कुलको प्रश्नपत्र छपाइ गर्न रामहरि दाईकोमा आउनुभएको थियो । हामी पनि बुबालाई सहयोग गर्न प्रेसमा गएका थियौं । काम सकिएपछि बुबाले पैसा तिर्ने बेलामा रामहरि दाईलाई प्याच्च भन्नुभयो, तँलाई काम पनि दिनुछ, पैसा पनि दिनुछ । आफ्ना छोरा दिनभरि कोठामा सुतेर बस्छन् न यिनलाई काम दिन्छस् न केही


*हाल यस प्रेससँग रहेका अत्याधुनिक मेसिनहरू*

सिकाउँछस् । यति भनेपछि छुच्चा रामहरि दाइले जवाब फर्काइहाले, ३ वटा मेसिन छन् एउटा लैजाउ, भाइहरूले छाप्छन् अनि काम पनि उतै दिनू । यति भनेपछि विष्णु दाईलाई सम्झें र उहाँले प्रेस राख्न प्रस्ताव राखेको कुरा पनि सम्झें । मलाई रामहरि दाईसँग भएको एउटा पहेंलो रङको मेसिनले मोहनी लगाएको थियो । हेर्दै साह्रै राम्रो । कुनै पहेंलो साडी लगाएकी राम्री केटीभन्दा कमको थिएन त्यो मेसिन । अनि काम सकेर कोठामा फर्कदा बुबासँग डराई डराइ त्यो पहेंलो मेशिनसँग माया बसेको कुरा गरें । जुन कुरा गर्न शायद मैले कुनै केटीसँग बसेको मायाको कुरा बुबासँग गर्न सहज हुन्थ्यो । बुबा त्यो दिन नरम रुपमा प्रस्तुत हुँदै विष्णु दाईसँग मिलेर प्रेस किन न त भन्ने भावना व्यक्त गर्नुभयो । तर समस्या थियो पैसाको सहकारीबाट जग्गा खरिद गर्न लिएको १ लाख रुपैंया त सहकारीको ऋण खातामा करीव ४ वर्ष अल्या हुँदै आइरहेको थियो । बुबाले मलिन हुँदै भन्नुभयो, जग्गा किनेको ऋण बाँकी छ अरु पैसा छैन कहाँवाट ल्याउने ३,५०,००० ? अनि मैले भनें, बुबा हामीले खानलाई, रमाइलो गर्नलाई ऋण लिन लागेको हो र ? उद्योग गर्न पो लिन लागेको त । उद्योग गरेपछि पैसा कमाउँला अनि तिरौंला । खान पो ऋण गर्न हुँदैन भन्ने मेरो वाक्य जीवनको आदर्श हो । अन्ततः प्रेसको मेसिन किन्ने आँट गरेर हामीले जनसचेतनबाट घरबारीको लालपूर्जा राखेर २०५७ साल कात्तिक २६ गते ३,५०,००० ऋण लियौं । माओवादी युद्धका कारण बाटोमा अप्ठेरो पर्नसक्ने डरले मेरा दाजुले रायोको सागको पातभित्र बाँधेर बसको छतमा राखी त्यो पैसा काठमाडौंको बबरमहलमा पुऱ्याउनुभयो । २७ गते साँझ रामहरि दाईको बेहुली जस्तो मेसिन खरिद गरी वुद्धनगरमा स्थापना भयो गौरीशंकर अफसेट प्रेस । बुबालाई तनावमाथि तनाव थपियो । मेसिन पनि खरिद गरियो, प्रेस दर्ता पनि गरियो तर छ महिना भयो, मेसिन कतापटि घुम्छ भन्ने कुरा थाहा नभएको । बिहान जान्छौं, दिनभरि मेसिनमा लागेको धुलो पुच्छ्यौं र बेलुका घर फर्कन्थ्यौं । हामी चारजनाको दिनचर्या यसरी नै बित्दै गयो । दिन सधैं एकनाश हुँदैनन् । कुर्न जान्नुपर्छ, एकदिन दिन आउँछ भनेझैं बिस्तारै प्रेसले आफ्नो फन्को मार्दै गयो । हाम्रो पनि जीवनको फन्को घुम्दै गयो र त्यो ऋण र जग्गा खरिद गरेको ऋणले छोटो समयमा नै अल्याबाट पार पाइयो । हाम्रा बुबालाई बल्ल विश्वास भयो, अब छोराले गरी खान्छन् भन्ने कुरा ।

जनसचेतन, मेरो र गौरीशंकर प्रेसको जन्म एउटै पितावाट भएको हो । जसरी जनसचेतनले आफ्ना पिता संस्थापक अध्यक्ष यज्ञराज ढुङ्गेलको मार्गदर्शनले २२०० मानिसको मन जितेर सफलताको शिखर चुम्दैछ त्यसैगरी हामी दाजुभाइले आफ्ना पिताको मार्गदर्शनलाई आदर्श मानी अहोरात्र कर्तव्यनिष्ठ भै गौरीशंकर प्रेसलाई गौरीशंकर हिमाल झैं अटल र उच्च राख्न सकेका छौं । त्यहींबाट शुरु भएको यात्रा आज गौरीशंकर प्रेसले आधुनिक सेवा दिइ ग्राहकलाई सन्तुष्टि दिन सफल भएको छ ।

व्यवसाय प्रवर्धनमा विविध आर्थिक अड्चन आउँदा रकमको जोहो गर्न जनसचेतन नै जाने गर्छु । ऋण लिन्छु तर खानलाई हैन उन्नति गर्न । आज सम्झन्छु यो जनसचेतन नभएको भए, त्यो साँढे तीनलाख जनसचेतनबाट नलिएको भए अहिले पनि म कुन बिर्खे साहु बनेर जीवनलाई घुमाइरहेको हुन्थें होला । धन्य जनसचेतन, तिमी मेरा वित्तीय गुरु हौ । त्यो तिम्रो साँढे तीनलाखले एस.एल.सी. परीक्षामा फेल भएको मलाई जीवनको त्योभन्दा कठीन परीक्षामा पास गरायौ । बाबुआमाको न्यानो काखमा बस्ने अवसर दियौ, बस्ने आवास दियौ, दाजुभाइसँगै बस्ने र काम गर्ने प्रण दियौ । आदर्श पत्नी दियौ, नेपालमा नै बसेर केही गर्ने उर्जा दियौ, जागिर खाने हैन जागिर खुवाउने बनायौ । आज यो अवस्थामा उक्लिएको छु कि, उद्यमका लागि ऋणको भार नभइ निन्द्रा नै लाग्दैन ।



# वित्तीय व्यवस्थापनमा जनसचेतन



**राजेन्द्र प्रसाद ढुङ्गेल**
ऋण विभाग प्रमुख

वित्तीय व्यवस्थापन भन्ने बित्तिकै आर्थिक गतिविधिसंग सम्बन्धित विषयवस्तुहरू पर्दछन् । सामान्य अर्थमा वित्तीय व्यवस्थापन भनेको कुनै पनि संस्थामा सञ्चालित वित्तीय गतिविधिहरूलाई सिलसिलेवार रूपमा तालिकीकरण गर्ने पद्धति हो । उक्त पद्धतिमा संस्थाका हरेक वित्तीय क्रियाकलापहरूको प्रचलित लेखा नीति, संस्थाको आफ्नै विनियम, सञ्चालन नीति,एवम् नियमअनुसार निर्दिष्ट ढाँचामा अभिलेख राख्ने, त्यसको सुरक्षा गर्ने, तोकिएको निकायहरूमा प्रतिवेदन तयार गरी पठाउने लगायतका कार्यहरू पर्दछन् । विशेष गरी वित्तीय व्यवस्थापनका निम्न उद्देश्यहरू रहन्छन् ।

क) संस्थाको वित्तीय संरचनालाई बलियो बनाउने ।

ख) सदस्यहरूको वित्तीय आवश्यक्ता पूरा गर्ने ।

ग) संस्थालाई आत्मनिर्भर बनाइ दिगो विकास गर्ने ।

घ) आन्तरिक र बाह्य कारणबाट संस्थालाई हुनसक्ने क्षतिबाट जोगाउने ।

माथि उल्लेखित उद्देश्यहरूलाई हेर्दा संस्थाका हरेक वित्तीय गतिविधिहरूसंग सम्बन्धित बिषयहरू वित्तीय व्यवस्थापनमा पर्दछन् । सहकारी संस्थाहरूमा सदस्यको बचतको सुरक्षणको प्रत्याभूति दिलाउनु , सरल, सुलभ र सुरक्षित तवरबाट ऋण लगानी एवम् असुलीलाई प्रभावकारी ढंगबाट सञ्चालन गर्नु, संस्थालाई जोखिममुक्त बनाउनु, आफ्ना सदस्यहरूको आर्थिक उन्नतितर्फ योजनावद्ध कार्यक्रम सञ्चालन गर्नु लगायत वित्तीय व्यवस्थापन अन्तर्गत पर्दछन् । यस लेखमा जनसचेतनले अवलम्बन गरेको वित्तीय व्यवस्थापन नीति र प्रणालीको बारेमा उद्देश्यगत रूपमा सारांशमा चर्चा गरिएको छ ।

**क) संस्थाको वित्तीय संरचनालाई बलियो बनाउने**

संस्थाको वित्तीय संरचनालाई सन्तुलित गरी तन्दुरुस्ती कायम गर्ने कुरा वित्तीय व्यवस्थापनको एक महत्वपूर्ण विषय हो । यस अन्तर्गत वित्तीय स्रोतको सही सदुपयोग एवम् सञ्चालनलगायत बिषयहरू पर्दछन् । जस्तो, संस्थामा रहेको पूँजी तथा दायित्वको उचित व्यवस्था तथा कोषहरूको समुचित प्रयोग हुनु आवश्यक रहन्छ । यसको लागि नियम बनाइनुपर्दछ । यसको नियम बनाउने कार्य सञ्चालक समितिले गर्दछ । कोषको परिचालन गर्दा संस्थालाई अधिकतम फाइदा हुने र सुरक्षित हुने क्षेत्रमा गर्नुपर्दछ । सदस्यहरूको आवश्यक्ता पुरा हुने गरी तरलताको व्यवस्था गरिनु आवश्यक हुन्छ भने सदस्यहरूको र समुदायको आर्थिक आयस्तरमा वृद्धि हुने खालका कार्यमा कोषको लगानी केन्द्रित गर्नुपर्दछ। तसर्थ अनुत्पादक सम्पतिमा कम लगानी गर्नुपर्दछ। सामान्यतया प्रतिफल नदिने सम्पत्ति कुल सम्पतिको ५ प्रतिशतभन्दा बढी हुनुहुँदैन । पर्ल्स अनुगमन प्रणालीअनुसार संस्थाको वित्तीय संरचना मजबुत बनाउनको निमित संस्थाको पूँजीलाई निम्नानुसार व्यवस्थापन गर्नुपर्दछः

१. कुल सम्पतिको ८०% सम्म लगानीमा रहेको ऋण हुनुपर्दछ ।

२. संस्थाको संस्थागत पूँजी  कुल पूँजीको कम्तिमा १०% पुर्‍याउनुपर्दछ ।

३. कुल सम्पतिमा सदस्यहरूको बचत ७०% देखि ८०% हुनुपर्दछ ।

४. संस्थालाई आर्थिक आवश्यक्ता भएमा कुल सम्पत्तिको ५% सम्म बाह्य ऋण लिन सक्नेछ ।

५ भाखा नाघेको ऋण हुनुहुँदैन । भएमा पनि कुल लगानीमा रहेको ऋणको ५% भन्दा कम हुनुपर्छ ।

६. तरलता को लागि बचत रकमको २०% सम्म व्यवस्था गर्नुपर्दछ । तर यस्तो व्यवस्था गर्दा नगद मौज्दात कुल सम्पत्तिको १% भन्दा बढी हुनुहुँदैन ।

पर्ल्स अनुगमन प्रणालीअनुसार जनसचेतनको २०७४ असार मसान्तसम्मको अवस्था तालिका १ मा प्रस्तुत छ जसले संस्थाको वित्तीय संरचनालाई बलियो रहेको संकेत गर्छ ।

**तालिका १: जनसचेतनको असार २०७४ सम्मको पर्ल्स स्थिति विवरण**

| अनुपात | सूत्र | लक्ष्य<br>प्रतिशतमा | हिसाब | २०७३/२०७४ |
|---|---|---|---|---|
| P1 | भाखा नाघेको ऋणमा सुरक्षण<br>१२ महिनाभन्दा बढी भाखा नाघेको | 100 | 7597262:00<br>7597262:00 | 100:00 |
| P2 | भाखा नाघेको ऋणमा सुरक्षण<br>१ देखि १२ महिनासम्म भाखा नाघेको | 35 | 1811566:00<br>5175902:00 | 35:00 |
| E1 | उठ्न बाँकी ऋण<br>कूल सम्पत्ति | 70–80 | 699009142:41<br>903073134:09 | 77:40 |
| E5 | सदस्यको कूल बचत<br>कूल सम्पत्ति | 70–80 | 64693030373:98<br>903073134:09 | 78:71 |
| E6 | बाह्य ऋण<br>कूल सम्पत्ति | 0 | 64320272:00<br>903073134:09 | 7:12 |
| E7 | शेयर पूँजी<br>कूल सम्पत्ति | a(Ldf 20 | 72710100:00<br>903073134:09 | 8:05 |
| E8 | संस्थागत पूँजी<br>कूल सम्पत्ति | Goĝtd 10 | 78016863:45<br>903073134:09 | 8:64 |
| E9 | खुद संस्थागत पुँजी<br>कूल सम्पत्ति | Goĝtd 10 | 78016863:45<br>903073134:09 | 8:64 |
| A1 | कुल भाखा नाघेको ऋण<br>उठ्न बाँकी ऋण | al(df 5 | 12773164<br>708417970:41 | 1:80 |
| A2 | प्रतिफल नदिने सम्पत्ति<br>कूल सम्पत्ति | a(Ldf 5 | 30047253:24<br>903073134:09 | 3:33 |
| R7 | शेयर को लागि लाभांश<br>औसत शेयर रकम | बजार दर को अनुपात | 9560939:93<br>65164750 | 15:00 |
| R9 | सञ्चालन खर्च<br>औसत सम्पत्ति | a(Ldf 5 | 19005442:53<br>811752700:6 | 2:34 |
| L1 | तरलता रकम<br>कूल बचत | 15 eGbf a(L | 116868968:95<br>646930373:98 | 18:07 |
| L3 | नकमाउने तरल सम्पत्ति<br>कूल सम्पत्ति | 1 k\|t ; t eGbf sd | 1479122:96<br>903073134:09 | 0:16 |
| S10 | यस वर्षको सदस्य संख्या-गतवर्षको सदस्य संख्या<br>गत वर्षको सदस्य संख्या | clws | 2792<br>18501 | 15:09 |
| S11 | यस वर्षको कूल सम्पत्ति-गत वर्षको कूल सम्पत्ति<br>गत वर्षको सम्पत्ति | clws | 182640866:97<br>720432267:12 | 25:35 |

**ख) सदस्यहरूको वित्तीय आवश्यकता पूरा गर्ने**

सदस्यहरूको वित्तीय आवश्यक्ता पूरा गर्ने सम्बन्धमा जनसचेतनको परिकल्पनाले नै प्रष्ट पारेको छ । यसको परिकल्पना रहेको छ- "सबल र सुरक्षित संस्था, समृद्ध सदस्य" (Safe and Sound SACCOS, prosperous Member.) जनसचेतन एक एकल उद्देश्यीय सहकारी संस्था भएकोले यसको मुख्य कार्य बचत र ऋण नै हो कारोबार नै हो । सदस्यहरूबाट बचत संकलन गरी उनीहरूकै सामाजिक र आर्थिक विकास हुने गरी उनीहरूलाई नै ऋण लगाानी गर्नु नै प्रमुख कार्य हो । यस संस्थामा सदस्यहरूको सम्वृद्धिलाई ध्यान दिँदै बचत, ऋण, मनिट्रान्सफर र सामाजिक सुरक्षालाई प्राथमिकता दिइएको छ ।

१. **बचत परिचालनः** सदस्यहरूबाट विभिन्न प्रकारका बचत संकलन गर्नु, संकलित बचतको सुरक्षा गर्नु, संकलित रकम सदस्यले चाहेको बखत फिर्ताको ग्यारेण्टीका साथै सदस्यलाई आफ्नो बचत खाताको



गोपनीयताको विश्वासनीयता कायम राख्नु वित्तीय व्यवस्थापनको महत्वपूर्ण अंश एवम् वित्तीय व्यवस्थापनको सूचक हो ।

**२. ऋण व्यवस्थापनः** सहकारी संस्थाको वित्तीय व्यवस्थापनमा सदस्यहरूको आर्थिक एवम् सामाजिक उन्नतिको लागि ऋण लगानी गरी नियमित किस्ताको माध्यमबाट असुल गर्नु पनि महत्वपूर्ण हुन्छ । उक्त ऋणलाई सदस्यले अधिकार नभै सुविधाको रूपमा सही र उचित प्रयोग गर्नुपर्दछ जसको कारण उनीहरूको आर्थिक विकासका साथै सामाजिक परिवर्तन सम्भव होस् र स्तरीय जीवनयापन गर्न सकुन् । तसर्थ ऋणलाई अधिकतम रूपमा उत्पादक क्षेत्रमा लगानी गर्नुपर्दछ । सदस्यहरूलाई आत्म निर्भर गराउने कार्यमा ऋणको उपयोग गराउन सकिएन भने ऋणमा प्रसस्त मात्रामा जोखिम हुने खतरा बढेर जान्छ। सही सदुपयोग भएन भने यसबाट सदस्य र संस्था दुवैलाई अहित हुन्छ । तसर्थ प्रभावकारी वित्तीय व्यवस्थापनमा जोखिममुक्त ऋण लगानी गर्नुपर्दछ ।

**३. सामाजिक सुरक्षाः** वित्तीय व्यवस्थापनमा आर्थिक सामाजिक दुवै पक्ष समेटिने हुँदा आफ्नो संस्थाबाट सदस्यहरूले सुरक्षाको अनुभूति महसुस गर्न सक्नुपर्दछ । सहकारी संस्था सदस्यकेन्द्रित हुने भएको हुँदा उनीहरूका हरेक क्रियाकलापहरूमा संस्थाको संलग्नता रहनुपर्दछ र सबै सुख दुःखमा उनीहरूलाई संस्थाले साथ दिनु पर्दछ । यसो हुँदा संस्थाप्रति सदस्यहरूको विश्वास मजबुत हुनगै संस्थाको वित्तीय संरचना मजबुत बन्दछ । जनसचेतन साकोसमा रहेको दैवी प्रकोपमा राहत कार्यक्रम, सदस्यको मृत्युपश्चात किरिया खर्च सहयोग, विध्यार्थीहरूलाई छात्रवृत्ति कार्यक्रम, सदस्य सुरक्षा कोष कार्यक्रम र जनसचेतन आजीवन सहारा लगायतका कार्यक्रमहरूले संस्थाको वित्तीय विकासमा महत्वपूर्ण योगदान गर्नुका साथै आज जनसचेतन आफ्ना सदस्यहरूको मुटुको ढुकढुकी बन्न सफल भएको छ ।

### ग) संस्थालाई आत्मनिर्भर बनाइ दिगो विकास गर्ने

पर्ल्स अनुगमन प्रणालीको बारेमा माथि नै उल्लेख गरिसकिएको छ । संस्थाको दिगो विकास भनेको संस्थाको आर्थिक अवस्थासंग सम्बन्धित रहेको हुन्छ । माथि नै उल्लेख गरिएजस्तै सदस्यको बचतको सुरक्षा, कोषहरूको उचित वितरण एवम् व्यवस्थापन, आयआर्जन नगर्ने सम्पतिको न्यूनीकरण गर्ने लगायत विषयहरू पर्दछन् । आत्मनिर्भरको अर्थ अर्काको आशा गर्नु नपर्ने अर्थात आफ्नै स्रोत र साधनमा टिक्न सक्नु भन्ने हो । संस्थालाई वित्तीय रूपमा सबल र सक्षम बनाइ राख्न सके मात्र सदस्यहरूको हित हुन्छ । वित्तीय सक्षमताले नै संस्थाको सबै पक्षको विकास सम्भव हुन्छ । जनसचेतन ले ACCESS Brand मा BRONZE को प्रमाणपत्र हुँदै ACCESS SILVER ब्राण्डलाई पनि दोस्रो पटक निरन्तरता दिइसकेकेको छ । यो पनि दिगो वित्तीय व्यवस्थापनको एक प्रमाण हो ।



**संस्थालाई वित्तीय रूपमा सबल र सक्षम बनाइ राख्न सके मात्र सदस्यहरूको हित हुन्छ । वित्तीय सक्षमताले नै संस्थाको सबै पक्षको विकास सम्भव हुन्छ । जनसचेतन ले ACCESS Brand मा BRONZE को प्रमाणपत्र हुँदै ACCESS SILVER ब्राण्डलाई पनि दोस्रो पटक निरन्तरता दिइसकेको छ । यो पनि दिगो वित्तीय व्यवस्थापनको एक प्रमाण हो ।**

### घ) आन्तरिक र बाह्य कारणबाट संस्थालाई हुनसक्ने क्षतिबाट जोगाउने

संस्थामा विभिन्न प्रकारका जोखिम रहेका हुन्छन् । जस्तो, ऋणबाट जोखिम आउनसक्छ । उचित प्रयोग गर्न नसकी सदस्यलाई घाटा भएमा सदस्यले समयमा किस्ता बुझाउन नसक्दा संस्था र सदस्य दुवैलाई घाटा हुन्छ । संस्थामा कुनै बेला अन्य प्रकारको जोखिमहरू पनि आउन सक्दछन् र संस्थालाई आर्थिक समाजिक रूपमा प्रभाव पर्न सक्दछ । त्यस्ता जोखिममा विशेष गरी तरलता अभाव, प्रतिस्पर्धी व्याजदरको न्युनता, प्रतिस्पर्धी संस्थाहरूबाट गरिएका कु-प्रचारहरूको प्रभाव आदि मुख्य हुन् । यी जोखिमहरूको व्यवस्थापनका लागि निम्न रणनीतिहरू अवलम्वन गर्नु पर्दछः

- तरलता अभाव हुन नदिन हप्तैपिच्छे PEARLS को विश्लेषण गर्नुपर्दछ र बचत तथा ऋणको अनुपात सन्तुलन राख्नुपर्छ ।
- तोकिएको मापदण्डमा असर नपर्ने गरी कुल पूँजीको बढीमा ५ प्रतिशतसम्म बाह्य ऋण लिने व्यवस्था मिलाउनुपर्छ ।
- ऋण असुलीमा बृद्धि गर्नुपर्छ र ऋण लगानीलाई सीमाभित्र राख्नुपर्छ ।

जनसचेतनको स्थापना कालदेखि हालसम्मको वित्तीय अवस्थालाई तलको तालिकामा प्रस्तुत गरिएको छ ।

**तालिका २: स्थापनादेखि हालसम्मको वित्तीय अवस्था**

| आ.व. | शेयरपूँजी | बचत | जगेडाकोष | अन्यकोषहरू | ऋण लगानी | कुल पूँजी तथा दायित्व |
|---|---|---|---|---|---|---|
| 2050÷051 | 11800:00 | 66700:00 | 689:83 | 2069:52 | 25800:00 | 85594:85 |
| 2051÷052 | 35600:00 | 352597:00 | 2484:91 | 7454:76 | 341664:00 | 398136:76 |
| 2052÷053 | 53400:00 | 1062298.33 | 10879:01 | 33576:42 | 1047205:00 | 1316507:00 |
| 2053÷054 | 125600:00 | 2082410:00 | 40024:00 | 60020:00 | 2037190:00 | 2480270:00 |
| 2054÷055 | 148900:00 | 3264916:00 | 66883:00 | 139458:00 | 2849071:00 | 4141707:00 |
| 2055÷056 | 524400:00 | 5089343:00 | 158467:49 | 494750:00 | 5034346:00 | 6662442:00 |
| 2056÷057 | 958800:00 | 8016613:00 | 286954:23 | 672647:55 | 8177040:00 | 10140644:00 |
| 2057÷058 | 1698500:00 | 8016613:00 | 407776:30 | 1042578:14 | 16775179:96 | 15135039:96 |
| 2058÷059 | 2355500:00 | 16775179:96 | 579956:30 | 866249:90 | 18043530:00 | 21386123:16 |
| 2059÷060 | 3011000:00 | 2199111:76 | 878462:50 | 1217163:80 | 21947057:00 | 28411035:06 |
| 2060÷061 | 3903900:00 | 30293475:33 | 1116580:00 | 1432025:95 | 31454206:00 | 38336089:63 |
| 2061÷062 | 4933900:00 | 39157621:74 | 1636576:00 | 2022162:74 | 38491672:00 | 49877630:94 |
| 2062÷063 | 6156000:00 | 44658172:28 | 2101911:03 | 2346051:28 | 46875581:00 | 58264600:95 |
| 2063÷064 | 7521300:00 | 53600912:74 | 2612262:25 | 2690915:10 | 57482109:00 | 71942837:45 |
| 2064÷065 | 9167400:00 | 69425131:34 | 3242700:84 | 2944451:67 | 65809096:00 | 89329068:46 |
| 2065÷066 | 11317600:00 | 83689149:34 | 5441182:13 | 3762748:15 | 84077101:00 | 108566494:23 |
| 2066÷067 | 14067400:00 | 100892637:10 | 6497190:84 | 4837724:66 | 105617101:00 | 131380336:20 |
| 2067÷068 | 17568100:00 | 129577093:51 | 8948330:56 | 5948200:62 | 132958827:79 | 174472053:00 |
| 2068÷069 | 22141100:00 | 10643869:37 | 10643869:37 | 7698177:02 | 188428449:00 | 239288908:07 |
| 2069÷070 | 29939700:00 | 241699738:49 | 14592300:04 | 9884514:63 | 239199770:54 | 303075545:00 |
| 2070÷071 | 37459000:00 | 321324766:19 | 18224876:36 | 13630981:33 | 317755917:44 | 408216449:35 |
| 2071÷072 | 47481200:00 | 439021606:02 | 23272412:42 | 16570483:48 | 410286006:28 | 547392112:11 |
| 2072÷073 | 57619400:00 | 570460971:91 | 46208651:38 | 16007554:77 | 585148289:56 | 720432267:12 |
| 2073÷074 | 72710100:00 | 646930373:98 | 54477795:47 | 31177671:92 | 708417970:41 | 903073134:09 |

**ङ) निष्कर्ष**

२५ वर्षको अवधिमा प्रत्येक वर्ष तोकिएको समयभित्र नै साधारण सभाहरू सम्पन्न हुनु, तोकिएको समयावधि अगावै लेखापरीक्षण सम्पन्न हुनु, लेखापरीक्षण प्रतिवेदन प्रकाशन गरी साधारण सभामा वितरण गर्नसक्नु लगायतका गतिविधिहरूले संस्थाको वित्तीय सुशासनलाई पुष्टि गर्दछ। संस्थालाई यस अवस्थासम्म ल्याउने कार्यमा सम्पूर्ण शेयर सदस्यहरूको महत्वपूर्ण भूमिका रहेको छ।



# सञ्चारमाध्यममा जनसचेतन



अर्जुन दाहाल 'अपवाद'

जनसचेतन स्थापना भएको २०५० सालसम्ममा दोलखामा जम्मा एउटा पत्रिका दर्ता थियो अरुणीमा त्रैमासिक। प्रजातन्त्र पुनस्थापना भएको ४ वर्ष मात्रै भएको थियो । काठमाण्डौमा कान्तिपुर लगायतका दैनिकहरूको प्रकाशन शुरु भएको थियो । यस समयमा स्थापना भएको जनसचेतन सहकारीले स्थानीयको समेत ध्यान तान्न सकिरहेको थिएन। सञ्चारमाध्यमका लागि समाचार नबन्नु नौलो विषय भएन।

२५ वर्ष प्रवेश गर्दा दोलखामा २ दर्जन बढी छापा सञ्चार संस्थाहरू दर्ता भएका छन् । १ दैनिक र केही साप्ताहिक तथा मासिक पत्रिकाहरू नियमित रूपमा प्रकाशनमा छन् । ४ ओटा रेडियोहरू नियमित प्रसारणमा छन्। रेडियोसँगै पछिल्लो समयमा करीब आधा दर्जन बढी अनलाइनहरू सञ्चालनमा छन्।

जिल्लामा सञ्चारमाध्यमसँगै केन्द्रस्तरका दर्जन बढी सञ्चारमाध्यममा दोलखाका पत्रकारहरू आवद्ध छन्। यसले गर्दा समाचारमा जनसचेतन सहकारीका विषयवस्तुहरू समावेश हुन थालेका छन् । जसरी सहकारीको प्रभाव राष्ट्रिय हुँदै अन्तर्राष्ट्रिय तहमा पुगेको छ। जिल्ला सँगसँगै राष्ट्रिय सञ्चारमाध्यममा पनि यसबारेका सामग्रीहरूले स्थान पाउन थालेका छन्।

सहकारीले गरेका कामहरूले समाजमा पारेको प्रभावका बारे विभिन्न पत्रिका, अनलाइनहरूमा समाचार तथा सामग्रीहरू छापिएका छन्। रेडियो तथा टेलिभिजनहरूमा समाचारका साथै सामग्रीहरू प्रसारण भएका छन्। यसले गर्दा समग्र सहकारी क्षेत्रकै सकरात्मक सन्देश प्रवाह भैरहेको छ। सहकारीले यसको राम्रोसँग दस्तावेजीकरण गर्न नसक्दा तिनीहरूबारे यहाँ विस्तारमा उल्लेख गर्न सकिएन।

यस सहकारीका बारेमा केन्द्रिय तहमा छापिएको समाचार खोज्दै जाँदा वि सं. २०६२ मा सहकारीमा नयाँ सञ्चालक समितिको निर्वाचनमा तत्कालिन नेकपा माओवादीले गरेको हस्तक्षेपबारे देखिन्छ । यसपश्चात सहकारीले प्रदान गरेका सेवा सुविधा तथा कार्यक्रमहरूका बारेमा समाचारहरू स्थानीय तथा राष्ट्रिय सञ्चारमाध्यममा






सहकारी गुरु

प्रकाशन भएको देखिन्छ । दोस्रो जनआन्दोलन पश्चात देशमा आर्थिक विषयवस्तुमा केन्द्रित दैनिकहरू शुरु भएपछि यस सहकारीले गरेका कार्यक्रमका बारेमा समाचार तथा सामग्रीहरू छापिएको पाइन्छ । विभिन्न लेखहरूमा यस सहकारीलाई उदाहरणका रूपमा समेत उल्लेख गरेको पाइन्छ। पछिल्ला समयहरूमा आर्थिक तथा सहकारीकेन्द्रित पत्रिका/अनलाइनहरूले जनसचेतन सहकारीका विभिन्न गतिविधिहरूलाई विशेष प्राथमिकताका साथ सामग्रीहरू प्रकाशन प्रसारण गर्ने गरेका छन् ।

अहिलेको युग नै सूचना प्रविधिमा आधारित युग हो । सहकारीका बारेमा प्रकाशित सामग्रीहरूको अभावका कारण सहकारी संस्थाले विभिन्न समयमा गरेका महत्वपूर्ण कार्यहरू ओझेलमा पर्ने खतरा रहन्छ। कुनै पनि संस्थाको इतिहास कायम गर्ने भनेकै दस्तावेज हो। सञ्चारमाध्यममा प्रकाशित प्रशारित सामग्रीहरूको सही दस्तावेजीकरण हुन नसक्दा संस्थाका उपलब्धिहरूलाई हामीले जति जोड दिएर प्रस्तुत गर्न सक्थ्यौं त्यस पाटोमा हामी कमजोर हुने निश्चित हुन्छ ।

जनसचेतनका उपलब्ध प्रकाशित सामग्रीहरू अध्ययन गर्दा आगामी दिनमा प्रकाशन प्रसारण सामग्रीलाई व्यवस्थित गर्न निम्न विषयमा ध्यान दिनुपर्ने देखिन्छ:

- संस्थाका बारेमा आएका समाचारहरू संग्रह गर्न कुनै कर्मचारी वा व्यक्ति विशेषलाई जिम्मेवारी दिने ।
- हालसम्म प्रकाशन प्रशारण भएका सामग्रीहरू विद्युतीय माध्यमका साथै छपाइ गरेर राख्ने ।
- संस्थाका कार्यक्रमहरूको पत्रकारहरूलाई नियमित रूपमा सूचना उपलब्ध गर्ने व्यवस्था गर्ने ।
- समय समयमा पत्रकारहरूका लागि अध्ययन भ्रमणको व्यवस्था गर्ने ।
- निश्चित समयको अन्तरालमा जनसचेतनका बारेमा सामग्रीहरू प्रकाशन प्रशारण भएका छन् कि भनेर खोजी गर्ने व्यवस्था मिलाउने ।
- छापिएका तथा प्रशासरण भएका सामग्रीहरूलाई संस्थाको वेभसाइटमा विषयगत रूपमा लिंक गर्ने ।
- सूचना, सञ्चार तथा व्यवस्थापनका लागि सहकारीमा छुट्टै इकाईको व्यवस्था गर्ने ।
- विशेष प्रकाशनहरू राष्ट्रिय पुस्तकालय (मदन पुरस्कार गुठी, ISBN आदि) दर्ता गरिराख्ने ।

संस्थाको हालसम्म छापिएकामध्ये उपलब्ध भएका सामग्रीहरूको विवरण तालिका १ मा प्रस्तुत गरिएको छ ।

**तालिका १: जनसचेतनसम्बन्धी प्रकाशित समाचारहरू**

| शीर्षक | प्रकाशन स्रोत | प्रकाशन मिति | लिङ्क |
|---|---|---|---|
| सहकारी संस्थामा कार्यरत व्यक्तिलाई माओवादी धम्की | नेपाल समाचारपत्र | २८ कार्तिक २०६२ पेज ६ | |
| सहकारीद्वारा विद्यालयमै वचत सुविधा | अभियान | २ फागुन २०६७ | http://www.abhiyan.com.np/article-sahakari_2ndfalgun2067_sahakaarii#.U-iHGdKSxOI |
| बाखा तथा बंगुरपालनमा सहकारीको डेढ करोड | अभियान | ३० साउन २०६८ | http://www.abhiyan.com.np/article-sahakari_30thshrawan2068_sahakaari#.U-iH-tKSxOI |
| समृद्ध बन्दैछ सिङ्गो जिल्ला | हिमाल | भदौ १६-३१, २०६८ | http://nepalihimal.com/news.php?id=4406 |
| ६ सहकारी पुरस्कृत | अभियान | २९ भदौ २०६९ पेज ७ | http://www.abhiyan.com.np/article-lagani_29bahdra2069_6sahakari#.U-nahuNdUTs |
| जनसचेतनलाई एक्सेस ब्राण्डिङ | शैलुङ्गको सूर्य | ९ असोज २०६९ पेज ६ | |
| सहकारीद्वारा जेष्ठ सदस्यलाई भत्ता | नयाँ पत्रिका | २०६९ असोज | |
| सहकारी अभियानको स्वर्णयुग (लेख) | सौर्य | २० चैत्र २०६९ | http://www.souryadaily.com/2013/04/64925.html |
| सहकारी मार्फत आर्थिक सामाजिक रुपान्तरण | अभियान | १० अप्रिल २०१३<br>२९ चैत्र २०६९ | http://www.abhiyan.com.np/article-product_29chaitra2069_dokha#.U-nTj-NdUTs |



| शीर्षक | प्रकाशन स्रोत | प्रकाशन मिति | लिङ्क |
| --- | --- | --- | --- |
| रेमिट्यान्सले दशैं रमाइलो | कान्तिपुर | १ कार्तिक २०७० पेज १२ | |
| वृद्धाश्रम बनाउने तयारीमा सहकारी | गोरखापत्र | ३ चैत्र २०७० पेज १४ | |
| विद्यालयलाई पुस्तक वितरण | कालिञ्चोक सन्देश | २०७१ जेठ २२ | |
| लाखौंको पुस्तक वितरण | राजधानी | २०७१ असार ६ पेज ५ | |
| खुसी नै खुसी | कान्तिपुर, कतार | २ साउन २०७१ | |
| गाउँ गाउँमा रेमिट्यान्स सेवा | कारोबार | | http://www.karobardaily.com/nepali/news/2014/04/1397383153 |
| वैदेशिक रोजगारीमा सरकारी लगानी | नेपाल समाचारपत्र | 2008-08-25 | http://www.newsofnepal.com/detailnews.php?type=samachaar&cat=16&id=12934 |
| बालबालिका पनि बचत अभियानमा | नेपाल समाचारपत्र | 2008-09-11 | http://www.newsofnepal.com/detailnews.php?type=samachaar&cat=16&id=13275 |
| No alternative to cooperation: Khanal | The Rising Nepal | Oct 12, | http://www.gorkhapatra.org.np/gopa.detail.php?article_id=25293&cat_id=8 |
| समृद्धिको भकारी | हिमाल | | http://nepalihimal.com/article/928 |
| रणनीतिक योजनाका लागि मैनापोखरीमा युवा साकोस | समय समाज | २ डिसेम्बर २०१३ | **http://www.samayasamaj.com.np/archives/1941#sthash.BYU9pCcJ.dpuf** |
| BOOK DISTRIBUTION PROGRAM: DOLAKHA | | | http://hdaf.org.np/book-distribution-program/ |
| DPM GAUTAM URGES FIS TO INVEST IN PRODUCTIVE SECTORS | sahakari khabar | | http://www.sahakarikhabar.com/?p=3345 |
| दोलखाका सहकारीहरुहरु माथिल्लो तामाकोसीको शेयरमा लगानी गर्ने | कारोबार | **October 19, 2014** | http://www.karobardaily.com/news/39280 |
| सहकारी नियमावलीमा संसोधनको खाँचो | कारोबार | | http://www.karobardaily.com/news/25629 |
| सहकारी दिवस भव्यतापूर्वक मनाइयो | sahakari khabar | | http://www.sahakarikhabar.com/?p=8589 |
| संस्था टिकाउन सदस्य समृद्ध बनाउनुपर्छ | bartaman sahakari | | http://www.bartamansahakari.com.np/?p=739 |
| दोलखा सहकारीको विश्वविद्यालय हो | bartaman sahakari | | http://www.bartamansahakari.com.np/?p=732 |
| सहकारीको नमुना जिल्ला बन्दै दोलखा | bartaman sahakari | | http://www.bartamansahakari.com.np/?p=729 |
| आन्तरिक राजश्वले गर्‍यो उत्कृष्ट करदातालाई सम्मान | online khabar | | https://www.onlinekhabar.com/2015/03/254010 |
| जनसचेतनमा पुनः भीम दाहाल सर्वसम्मत | bartaman sahakari | | http://www.bartamansahakari.com.np/?p=1600 |
| सोचेजस्तो हुन्न जीवन | Setopati | | https://setopati.com/samaj/23962/ |
| तरकारीले धानेको जिन्दगी | शैलुङ्गको सूर्य | | |
| सहकारीको बढोत्तरी | कान्तिपुर कोसेली | | |
| विद्यालयभित्रै बालसहकारी | आजको शिक्षा | | |
| नेपालका १९ सहकारी मात्र एसियाली मापदण्डभित्र | Banking khabar online | **September 9, 2017** | http://bankingkhabar.com/?p=28621 |

# रजत जयन्ती मूल समारोह समितिको नामावली

| क्र.स. | स.न. | नाम | समारोह समितिमा पद | संस्थामा पद | मोबाइल नं. |
|---|---|---|---|---|---|
| १ | १२ | भीमप्रसाद दाहाल | संयोजक | अध्यक्ष- सञ्चालक समिति | ९८५४०४५१५७ |
| २ | ७१० | हेमन्त चौलागाइँ | सदस्य | उपाध्यक्ष - सञ्चालक समिति | ९८५१००२११९ |
| ३ | ३५७ | मीनप्रसाद दाहाल | सदस्य | सचिव - सञ्चालक समिति | ९८६१०५२५३४ |
| ४ | १२१ | नारायणप्रसाद दाहाल | सदस्य | सह-सचिव - सञ्चालक समिति | ९८५१२१४३४२ |
| ५ | ७२५ | कमल बहादुर दाहाल | सदस्य | कोषाध्यक्ष - सञ्चालक समिति | ९८५११५७४८० |
| ६ | ३२० | रोचकुमारी चौलागाइँ | सदस्य | सदस्य - सञ्चालक समिति | ९६१४९७५६७० |
| ७ | २२३२ | भरत के.सी. | सदस्य | सदस्य - सञ्चालक समिति | ९८५११६०८७९ |
| ८ | ५३६१ | स्वस्थानी कुँवर | सदस्य | सदस्य - सञ्चालक समिति | ९८६४००४५९९ |
| ९ | ५५९१ | सरद सापकोटा | सदस्य | सदस्य - सञ्चालक समिति | ९८५१०३६८८७ |
| १० | १०१४८ | शिवराम ढकाल | सदस्य | सदस्य - सञ्चालक समिति | ९८४९०२४३२२ |
| ११ | १९०६ | चक्र बहादुर घतानी | सदस्य | सदस्य - सञ्चालक समिति | ९८०७६२९८०६ |
| १२ | ११६६ | फुलकाजी तामाङ | सदस्य | सदस्य - सञ्चालक समिति | ९८१५८७११५१ |
| १३ | ८७०० | टंक बहादुर सुनुवार | सदस्य | सदस्य - सञ्चालक समिति | ९८१५८६५६५७ |
| १४ | ७३४३ | सुमिता शिवाकोटी (उप्रेती) | सदस्य | सदस्य - सञ्चालक समिति | ९८४९११०६४६ |
| १५ | २८४४ | अस्मिता दाहाल | सदस्य | सदस्य - सञ्चालक समिति | ९८६०३१००४० |
| १६ | ५०८ | गोपालध्वज श्रेष्ठ | सदस्य | संयोजक - लेखा सुपरीवेक्षण समिति | ९८५४०४५४०० |
| १७ | २१ | राधाकृष्ण दाहाल | सदस्य | सदस्य - लेखा सुपरीवेक्षण समिति | ९८४१९८१३०६ |
| १८ | ८५३ | पुष्पराज दाहाल | सदस्य | सदस्य - लेखा सुपरीवेक्षण समिति | ९८४४१४५८२५ |
| १९ | १ | यज्ञराज ढुङ्गेल | सदस्य | संस्थापक अध्यक्ष | ९८४१४५७७८० |
| २० | ८ | पुष्करकुमार दाहाल | सदस्य | संस्थापक कोषाध्यक्ष | ९८५११७९९४६ |
| २१ | २९ | पशुपति चौलागाइँ | सदस्य | सयोजक - सल्लाहकार समिति | ९८५११०१०२६ |
| २२ | ६६२८ | पार्वत गुरुङ | सदस्य | सदस्य - सल्लाहकार समिति | ९८५१०५५०८४ |
| २३ | २८८७ | शान्ति पाखिन | सदस्य | सदस्य - सल्लाहकार समिति | ९८५११२८६७५ |
| २४ | २४२ | ऋषिकेश उप्रेती | सदस्य | सदस्य - सल्लाहकार समिति | ९८५१०७७६४७ |
| २५ | ५३४८ | राजेन्द्र मानन्धर | सदस्य | सदस्य - सल्लाहकार समिति | ९८५१०९३६८५ |
| २६ | १९९६ | शङ्करलाल श्रेष्ठ | सदस्य | सदस्य - सल्लाहकार समिति | ९७५४२०१६०२ |
| २७ | ३५ | धर्मानन्द दाहाल | सदस्य | सदस्य - सल्लाहकार समिति | ९७५१०४६१४३ |
| २८ | ५१४० | प्रोणप्रताप के.सी | सदस्य | कानुनी सल्लाहकार | ९८४४०६१६६५ |
| २९ | २६३९ | हरी बहादुर पाण्डे | सदस्य | सदस्य- ऋण उप समिति | ९८४४०६०९४९ |
| ३० | ३०१५ | विमला दाहाल घिमिरे | सदस्य | सदस्य- ऋण उप समिति | ९७४४०२८५२२ |
| ३१ | ६२७२ | रणकाजी तामाङ | सदस्य | सदस्य- शिक्षा उप समिति | ९८४४०१२९३० |
| ३२ | ९५४७ | दुर्गा सुवेदी आचार्य | सदस्य | सदस्य- शिक्षा उप समिति | ९८४४००१०७० |
| ३३ | २०५६ | बिमला दाहाल | सदस्य | सदस्य- महिला उप समिति | ९८०३१५६२०१ |
| ३४ | १२६६९ | रजिना सुनुवार | सदस्य | सदस्य- महिला उप समिति | ९८४४०००९४७ |
| ३५ | ४१६० | भवानी उप्रेती | सदस्य | सदस्य- महिला उप समिति | ९७४१०४८०८८ |



| क्र.स. | स.न. | नाम | समारोह समितिमा पद | संस्थामा पद | मोबाइल नं. |
|---|---|---|---|---|---|
| ३६ | ९३१० | पार्वती सुनुवार | सदस्य | सदस्य- महिला उप समिति | ९७४४०३६११५/ ९८१९०५०११९ |
| ३७ | ८७६९ | दुर्गा ओली | सदस्य | सदस्य- महिला उप समिति | ९८४९५८०६३५ |
| ३८ | ९३८५ | गोमा दाहाल | सदस्य | सदस्य- महिला उप समिति | ९७४११०९९९९ |
| ३९ | १४६७ | श्यामकृष्ण अधिकारी | सदस्य | सदस्य- धितो लिलाम उप समिति | ९८५४०४५१२५ |
| ४० | ८८०० | जम्के बहादुर श्रेष्ठ | सदस्य | सदस्य- धितो लिलाम उप समिति | ९७४१०७८२२९ |
| ४१ | २ | विष्णु प्रसाद चौलागाइँ | सदस्य | संस्थापक सदस्य | ९७४४०२८४१३ |
| ४२ | ३ | बावुराम गिरी | सदस्य | संस्थापक सदस्य | ९७४११७५०८० |
| ४३ | ४ | पुण्य प्रसाद घिमिरे | सदस्य | संस्थापक सदस्य | ९८४१६७०४०५ |
| ४४ | ५ | गोपीकृष्ण शर्मा | सदस्य | संस्थापक सदस्य | ९७४१०५०१४७ |
| ४५ | ६ | पुण्य प्रसाद घिमिरे | सदस्य | संस्थापक सदस्य | ९७४१०१९६५५ |
| ४६ | ७ | सुदर्शन ढुङ्गेल | सदस्य | संस्थापक सदस्य | ९८०८०३६४१९ |
| ४७ | ९ | बिर्ख बहादुर खडका | सदस्य | संस्थापक सदस्य | ९८१७८३६८७० |
| ४८ | १० | कुमार चौलागाइँ | सदस्य | संस्थापक सदस्य | ९८४९१३५९८८ |
| ४९ | १४ | रत्न प्रसाद घिमिरे | सदस्य | संस्थापक सदस्य | ९७४४०२८७०७ |
| ५० | १५ | छत्र प्रसाद दाहाल | सदस्य | संस्थापक सदस्य | ९७४१०१५६७५ |
| ५१ | १६ | राजेन्द्र प्रसाद ढुङ्गेल | सदस्य | संस्थापक सदस्य | ९८६११३६३९५ |
| ५२ | १७ | दिपक कुमार बस्नेत | सदस्य | संस्थापक सदस्य | ९८४४०६०३५४ |
| ५३ | १८ | परितोष कुमार कर्ण | सदस्य | संस्थापक सदस्य | ९८५४०४५०४४ |
| ५४ | १९ | पुण्य प्रसाद न्यौपाने | सदस्य | संस्थापक सदस्य | ९८१२०६३६५७ |
| ५५ | २२ | बोमहरी दाहाल | सदस्य | संस्थापक सदस्य | ९७४१०५४९२० |
| ५६ | २४ | बाल कुमार दाहाल | सदस्य | संस्थापक सदस्य | ९८६००६३३२४ |
| ५७ | २६ | विष्णु प्रसाद दाहाल | सदस्य | संस्थापक सदस्य | ९८४४१८५५५९ |
| ५८ | २७ | ज्ञानेन्द्र बहादुर खडका | सदस्य | संस्थापक सदस्य | ९७४४२४४२४५ |
| ५९ | २८ | ललित बहादुर कार्की | सदस्य | संस्थापक सदस्य | ९८१६८७६४८५ |
| ६० | ३१ | मिन प्रसाद शिवाकोटी | सदस्य | संस्थापक सदस्य | ९८०९६३३६५० |
| ६१ | ३२ | भवानी प्रसाद घिमिरे | सदस्य | संस्थापक सदस्य | ९८४३९१११२० |
| ६२ | ३३ | घनश्याम घिमिरे | सदस्य | संस्थापक सदस्य | ९८४४०६१८६० |
| ६३ | ३४ | चन्द्र बहादुर दाहाल | सदस्य | संस्थापक सदस्य | ९८४४१४४४९७ |
| ६४ | ५९९१ | जीवन लामा | सदस्य | पत्रकार | ९८४४०६०१२३ |
| ६५ | २८९६ | अर्जुन चौलागाइँ | सदस्य | निजामती कर्मचारी | ९८५११९३९३१ |
| ६६ | ८६२७ | होम पाठक | सदस्य | सामाजिक अभियन्ता | ९८५११८६६९० |
| ६७ | ५५६६ | जीवशराज खडका | सदस्य | सहकारीकर्मी | ९८५४०४५७७७ |
| ६८ | १०३३८ | बलराम के.सी. | सदस्य | सहकारी कर्मचारी | ९८४४१९६७८३ |
| ६९ | | पूर्णादेवी तामाङ | सदस्य नभएको | सहकारीकर्मी | ९८४४००२६१६ |
| ७० | ३०८४ | भिमकुमारी बस्नेत | सदस्य | उत्कृष्ट बचत कर्ता | ९८४९४०८१०० |
| ७१ | ५०४३ | प्रेम बहादुर कार्की | सदस्य | उत्कृष्ट बचतकर्ता | ९८६०६८८५४२ |
| ७२ | १४४८ | दोस कुमार बस्नेत | सदस्य | उत्कृष्ट बचतकर्ता | ९८४९१०७९०५ |
| ७३ | १९६ | शम्भु प्रसाद दाहाल | सदस्य | उत्कृष्ट बचतकर्ता | ९७४१०६६३८२ |

| क्र.स. | स.न. | नाम | समारोह समितिमा पद | संस्थामा पद | मोबाइल नं. |
|---|---|---|---|---|---|
| ७४ | ७७७९ | शुभद्रा खडका कार्की | सदस्य | उत्कृष्ट बचतकर्ता | ९८४९३२५४८१ |
| ७५ | ५९१२ | रुद्रजंग बुढाथोकी | सदस्य | उत्कृष्ट ऋण कारोवारकर्ता | ९८४४२०८३७५ |
| ७६ | ३७५ | डम्बर कुमारी वि.क | सदस्य | उत्कृष्ट ऋण कारोवारकर्ता | ९८०७६२९८०६ |
| ७७ | ७७०६ | चन्द्र बहादुर खडका | सदस्य | उत्कृष्ट ऋण कारोवारकर्ता | ९८४१८२९२७२ |
| ७८ | १४४१ | दल बहादुर घिमिरे | सदस्य | उत्कृष्ट ऋण कारोवारकर्ता | ९८६१७३४९३० |
| ७९ | २६६९ | रामजी दाहाल | सदस्य | उत्कृष्ट ऋण कारोवारकर्ता | ९८६१०५२५४७ |
| ८० | ४८९ | हरि प्रसाद रिमाल | सदस्य | उत्कृष्ट शेयर खरिदकर्ता | ९७५५०००२६६ |
| ८१ | ३१३६ | राजेश बस्नेत | सदस्य | उत्कृष्ट शेयर खरिदकर्ता | ९८५१०८९१४८ |
| ८२ | १४८२२ | रूपा श्रेष्ठ | सदस्य | उत्कृष्ट शेयर खरिदकर्ता | ९८४४२०५३९३ |
| ८३ | १६८८ | नवराज घिमिरे | सदस्य | उत्कृष्ट शेयर खरिदकर्ता | ९८६०२२१८२७ |
| ८४ | २९३५ | गिता भण्डारी | सदस्य | उत्कृष्ट शेयर खरिदकर्ता | ९८६०२२१८२७ |
| ८५ | ६२ | नाम कुमारी शिवाकोटी | सदस्य | पुर्व सञ्चालक | ९८४४३२८००३ |
| ८६ | ४७ | कृष्ण कुमार लामा | सदस्य | पुर्व सञ्चालक | ९८४९११२९५५ |
| ८७ | ८७ | केशव प्रसाद दाहाल | सदस्य | पुर्व सञ्चालक | ९७४४०२२१५७ |
| ८८ | १८३ | तारा प्रसाद पन्त | सदस्य | पुर्व सञ्चालक | ९८५४०४५७०० |
| ८९ | १४१ | माधब प्रसाद दाहाल (१४१) | सदस्य | पुर्व सञ्चालक | ९७४१०५८९४७ |
| ९० | ९० | होम प्रसाद आचार्य | सदस्य | पुर्व सञ्चालक | ९७४१०९३०२३ |
| ९१ | १४६ | रूपा दाहाल | सदस्य | पुर्व सञ्चालक | ९८४९६४३२८३ |
| ९२ | १५५ | मन्दिरा दाहाल | सदस्य | पुर्व सञ्चालक | ९८४१५७०३५५ |
| ९३ | ५४ | शिव प्रसाद खतिवडा | सदस्य | पुर्व सञ्चालक | ९८४४३०९७७४ |
| ९४ | १२१० | बिन्दु देबी दाहाल | सदस्य | पुर्व सञ्चालक | ९७४११२९२३५ |
| ९५ | १६५८ | दिनानाथ ढुङ्गेल | सदस्य | पुर्व सञ्चालक | ९७४५०३७६१८ |
| ९६ | ७५६ | देबी दाहाल | सदस्य | पुर्व सञ्चालक | ९७४१०४८२९० |
| ९७ | १५५२ | पम्बेलमु शेर्पा | सदस्य | पुर्व सञ्चालक | ९८६४०००७७३ |
| ९८ | ३९४ | गगने सार्की | सदस्य | पुर्व सञ्चालक | ९८६०७४७०३६ |
| ९९ | १७६० | रजुना शर्मा | सदस्य | पुर्व सञ्चालक | ९७४३६३९४६७ |
| १०० | ७५९ | पुष्पराज भट्टराई | सदस्य | पुर्व सञ्चालक | ९८४९६१२११८ |
| १०१ | १६५० | नवराज खडका | सदस्य | पुर्व सञ्चालक | ९८१३६९१४७३ |
| १०२ | २५९७ | कल्पना उप्रेती | सदस्य | पुर्व सञ्चालक | ९८४९६५६०२२ |
| १०३ | ५१७१ | पुर्ण बहादुर कुँवर | सदस्य | पुर्व सञ्चालक | ९८४४१८६२९६ |
| १०४ | १६८ | रिने शेर्पा | सदस्य | पुर्व सञ्चालक | ९८५४०४५०३० |
| १०५ | ५७ | कृष्ण प्रसाद रिमाल | सदस्य | पुर्व सञ्चालक | ९७४१०१८१४५ |
| १०६ | ४५५४ | सिमा लामा | सदस्य | पुर्व सञ्चालक | ९८४९५०६३३२ |
| १०७ | २०८ | टिकाराम घिमिरे | सदस्य | पुर्व सञ्चालक | ९८४४१४५५५६ |
| १०८ | १२८६३ | कृष्णकुमार श्रेष्ठ | सदस्य सचिव | प्रमुख कार्यकारी अधिकृत | ९८५४०४५८९६ |



# हालसम्मका सञ्चालकहरूको नामावली

### तदर्थ समिति २०५०।०६।२२

| क्र.स. | नाम | पद | कैफियत |
|---|---|---|---|
| १ | यज्ञराज ढुङ्गेल | संयोजक | |
| २ | गोपीकृष्ण शर्मा | उपाध्यक्ष | |
| ३ | पुण्य प्रसाद घिमिरे | सचिव | |
| ४ | पुष्कर कुमार दाहाल | कोषाध्यक्ष | |
| ५ | हरी प्रसाद दाहाल | सदस्य | |
| ६ | बोमहरी दाहाल | सदस्य | |
| ७ | भीम प्रसाद दाहाल (स.नं.१३) | सदस्य | |

### प्रारम्भिक साधारण सभावाट निर्वाचित पहिलो सञ्चालक समिति २०५०।१०।२३

| क्र.स. | नाम | पद | कैफियत |
|---|---|---|---|
| १ | यज्ञराज ढुङ्गेल | संयोजक | |
| २ | भवानी प्रसाद घिमिरे | उपाध्यक्ष | |
| ३ | पुण्य प्रसाद घिमिरे | सचिव | भाद्र २४, २०५१ बाट सचिवमा हरि प्रसाद दाहाल निर्वाचित भएको |
| ४ | पुष्कर कुमार दाहाल | कोषाध्यक्ष | |
| ५ | नाम कुमारी शिवाकोटी | सदस्य | |
| ६ | कृष्ण कुमार लामा | सदस्य | |
| ७ | बोमहरी दाहाल | सदस्य | |
| ८ | बिष्णु प्रसाद दाहाल | सदस्य | |
| ९ | गोपीकृष्ण शर्मा | सदस्य | |

### पहिलो लेखा सुपरीवेक्षण समिति २०५०।१०।२३

| क्र.स. | नाम | पद | कैफियत |
|---|---|---|---|
| १ | चन्द्रबहादुर दाहाल | संयोजक | |
| २ | हरिप्रसाद दाहाल | सचिव | भाद्र २४ २०५१ वाट सचिव नारायणप्रसाद दाहाल निर्वाचित भएको |
| ३ | धर्मानन्द दाहाल | सदस्य | |

### दोस्रो साधारण सभाबाट निर्वाचित दोस्रो सञ्चालक समिति २०५२।११।२१

| क्र.स. | नाम | पद | कैफियत |
|---|---|---|---|
| १ | यज्ञराज ढुङ्गेल | अध्यक्ष | |
| २ | भवानी प्रसाद घिमिरे | उपाध्यक्ष | |
| ३ | हरिप्रसाद दाहाल | सचिव | |
| ४ | पुष्करकुमार दाहाल | कोषाध्यक्ष | |
| ५ | नामकुमारी शिवाकोटी | सदस्य | |
| ६ | प्रेमकुमारी चौलागाई | सदस्य | |
| ७ | बोमहरी दाहाल | सदस्य | |
| ८ | केशवप्रसाद दाहाल | सदस्य | |
| ९ | केदारप्रसाद दाहाल | सदस्य | |

### दोस्रो लेखा सुपरीवेक्षण समिति २०५२।११।२१

| क्र.स. | नाम | पद | कैफियत |
|---|---|---|---|
| १ | धर्मानन्द दाहाल | संयोजक | |
| २ | कृष्ण कुमार लामा | सदस्य | |
| ३ | नारायण प्रसाद दाहाल | सचिव | |

### तेस्रो साधारण सभावाट निर्वाचित तेस्रो सञ्चालक समिति २०५३।०५।१५

| क्र.स. | नाम | पद | कैफियत |
|---|---|---|---|
| १ | यज्ञराज ढुङ्गेल | अध्यक्ष | पौषभित्र साधारण सभा सम्पन्न गर्नुपर्ने वैधानिक व्यवस्था भएको र सञ्चालक समितिको पदावधि फागुणमा सकिने परम्परा रहँदै आएकोमा सबै सञ्चालकले राजीनामा दिई समायावधिभित्रै साधारण सभा सम्पन्न गर्न नयाँ सञ्चालक समितिको निर्वाचन गरिएको । |
| २ | भवानी प्रसाद घिमिरे | उपाध्यक्ष | |
| ३ | नारायण प्रसाद दाहाल | सचिव | |
| ४ | पुष्कर कुमार दाहाल | कोषाध्यक्ष | |
| ५ | नाम कुमारी शिवाकोटी | सदस्य | |
| ६ | प्रेम कुमारी चौलागाई | सदस्य | |
| ७ | बोमहरी दाहाल | सदस्य | |
| ८ | केशव प्रसाद दाहाल | सदस्य | |
| ९ | केदार प्रसाद दाहाल | सदस्य | |

### तेस्रो लेखा सुपरीवेक्षण समिति २०५३।०५।१५

| क्र.स. | नाम | पद | कैफियत |
|---|---|---|---|
| १ | धर्मानन्द दाहाल | संयोजक | |
| २ | कृष्णकुमार लामा | सदस्य | |
| ३ | वालकुमार दाहाल | सचिव | |

### पाँचौ साधारण सभाबाट निर्वाचित चौथो सञ्चालक समिति २०५५।०६।१०

| क्र.स. | नाम | पद | कैफियत |
|---|---|---|---|
| १ | यज्ञराज ढुङ्गेल | अध्यक्ष | |
| २ | नारायण प्रसाद दाहाल | उपाध्यक्ष | |
| ३ | भीम प्रसाद दाहाल | सचिव | |
| ४ | पुष्कर कुमार दाहाल | कोषाध्यक्ष | |
| ५ | तारा प्रसाद पन्त | सदस्य | |
| ६ | गोपालध्वज श्रेष्ठ | सदस्य | |
| ७ | बोमहरी दाहाल | सदस्य | |
| ८ | घनश्याम घिमिरे | सदस्य | |
| ९ | रोच कुमारी चौलागाई | सदस्य | |

**चौथो लेखा सुपरीवेक्षण समिति २०५५।०६।१०**

| क्र.स. | नाम | पद | कैफियत |
|---|---|---|---|
| १ | धर्मानन्द दाहाल | संयोजक | |
| २ | माधव प्रसाद दाहाल (स.न.३८६) | सदस्य | |
| ३ | माधव प्रसाद दाहाल (स.न.१४१) | सचिव | |

**सातौं साधारण सभाबाट पाँचौ सञ्चालक समिति २०५७।०६।१४**

| क्र.स. | नाम | पद | कैफियत |
|---|---|---|---|
| १ | यज्ञराज ढुङ्गेल | अध्यक्ष | |
| २ | तारा प्रसाद पन्त | उपाध्यक्ष | |
| ३ | भीम प्रसाद दाहाल | सचिव | |
| ४ | पुष्कर कुमार दाहाल | कोषाध्यक्ष | |
| ५ | गोपालध्वज श्रेष्ठ | सदस्य | |
| ६ | कमल बहादुर दाहाल | सदस्य | |
| ७ | होम प्रसाद आचार्य | सदस्य | |
| ८ | हेमन्त कुमार चौलागाइँ | सदस्य | |
| ९ | रूपा दाहाल | सदस्य | |
| १० | गोमा दाहाल | सदस्य | |
| ११ | मन्दिरा दाहाल | सदस्य | |

**पाँचौ लेखा सुपरीवेक्षण समिति २०५७।०६।१४**

| क्र.स. | नाम | पद | कैफियत |
|---|---|---|---|
| १ | ऋषिकेश उप्रेती | संयोजक | |
| २ | माधवप्रसाद दाहाल (३८६) | सचिव | |
| ३ | राजेन्द्र प्रसाद ढुङ्गेल | सदस्य | |

**१२ औं साधारण सभाबाट निर्वाचित छैटौं सञ्चालक समिति २०६२।०६।१५**

| क्र.स. | नाम | पद | कैफियत |
|---|---|---|---|
| १ | यज्ञराज ढुङ्गेल | अध्यक्ष | |
| २ | तारा प्रसाद पन्त | उपाध्यक्ष | |
| ३ | भीम प्रसाद दाहाल | सचिव | |
| ४ | पुष्कर कुमार दाहाल | कोषाध्यक्ष | |
| ५ | गोपालध्वज श्रेष्ठ | सदस्य | |
| ६ | कमल बहादुर दाहाल | सदस्य | भाद्र १२ २०६६ मा राजीनामा |
| ७ | हेमन्त कुमार चौलागाइँ | सदस्य | |
| ८ | नारायण प्रसाद दाहाल | सदस्य | |
| ९ | रोच कुमारी चौलागाइँ | सदस्य | |
| १० | रत्न प्रसाद शिवाकोटी | सदस्य | |
| ११ | विन्दुदेवी दाहाल | सदस्य | फागुण २८ २०६३ मा राजीनामा |
| १२ | शिव प्रसाद खतिवडा | सदस्य | |
| १३ | राधाकृष्ण दाहाल | सदस्य | फाल्गुण २८ २०६३ मा मनोनित |
| १४ | गगन चर्मकार | सदस्य | फाल्गुण २८ २०६३ मा मनोनित |
| १५ | दिनानाथ ढुङ्गेल | सदस्य | फाल्गुण २८ २०६३ मा मनोनित |
| १६ | पम्वेलमु शेर्पा | सदस्य | फाल्गुण २८ २०६३ मा मनोनित |

**११ औं साधारण सभाबाट निर्वाचित छैटौं लेखा सुपरीवेक्षण समिति २०६१।०६।३०**

| क्र.स. | नाम | पद | कैफियत |
|---|---|---|---|
| १ | धर्मानन्द दाहाल | संयोजक | |
| २ | मीन प्रसाद दाहाल | सचिव | |
| ३ | कृष्ण कुमार लामा | सदस्य | |

**१२ औं साधारण सभाबाट निर्वाचित सातौं लेखा सुपरीवेक्षण समिति २०६२।०६।१५**

| क्र.स. | नाम | पद | कैफियत |
|---|---|---|---|
| १ | धर्मानन्द दाहाल | संयोजक | |
| २ | मीन प्रसाद दाहाल | सचिव | |
| ३ | कृष्ण कुमार लामा | सदस्य | |

**१७ औं साधारण सभाबाट निर्वाचित सातौं सञ्चालक समिति २०६७।०६।२२**

| क्र.स. | नाम | पद | कैफियत |
|---|---|---|---|
| १ | यज्ञराज ढुङ्गेल | अध्यक्ष | |
| २ | भीम प्रसाद दाहाल | उपाध्यक्ष | |
| ३ | हेमन्त कुमार चौलागाई | सचिव | |
| ४ | नारायण प्रसाद दाहाल | सह-सचिव | |
| ५ | पुष्कर कुमार दाहाल | कोषाध्यक्ष | |
| ६ | केशव प्रसाद दाहाल | सदस्य | |
| ७ | रजुना शर्मा | सदस्य | |
| ८ | पुष्पराज भटराई | सदस्य | |
| ९ | मन्दिरा दाहाल | सदस्य | |
| १० | नवराज खडका | सदस्य | |
| ११ | कल्पना उप्रेती | सदस्य | |
| १२ | पुर्ण बहादुर कुँवर | सदस्य | |
| १३ | स्वस्थानी कुँवर | सदस्य | |
| १४ | गगन बहादुर विशंखे | सदस्य | |
| १५ | रिने शेर्पा | सदस्य | |

**१७ औं साधारण सभावाट निर्वाचित आठौं लेखा सुपरीवेक्षण समिति २०६७।०६।२२**

| क्र.स. | नाम | पद | कैफियत |
|---|---|---|---|
| १ | गोपालध्वज श्रेष्ठ | संयोजक | |
| २ | मिनप्रसाद दाहाल | सचिव | |
| ३ | कृष्णकुमार लामा | सदस्य | |



**२० औं साधारण सभाबाट निर्वाचित आठौं सञ्चालक समिति २०७०।०७।०१**

| क्र.स. | नाम | पद | कैफियत |
|---|---|---|---|
| १ | भीम प्रसाद दाहाल | अध्यक्ष | |
| २ | हेमन्त कुमार चौलागाइँ | उपाध्यक्ष | |
| ३ | मीन प्रसाद दाहाल | सचिव | |
| ४ | राधाकृष्ण दाहाल | सह-सचिव | |
| ५ | नारायण प्रसाद दाहाल | कोषाध्यक्ष | |
| ६ | रोच कुमारी चौलागाइँ | सदस्य | |
| ७ | भरत के.सी. | सदस्य | |
| ८ | शम्भु प्रसाद दाहाल | सदस्य | |
| ९ | कृष्ण प्रसाद रिमाल | सदस्य | |
| १० | पुर्ण बहादुर कुँवर | सदस्य | |
| ११ | स्वस्थानी कुँवर | सदस्य | |
| १२ | गगन बहादुर विशंखे | सदस्य | |
| १३ | रिने शेर्पा | सदस्य | |
| १४ | रजुना शर्मा | सदस्य | |
| १५ | सीमा लामा | सदस्य | २०७१ असोज २७ गते सम्पन्न २१ औं साधारण सभाबाट निर्वाचित |

**२० औं साधारण निर्वाचित नवौं लेखा सुपरीवेक्षण समिति २०७०।०७।०२**

| क्र.स. | नाम | पद | कैफियत |
|---|---|---|---|
| १ | गोपालध्वज श्रेष्ठ | संयोजक | |
| २ | टिकाराम घिमिरे | सचिव | |
| ३ | पुष्पराज दाहाल | सदस्य | |

**२३ औं साधारण सभावाट निर्वाचित नवौं सञ्चालक समिति २०७३।०७।२७**

| क्र.स. | नाम | पद | कैफियत |
|---|---|---|---|
| १ | भीम प्रसाद दाहाल | अध्यक्ष | |
| २ | हेमन्त कुमार चौलागाइँ | उपाध्यक्ष | |
| ३ | मीन प्रसाद दाहाल | सचिव | |
| ४ | नारायण प्रसाद दाहाल | सह-सचिव | |
| ५ | कमल बहादुर दाहाल | कोषाध्यक्ष | |
| ६ | रोच कुमारी चौलागाइँ | सदस्य | |
| ७ | भरत के.सी. | सदस्य | |
| ८ | स्वस्थानी कुँवर | सदस्य | |
| ९ | शरदचन्द सापकोटा | सदस्य | |
| १० | शिवराम ढकाल | सदस्य | |
| ११ | चक्रवहादुर वि.क. | सदस्य | |
| १२ | फुलकाजी तामाङ | सदस्य | |
| १३ | टंकवहादुर सुनुवार | सदस्य | |
| १४ | सुमिता शिवाकोटी | सदस्य | |
| १५ | अस्मिता दाहाल | सदस्य | |

**२३ औं साधारण सभावाट निर्वाचित दशौं लेखा सुपरीवेक्षण समिति २०७३।०७।२७**

| क्र.स. | नाम | पद | कैफियत |
|---|---|---|---|
| १ | गोपालध्वज श्रेष्ठ | संयोजक | |
| २ | राधाकृष्ण दाहाल | सचिव | |
| ३ | पुष्पराज दाहाल | सदस्य | |

उपरोक्त सदस्यहरु उपस्थित भएको प्रारम्भिक भेलाले निम्न अनुसार निर्णय गऱ्यो।

(१) यस संस्थाको नाम जन सचेतन सहकारी संस्था लिमिटेड राख्ने निर्णय गरियो।

(२) संस्थाको कार्य क्षेत्र डोलखा जिल्लाका काब्रे, नाम्दु, मिर्गे र गौरीमुदी गा० वि० स० हरुलाई निर्धारण गरियो।

(३) संस्थाको ठेगाना श्री हनुमन्ते ९ नं काब्रे गा० वि० काब्रे हुने निर्णय भयो।

(४) संस्थाको चिन्ह दुइ हत्केलामाथि खुलेको किताव रहेको चिन्ह रहनेछ।

(५) प्रारम्भिक साधारण सभा नहुनजेलको लागी निम्न अनुसारको ७ सदस्य तदर्थ समिति एवं समितिको गठन गरियो।

१. श्री पद्मराज ढुंगेल काब्रे - संयोजक
२. श्री गोपी कृष्ण शर्मा काब्रे - उपाध्यक्ष
३. श्री पुण्य प्रसाद घिमिरे नाम्दु - सचिव
४. श्री पुष्कर कुमार दहाल काब्रे - कोषाध्यक्ष
५. श्री हरि प्रसाद दहाल काब्रे - सदस्य
६. श्री बमहरि दहाल - मुर्गे - "
७. श्री भीम प्रसाद दहाल सिरिसेकाव "

(६) उपरोक्त समितिलाई निम्न अनुसारको अधिकार प्रत्यायोजन गरियो।

(क) संस्था दर्ता गर्ने आवश्यक सबै काम कार्वाहीहरु गर्ने।
(ख) संस्थाको प्रारम्भिक साधारण सभा बोलाउने।
(ग) संस्थाको सबै दैनिक कार्य संचालन गर्ने।
(घ) संस्था दर्ता गर्ने अधिकार कुनै व्यक्ति वा व्यक्तिहरुलाई दिने।

(७) विनियम सम्बन्धमा संस्थाको नेपाल बचत तथा ऋण सहकारी संघ लि० ले तयार पारी छापेको विनियमलाई अक्षरस स्वीकृत गरी खालीठाउँहरुमा निम्न लिखित कुराहरु भर्ने निर्णय गरियो।

<u>विनियमको धारा</u>

१ (क) संस्थाको नाम :- श्री जन सचेतन बचत तथा ऋण सहकारी संस्था लि० राख्ने।

(ख) ठेगाना :- श्री हनुमन्ते ९ नं गा० वि० काब्रे राख्ने।

२. संस्थाको कार्य क्षेत्र डोलखा जिल्लाको काब्रे, नाम्दु, मुर्गे र गौरीमुदी गा० वि० स० हरु निर्धारण गर्ने।

धारा ६· प्रवेश शुल्क रु.२५। र वार्षिक सदस्य शुल्क रु.५०। निर्धारण गर्ने।

धारा १६·(क) संस्थाको पूँजी संकलनका लागी प्रति शेयर रु.१००।- को ५००थान शेयर जारी गर्ने।

धारा १८· शेयरको प्रमाण-पत्र हराएमा रु १०। लिई अर्को प्रमाण-पत्र दिने।

धारा २५· विलम्ब शुल्क - ऋण निवेदनमा उल्लेख गरिएको उद्देश्य प्राप्ती सँगैआफुले कबुल गरेको आन्तिम समयावधि भित्र किस्ता भुक्तानी नगरेमा प्रथम महिनामा १% दोस्रो महिनामा २% तेस्रो महिनामा ३% विलम्वशुल्क लिने।

धारा ३२- संस्थामा ९ जना भएको कार्यकारी समिति हुने।

धारा ३३- संञ्चालकहरुको पदावधि २ वर्षको हुने।

धारा ३४-(ग) समितिको बैठकमा विना सूचना ३ पटक सम्म लगातार अनुपस्थित भएमा सदस्यतलाई पदबाट हटाउने।

धारा ३५- आर्थिक वर्ष श्रावण देखि आषाढ सम्म कायम गरिने।

(ट) आर्थिक वर्ष २०५०/०५१को कार्ययोजना सम्बन्धमा निम्न अनुसार निर्णय गरियो।

१. प्रति सदस्य औषत मासिक बचत रु.१००।- ले ६५ जनाबाट ६६५००।- संकलन गर्ने।

२. सदस्य संख्या - ६५ पुऱ्याउने।

३. सदस्यहरुबाट संकलित रकम मध्ये ६५% रकम उत्पादनकार्यमा लगानी गरी उनिहरुको आर्थिक सामाजिक आयस्तरमा विकास पुऱ्याउने।

४. संस्थालाई अविच्छिन्न रुपमा अधिवंशाउन सदस्यहरुबाट निम्न कार्यहरु अप-नाई संस्थालाई स्वावलम्वि बनाउने लक्ष्य राखिएको छ।

क. प्रत्येक सदस्यहरुबाट (१) (एक पटक मात्र) प्रवेश शुल्क रु २५। ले ६५ जनाबाट रु - - - - - - - - - - - - - - १८६५।- संकलन गर्ने।

ख. वार्षिक सदस्य शुल्क, नविकरण शुल्क रु ५०।- ले ६५जना बाट रु - - - - - - - - - - - ३२५०।- संकलन गर्ने।

ग. संस्थाको नाममा खोलिएको बचत खाताबाट ब्याज आर्जन गर्ने१०००।-

घ. सदस्यहरुलाई उपलब्ध गराईएको ऋण ब्याजबाट संकलनगर्ने १८६५।-

जम्मा आम्दानी रु - - - - - - - ८२००।-

५. उपरोक्त आर्जित रकम निम्न अनुसार खर्च गरिने छ।

क. मसलन्द खर्चमा रु – – – – – – – – ५००।=

ख. यातायात तथा सञ्चार – – – – – – – – ५००।=

ग. तालिम तथा प्रचार प्रसार – – – – – – – ५००।=

घ. इनाम – – – – – – – – – १०००।=

ङ. सदस्यहरूको बचतमा ब्याज वितरण – – – – ३५८५।=

च. केन्द्रिय संघको वार्षिक सदस्यता शुल्क – – – – – ५००।=

छ. संस्था दर्ता खर्च – – – – – – – – ५००।=

ज. लेखा परिक्षण शुल्क – – – – – ५००।=

झ. विविध खर्च – – – – – – – – १००।=

कुल खर्च → ८४८५।=

खुद आय – रु – – – – १०२५।-

६. जगेडा कोषमा रु – – – – १०२५। पुर्‍याउने।

७. सदस्यहरूलाई शेयर बिक्रिबाट रु – १००००।- संकलन गर्ने।

(९) – सदस्यहरूबाट संकलित शेयर बिक्रि बचत तथा प्रवेश र सदस्यता शुल्क बाट प्राप्त सम्पूर्ण रकम तत्काल सचिविका कोषाध्यक्ष श्री पुष्कर कुमार दहाल जिम्मा राख्ने र संस्था दर्ता हुने बित्तिकै अध्यक्ष श्री भद्रराज ढुंगेल र कोषाध्यक्ष श्री पुष्कर कुमार दहालको संयुक्त दस्तखत मा ने.बैं.लि.-चक्रिकोटमा बचत खाता खोली रकम जम्मा गर्ने।

(१०) – संस्थाको नियमावली सम्बन्धमा निम्न अनुसार गर्ने निर्णय गरियो।

क. बचत सम्बन्धी नियम।

१. प्रत्येक सदस्यले आफूले मन्जुर गरेको बचत रकम प्रत्येक महिनाको ८ गते भित्र कार्यालयमा आई रकम अनिवार्यरुपमा जम्मा गर्नुपर्ने छ।

२. सो मिति सम्म दाखिला नगरेमा सोही महिनाको २५ गते सम्म रु १% र सो भन्दा पछि हुँदै २% ले हुने विलम्ब शुल्क सहित दाखिला गर्नु पर्ने छ।

३. बचत कर्ता सदस्यले बचत रकम बुझाएको रसिद प्राप्त गर्नु पर्ने छ र सो रसिद हिफाजत साथ राख्नु पर्ने छ।

४. कुनै पनि बचत कर्ता सदस्यले महिनाको घटिमा रु ५०।- बढीमा रु ५००।- सम्म बचत रकम जम्मा गर्न पाउने छ।

५. विशेषकारण र परिस्थिति बाहेक कुनै पनि सदस्यले बचतको रकम मा घटबढ गर्न पाउने छैन। गो।

६. बचत कर्ता सदस्यको बचतमा वार्षिक १०% का दरले प्रत्येक आषाढ मसान्तमा ब्याज वितरण गरिने छ।

७. आफू संस्थामै वा बसाइँ सरी स्थानान्तरमै छोड्नु पर्ने अवस्था बाहेक अन्य अवस्थामा कुनै पनि बचत कर्ता सदस्यले कम्तीमा १२ किस्ता बचत नबुझाई सदस्यताबाट हटन पाउने छैन।

(ख) <u>ऋण सम्बन्धी नियम</u>

१. कुनै पनि बचत कर्ता सदस्यले आफूलाई आवश्यक परेको उद्देश्य परिपूर्ति गर्न संस्थाले तयार गरेको ऋण आवेदन फाराम भरी ऋण माग गर्न सक्नेछ।

२. पहिलो ऋण प्राप्त गर्न आफू सदस्य भएको कमसे कम ६ महिना पुरा गरि सकेको हुनुपर्ने छ।

३. सदस्य नभएका व्यक्तिहरूले पनि संस्थामा ऋण माग गर्न सक्ने छन तर निजहरूले धितोको रूपमा संस्थाले उचित ठानेको चल संपत्ति मात्र राखी ऋण प्राप्त गर्न सक्ने छ।

४. सदस्यहरूले ऋण प्राप्त गर्दा आफ्नो खातामा जम्मा भएको बचत रकम बराबरको ऋण लिन कुनै धितो वा जमानी राख्नु पर्ने छैन तर सो भन्दा बढी ऋण लिन चाहेमा अरु सदस्यहरूलाई जमानी राख्नु पर्नेछ। अवस्था हेरी निजको चल अचल संपत्ती धितो राखेर पनि ऋण लिन सकिने छ।

५. जमानी बस्ने सदस्यले आफू जसको लागी जमानी बसेको छ उसले संस्थाको ऋण चुक्ता नगरे सम्म ऋण प्राप्त गर्न वा बचत रकम फिर्ता लिन पाउने छैन तर जमानी बसेको रकम भन्दा निजको बचत बढी रहेछ भने सो बढी भएको रकम बराबरको ऋण प्राप्त गर्न कुनै बाधा पर्ने छैन।

६. आफू जमानी बसी ऋण दिलाएको व्यक्तिले ऋण नतिरी संस्थालाई हानी हुन जाने स्थिती भएमा संस्थाले जमानी बस्ने व्यक्तिको बचत रकमबाट असुल गर्न सक्ने छ।

७. सदस्यले लिएको ऋण सामान्यतया दस १० किस्तामा विभाजन गरी प्रत्येक किस्तामा साँवा र ब्याज समेत असुल गरिने छ तर ऋणको प्रकृति अनुसार किस्ता संख्या घट बढ गर्न सकिने छ। साधारणतया किस्ता बुझाउने अवधी १ महिनाको हुनेछ तर सदस्यले उत्पादनमुलक कार्यमा लगाउदा त्यसको प्रतिफल लामो अवधि पछि मात्र पाउने रहेछ भने किस्ताको समयावधि बढाउन पनि सकिने छ।

८. आफूले जुन उद्देश्यको लागी ऋण लिएको हो सोही कार्यमा खर्च गर्नु पर्छ। सो नगरी ऋणको दुरुपयोग भएको प्रमाणीत भएमा संस्थाले सो तमसुक तोकेको अवधि अगावै ऋण फिर्ता माग्न सक्ने छ र दुरुपयोग गरे वापत १०% सम्म जरिवाना हर्जाना लिन सक्ने छ।

९. संस्थाका सदस्यहरूलाई वार्षिक १६% र अन्य व्यक्तिहरूलाई वार्षिक २०% को ब्याज लिइने गरी ऋण दिइने छ।



# आगन्तुकका आँखामा जनसचेतन

April 19, 2014

To the Board and Management:

Congratulations for your good results in ACCESS. It is not an easy job and we anticipate that you will continue to use ACCESS in monitoring your SACCOS.

Good luck!

[illegible]
ACCU-Thailand

Babu Ram [illegible]
NEFSCUN

आज मिति २०७३ साल चैत्र ११ गतेका दिन डिभिजन सहकारी कार्यालयबाट (दोलखा चरिकोट) बाट अनुगमन तथा निरीक्षण गरी सुझावहरु प्राप्त भयो।

तपसिल

श्री [illegible] सहकारी अधिकृत डि.स.का. दोलखा
श्री नारायण [illegible] डि.स.का. दोलखा

सुझावहरु:

१. सदस्य वर्गीकरणको व्यवस्था गर्नुपर्ने
२. संस्था स्थापना कालदेखि हाल सम्मका संचालक समिति, साधारण सभा, लेखा समिति, ऋण उप समिति लगायतका माइन्युट हरुको संख्यात्मक विवरण हालसम्म साथै भविष्यमा अध्ययन गर्नेका लागि अनुसन्धान गर्न उपयुक्त हुने देखिएको।
३. संचालक समिति, लेखा समितिका [illegible]हरुले मनोनयनका बेला पेश गर्नुपर्ने सम्पूर्ण कागजात हरुको पूर्ण व्यवस्थापन गर्नुपर्ने देखिएको।

मिति २०६६/०४/०८ गतेका दिन यस सहकारीको कार्यालयमा सेरघारको सन्दर्भमा धेरै प्रगति बारे थाहा पाइयो। सामाजिक समावेशीकरण, आर्थिक उन्नति र विविध पक्ष हरु बारे जानकारी धेरै मिठो रुपमा सुन्दा यो विकासको नमुनालाई देशको अन्य ग्रामीण क्षेत्र हरुमा पनि विस्तार गर्न सके नयाँ नेपाल निर्माणमा वास्तविक सहयोग पुग्न सक्ने देखियो।

जगन्नाथ अधिकारी
बजार अधिकृत
CEAPRED/PVSPR
9841390843
jaganadhikari@gmail.com

प्रयाग ढुंगेल
घर - मकरवारी - ६ रामेछाप
(सिप्रेड मैजामाजेवरी कृषि प्राविधिक पदमा कार्यरत)
9741067019

नेपाल राष्ट्र बैंक बाट श्री साना किसान बैंक विकास बैंक सुपरिवेक्षण गर्ने क्रममा मिति २०६६/०६/२० र २१ गते यस जन सचेतना सहकारी संस्था लिमिटेड को नेपाल राष्ट्र बैंक र साना किसान विकास बैंकको संयुक्त स्थलगत अवलोकन भ्रमण सम्पन्न गरियो। यस क्रममा यस संस्थाले गरेको उन्नती, प्रगति र आफ्ना कार्यक्षेत्रभित्रका संस्थाका सदस्यहरुलाई पुर्याएको वित्तीय सेवा र प्रगति तथा उपलब्धी प्रति अवलोकन टिम खुशि प्रकट गर्न चाहान्छौं।

१) ज्ञातुकृष्ण अधिकारी उप-निर्देशक ने.रा.बैंक, वित्तीय संस्था सुपरिवेक्षण विभाग, काठमाडौं। २०६६/०६/२१

२) दामोदर प्रसाद आचार्य सहायक निर्देशक, ने.रा.बैंक वित्तीय संस्था सुपरिवेक्षण विभाग, काठमाडौं

३) शिवहरि अर्याल प्रबन्धक, साना किसान विकास बैंक लि. कृषिविकासनगर, तीनकुने, काठमाडौं



26.08.0…
12:15 P…

I am really enough to visit the society. As my observation it is a best cooperative, we visit last few days. I am impress with the products and service of your society. You are doing excellent for the settlement of your people. I am carrying many good thin… for my people.

Hope to meet you again. And y… are welcome to my sweet Bang…

Hope all the best of your society.

SHYAMAL JAMES ROZARIO
VICE CHAIRMAN
MOTHBARI CHRISTIAN CO-OPERA…
CREDIT UNION…
VILL: MOTHBARI, PO: ULOKHOLA…
P.S: KALIGONJ, DIST: GAZIPU…
BANGLADESH.

email: Shyamal_Rozario@…

Thank you very much. This is first Time for me to visit so big cooperative in Nepal. I studied many issue about cooperative in future.

I had many questions to treasurer and manager. And their answers were very clear and fine.

I am very happy to visit you just before coming back to Japan on March.

Thanks again,

(25 Magh 2069)
2013.02.07
N. Tsuboi / JICA SV
坪井伸弘

आज मिति २०६३ साल माघ १२ गतेका दिन - राष्ट्रिय सहकारी बैंक लि० का पदाधिकारीहरूबाट यस संस्थाको अवलोकन तथा अनुगमन गरी सुझावहरू प्राप्त भयो।

उपस्थिति

१. भरत थिमोरिया - केन्द्रीय सहायक प्रबन्धक

२. रामकुमार तिमल्सिना - अधिकृत

सुझाव तथा सल्लाहहरू

→ यस संस्था सहकारी क्षेत्रको नमुनाको रूपमा कारोबार गर्दै सदस्यहरूको सामाजिक र आर्थिक रूपमा जिवनस्तर विकास गरी सहकारीको क्षेत्रमा ACCESS Brand प्राप्त गरी सुशासन तथा पारदर्शिता कायम गर्न सफल भएको यस संस्था अनुगमनमा सहभागी हुन पाउदा हामी गौरवान्वित भएका छौं।

→ आगामी दिनमा सुशासन कायम गरी अझ व्यापक रूपमा सदस्य तथा कारोबारमा वृद्धि गर्न सफल हुनुहोस्।

→ सदस्यको चाहना बमोजिमको सेवा, सुविधा प्रदान गरी आवश्यक बचत, ऋण तथा तालिम तथा अन्य व्यवसायिक तालिम संचालन गरी रोजगारी तथा Entrepreneurship development गर्न यस संस्था सफल रहोस्।

→ विदेश क्षेत्रमा प्रयोगमा आएका नया विकास भएका नयाँ नयाँ प्रविधिहरू प्रयोग गर्दै अगाडी बढ्ने कुरामा संस्था आशावादी छौं।

आ.व. २०७४/२०७५.

आज मिति २०७४ साल श्रावण २४ गते का दिन यस जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि. को अवलोकन गर्ने अवसर प्राप्त भयो। अवलोकनका क्रममा संस्थाका अध्यक्ष श्री भिम प्रसाद दाहाल एवं सञ्चालक सदस्य बाच कुमारी चौलागाईले संस्थाको बारेमा संक्षिप्त जानकारी गराउनु भयो। विगत २०४० सालमा ग्रामिण जिल्लामा स्थापित संस्थाले कारोबार संचालनका क्रममा आफ्नो प्रतिकूलताका बावजुद पनि सहकारीका मूल्य मान्यता एवं सिद्धान्त भित्र रहेर जनताको जिवन परिवर्तनमा पुऱ्याएको भूमिका प्रशंसनिय पाइयो। सम्पूर्ण सहकारीकर्मीहरूको बिचमा नमुनाको रूपमा स्थापित भै अविरल रूपमा संस्थाले थप सफलता शुभ-कामना राष्ट्रिय सहकारी बैंकको तर्फ बाट व्यक्त गर्दछौं।

जय सहकारी

१. श्री कुलचन्द्र अधिकारी, संयोजक राष्ट्रिय सहकारी बैंक

२. ,, सागर नेपाल, सदस्य 9851058387 ,, ,,

३. ,, लक्ष्मीप्रसाद उप्रेती ,, ,, ,,

२०७४/४/२४ गते बुधबार

बनेपा (काभ्रे)

कुलचन्द्र अधिकारी 9851177397 अध्यक्ष काभ्रे पलाञ्चोक जिल्ला सहकारी संघ

सागर नेपाल 9851058387 अध्यक्ष जनउद्धार सहकारी संस्था लि. काठमाडौं

लक्ष्मीप्रसाद उप्रेती 9852672390 उपाध्यक्ष, नेपाल बहुउद्देश्यीय सहकारी संघ NMC (मोरङ)



# सहकारी क्षेत्रमा हाम्रो कार्यभार



**केशव प्रसाद बडाल**
अध्यक्ष, राष्ट्रिय सहकारी महासंघ नेपाल

## १. पृष्ठभूमि

संसारका सबै प्राणी पदार्थ र घटनालाई हेर्ने, विचार गर्ने, विश्लेषण गर्ने, व्याख्या गर्ने तरिकालाई दर्शन भन्ने गरिन्छ। दर्शनलाई विज्ञानको पनि विज्ञान हो भन्ने गरिन्छ। उत्पादनका साधनहरू, उत्पादन प्रणाली, उत्पादित वस्तुको वितरण, प्रणाली, मनोविज्ञान समाजशास्त्रको समग्र अवस्थालाई सघन ढंगले बुझ्ने, विश्लेषण गर्ने व्यवस्था गर्ने र यसलाई संश्लेषित रूपमा धारणा बनाउने विधिलाई दर्शन भनिन्छ।

सहकारीको जन्म, विकास र विस्तारको इतिहासलाई हेर्दा र वर्तमान अवस्था विश्लेषण गर्दा पनि उत्पादन प्रणाली, उत्पादनका औजार, उत्पादन ढाँचा, वितरण प्रणालीसहितको उत्पादक शक्ति र उत्पादन सम्बन्धको अवस्थाले सहकारीको महत्व आवश्यक्ता बोध गराउँछ । उत्पादनको आधार, उत्पादनका साधन, उत्पादनको औजार, उत्पादनको प्रविधि र यी सबैको स्वामित्व कसको छ भन्ने कुरा अत्यन्त महत्वपूर्ण हुन्छ । सहकारीमा समाजका सदस्यहरू नै उत्पादन साधनका समान हकदार हुन्छन् । सदस्यहरू सार्वभौम अधिकार सम्पन्न हुन्छन् । आफ्नो संस्था वा संघको नीति र नेतृत्व निर्माणका निर्णायक भूमिका खेल्न सक्छन्। निजी स्वामित्व भएको कम्पनीमा पूँजी र व्यक्तिको भूमिका प्रधान हुन्छ भने सहकारीमा सदस्यहरूको भूमिका निर्णायक हुन्छ। सहकारीमा समुदायको निर्णायक भूमिका हुने हुँदा यो अत्यन्त लोकतान्त्रिक प्रणाली हो। सहकारीको आर्थिक संरचनाले समाजवाद-उन्मुख अर्थतन्त्रको जग निर्माण गर्न भूमिका निभाउँछ । यसबारे भ्रमपूर्ण विचार जतिसुकै विद्वानबाट आए पनि त्यो प्रकारान्तरमा सहकारी विरोधी विचारको भ्रुणको रूपमा लिनुपर्छ र सहकारीका हरकोही सदस्यले सहकारीका पक्षमा दृढतापूर्वक उभिनुपर्छ।

## २. उत्साहपूर्ण विस्तार

नेपालमा सहकारी आन्दोलनको इतिहास करिब छ दशकको भए पनि सहकारी दर्शन तथा सिद्धान्तको आधारमा सञ्चालनको प्रारम्भ सहकारी ऐन, २०४८ बाट नै अघि बढ्न थाल्यो । भर्खरै प्रथम सहकारी महासम्मेलन सम्पन्न भयो । यो कार्यक्रममा देशभरिका सहकारीकर्मी, अर्थविज्ञ, समाजशास्त्री, कृषिविज्ञ र स्वदेश तथा विदेशका अति महत्वपूर्ण र शीर्षस्थ व्यक्तित्वहरूको सहभागिताको ऐतिहासिक महासम्मेलन सम्पन्न भएको छ। यसले दिएको सन्देश अब नेपालमा सहकारी क्षेत्रको जागरणस्तरबाट संस्थागत क्षमता विकास र विस्तारको युगमा प्रवेश गरेको छ । देशका पचहत्तरै जिल्लामा सहकारी स्थापित हुनु, देशका सबै गाउँपालिका, नगरपालिका, जिल्ला र प्रदेशमा सहकारीले आधार निर्माण गर्नु, ताप्लेजुङ, सोलुखुम्बु, दार्चुला जस्ता जिल्लामा पनि एक दुई गा.वि.स बाहेक सबै गा.वि.स. मा सहकारी संस्था परिचालित हुनु, सहकारीबारे पक्ष र विपक्षमा राष्ट्रियस्तरको बहस हुन थाल्नु महत्वपूर्ण जागरणस्तरमा पुगेको मान्नुपर्छ । अन्तर्राष्ट्रिय सहकारी वर्षमा राष्ट्रव्यापी रूपमा प्रचार प्रसार, रक्तदान, शरीरदान, आँखादान, भेला, समारोह, र्‍यालीले आम जनतामा जागरण ल्याएको छ। कुनै पनि क्षेत्रको विकासको गतिसँगै समस्याहरू पनि देखिन थाल्छन्। सामान्यबाट जटिलतातर्फ जान्छ । नेपालका सहकारी आन्दोलनले पनि त्यो स्थान प्राप्त गरेको छ । एशियाली ऋण महासंघद्वारा सम्मानित हुने एशिया प्रसान्त क्षेत्रको ब्राण्ड प्राप्त गर्ने देशमा नेपाल अग्रणी भएको छ । अन्तर्राष्ट्रिय सहकारी महासंघमा नेपालको हैसियत छिमेकी भारत र चीनकै हाराहारीमा पुगेको छ। यो हाम्रो लागि गौरवको विषय हो।



**जागरणको अवस्थाबाट संस्थागत क्षमता वृद्धि, उत्पादनशील क्षेत्रमा गतिशीलता, नयाँ नयाँ खाले अनुसन्धान र विकास गर्दै मानवीय आवश्यक्ताका यावत क्षेत्रमा सहकारीले विकास र विस्तार गर्नु अबको मुख्य कार्यभार हो।**

### ३. अबको कार्यभार

जागरणको अवस्थाबाट संस्थागत क्षमता वृद्धि, उत्पादनशील क्षेत्रमा गतिशीलता, नयाँ नयाँ खाले अनुसन्धान र विकास गर्दै मानवीय आवश्यक्ताका यावत क्षेत्रमा सहकारीले विकास र विस्तार गर्नु अबको मुख्य कार्यभार हो ।

संयुक्त राष्ट्रसंघले घोषणा गरेको दिगो विकास लक्ष्य २०१६-२०३० हासिल गर्न अग्रणी भूमिका निभाउनु, जथाभावी निजीकरणबाट आधारभूत तहका जनताका नकारात्मक असर पर्न नदिनु, प्राकृतिक श्रोतको जथाभावी दोहनबाट वातावरण बिगार्नबाट जोगाउनु, खाद्य सुरक्षा जस्तो महत्वपूर्ण कार्यमा अग्रणी भूमिका निभाउनु, गरीवी घटाउनु, समावेशी समाजको निर्माण गर्नु, रोजगारको सिर्जना गर्नु अब सहकारीको महत्वपूर्ण भूमिका हुनुपर्छ ।

देशमा आर्थिक स्थायित्व कायम गर्नु, लक्षित समुदायको उत्थान गर्नु, महिला, युवा, वृद्ध, सीमान्तकृत समुदायको आर्थिक, सामाजिक तथा सांस्कृतिक आवश्यकता पूरा गर्न सहकारी क्षेत्र उपयुक्त माध्यम भएको कुरा राज्यलाई बोध गराउन र आफू पनि सोही अनुसार क्रियाशील हुन हरेक सहकारीकर्मीको दायित्व हो । सहकारी मैत्री संविधान आएको छ । संविधानले सहकारीलाई महत्व दिएको छ । कानुन, नीति, नियम, मापदण्ड तयार गर्ने, तालिम प्रशिक्षण, पूर्वाधार, प्रविधिको व्यवस्था गर्ने, सहकारीकर्मीले त्यसलाई सामाजिक न्याय र उत्पादकत्व वृद्धिका लागि आ-आफ्ना कार्यक्षेत्रमा परिचालित गरी अघि बढ्नु अबको दायित्व हो । सबै सहकारीकर्मीको कार्यभार हो ।

सहकारी अर्थतन्त्रले बजार सन्तुलनका लागि विशेष भूमिका निभाउने हुँदा राज्यले यसको महत्वलाई बुझेर नीतिगत, कानुनी, व्यवहारिक र बजेटरी सपोर्टका माध्यमबाट **दिगो विकास लक्ष्य प्राप्तिका लागि सहकारी** भन्ने थीमलाई बल पुऱ्याउँदै **"सुखी र समृद्ध अर्थतन्त्रको आधार, सहकारी अर्थतन्त्रको विस्तार"** भन्ने नारालाई सबल बनाउन सोही अनुसारको नीति तथा योजना अघि बढाउन जरूरी छ । फेब्रुवरी २७-२९, २०१२ मा नवौं एसिया प्रशान्त क्षेत्रीय मन्त्रीस्तरीय सम्मेलनले एशिया प्रसान्त क्षेत्रका सबै राष्ट्रलाई आव्हान गरेको छ र त्यसमा भनिएको छ,- **"एशिया प्रसान्त क्षेत्रका सबै राष्ट्रले सहकारीको कार्यदायरा फराकिलो पार्न, स्वायतता र स्वनियमनलाई प्रभावकारी पार्न, पारदर्शी संयन्त्र प्रभावकारी पार्न, विवाद समाधानका लागि मध्यस्थता संयन्त्र निर्माण गर्न, सहकारी संघ र महासंघलाई हर हिसाबले क्षमतावान बनाउन, क्षमता अभिवृद्धि गर्न विशेष तालिम प्रशिक्षण पूर्वाधार तयार गर्न, व्यवस्थापकीय क्षमता अभिवृद्धि गर्न, पूर्वाधारको विकास गर्न, करबाट प्राप्त रकम सहकारी विकासमा लगानी गर्न, सामाजिक, आर्थिक, सांस्कृतिक विकासलगायत क्षेत्रमा सहकारीलाई सबल बनाइ सामेल गर्न जोडदार आग्रह गर्दछ ।"**

अन्तर्राष्ट्रिय सहकारी वर्ष २०१२ मा संयुक्त राष्ट्रसंघ र अन्तर्राष्ट्रिय सहकारी महासंघले गरेको आव्हानमा पनि सहकारी जागरण अभियान, सहकारी व्यवसाय प्रवर्द्धन र सहकारीमैत्री संविधान, ऐन, कानुन, नीति, नियम र मापदण्ड बनाउन सबै राष्ट्रलाई आव्हान गरेको थियो ।

यसैगरी अन्तर्राष्ट्रिय पारिवारिक खेती वर्ष २०१४ पनि संयुक्त राष्ट्र संघले घोषणा गरेको छ । सहकारी क्षेत्रबाट यो कार्यक्रम विस्तार गर्न भनेको छ ।

२०१६ जनवरीदेखि २०३० डिसम्बरसम्ममा पूरा गर्ने गरी १७ बुँदे दिगो विकास लक्ष्य राखेको छ ।

यी सबै कुराले विश्वमा बढ्दो असमानता, गरीवी, द्वन्द्व र वातावरण विनाशले पारेको नकारात्मक असरलाई न्यून गर्न सहकारी अर्थतन्त्रलाई सबल, सक्षम, व्यापक र प्रभावकारी बनाउनुपर्ने कुराको महत्वलाई सबै पक्षले जोड दिएका छन् । यसै अनुसार हाम्रो देश नेपालमा पनि अघि बढाउन प्रत्येक प्रदेश, जिल्ला, निर्वाचन क्षेत्र, स्थानीयतहका सहकारीकर्मीले आ-आफ्ना क्षेत्रका जनप्रतिनिधिलाई सहकारीमैत्री बन्न प्रेरित गर्ने, दबाव दिने, सकारात्मक भूमिका निभाउन लागी पर्ने गराउन सक्दो प्रयास गर्न जरूरी छ । अन्यथा सहकारीमैत्री संविधानलाई व्यवहारमा उतार्न कठिन हुन्छ ।



**अहिले किन खाद्य, पेय पदार्थसमेत आयात गर्नुपर्ने स्तरमा नेपाल पुग्यो ? किन अन्न, फलफूल, दूध समेत आयात गर्नुपर्ने अवस्थामा पुग्यो ? किन व्यापार घाटा भैरहेको छ ? यसको गुदी कारण के हो ? यसवारे सबै सहकारीकर्मी र राज्यले सिंहावलोकन गर्न जरूरी छ ।**

### ३. उत्पादनशील क्षेत्रमा सहकारी

सहकारी उत्पादनशील क्षेत्रमा जान आवश्यक छ । जान पनि चाहन्छ, कैयौं सहकारी उत्पादनशील क्षेत्रमा लागेका पनि छन् । तर यसमा अनेक समस्या छन् जसको समाधान सहकारीले एक्लै गर्न सक्दैन । यसमा राज्यको भूमिका सहकारीमैत्री हुन आवश्यक छ । सहकारीलाई प्रतिस्पर्धी



क्षमतामा जानका लागि तालिम, प्रशिक्षण, पूर्वाधार, प्रविधि र संरक्षण जरूरी छ । सहकारी अर्थतन्त्र बलियो हुनु भनेको केवल आर्थिक उपार्जनको मात्रै प्रश्न होइन । अनेकता बीचको एकतालाई सबल बनाउन, छरिएको पूँजी, श्रम, सिप र अनुभवलाई एकत्रित गरी सामाजिक न्याय र उत्पादकत्व वृद्धि सँगसँगै लैजान, समाजिक विभेदका आधारलाई तलैदेखि समाप्त गर्न, प्रत्येक नागरिकमा क्षमता अभिवृद्धि गर्न सहकारीले खेल्ने भूमिकालाई निजी उद्यमसँग दाँजेर हेर्न मिल्दैन ।

नेपाल भारतसँगको १८८० वर्ग किलोमिटर खुल्ला सीमाना भएको देश हो । हरेक बस्तुको उत्पादनले भारतका बस्तुसँग प्रतिस्पर्धा गर्नुपर्छ । भारतका किसानले सिंचाई, बीउ, मल, कोल्डस्टोर, ढुवानीका साधन, बजार, लगायतमा पाएको सुविधा र नेपालका किसानले पाएको सुविधालाई दाँजेर हेरौं, अनि थाहा हुन्छ हाम्रा किसानले कसरी समस्या झेलिरहेका छन् । कृषिमा मात्र होइन उद्योगमा पनि विद्युतलगायतका उर्जामा भारतको र नेपालका उत्पादन लगायतका सुविधामा जुन अन्तर छ यसले गर्दा उत्पादनमा लागेका सहकारी र आम किसान र उद्यमीले व्यहोर्नु परेको समस्यालाई सम्बोधन हुन जरूरी छ । सम्बोधन गर्दा या सुविधा उपलब्ध गराउँदा त्यो कुन वर्ग र समुदायको बीचमा प्रवाहित भएको छ, त्यसले साँच्चिकै उत्पादक शक्तिकोमा पुगेको छ कि अन्तै गएको छ, यो पाटो हेर्नुपर्ने पक्ष हो ।

अहिले किन खाद्य, पेय पदार्थसमेत आयात गर्नुपर्ने स्तरमा नेपाल पुग्यो ? किन अन्न, फलफूल, दूध समेत आयात गर्नुपर्ने अवस्थामा पुग्यो ? किन व्यापार घाटा भैरहेको छ ? यसको गुदी कारण के हो ? यसवारे सबै सहकारीकर्मी र राज्यले सिंहावलोकन गर्न जरूरी छ ।

- भूमिहीनमा जमिनको पहुँच छ कि छैन ?
- जोसँग थेरथोर जमिन छ तिनमा सिंचाई, बीउ, मल, प्रविधि, तालिम, प्रशिक्षण पुगेको छ कि छैन ?
- त्यहाँ कृषि श्रमिकले उत्साहसाथ काम गर्ने वातावरण छ कि छैन ?
- पशुपालन, पंक्षीपालन गर्ने किसानको विकास पूर्वाधार र वीमा व्यवस्था छ कि छैन ?
- किसानमा वित्तीय सेवा पर्याप्त पुगेको छ कि छैन ?
- उत्पादित बस्तु बजारसम्म पुग्ने र उत्पादक र उपभोक्ता बीचको मूल्यान्तर कति छ ?
- बिचौलीयाले लाभ लिने उत्पादक, उपभोक्ता दुवै मर्कामा परेका छन् कि छैनन?
- यसमा राज्यको भूमिका कस्तो छ ?

उक्त विषयमा सहकारी तथा गरीवी निवारण मन्त्रालय, राष्ट्रिय सहकारी विकास बोर्ड, सहकारी विभाग, राष्ट्रिय सहकारी संघको भूमिका के कस्तो छ यी कुरा सहकारी क्षेत्रले उत्पादन क्षेत्रमा जान पर्याप्त प्रोत्साहन पाएको छ कि छैन, यो पक्षमा सबै सहकारीकर्मी जागरूक भएर लाग्न जरूरी छ ।

प्रत्येक गाउँपालिका, नगरपालिका, जिल्ला र प्रदेशमा मोडल सहकारी हुन जरुरी छ । मोडल सहकारी हेरेर बाँकीले पनि त्यसबाट शिक्षा लिन र त्यही अनुसार अघि बढ्न बढाउन प्रेरित गर्न जरूरी छ । सहकारी विकास बोर्डले अनुसन्धान र विकासका निम्ति के कति काम गरेको छ, यसलाई अघि बढ्न बढाउन राष्ट्रिय सहकारी संघ, विषयगत केन्द्रीय संघ र सरकारले के कति सघाएका छन् वा सघाउनका लागि बोर्डले कतिको पहलकदमी गरेको छ । सरकारले सहकारी विकास विस्तार, अनुसन्धान, तालिम, प्रशिक्षण, पूर्वाधार र प्रविधिका लागि कतिको प्रयास गरेको छ । यी सबै कुराले सहकारी क्षेत्रले अब गर्ने कामको दिशा निर्धारण गर्दछ ।

सहकारी मानवीय आवश्यक्ताका सबै क्षेत्रमा आवश्यक छ । वित्तीय क्षेत्र, उपभोक्ता क्षेत्र सबैभन्दा व्यापक र सर्बव्यापी आवश्यकताका क्षेत्र हुन् । वित्तीय क्षेत्रमा सहकारीले आकार वृद्धि गरे पनि उपभोक्ता क्षेत्रमा प्रगति गर्न सकेको छैन । अब सहकारीले उत्पादन, प्रशोधन, भण्डारण, वितरण सबै क्षेत्रमा प्रभावकारी विकास र विस्तार गर्न जरूरी छ । कृषि, उद्योग, निर्माण, प्रशोधन, सेवा, विद्युत, शिक्षा, स्वास्थ्य, यातायात, लगायतका क्षेत्रमा सहकारी अघि बढ्नुपर्छ । त्यसका लागि राज्य सहयोगी हुनुपर्छ ।

आवास क्षेत्र धेरै महत्वपूर्ण क्षेत्र हो । व्यवस्थित आवास सभ्यता, संस्कृति, स्वास्थ्य र सुरक्षाको आधार हो । असुरक्षित बस्तीका कारण हरेक वर्ष ठूलो धनजनको क्षति भैरहेको छ । असुरक्षित र अव्यवस्थित बसोबास यथावत राखेर कहिंकतै विकास गर्न सकिंदैन । असुरक्षित बस्तीलाई सुरक्षित र सुव्यवस्थित बसोवासका लागि सहकारीले आवास क्षेत्रमा आफूलाई प्रवेश गराउनुपर्छ । एकाथरी मान्छे सहकारीले घरजग्गाको कामै गर्नु हुँदैन भनेजस्ता कुरा गर्छन् । अर्काथरी सहकारीकर्मी सोच विचारै नगरी आर्थिक विश्लेषण नै नगरी घरजमीनमा पैसा लगानी गर्ने र क्षति व्यहोर्ने गरेको पनि देखिन्छ । यो दुवैबाट जोगिंदै मानवीय आवश्यक्ताको सबै क्षेत्रमा सहकारीले आफ्ना कार्यदायरा बनाउनुपर्छ । गाँस, बास, कपास, शिक्षा, स्वास्थ्य, रोजगार मानवका लागि अति



**नेपालको प्रमुख उत्पादक शक्ति किसान, प्रमुख उत्पादनको साधन भूमि भएकोले कृषि, पशुपालन वनपैदावर क्षेत्रमा बढी लाग्नै पर्छ। सँगसँगै विद्युत उत्पादन, वितरण, आवास क्षेत्र निर्माण, विकास, उद्योग र प्रशोधन, भण्डारण, वितरण, पर्यटन विकास लगायत क्षेत्रमा सहकारी अघि बढ्न जरूरी छ।**

आवश्यक क्षेत्र हुन् । यी सबै क्षेत्रमा सहकारीले योजनावद्ध ढंगले लाग्नुपर्छ । नेपालको प्रमुख उत्पादक शक्ति किसान, प्रमुख उत्पादनको साधन भूमि भएकोले कृषि, पशुपालन वनपैदावर क्षेत्रमा बढी लाग्नै पर्छ। सँगसँगै विद्युत उत्पादन, वितरण, आवास क्षेत्र निर्माण, विकास, उद्योग र प्रशोधन, भण्डारण, वितरण, पर्यटन विकास लगायत क्षेत्रमा सहकारी अघि बढ्न जरूरी छ ।

अब सबै विषयगत केन्द्रीय संघ, जिल्ला संघ र विषयगत जिल्ला संघ, राष्ट्रिय सहकारी बैंक सबैले उक्त सबै क्षेत्रको विकासको लागि आम रूपमा र खास रूपमा आ-आफ्ना विषयगत क्षेत्रको विकासमा खोजमूलक ढंगले अघि बढ्नु अब सबै सहकारी अगुवाहरूको कार्यभार हो ।

त्यसैगरी सहकारी विकास बोर्डले पनि अनुसन्धान र विकासको कामलाई प्राथमिकतामा राखेर सहकारी आन्दोलनका सबै क्षेत्रमा सघाउने कार्यक्रम बनाउनुपर्छ ।

## ४. कार्यभार कार्यान्वयनमा सहयात्रा

सहकारी तथा गरीवी निवारण मन्त्रालयले गरीवीसँग सम्बन्धित सबै निकायलाई आफ्नो मन्त्रालय अन्तर्गत ल्याएर, आफ्नो कार्यक्षेत्र ७७ वटै जिल्ला र ७ वटै प्रदेशलाई बनाएर सहकारी क्षेत्रको तालिम प्रशिक्षण पूर्वाधार विकासमा अग्रणी भूमिका निभाउनुपर्छ ।

७७ वटै जिल्लामा सहकारी डिभिजन कार्यालय स्थापित गर्ने, सबै प्रदेशमा होस्टलसहितको सुव्यवस्थित, सहकारी तालिम तथा प्रशिक्षण केन्द्र स्थापित गर्ने । केन्द्रमा अन्तर्राष्ट्रिय स्तरको प्रशिक्षण केन्द्र स्थापित गर्ने । नियमित प्रशिक्षण केन्द्र स्थापित गर्ने । नियमित प्रशिक्षण, अल्पकालिन, मध्यकालिन र उच्चतहको सहकारी डिप्लोमा तहको सहकारी प्रशिक्षण केन्द्र स्थापित गर्नुपर्छ ।

हाम्रा विश्वविद्यालयहरूमा पनि सहकारी सिद्धान्त र व्यवहारबारे प्रशिक्षण व्यवस्था र अनुसन्धान तथा विकास विभाग स्थापना गरेर काम गर्न जरूरी छ । अनुसन्धान र विकाससँगै जाने विषय भएकाले यसका लागि राज्यले लगानी बढाउन जरूरी छ ।

सहकारी क्षेत्रको उत्पादन तथा सेवा क्षेत्रका विकासको लागि दक्ष जनशक्ति निर्माण गर्न मध्यम तहको प्रविधिको प्रयोग तथा विकासका लागि, सबै जिल्ला संघ र केन्द्रीय संघलाई क्षमतावान बनाउनका लागि राज्य र सहकारी आन्दोलनबीचको सहकार्य अत्यन्त जरूरी भएको छ । सबै तहका सहकारी संस्था तथा संघहरूको संचालक, लेखा समिति, व्यवस्थापक गरी लगभग ३ लाख छन् । तिनले उचित तालिम तथा प्रशिक्षण नपाएका कारण समस्याहरू सिर्जना भएका छन् । यसका लागि सहकारी संस्था तथा संघहरूले आफैं पनि उक्त कार्यका लागि विशेष प्रयास गर्नुपर्छ । राज्यले पनि तालिम प्रशिक्षण, पूर्वाधार र प्रविधि उपलब्ध गराउन विशेष योजना बनाएर लाग्नुपर्छ ।

सहकारी विकासलाई राष्ट्रिय सहकारी संघको अगुवाइमा ५ वर्षे सहकारी विकासको रणनीति तयार गरिएको छ । सहकारी नीति नेपाल सरकारले पारित गरेको छ। सहकारीका प्रक्रियागत तथा नीतिगत समस्या हल गर्ने, राष्ट्रिय योजना आयोगका उपाध्यक्षको अध्यक्षतामा बनेको कार्यदलले प्रतिवेदन पनि बुझाएको छ । उक्त सबै दस्तावेजको आधारमा राज्यले खेल्नुपर्ने भूमिका र सहकारीकर्मीले खेल्नुपर्ने भूमिका प्रस्तुत गरिएको छ । सहकारी बिकास बोर्डले २० वर्षे रणनीति तयार गर्दैछ ।

देश विकासको महत्वपूर्ण स्तम्भ सहकारी हो । छरिएको पूँजी, श्रम, सिप, क्षमता र अनुभवको सदुपयोग गरौं। देशको आर्थिक, सामाजिक, सांस्कृतिक र वातावरणीय विकासको अगुवाई गरौं । सम्पूर्ण सहकारीकर्मी एकतावद्ध भएर स्वाधीन अर्थतन्त्र निर्माणको सारथी बनौं । यो नै सबैभन्दा देशभक्तिपूर्ण कार्य हो । यो नै सबैभन्दा लोकतान्त्रिक कार्य हो । यो नै हाम्रो सबैको कार्यभार हो ।

"राष्ट्रिय सहकारी संघले दिगो बिकास लक्ष्य प्राप्तिका लागि सहकारी" थिम तय गरेको छ ।

संयुक्त राष्ट्रसंघ र अन्तर्राष्ट्रिय सहकारी महासंघले पनि दिगो बिकास लक्ष्य प्राप्तिमा जोड दिएको छ । अब सबै गाउँपालिका, नगरपालिका, जिल्ला र प्रदेशमा सहकारी अर्थतन्त्रको बिकास र विस्तार गर्न, संविधानको मार्गदर्शनमा सबै पक्ष प्रतिवद्धतापूर्वक लाग्नुपर्छ ।

# दोलखाको साकोस अभियानः एक पृष्ठभूमि



**डी.बी. बस्नेत**
अध्यक्ष, नेफ्स्कुन

सहकारीको विश्व इतिहासलाई हेर्ने हो भने सहकारीको जन्म सन् १८४४ मा बेलायतको मेन्चेस्टर शहरको रोचडेल गाउँमा भएको थियो । यो रोचडेल इक्विटेवल पायनियर सहकारी संस्थाको गठन भयो । यो नै संसारको जेठो र विधिवत रूपमा स्थापना भएको सहकारी मानिएको थियो । बचत तथा ऋण सहकारीका जन्मदाता जर्मनका एफ.डब्लु. राइफाइसनले सहकारीलाई "**एकका लागि सबै, सबैका लागि एक**" हो भनेका छन् । स्रोत साधन, सीप र क्षमतालाई सँगै बसेर, सँगै मिलेर काम गरौं भन्ने कुरामा सहकारीले जोड दिएको छ ।

नेपालको कुरा गर्दा २०४५ श्रावण ३२ गते नेपाल बचत तथा ऋण संघको नामबाट भोजराज घिमिरेको अध्यक्षतामा कमलादी काठमाडौंमा अफिस स्थापना भएको रहेछ । त्यसबखत यस पंक्तिकारले पनि दोलखामा सहकारी अभियान शुरु गरिसकेको थियो, जुन बेला नेपालमा सहकारी ऐन २०४८ समेत आइसकेको थिएन ।

नेपालमा सहकारीको जन्म, विकास र विस्तारको इतिहासलाई हेर्ने हो भने दोलखा जिल्ला सहकारी स्थापनाको उर्वरभूमि हो । दोलखामा सहकारी स्थापनाको शुरुवाती बिन्दु खोज्ने हो भने २०४७ माघ १० गते जिरीमा अरनिको राजमार्गमा सार्वजनिक सवारी सेवा सञ्चालन गरी दोलखालीलाई जिरीदेखि काठमाडौं पुर्‍याउने र काठमाडौंदेखि दोलखाको पर्यटकीय शहर जिरीसम्म यात्रु बस सेवा सहज बनाउन यातायात व्यवसायीहरू सक्रिय बने । त्यसैबखत यातायात व्यवसायी र तिनमा कार्यरत मजदुरहरूको समूहमध्येबाट १६ जनालाई संगठित गरी मासिक २०० रूपैंया बचत संकलन शुभारम्भ गरी नेपाल बैंक लि. जिरीमा रु.३२०० जम्मा गरिएको थियो । सहकारी अभियानको क्षेत्रमा दोलखाबाट शुरु भएको यो महाअभियान नै दोलखा साकोस विकासको महत्वपूर्ण चरण थियो । त्यस समयमा उक्त अभियानको नेतृत्व गर्ने जिम्मेवारी यस पंक्तिकारको रहेको थियो । म सामुहिक सहकार्यमार्फत

> **आर्थिक रुपमा सम्पूर्ण कार्यमा राज्यको पहुँच नपुगेको र निजी क्षेत्रले नदेखेजस्तो गरेका स्थानलाई विकासको राष्ट्रिय मूल प्रवाहमा ल्याउने काम वर्तमान अवस्थामा सहकारीले गरिरहेको छ ।**

केही गर्न सकिन्छ भनी त्यसकै उपायको खोजीमा निरन्तर लागिरहेँ । त्यतिबेला मलाई लागेको थियो, थोरैथोरै पैसा जम्मा गर्दै जानसके समस्या परेको बेलामा सबैको खाँचो टार्न सकिएला । फेरि प्रश्न उब्जियो, यसरी गरेको सामुहिक कार्यलाई कसरी वैधानिकता दिलाउन सकिन्छ भनी त्यसतर्फ केन्द्रित भएँ ।

मैले आजको अरनिको साकोसलाई जिल्ला प्रशासन कार्यालय दोलखामा संस्था दर्ता ऐनअनुसार स्टाफ सहयोगी बचत कोषको नामबाट शिवजी राउत, चन्द्र कुमार श्रेष्ठ, याम जिरेलसमेतको सक्रियतामा २०४८ सालमा दर्ता गरी सञ्चालनमा ल्याएको थिएँ ।

२०४८ मा सहकारी ऐन र २०४९ मा सहकारी नियमावली जारी भएपछि दोलखाको पहिलो साकोस सहकारी विभागमा २०४९ मा दर्ता गरी नेफ्स्कुनको प्राविधिक सहयोगमा जिरीमा बचत तथा ऋण शिक्षा शिविर र केही समयपछि दोलखा जिल्ला विकास समितिको सभाहलमा जिल्लाभरका सामाजिक संस्था, माध्यामिक विद्यालयलाई आमन्त्रण गरी १ दिने बचत तथा ऋण शिक्षा शिविर चलाइएको थियो, जसको श्रोत व्यक्तिको रूपमा नेफ्स्कुनका निवर्तमान अध्यक्ष ऋषिराज घिमिरे र तत्कालिन सञ्चालक विश्वमोहन आचार्य रहनुभएको थियो ।

दोलखाको शिक्षा शिविरमा हनुमन्तेश्वर माविका प्र.अ. यज्ञराज ढुङ्गेल र चरिकोटबाट रामदास श्रेष्ठ

सहभागी हुनुहुन्थ्यो । बचत तथा ऋण शिक्षा शिविरबाट प्राप्त जानकारीपश्चात उहाँहरूकै सक्रिय सहभागितामा जनसचेतन साकोस काब्रे, दोलखा र मिलिजुली साकोस चरिकोटमा स्थापना भएका थिए । यसै समय जिरीमा गोकुलध्वज कार्कीको नेतृत्वमा फ्रेण्डसीप साकोसलाई पनि सञ्चालनमा ल्याई दर्ता गरिसकिएको थियो ।

२०५० सालमा काब्रे गा.वि.स.मा स्थापित जनसचेतन बचत तथा ऋण सहकारी संस्थाले आज स्थापनाको रजत महोत्सव मनाइरहँदा यस अवसरमा दोलखामा साकोस अभियानको प्रादुर्भाव सम्बन्धी केही विषयगत जानकारीहरू सबैमाझ पुनःस्मरण गराउनु मैले मेरो दायित्व सम्झेको छु। दोलखा जिल्लाको काब्रे गा.वि.स,मा २०५० आश्विन २२ गते शिक्षक, किसान, तथा सामाजिक अभियन्ताहरूसहित ३४ जना व्यक्तिहरूबाट एक एक सय रूपैंया जम्मा गरेर दर्ता भएको थियो । त्यसबेला अर्थात २०५० सालतिर यहाँ जनतालाई ऋण सापट दिनुपर्दा महिनाको सयकडा रु. ५ का दरले व्याज तिर्नुपर्थ्यो ।

जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि.२०५० मा दर्ता भई सञ्चालनमा रहेर सानोसानो बचत संकलन गरी कार्यक्षेत्रका मानिसलाई समुदायमा समेट्दै साहु-महाजनको शोषणबाट तमाम गाउँबासीलाई मुक्ति दिँदै स्वरोजगार बन्नका लागि पूँजी निर्माण गरेर सहयोग गर्दै आइरहेको छ । त्यतिमात्र नभएर सहकारीको संस्थागत स्वरूपलाई नेपालकै एक अब्बल सहकारी अभियानको रूपमा चिनाउने संस्थापक अध्यक्ष यज्ञराज ढुङ्गेल, संस्थापक पुस्कर दाहाललगायत आज नेपालमा हैन एशियामा नै अब्बल बनाउन सबै क्षेत्रबाट लगानी गर्ने संस्थापकदेखि वर्तमान संस्थाका सबै सञ्चालक समिति र सम्पूर्ण कर्मचारीहरू, संस्थाको व्यावसायिक कारोवारमा सदस्य बनेर, ऋण लिएर, बचत गरेर र ऋण नियमित असुली गर्न अन्तर्राष्ट्रिय सहकारीको मूल्य मान्यता, नीति, विधि र नेफस्कुनको छातामुनि रहेर नेपाल सरकारबाट जारी नीति नियमलाई आत्मसात गर्दै अगाडि बढिरहेको यो संस्थाको विशाल छहारीबाट सबै सदस्यले शीतलताको अनुपम अनुभव संगालिरहने विश्वास लिन सकिन्छ । यसका साथै विश्व बजारमा द्रुततर गतिमा विकास भैरहेको प्रविधिको विकासलाई पनि सहकारी संस्थाले सदस्यमाझ पुर्याउनै पर्नेछ । यही चरणको विकासको लागि नेफ्स्कुन सक्रिय रहिरहेको अवस्था छ ।

आज नेफ्स्कुन नेपालमा स्थापित र क्रियाशील विषयगत केन्द्रीय संघहरूमा सबैभन्दा जेठो संघको रूपमा स्थापित छ । सम्पूर्ण सहकारी संघ, संस्थाहरूमा सबैभन्दा धेरै बचत तथा ऋण सहकरी संस्थाहरू नै छन् । दर्ता भएका करिब ३४ हजार र क्रियाशिल करिब २८ हजारमध्ये करिब आधा जति बचत तथा ऋण सहकारीहरू नै क्रियाशिल छन् । यिनै बचत तथा ऋण सहकारी संस्थाहरूमार्फत नै ग्रामीण समुदायहरूले वित्तीय सेवा पाइरहेका छन् । दूरदराजमा रहेर सम्पूर्ण समाधानसहितको आर्थिक, सामाजिक, सांस्कृतिक परिवर्तनका लागि देशभर ३ लाखभन्दा बढी सञ्चालक र लेखा समितिका साथीहरू बिना-पारिश्रमिक समुदायको विकासमा सक्रिय छन् । यही अभियानलाई कार्यरूप दिन नेफ्स्कुन निरन्तर क्रियाशील छ ।

आज सहकारी भनेका सामुहिक रूपमा व्यावसायिक क्रियाकलापमार्फत मुनाफाभन्दा पनि सदस्य र समुदायको हितमा ध्यान दिँदै सञ्चालन गर्ने पद्दतिको रूपमा विकास भएका छन् । यसको उद्देश्य पनि आफ्ना सदस्यहरूको आर्थिक, सामाजिक, सांस्कृतिक उन्नति गर्दै स्वावलम्बी, आत्मनिर्भर, सचेत, सभ्य समाज र आर्थिक रूपमा सम्पूर्ण कार्यमा राज्यको पहुँच नपुगेको र निजी क्षेत्रले नदेखेजस्तो गरेका स्थानलाई विकासको राष्ट्रिय मूल प्रवाहमा ल्याउने काम वर्तमान अवस्थामा सहकारीले गरिरहेको छ । निम्न पूँजी भएका, नियमित आय स्रोत नभएका र एकीकृत रूपमा अगाडि बढ्न नसक्ने समुदायमा समेत यो अभियान सहारा बनेको छ ।

अन्तमा, दोलखाको साकोस अभियानमा २५ बर्षको अवधिमा सम्पूर्ण तवरबाट संस्थागत रूप धारण गरी अब्बल संस्था बनेको जनसचेतनको छत्रछायाँमा आगामी दिनमा सदस्यहरूले अझै रमाउन, भरोसा र विश्वास लिन सक्ने वातावरण बनोस् । शुभकामना ।



# अब सहकारीहरू उत्पादनमा लाग्नुपर्छ



**पशुपति चौलागाइँ**
सांसद एवम् पोलिटव्युरो सदस्य
नेकपा एमाले

**१. जनसचेतन सहकारी २५ वर्षमा प्रवेश गर्दैछ । तपाइँ संस्थापक सदस्य पनि हुनुहुन्छ । सहकारी स्थापनालाई कसरी सम्झिरहनुभएको छ ?**

म २५ वर्ष अगाडिको स्मरण गर्छु । हामी गाउँलाई कसरी बनाउने होला ? स्कुललाई कसरी राम्रो बनाउने होला ? मान्छेलाई उत्पादनमा कसरी जोड्ने होला ? के सम्भावनाहरू हुन सक्छन् भनेर छलफल गर्थ्यौं । गाउँमा बैङ्कहरू थिएनन् । १, २ ओटा घटनाहरू सम्झन्छु । घरवरपरका साथीभाईहरू कृषि विकास बैङ्कको ऋण खोज्न जाने । १० हजार ऋण लिने, ७ हजार खल्तीमा लिएर आउने, ३ हजार उतै के के गर्नुपर्ने । पैसा लिएर आएपछि पनि काम गर्न नसक्ने । धितो राखेको घर जग्गा लिलाम हुने । व्यक्तिसँग लिन ठेकी, कोसेली भनेर घरघर पुग्नुपर्ने अवस्था थियो । व्याज चर्को बुझाउनुपर्ने । यी यस्ता यावत समस्या समाजमा छँदै थिए । हामी स्वयम् पनि तिनै कुराबाट प्रताडित थियौं । समाज प्रताडित थियो । २०४७ सालमा प्रजातन्त्र आयो, गणतन्त्र आएन । २०४८ सालमा सहकारी ऐन आयो । विश्वमा सहकारी स्थापना भएको ११२ वर्षपछि नेपालमा सहकारी अभियान शुरु भएछ वि.सं. २०१२ सालमा । सहकारी अभियान शुरु भएको झण्डै १४७ वर्षपछि मात्र नेपालमा सहकारी ऐन आयो । सहकारी ऐन आएपछि सहकारी अभियानले अलिकति गति लियो । सहकारी संस्थाहरूमा समस्याहरू पनि थपिए ।

हामी अलिकति चेतनशील मान्छेहरू, पढेलेखेका मान्छेहरू, विचार मिल्ने मान्छेहरू समान उँचाई भएका मान्छेहरू, सँगै घुमफिर गर्नसक्ने, मन मिल्ने मान्छेहरूका बीचमा छलफल गरिकन, खास गरेर विद्यालयमा काम गरिरहेका शिक्षकहरूका बीचमा र त्योसँग सम्बन्ध राख्ने पढेलेखेका मान्छेहरूसँग मिलेर सहकारी खोल्ने निष्कर्षमा पुग्यौं । त्यसको अगुवाई हाम्रो आदरणीय गुरु यज्ञराज ढुङ्गेलले गर्नुभयो । मेरो औपचारिक शिक्षाको पनि उहाँ गुरु हो । हामी सबैले उहाँलाई हेडसर भन्छौं । मेरो छोरीले पनि, एकदिन उनलाई सरको खास नाम सोध्दा उनलाई त्यो थाहै रहेनछ । यज्ञराज सर सबैका हेडसर हुनुहुन्थ्यो । उहाँको समाजमा दर्जा त्यही थियो ।

उहाँले सहकारीका बारेमा अवधारणा लिएर आउनुभयो । उहाँले भनेपछि कसैले प्रतिवाद गर्ने कुरा हुँदैनथ्यो । उहाँले गलत काम गर्नुहुन्न भन्ने हामीमा विश्वास थियो । हामी ३४ जना भएर ३४०० रूपैँया जम्मा गरेर सहकारी स्थापना गर्‍यौं । आज यही संस्था २५ वर्षमा प्रवेश गर्दैछ । त्यहाँको गरिबीलाई देखेर मानिसहरूलाई कसरी संगठित गर्ने, कसरी सक्षम बनाउने भनेर सहकारी स्थापना गरिएको थियो ।

**२.पैसा उठाउन सजिलो थियो त ?**

सजिलो थिएन । हामी एकै खालका मानिसहरू भएका कारण अलि सजिलो भयो । म एमालेको नेता पनि थिएँ । त्यसलाई लिएर मलाई चुनावमा लड्न पैसा जम्मा गर्नका लागि सहकारी बनाइयो भनेर पनि हल्ला भयो । यज्ञराजलाई तलब पुगेन, तलब थप्नका लागि यो काम गरेका हुन् भन्ने पनि भयो । तर पनि हामीले निष्ठापूर्वक सहकारीका मूल्य मान्यताका साथ संस्थालाई अगाडि बढाउँदै लग्यौं । नेपालको सहकारी आन्दोलनले तय गरेका सिद्धान्तहरू र अन्तर्राष्ट्रिय सिद्धान्तहरू र विधिहरूभित्र बसेर हामीले सहकारी सञ्चालन गर्‍यौं । त्यसो गर्दा हामीसँग कुनै समूह, धर्म, लिङ्ग, जाति, भाषा, धर्मको स्वार्थ थिएन । हाम्रो एउटै स्वार्थ भनेको सहकारी अभियानलाई कसरी बलियो बनाउन सकिन्छ भन्ने मात्रै थियो । हामी सबैको साझा सरोकार यही मात्र थियो त्यसकारण हामीले यसमा कुनै पनि विचार, भाषा, धर्मका कुरा लागू गरेनौं ।

वि.सं. २०५२ पछि माओवादीले गरेको हिंसात्मक आन्दोलनका क्रममा सहकारीको साधारण सभाका सामान्य विवादलाई लिएर सञ्चालकहरू यज्ञराज ढुङ्गेल, पुष्कर दाहाल, भीम दाहाल, कुमार चौलागाइँ, प्रेमकुमारी चौलागाइँ, रुद्र प्रसाद दाहाललगायतलाई धम्कीपूर्ण चिठीहरू लेख्ने काम भयो । त्यसमा प्रयोग भएको भाषाशैलीका बावजुद हामीले सहकारी सिद्धान्तहरूमा नडगमगाइकन यज्ञराज ढुँगेलको नेतृत्वमा बढाइरह्यौं । हामी सहकारी आन्दोलन

यस उँचाइमा पुगेकोमा गर्व गर्दछौं । यो एउटा आर्थिक, सामाजिक, समावेशी आन्दोलन भएको छ । यसमा अहिले कसैले आफूलाई कांग्रेस, एमाले, माओवादी देख्दैन । जात, भाषा, धर्म, लिङ्ग देख्दैन । यसले सबैलाइ एकै ठाउँमा ल्याएको छ । हिजो भएका कुराहरूमा मेरो कुनै गुनासो छैन । किनभने चेतनाको स्तर त्यस्तै थियो । त्यसलाई चिरेर अगाडि जानु जरुरी थियो ।

**३.राजनीतिक दलहरू र सहकारी संस्थाहरूबीच बेला बेला टकराव हुने गर्छ । यस्तो किन हुन्छ ?**

सहकारी आन्दोलन राजनीतिभन्दा बाहिर छ । जात, भाषा, धर्म, लिङ्ग, क्षेत्र, भेगबाट माथी छ । जनसचेतन सहकारीमा कोही मान्छे सदस्य बन्छु भनेर जाँदा व्यवस्थापनले सोध्ने शायद १ मात्र प्रश्न हो, तपाँइको ठेगना कहाँ हो ? तपाइँ कति बचत गर्नुहुन्छ र कसरी गर्नुहुन्छ भनेर पनि सोध्ला, यत्तिमात्रै हो । जात, थर, धर्म, क्षेत्र लिङ्गका विषयमा यसले सोधखोज गर्दैन । सहकारी ऐनले कार्यक्षेत्र तोकिदिएका कारण यसले ठेगाना भने जरुर सोध्छ । शुरुमा यसको कार्यक्षेत्र तत्कालिन काब्रे गाविस, त्यसपछि आसपासमा ४ गाविसहरू र अहिले दोलखा जिल्लाभर रहेको छ । त्यसका कारण जिल्लाबाहेकको मानिसलाई सदस्यता दिन नमिल्ने भएका कारण यसले ठेगाना सोध्छ । त्यसभन्दा बाहेकका विषयहरू सोध्दैन । सहकारीको आन्दोलन जात, भाषा, धर्म ,लिङ्ग क्षेत्रभन्दा माथी छ । पेशाभन्दा माथी छ । एउटा कार्यालयको प्रमुख पनि यसको सदस्य बन्नसक्छ । कार्यालय सहयोगी पनि सदस्य बन्नसक्छ । दुवैको हैसियत संस्थामा समान रहन्छ । हामीलाई गर्ने व्यवहार समान हुन्छ । म सांसद र नेकपा एमाले पार्टीको पोलिटव्युरो सदस्य र मेरो घर मास्तिरको दलित छिमेकी पनि संस्थामा समान हैसियतमा सदस्य रहन्छन् । अरु ठाउँमा हाम्रो समानस्तर नहुनसक्छ । हामी पार्टीमा समान हैसियतमा नहुन सक्छौं । कम्पनीमा नहुन सक्छौं ।

सहकारीले नेपालमा समानताको कुरा सिकाएको छ । पारदर्शिता र समावेशिताको कुरा सिकाएको छ । नेपालका राजनैतिक दलहरूलाई लोकतन्त्रको कुरा सिकाएको छ । यसले सिकाएको समानता, समावेशीता, लोकतन्त्रका कुराहरूलाई नेपालका दलहरूले अझै सिक्न सकेका छैनन् । यसले सिकाउन खोजेको कुरामा कसैका विवाद हुन सक्लान तर अब जनसचेतन नेपालको सहकारी आन्दोलनमा अगुवा संस्था हो । यसले ऋण महासंघले प्रदान गर्ने सिल्भर ब्राण्ड पाएको छ । अन्तर्राष्ट्रिय सहकारी आन्दोलनको हिस्सा पनि यो सहकारी बन्न सफल भएको छ । सहकारीले विभिन्न मापदण्डहरू पुरा गरेर यो ब्राण्ड पाएको हो । अब यसलाइ जोगाएर गोल्डेन ब्राण्ड हात पार्नुपर्छ । अहिले सहकारीलाई मानिसहरूले जात, भाषा, धर्म, लिङ्गका आधारमा हेर्दैनन् । यो सबैको साझा, नेपालको अगुवा र नमुना सहकारी संस्था भएको छ । अहिले देशभरका मानिसहरू सहकारी संस्था सिक्नका लागि जनसचेतनको भ्रमण गर्नुहुन्छ । यो अहिले सहकारी सिक्ने थलो पनि भएको छ । राज्यले गर्न नसकेका धेरै सामाजिक कामहरू सहकारी संस्थाहरूले गरेका छन् । यो आन्दोलन पनि हो ।

**४.सहकारी ऐन लामै समयदेखि संसदमा अल्झिरहेको छ । किन यस्तो भएको हो? अब कहिले आउँछ ?**

हाम्रो संघ-संस्थाहरूको चेतना र परिवेश पनि राष्ट्रिय तथा अन्तर्राष्ट्रिय परिवेशहरूका आधारमा निर्माण हुने गर्छ । ऐनहरू त्यसैमा आधारित भएर आउने गर्छन । हामीले अन्तर्राष्ट्रिय मञ्चहरूमा गरेका प्रतिवद्धता सम्झौताका आधारमा पनि ऐनहरू निर्माण हुने गर्छन् ।

१८४४ मा बेलायतमा सहकारी अभियान शुरु गरेको ११२ वर्षपछि चितवनमा सहकारी सञ्चालन भयो । संवत २०१६ मा तत्कालिन निर्वाचित सरकारले सहकारी ऐन बनाउन शुरु गरेको थियो । २०१७ मा लोकतन्त्र खोसियो । सहकारी अभियान पनि साझा अभियानमा परिणत भयो । २०४८ सालको सहकारी ऐन २०४१ सालको साझा संस्था ऐन खारेज भएर बनेको थियो । ऐन शुरु हुँदा देशमा ८३० सहकारी संस्थाहरू थिए । अहिले ३४ हजार सहकारी छन् । ६० लाख सदस्य छन् । कुल गार्हस्थ्य उत्पादनको ४ प्रतिशत हिस्सा यस क्षेत्रले ओगटेको छ । आर्थिक कारोबारको २० प्रतिशत यसले ओगट्छ । ५ खर्बभन्दा बढीको यसले कारोबार गर्दछ । २ लाख मानिसहरूले यसमा स्वयम्सेवकको भूमिकामा सञ्चालक समितिमा रहेर काम गरिरहेका छन् । सञ्चालकहरूले आन्दोलनमा सहयोग गरेका छन् । धेरैले प्रत्यक्ष, अप्रत्यक्ष रूपमा रोजगार पाएका छन् ।

नेपालमा जहाँ राज्य पुग्न सक्दैन र निजी क्षेत्र जान चाहँदैन त्यस्तो क्षेत्रमा सहकारीले काम गरेको छ । गरीब र दुःखी बस्तीमा राज्यको पहुँच पुग्दैन । निजी क्षेत्रले त्यहाँ बजार देख्दैन । यस्ता ठाउँहरूमा सहकारी पुग्ने गरेको छ । यसकारण नेपालका आर्थिक, सामाजिक र राजनीतिक आन्दोलनहरूको एउटा संवाहक सहकारी हो । यस तथ्यलाई



नेपालका राजनीतिक दलहरूले महशुस गरेका कारण नेपालमा अन्तरिम संविधानदेखि नै मुलुकको अर्थनीतिमा सहकारी क्षेत्रलाई एक खम्बाका रूपमा स्वीकार गरियो । अहिलेको संविधानमा पनि तीन खम्बे अर्थनीति राज्यले स्वीकार गर्ने र त्यसमा एक खम्बा सहकारीलाई मानिएको छ ।

२०४८ सालको ऐनले अहिलेको सहकारी आन्दोलनलाई नेतृत्व गर्न सक्दैनथ्यो । त्यसैकारण सरकारले सहकारी सम्बन्धी नयाँ ऐन जारी गर्न राष्ट्रिय सहकारी संघका अध्यक्ष केशब बडालको नेतृत्वमा कार्यदल गठन गर्‍यो । यसले छलफल गरेर अर्थ समितिमा पठायो । अर्थ समितिमा अर्थमन्त्री भइसक्नुभएका भरतमोहन अधिकारीको नेतृत्वमा उपसमिति बन्यो । यसले दल, सहकारीकर्मी, विज्ञहरू तथा अन्तर्राष्ट्रिय अनुभवका आधारमा आवश्यक संसोधन गरेर बुँदाहरूसहित अर्थ समितिमा पठायो । अर्थ समितिले यसलाई संसदमा पठायो । यही साउन २२ गते संसदको सम्भाव्य कार्य समितिमा यो विधेयक राखेर पनि यसलाई प्रस्तुत गरिएन । ऐनमा सबै कुरा समेट्न सकिए भन्न नसकिएला । यसमा नपुगेका कुराहरू भोलि थप्दै जाउँला । सहकारीमा नराम्रा काम भएका छन् । यसको नियमनका लागि पनि ऐन छिटो आउनुपर्छ भनेर हामीले दलहरूका बीचमा साझा बुझाइ बनाएका छौं । सबै पक्षको समझदारीमा सहकारी ऐन परिमार्जन गरिएको छ । सरकारले यसलाई छिटै ल्याउला । यसले सहकारी आन्दोलनलाई अझै व्यवस्थित गर्नेछ ।

मेरो विचारमा नेपालको सहकारी आन्दोलनलाई व्यवस्थित विकास गर्न सहकारी विकास बोर्डले मात्र सक्दैन । यसका लागि सहकारी प्राधिकरण आवश्यक छ । हामीकहाँ विद्युत सञ्चारका क्षेत्र नियमन गर्नका लागि प्राधिकरण रहेका छन् ।

**५ आजको परिवेशमा शेयर सदस्यहरूको भूमिका कस्तो हुनुपर्छ ?**

सहकारीको राम्रो पक्ष भनेकै १ व्यक्ति १ मत हो । यसमा शेयरको संख्याले अर्थ राख्दैन । जनसचेतनका २२ हजार सदस्यहरूकै भूमिका सक्रिय हुनुपर्छ भन्न नसकिएला तर यसमा हामीले प्रतिनिधिमूलक व्यवस्थाबाट साधारण सभामा सदस्य छानेर प्रतिनिधिहरूको छनौट गर्ने काम गरेका छौं । यिनै प्रतिनिधिहरूले सहकारी संस्थालाई खबरदारी गर्छन् । यसबाट पुगेन भने सदस्यहरूलाई सहकारी शिक्षा प्रदान गर्नुपर्छ । सञ्चालकहरूले पनि सदस्यप्रति जिम्मेवार हुनुपर्छ । जनसचेतनका प्रत्येक सदस्यले म जनसचेतनको सदस्य हुँ भन्नेमा गर्व गर्ने अवस्थामा पुर्‍याएका छौं । कहीं कमजोरी भयो भने सहकारी शिक्षा प्रभावकारी रूपमा सञ्चालन गर्नुपर्छ ।

**६.अब सहकारी आन्दोलनले कुन बाटो समाउनुपर्छ ?**

देशमा ३४ हजार सहकारी छन् । त्यसमा १५ हजारभन्दा धेरै बचत तथा ऋण सहकारी संस्था रहेका छन् । नेपालका सबै दलहरू समाजवाद निर्माण गर्नुपर्छ भन्नेमा एकमत छन् । त्यो कुरा संविधानमा पनि उल्लेख भएको छ । तर कसरी प्राप्त गर्ने भन्ने विषयमा विवादहरू छन् । सहकारी संस्थाहरूले पनि राज्यले परिकल्पना गरेको समाजवाद प्राप्तिका लागि लाग्नुपर्ने अवस्था छ । राज्यले सहकारीलाई एक जिम्मेवार आर्थिक पक्षका रूपमा स्वीकार गरेको छ तीनखम्बे अर्थनीतिमार्फत । समाजवाद भनेको आर्थिक सम्पन्नता हो । आर्थिक पक्ष उत्पादनमा गाँसिन्छ । यसका लागि मानिसहरूलाई उत्पादनमा नलगाइ हुँदैन । जनसचेतनले आफ्ना सदस्यहरूलाई उत्पादन तथा बजारीकरणमा सहयोग गर्नुपर्छ । सदस्यको उत्पादनलाई प्रशोधन तथा बजारीकरण गर्नेतर्फ लाग्नुपर्ने आवश्यक्ता छ । २५ वर्ष पुगेपछि यो संस्था परिपक्व भइसकेको छ । यसको काम भनेको ऋण दिने र उठाउनेमा मात्र सीमित हुनुभएन । सदस्यहरूलाई व्यवसायी र उद्यमी बनाउनेतर्फ लाग्नुपर्छ । अब सहकारीले सदस्यहरूलाई वैदेशिक रोजगारीमा जान ऋण दिएको छु भन्ने हैन । तिनीहरूलाई बैदेशिक रोजगारीमा जाने अवस्था अन्त्यका लागि मैले सीप प्रदान गरेको छु । बजारको अवस्था सिर्जना गरेको छु । जनसचेतनमा सदस्य भएवापत म विदेश जान परेन । मैले यो सीप प्राप्त गरें । आफ्नै ठाउँमा आयआर्जन गरें भन्ने सदस्य बनाउनुपर्छ । सहकारीले पनि यस वर्ष यति सदस्यहरू व्यवसायिक भए, अर्को साल यतिको लक्ष्य छ भन्नेतर्फ लाग्नुपर्छ । मैले दिएको ऋणको उपयोगले यति सदस्यहरू रोजगार भए भन्नेमा लाग्नुपर्छ । २५ वर्ष पुगेको अवसरमा सहकारीले संकल्प गर्नुपर्‍यो कि अब सदस्यहरू व्यवसायिक बनाइनेछन् । त्यसका लागि तालिम केन्द्रहरू स्थापना गर्नुपर्ने हुन्छ । व्यवसायिक केन्द्रहरू स्थापना गर्नुपर्‍यो । यसैमा जनसचेतनको सफलता छ । जनसचेतनलाई त्यसतर्फ अगाडि बढाइनेछ ।



# स्वाधीन र समृद्ध नेपाली अर्थतन्त्रका लागि सहकारी आन्दोलन

डा. युवराज खतिवडा
पूर्व उपाध्यक्ष, राष्ट्रिय योजना आयोग
पूर्व गभर्नर, नेपाल राष्ट्र बैंक

## १ पृष्ठभूमि

आर्थिक समृद्धि र स्वाधीन अर्थतन्त्र अन्तरसम्वन्धित विषयहरू हुन् । एउटा हासिल गर्न अर्को पनि संगसंगै प्राप्त हुने अवस्था बन्नुपर्दछ । स्वाधीन अर्थतन्त्र भन्नाले मुलुकको आर्थिक नीति निर्माण, सञ्चालन र व्यवस्थापनमा राज्य आफैं निर्णायक हुने तथा नागरिकहरूले स्वतन्त्र ढंगले राष्ट्रिय अर्थतन्त्र निर्माण गर्न व्यवसाय गर्न पाउने अवस्था हो । एक्काइसौं शताव्दीको अर्थतन्त्र पूर्णरुपमा आत्मनिर्भर हुने वा पूर्ण परनिर्भर हुने अवस्था देखिंदैन । एक अर्कामा निर्भर रहेर अन्तरनिर्भरताको आधारमा विश्वका मुलुकहरू चल्ने हो । विज्ञान प्रविधि, पूँजी, श्रम, उद्यमशिलता, उत्पादित वस्तुको वजार र उपभोग सबै एउटै मुलुकमा हुन त्यति सम्भव छैन । त्यसैले पूर्ण प्रतिस्पर्धा र समान क्षमताका आधारमा अन्तरनिर्भर विश्व अर्थतन्त्रको हिस्सा हुनुलाई स्वाधीन अर्थतन्त्रभित्रै राख्दा अन्यथा हुँदैन । तर कच्चा पदार्थ र अदक्ष श्रम मात्र निर्यात गर्ने र अरु सबै कुराहरू आयात गर्ने हाम्रो जस्तो अर्थतन्त्र स्वाधीन भन्न मिल्दैन । स्वाधीन अर्थतन्त्रले धेरै हदसम्म अन्तर्राष्ट्रिय संकट, दबाव र असहयोग थेग्न सक्नुपर्दछ ।

समृद्ध अर्थतन्त्र भन्नाले बलियो आर्थिक आधार भएको, उच्च शिक्षा, सीप र सुस्वास्थ्यसहितको उत्पादक श्रमशक्ति तथा उद्यमशील नागरिक भएको एवम् सम्पूर्ण नागरिकहरूले सामाजिक सुरक्षाको अनुभूति गर्नसक्ने उन्नत अर्थ व्यवस्थालाई वुझ्नुपर्ने हुन्छ । समृद्धि भनेको अझ फराकिलो विषय हो । खासगरी आर्थिक, सामाजिक, सांस्कृतिक र वातावरणीय दृष्टिले पनि सबैको सन्तुष्ट र सुखी जीवनकोको अवस्था समृद्धि हो । त्यसैले समृद्धिमा समानता, समन्यायिकता, सामाजिक न्याय, आर्थिक सहभागिता र मानव जीवनका धेरै पक्षवाट खुशीका वातावरण बन्नुपर्ने हुन्छ ।

नेपालको संविधानमा समृद्धिका कुरा धेरै गरिएको छ । यो संगै समाजवाद उन्मुख अर्थतन्त्र निर्माणको परिकल्पनासमेत गरिएको छ। यो हासिल गर्न सरकार, निजी क्षेत्र र सहकारीको परिपूरक भूमिकाको अपेक्षा गरिएको छ। आर्थिक वृद्धिको मात्र उद्देश्य भए निजी क्षेत्रलाई उत्पादनको सम्पूर्ण जिम्मेवारी दिएर राज्यले त्यसलाई सहजीकरण गरे पुग्थ्यो होला । त्यस्तै राज्य नियन्त्रित समाजवादको मात्र कुरा भए सरकारको मात्र भूमिकालाई महत्व दिए पुग्थ्यो होला । तर नेपालमा हामी निजी क्षेत्रको उल्लेख्य भूमिका रहेको तथा सामाजिक जिम्मेवारीसहितको व्यवसायिक गतिविधि र त्यसका लागि बजार प्रणालीले उत्प्रेरणा दिने तर समतामूलक आर्थिक व्यवस्था ल्याउन राज्यको नेतृत्वदायी भूमिका हुने आर्थिक प्रणालीको परिकल्पना गर्दछौं । यसका लागि सरकार र निजी क्षेत्रसंगै सहकारी क्षेत्रको उल्लेख्य भूमिका रहनुपर्ने भएको हो । आर्थिक आधार वलियो वनाइ विकास प्रयासमा सफलता हासिल गर्न नेपाल जस्तो अतिकम विकसित मुलुकले मध्यमकालमा समावेशी, रोजगारीयुक्त उच्च अंकको आर्थिक वृद्धि हासिल गर्ने लक्ष्य लिनै पर्दछ । यसका लागि कृषि, जलस्रोत, पर्यटन, निर्यात प्रवर्धन क्षेत्रको विकासबाट मात्र सम्भव हुने देखिन्छ भने समुदायमा आधारित सहकारीको ढाँचा नै यसका लागि उत्तम विकल्प हुनसक्छ ।


**अर्थतन्त्रमा सहकारी क्षेत्रको भूमिका बढाउँदै गएमा प्रारम्भिक चरणमा घरेलु तथा साना उद्योगको विकास हुने गर्दछ भने मध्यमकालमा मझौला उद्योग र दीर्घकालमा सहकारीतामा आधारित ठूला औद्योगिक व्यवसायको सञ्चालन गर्न सकिन्छ ।**

विश्व आर्थिक प्रणालीमा विभिन्न समयमा पूँजीवादी,



समाजवादी वा मिश्रित अर्थतन्त्रहरूको अभ्युदय, विकास वा पतन भएको देखिन्छ । यसै क्रममा कहिले राज्यको भूमिका विहीनता त कहिले राज्यको मात्र उपस्थितिको अर्थ प्रणालीको वकालत गरिन्थ्यो । यस बाहेक अरु प्रणाली पनि आर्थिक विकासका माध्यम वा आधार हुनसक्छन् भन्ने कुरा बिर्सने गरिन्थ्यो । विकसित मुलुकहरूले अघि सारेका आर्थिक नीतिका कारण अर्थतन्त्रमा सरकारको न्यून हस्तक्षेप र निजी क्षेत्रमाथि अत्यधिक भरोसा गरिएको थियो । अझ खासगरी उदार अर्थतन्त्रमा सरकारले सामाजिक सुरक्षा र आर्थिक वातावरण एवम आधारशीलाको निर्माणमा र निजी क्षेत्रले उत्पादन तथा व्यापारमा केन्द्रित हुने अपेक्षा गरिएको थियो । तर निजी क्षेत्रले सामाजिक जिम्मेवारीसहितको नाफाको अवधारणालाई आत्मसात् गर्न नसकेको कारण ठूला ठूला आर्थिक संकटहरू आइलागे । निजी क्षेत्र स्वभावैले अधिक नाफा हुने क्षेत्रमा मात्रै र अझ खासगरी अतिरिक्त लाभको अवसर भएका क्षेत्रमा सीमित हुन खोजेको देखियो । सरकार एक्लैले यो समस्या हल गर्नसक्ने पनि देखिएन । त्यसैले समन्यायिक समाजको निर्माण गर्ने क्रममा आर्थिक गतिविधिमा समुदायमा आधारित संस्थाहरू र सहकारीको भूमिकाको अपरिहार्यतालाई सबैले मनन गर्न थालेका हुन । समग्रमा सरकार र निजी क्षेत्र दुबैले विकासको गतिलाई अपेक्षित रुपमा अघि बढाउन नसकेको परिवेशमा सहकारी एक सशक्त विकल्पको रुपमा अघि आएको हो ।

तर के सहकारीबाट मात्र आर्थिक समृद्धि सम्भव छ भन्ने प्रश्नलाई भने सम्बोधन गर्नैपर्ने हुन्छ । ठूलो परिमाणको पूँजी र प्रविधि परिचालन, वैज्ञानिक खोज र अनुसंधान, जनशक्ति विकास, पूर्वाधार निर्माण, वातावरण र जलवायु परिवर्तन अनुकूलन, र सामाजिक सुरक्षाको क्षेत्रमा राज्यको अहम भूमिका हुन्छ नै, त्यस्तै औद्योगिक तथा व्यापारिक क्षेत्रमा निजी क्षेत्रको भूमिका स्वतः ठूलो रहन्छ । तर सामाजिक न्यायसहितको लोकतान्त्रिक र समावेशी अर्थतन्त्र र लोक कल्याणकारी राज्य निर्माणमा सहकारी क्षेत्रले अर्थतन्त्रका प्रमुख खम्बाका रुपमा रहेका सरकार र निजी क्षेत्रको पूरकका रुपमा अघि बढनैपर्छ । यसले सरकार र निजी क्षेत्रले समेट्न नसकेका र विगतमा तिनले सफलता हासिल गर्न नसकेका क्षेत्रहरूका आर्थिक गतिविधि सञ्चालनमा सक्रिय रूपमा आफूलाई स्थापित गर्नसक्छ । यस सिलसिलामा सहकारी क्षेत्रले अर्थतन्त्रको अग्र एवम् पृष्ठ दुवै सम्बन्ध स्थापित गर्ने अवसरको उपयोग गर्दै मध्यमकालबाटै निजी क्षेत्रसंगको सहकार्यमा स्वाधीन अर्थतन्त्र निर्माणको महत्वपूर्ण लक्ष्यमा योगदान पुऱ्याउन सक्दछ । यसो हुन सहकारी आन्दोलनलाई समुदायमा आधारित एवं स्थानीय स्रोत, साधन र सीपको उपयोग गर्दै रोजगारी, आय र उत्पादन अभिवृद्धि गर्ने कार्यलाई विकृतिमुक्त ढंगले अघि बढाउनु आवश्यक छ ।

**२ स्वाधीन र समावेशी विकासमा सहकारीको भूमिका :**

स्वाधीन अर्थतन्त्रका नागरिकहरू आर्थिक रुपमा सक्षम, सबल र स्वतन्त्र हुन्छन् । आर्थिक रुपमा स्वतन्त्र हुनलाई उत्पादनका साधनमा पहुँच, उत्पादन कार्य, वितरण र उपभोगमा समेत पहुँच तथा आर्थिक निर्णय प्रक्रियामा प्रभावकारी सहभागीता अनिवार्य हुन्छ । नेपालका झण्डै एक चौथाई परिवार भूमीहीन छन्, दुई तिहाई परिवारहरू औपचारिक बैंक तथा वित्तीय सेवाबाट विमुख छन्, झण्डै एक तिहाई श्रमशक्ति निरक्षर छ । धेरै परिवारहरू लैंगिक, सामाजिक र भौगोलिक वहिष्करणवाट पीडित छन् । समग्रमा यी परिवारहरू सामान्य जीवन निर्वाहका लागि आत्मनिर्भर हुनसक्ने अवस्था छैन । उनीहरू संगठित नभई आर्थिक कारोवार गर्ने क्षमता, आफ्नो आवाज वा समस्या राज्यसमक्ष पुर्‍याउने क्षमता तथा गरिवीवाट माथि उठ्ने अवस्था रहँदैन । यस्ता परिवारलाई सामाजिक परिचालनको माध्यमवाट संगठित गर्ने, उनीहरूलाई आयआर्जन र रोजगारीका अवसर सिर्जना गर्ने तथा आर्थिक सामाजिक सशक्तिकरण गर्ने कार्यमा सहकारी प्रणाली एक महत्वपूर्ण उपाय हुन सक्तछ ।

साधारणतया आर्थिक वृद्धिलाई समावेशी बनाउने कुरा गर्दा हामी त्यो बजार अर्थतन्त्रबाट हासिल गर्ने कल्पना गर्छौं जुन असम्भव कुरा हो । समावेशी आर्थिक वृद्धि भन्नाले उत्पादन प्रक्रियामा समुदायका अधिकाँश सदस्यको सहभागिता हुने, उत्पादन प्रक्रियाको निर्णयमा सबैको सहभागिता तथा आर्थिक वृद्धिको लाभ सबैलाई वितरण हुने कुरालाई बुझ्नुपर्ने हुन्छ । तर बजार अर्थतन्त्रमा उत्पादनका साधनहरूमा सबैको पहुँच हुँदैन र उत्पादनको वितरण पनि समानुपातिकता र समन्यायिकता सम्भव हुँदैन । त्यसैगरी, यस पद्धतिमा उत्पादन र वितरणको प्रक्रियामा सबैको समान क्षमता र अधिकार पनि स्थापित हुन सक्दैन । त्यस्तै समावेशी आर्थिक वृद्धिलाई बढी न्यायमुखी बनाउन जहाँ राज्यको दरिलो उपस्थिति जरुरी हुन्छ, त्यस्ता क्षेत्रहरूमा राज्यले वितरणका बलिया कार्यक्रमहरू ल्याउनुपर्ने हुन्छ । तर, राज्यको उपस्थितिबाट सबैलाई सेवा पुऱ्याउनका लागि राज्य संयन्त्रको क्षमता, दक्षता र कुशलतामा प्रश्नहरू उठ्न सक्दछन् । यस्ता प्रश्नहरू हाम्रो जस्तो अल्पविकसित मुलुकमा अझ टड्कारो रुपमा उठ्ने गरेको पाइन्छ । किनभने अनुभवले के देखाएको छ भने यस्ता अल्पविकसित

मुलुकहरूमा राज्य श्रोतको विनियोजनको आधाभन्दा पनि निकै कम मात्रै भौतिक प्रगतिमा परिणत हुन्छन् । यसले राज्यको सीमित साधनको अपव्यय भएको देखाउँदछ। त्यसैले समावेशी विकासको प्रभावकारी ढाँचाको कुरा गर्दाखेरी अहिलेको अवस्थामा राज्य र निजी क्षेत्र गरी दुई मूल पात्रहरू (Actors) मात्र रहने ढाँचा काम लागेन, त्यसैले अब तेश्रो पात्रको रुपमा समुदायमा आधारित सहकारी संस्थाहरू समेतको सक्रियता उपलब्धिमूलक हुनसक्छ भन्ने देखिइसकेको छ । सदैव नाफा केन्द्रित हुने निजी क्षेत्रले समेट्न नसकेका वा उसले समावेश गर्न आवश्यक पनि नठानेका, राज्य संयन्त्रले परिचालन गरेको स्रोतले मात्रै समावेशिता हासिल गर्न नसकेका अवस्थामा यदि हामीले सामुदायिक र सहकारी संस्थाहरूको माध्यमबाट उत्पादनको प्रक्रिया र उत्पादित वस्तु र सेवाको वितरण एवम् त्यसबाट प्राप्तको लाभको वितरणको अवस्थासम्म पनि सहकारीलाई परिचालन गर्न सक्यौं भने मात्र समावेशी आर्थिक वृद्धिको कल्पना कार्यरुपमा रुपान्तरित हुनसक्दछ भन्ने कुरा व्यवहारमा नै देखिइसकेको छ ।

हामीले ख्याल गर्नुपर्ने अर्को एउटा मुद्दा चाहीँ के हो भने नागरिक सवलीकरणको माध्यमबाट आर्थिक सामाजिक रुपान्तरण गर्ने कुरालाई मूर्त रुप दिन सकिन्छ। सवलीकरण अन्तर्गत पनि खासगरी लैंगिक समानता र सशक्तिकरणका विषय प्रवल हुन्छन् । हाम्रोजस्तो मुलुकमा लैंगिक समानताको कुरा गर्दा महिलाहरूलाई सशक्त बनाउने र उनीहरूलाई सक्षम तुल्याउने, त्यसैगरी अधिकार सम्पति र अवसरमा समान रुपमा उनीहरूको पहुँच पुऱ्याउने विषयले प्राथमिकता पाउनुपर्ने हुन्छ जुन राज्य संयन्त्रबाट लामो समयसम्म हासिल हुन सकेन भने अर्कोतर्फ निजी क्षेत्रले चाहीँ सामान्य संस्थागत सामाजिक उत्तरदायित्व अन्तर्गत सांकेतिकरुपमा गर्ने बाहेक दीर्घकालीन र व्यापकरुपमा गर्न सक्ने विषय नै भएन । त्यसो हुनाले लैंगिक समानता र महिला सशक्तिकरणको लागि समुदायमा आधारित सहकारिता एउटा उपयुक्त माध्यम हुन्छ। नेपालमा खुलेका अधिकांश महिला सहकारीहरू, महिला सहभागितामा खुलेका अन्य सामुदायिक संस्थाहरू यसका ज्वलन्त उदाहरणहरू हुन् । यसबाट महिला सशक्तिकरणमा महत्वपूर्ण भूमिका निर्वाह भएको छ ।

नेपालमा साना किसान कृषि सहकारीदेखि लघुवित्त सेवा प्रदान गर्ने सहकारी संस्थाहरूसम्मले समुदायको परिचालन र सशक्तिकरण मार्फत आर्थिक रुपमा स्वाधीन बनाउन सफलता प्राप्त गरिरहेको सन्दर्भमा सहकारीहरू अन्ततः स्वाधीन र समावेशी अर्थतन्त्र निर्माणमा नै कोशेढुङ्गा हुने कुरामा दुईमत छैन । सहकारी संस्था खासगरी स्थानीय समुदायको सहभागितामा स्थापना भइ बचत परिचालन गर्दै  आर्थिक एवम् सामाजिक कार्यका लागि आवश्यक पर्ने वित्तीय खाँचो पूरा गर्न स्थापित भएका हुन्छन् । यसको क्रमिक विकासको परिणामस्वरुप स्थानीय श्रम तथा सीपको उपयोग गरी उत्पादन अभिवृद्धि गर्नका लागि पूँजी निर्माणको कार्य पनि यसको कार्यक्षेत्रभित्र पर्दछ । यस कार्यमा अन्य सहकारी संस्थाहरूको अतिरिक्त बचत तथा ऋण सहकारी संस्थाको भूमिका महत्वपूर्ण हुने गर्दछ । तथापि यी संस्थाहरूमध्ये शहर केन्द्रित धेरै सहकारीले सहकारिताको भावना र मान्यता अनुरुप मात्र कार्य गर्नुपर्ने हुन्छ ।

नेपालको सन्दर्भमा भन्ने हो भने २०७३ असार मसान्तसम्ममा सहकारी संस्थाहरूबाट झण्डै  रु ७२ अर्व शेयर तथा अन्य पूँजी तथा करिव ३ खर्व वरावर वचत परिचालन भएको छ । यो स्रोतवाट रु २९० अर्व वरावर ऋण प्रवाह हुन सकेको छ। मुलुकका चालिस प्रतिशतभन्दा वढी परिवारहरू कुनै न कुनै रुपमा सहकारीको वित्तीय सेवावाट लाभान्वित हुन सकेका छन् । यो वित्तीय पहुँच बैंक तथा वित्तीय संस्थाहरूमार्फत प्राप्त सेवाभन्दा पनि वढी छ । झण्डै ३४ हजार सहकारी संस्थाका ६० लाख भन्दा वढी सदस्यहरू र त्यसमध्ये ५१ प्रतिशतभन्दा वढी महिला सदस्य आर्थिक क्रियाकलापमा संलग्न हुँदा सचेतना, उद्यमशीलता, स्थानीय साधन स्रोत परिचालन, स्वरोजगारी, आयआर्जन, पूँजी निर्माण र आर्थिक सामाजिक रुपान्तरणमा उल्लेख्य योगदान पुगेको छ । यसले ग्रामीण क्षेत्रको आर्थिक सामाजिक रुपान्तरणमा उल्लेख्य योगदान पुगेको छ। सहकारीका शेयर सदस्यहरूमा रहेको सीप, क्षमता र दक्षतामा आधारित कृषि उद्यम, साना तथा मझौला उद्योग व्यवसाय र सेवाको प्रवर्द्धनमा लाग्न थालेसंगै निजी पूँजीमा अन्तरनिहीत अतिरिक्त लाभको सिद्धान्तमा आधारित श्रमको शोषण अन्त्य हुने र अर्कोतर्फ सहकारीका माध्यमबाट मात्र न्यून लागतमा उत्पादन सम्भव हुने वातावरण वनेको छ। प्राथमिक वस्तुको उत्पादन र प्रशोधन कार्यमा सहकारीको अग्रसरताले सिर्जना गर्ने रोजगारीले स्थानीय जनसमुदायको क्रयशक्ति क्रमिक रुपले सुदृढ भई उत्पादित वस्तु तथा सेवाको माग बढ्ने, बजार विस्तार हुने, रोजगारी र आयमा वृद्धि हुने तथा यसबाट उपभोगको प्रवृत्तिमा समयसापेक्ष परिवर्तन र बृद्धि भइ अर्थतन्त्र थप चलायमान हुने अवस्था सिर्जना भएको छ ।

कृषि उत्पादन, भण्डारण, प्रशोधन तथा बजारीकरण एवम् कृषि सामग्रीको आपूर्ति व्यवस्थापनमा कृषि सहकारी संघ संस्थाहरूको संलग्नतालाई पनि अन्तर्राष्ट्रिय अनुभवले बाञ्छनीय सिद्ध गरिसकेको छ । नेपालका सहकारी संस्थाहरू बस्तु तथा सेवाको बजारीकरणका लागि अघि बढन सक्दछन् भने अर्कोतर्फ सहकारीका माध्यमबाट हुने उत्पादन र त्यसको विक्री वितरणबाट प्राप्त हुने लाभ सहकारीका शेयर सदस्यहरूबीच न्यायोचित वितरण गरी आयको असमान वितरणलाई न्यूनीकरण गर्न सहयोग पुर्याउन सक्छन भन्ने पनि देखिएकै छ। आउँदा दिनहरूमा नेपालका सार्वजनिक संस्थानहरूको सञ्चालन सरकारले नगर्ने हो भने सहकारीकरणको ढाँचालाई अवलम्वन गरी त्यस्ता कल-कारखाना, सरकारी कृषि फर्म तथा बजार केन्द्रहरूको सञ्चालन सहकारीलाई हस्तान्तरण गर्ने नीति अख्तियार गर्ने हो भने उत्पादन र वितरणमा सहभागिताको विकास भइ संविधानको समावेशी आर्थिक वृद्धिको उद्देश्य हासिल गर्नमा पनि मद्दत पुग्ने अपेक्षा गर्न सकिन्छ ।

स्वाधीन अर्थतन्त्रको मौलिक पक्ष भनेको खाद्य सुरक्षा पनि हो । संविधानले नै यो सुरक्षाको प्रत्याभूति गरेको संदर्भमा सहकारीमार्फत खाद्यान्न उत्पादन, प्रशोधन, भण्डारण, र वजारीकरणमा सहजता ल्याइ खाद्य सुरक्षा हासिल गर्न सकिन्छ। खाद्य सुरक्षा उत्पादन र वितरणसंगै उपलव्धता र गुणस्तरको विषय हो। भौगोलिक विकटताले गर्दा स्थानीय रूपमा उत्पादन बढाउनु खाद्य सुरक्षाको पहिलो रणनीति हो । यस सन्दर्भमा ग्रामीण क्षेत्रमा स्थानीय श्रम, सीप र साधनमा आधारित कृषि सहकारी संस्थाहरूको सक्रियताबाट उत्पादन र वितरण सुदृढ गरी एक हदसम्म खाद्य सुरक्षा सुनिश्चित गर्न सकिन्छ । नेपालको भौगोलिक एवम् जैविक विविधतामा रहेको कृषि तथा वनजन्य उत्पादनको सम्भाव्यताका दृष्टिकोणबाट हेर्दा हरेक भौगोलिक क्षेत्रमा विशिष्टीकृत कृषि एवम् वनजन्य उत्पादन सम्भव छ भने स्थानीय जनसमुदायको स्वामित्वमा सञ्चालित सहकारी संस्था नै यसको विकासका लागि अग्रणी हुनसक्ने यथार्थलाई मनन गरी अघि बढ्न सकेमा खाद्य सुरक्षा हासिल गर्न थप मद्दत पुग्ने देखिन्छ ।

मुलुकभित्र नै पर्याप्त रोजगारीका अवसरहरू प्राप्त हुनु स्वाधीन अर्थतन्त्रको द्योतक हो। उत्पादनका साधनमा सीमित व्यक्तिको मात्र पहुँच, सानो तथा खण्डित वजार, र मूलतः कृषि तथा ग्रामीण अर्थतन्त्र भएको नेपालमा सहकारी रोजगारीको ठूलो माध्यम हुनसक्छ । मुलुकभित्र रोजगारीका पर्याप्त अवसरको अभावको कारण अधिकांश युवा श्रमशक्ति विदेश पलायन भएको छ। तथापि उनीहरू केही पूँजी, अनुभव र सीप सिकेर फर्कने र व्यवसाय स्थापना गरी रोजगारी सिर्जना गर्ने काममा लाग्न थालेको अवस्था पनि छ। खासगरी खाडी मुलुकमा गएका त्यस्ता युवा स्वदेश फर्केपश्चात् कुनै न कुनै कृषिजन्य व्यवसायमा संलग्न भएका र तिनको वित्तीय आवश्यकता परिपूर्ति गर्ने काम मोफसलका सानो पूँजीगत आधार भएका विकास बैंक र स्थानीय सहकारी संस्थाहरू नै अग्रपंक्तिमा देखिएका छन् । यस सन्दर्भमा सहकारी संस्थाहरू स्थानीयस्तरमा स्वरोजगारका अवसर सिर्जना गर्न समूहमा आधारित लघु उद्यम प्रवर्द्धन गरी रोजगारी अभिवृद्धि गर्ने एक सशक्त माध्यम हुन सक्छन्। यस अतिरिक्त सहकारी संस्थाहरूको अग्रसरता र संलग्नतामा सञ्चालन हुने उत्पादन, प्रशोधन र वितरणको कार्यबाट एकातर्फ रोजगारीका अवसर सिर्जना गर्न सकिन्छ भने अर्कोतर्फ त्यसमा संलग्न समुदायको आयआर्जन हुने निश्चित प्रायः नै हुन्छ । यसरी आय आर्जनमा वृद्धि भइ समुन्नत र सुसंस्कृत समाज निर्माणमा सहकारीले सकारात्मक योगदान गर्ने विश्वास गर्न सकिन्छ। सहकारीका संलग्नतामा उत्पादन एवम् आय आर्जनका काम अघि बढाउँदा राज्य र निजी क्षेत्रमा जस्तो साधन र स्रोतको चुहावट हुने सम्भावना कम हुन्छ ।

तीन खम्बे अर्थनीति अंगीकार गरेको मुलुक नेपालमा सहकारी संस्थाले स्थानीयस्तरको लगानीमा व्यवसायको अग्र एवम् पृष्ठ सम्बन्ध कायम गर्न सक्दछ भने निजी क्षेत्रले प्रवर्द्धन गर्ने ठूला उद्योग व्यवसायको सुदृढ पृष्ठ सम्बन्ध निर्माणमा पनि सहकारी सहयोगी हुनसक्दछ। अर्थतन्त्रमा सहकारी क्षेत्रको भूमिका बढाउँदै गएमा प्रारम्भिक चरणमा घरेलु तथा साना उद्योगको विकास हुने गर्दछ भने मध्यमकालमा मझौला उद्योग र दीर्घकालमा सहकारीतामा आधारित ठूला औद्योगिक व्यवसायको सञ्चालन गर्न सकिन्छ। यी तथ्यबाट के पुष्टि हुन्छ भने सहकारी क्षेत्र औद्योगिक लगानी प्रवर्द्धनमा अग्रणी र बलियो साझेदार हुनसक्दछ । पूँजी र प्रविधिमा आधारित ठूलो लगानी आवश्यक पर्ने सेवा व्यवसायको स्थापना र सञ्चालन निजी क्षेत्रबाट हुने अपेक्षा गरिएको हुन्छ भने प्रारम्भिक चरणमा श्रम र सीपमा आधारित सेवा व्यवसायमा सहकारी संस्थाको महत्वपूर्ण भूमिका हुने गर्दछ । त्यसैगरी दीर्घकालमा भने सहकारी पनि सेवा व्यवसायको प्रवर्द्धन गर्ने कार्यमा निजी क्षेत्रको परिपूरकको रुपमा खडा हुनसक्छ । वित्तीय सेवामा सहकारीको भूमिका अझ प्रभावकारी हुने कुरामा शंका छैन ।

आयातमा अधिक निर्भर मुलुक स्वाधीन र समृद्ध वन्न सक्दैन । नेपालको औद्योगिक उत्पादन, निर्माण, र पूर्वाधारको विकासमा तथा दैनिक उपभोगमा समेत आयातको हिस्सा ज्यादै उच्च छ । यसले गर्दा मुलुकको व्यापार घाटा कूल गार्हस्थ उत्पादनको ३० प्रतिशतभन्दा वढी भइसकेको छ । खासगरी आयातमा देखिएको तीव्र वृद्धि र निर्यातको प्रवृत्तिमा देखिएको न्यून वृद्धि अझ भनौं शिथिलताका कारण पनि यस्तो अवस्था सिर्जना भएको हो । स्वदेशमा नै उत्पादन गर्न सकिने कृषिजन्य वस्तुहरूको आयात, विलाशी वस्तुहरूप्रतिको मोह, आयात प्रतिस्थापन नीतिको अभाव समेतका कारण यस्तो भएको हो । कृषि उत्पादन, आयात प्रतिस्थापन र निर्यात प्रवर्धनमार्फत सहकारीले व्यापार घाटा कम गर्दै स्वाधीन अर्थतन्त्र निर्माणमा सहयोग पुऱ्याउन सक्दछन् ।

देशभित्र उपलव्ध प्राकृतिक साधन, मानवीय संसाधन र तिनमा निहीत सीपको उच्चतम उपयोग गर्दै मध्यमकालका लागि लक्षित गरी कृषि क्रान्तिका माध्यमबाट आयात प्रतिस्थापन गर्ने गरी आर्थिक क्रियाकलापहरू जस्तै उत्पादन, प्रशोधन, बजारीकरण र लाभको वितरण गर्ने कार्यमा सहकारी संस्थाले अग्रणी भूमिका खेल्न सक्दछ । त्यसैगरी, राज्यले प्राथमिकीकरण गरी सहकारी लक्षित उच्च मूल्यका कृषि उपज प्रशोधनका माध्यमबाट त्यस्ता कृषि उपजको बृहत् उत्पादन, सहकारीको क्षमताले पूँजीगत लगानीको आवश्यकता पूरा गर्नसक्ने परम्परागत सीपमा आधारित हस्तकलाका वस्तुहरूको उत्पादनमा समेत सहकारीले अग्रणी भूमिका निर्वाह गर्न सकेको खण्डमा निर्यात प्रवर्द्धन र आयात प्रतिस्थापन भइ व्यापार घाटामा दीर्घकालीन सुधार आउने देखिन्छ ।

सैद्धान्तिक दृष्टिले हेर्दा पनि सहकारी संस्थाहरू निजी क्षेत्र जस्तो अल्पकालीन नाफाबाट अभिप्रेरित भइ स्थापना गरिने व्यवसायिक प्रतिष्ठान नभइ दीर्घकालीन सामाजिक आर्थिक रुपान्तरणका अभियन्ता हुन् । सहकारी संस्थाले परिचालन गर्ने बचत र त्यसले प्राप्त गर्ने प्रतिफल अधिकतम हुनसक्ने तथा ऋणी सदस्यले पनि न्यूनतम व्याजदरमा कर्जा पाउन सक्ने हुँदा यो दुवै पक्षको हितमा रहने कुरा स्पष्ट नै छ । सहकारी संस्थाहरूले सिद्धान्ततः सीमित नाफामा कारोबार सञ्चालन गर्ने, त्यस्तो नाफा पनि शेयर सदस्यभित्रै वितरण गरिने र जे जति नाफा बाँकी रहन्छ त्यो नाफा संस्थाको दीर्घकालीन वित्तीय सक्षमताका लागि उपयोग गर्ने अवधारणाको कारण यसले आन्तरिक उत्पादन अभिवृद्धिमार्फत समावेशी र समतामूलक अर्थतन्त्र बन्न सघाउ पुऱ्याउँछ ।

आर्थिक स्वाधीनतालाई आत्मनिर्भर, स्वतन्त्र र विदेशी पूँजी, बजार र सहायता नचाहिने अर्थतन्त्रको रूपमा बुझ्ने गरिन्छ । तर एक्काइसौं शताव्दीको आर्थिक स्वाधीनताले बन्द अर्थतन्त्रको परिकल्पना गर्दैन । आर्थिक स्वाधीनताले अर्थतन्त्रहरूका बीचको अन्तरनिर्भरतालाई पनि अस्वीकार गर्दैन । आर्थिक स्वाधीनताको चर्चा गर्दा अर्थतन्त्रमा उपलव्ध प्राकृतिक, भौतिक, वित्तीय र मानवीय स्रोतको उपयोग गर्न राज्यको आफ्नै निर्णायक भूमिका हुनसकेको छ वा छैन ? आर्थिक रुपले सक्रिय जनसंख्यामध्ये श्रमशक्तिको रुपमा उपयोगको सम्भावना रहेका मानवीय स्रोतले पर्याप्त रोजगारीका अवसर पाउन सकेका छन् वा छैनन् ? विदेशी सहायता राष्ट्रिय हित र प्राथमिकतामा र राष्ट्रिय स्वार्थ अनुकूल परिचालन गर्न सकिएको छ, छैन ? वा आफ्नो उत्पादनको बजार कतिसम्म आन्तरिक रूपमा सुदृढ छ भन्ने जस्ता कुराहरू अघि सर्छन् । आर्थिक स्वाधीनताले मुलुकका बासिन्दाको लागि आवश्यक पर्ने वस्तु तथा सेवाको आपूर्ति अर्थतन्त्रको आर्जनले पुग्ने अर्थात कुल राष्ट्रिय आय बराबर हुनुपर्दछ भन्ने वकालत गर्दछ । खुला अर्थतन्त्रमा एकातिर अन्तर्राष्ट्रिय व्यापारलाई प्रतिस्पर्धी बनाउँदै ठूला लगानी आकर्षित गर्न पूँजीको प्रतिफल तुलनात्मक रुपमा उच्च हुनु आवश्यक छ भने देशभित्र छरिएर रहेका पूँजीको सदुपयोग गर्दै आय आर्जन र रोजगारी बढाउन सहकारी संस्थाहरू सशक्त हुनु आवश्यक छ ।

विकसित मुलुकहरूले अघि सारेका आर्थिक नीतिका कारण अर्थतन्त्रमा सरकारको न्यून हस्तक्षेप र निजी क्षेत्रमाथि अत्यधिक भरोसा गरिएको देखिन्छ । अझ खासगरी उदार अर्थतन्त्रमा सरकारले सामाजिक सुरक्षा र आर्थिक वातावरण एवम् आधारशीलाको निर्माणमा र निजी क्षेत्रले उत्पादन तथा व्यापारमा केन्द्रित हुने अपेक्षा गरिन्छ । तर निजी क्षेत्रले सामाजिक जिम्मेवारीसहितको नाफाको अवधारणालाई आत्मसात् गर्न नसकेको कारण समन्यायिक समाजको निर्माण गर्ने क्रममा आर्थिक गतिविधिमा समुदायमा आधारित सहकारीको भूमिकाको अपरिहार्यतालाई सबैले मनन गरेको देखिन्छ । यस अवस्थामा सहकारी आन्दोलनलाई आर्थिक समृद्धिको लागि स्वर्णिम अवसरका रुपमा उपयोग गर्नुपर्ने देखिन आएको छ ।

**३. दिगो विकासका लक्ष्यहरू र सहकारी क्षेत्र**

'दिगो विकास लक्ष्यहरू' भनेका संयुक्त राष्ट्र संघले अघि सारेका र नेपाल पनि यसमा हस्ताक्षरकर्ता १९३ मुलुकहरूमध्ये भइ सन् २०१६ देखि १५ वर्षसम्मका लागि



विकासको रणनीतिका रुपमा अघि बढाएका आर्थिक, सामाजिक र वातावरणीय विकासका एजेण्डा हुन् । १७ वटा लक्ष्य, १६९ वटा गन्तव्य र २३० भन्दा वढी परिसूचकहरू भएका यी लक्ष्यहरूले गरीवी, कुपोषण, अशिक्षा, असाक्षरता, आधारभूत शिक्षा, स्वास्थ्य र खानेपानी सुविधाबाट वञ्चिति, लैङ्गिक असमानता आदिको अन्त्य गर्ने ध्येय राखेका छन् । त्यस्तै समावेशी आर्थिक वृद्धि, मर्यादित रोजगारी, आधारभूत पूर्वाधारको विकास, व्यवस्थित सहरी विकास र अन्वेषणमा आधारित औद्योगिकीकरण, राष्ट्र-राष्ट्रवीचको र मुलुकभित्र परिवार-परिवारवीचको असमानता घटाउने, धान्न नसकिने उपभोग र उत्पादन प्रणलीलाई रुपान्तरण गरी दिगो वनाउने जस्ता विषयहरू पनि यसभित्र समेटिएका छन् । जलवायु परिवर्तनका असरहरूलाई न्यूनीकरण गर्दै अनुकूलनको क्षमता बढाउने, समुन्द्री जीवनलाई दिगो रुपमा सञ्चालन हुने गरी व्यवस्था गर्ने, वन, जमीन, पर्यावरण, जैविक विविधताको संरक्षण र प्रर्वद्धन गर्ने ध्येय पनि यसमा समावेश छन् । न्यायमा पहुँच, सुशासन, मानव अधिकारको संरक्षण एवम् प्रवर्द्धन र शान्तिपूर्ण एवम् समावेशी समाज निर्माण गर्ने ध्येयहरू समेत दिगो विकास लक्ष्य अन्तर्गत समेटिएका छन् । यी सवै लक्ष्यहरू हासिल गर्न राष्ट्रिय तया अन्तर्राष्ट्रिय सहभागिता, सहयोग र सहकार्यका क्षेत्र तथा उत्तर-दक्षिण, दक्षिण-दक्षिण एवम् त्रिकोणीय सहयोग विस्तार गर्ने रणनीतिहरू अघि सारिएको छ ।

दिगो विकास लक्ष्य प्राप्त गर्न सार्वजनिक, निजी, सहकारी एवम् सामुदायिक क्षेत्रको उत्तिकै ठूलो भूमिका आवश्यक छ । त्यस्तै सहस्राव्दी लक्ष्य हासिल गर्दा विकासका न्यूनतम् लक्ष्यहरू मात्र प्राप्त गर्नुपर्ने थियो भने दिगो विकासमा अधिकतम् लक्ष्यहरू पूरा गर्नुपर्नेछ । "कोही पछि नपरुन्" भन्ने सिद्धान्तले विकासका सवै साझेदार एवम् सरोकारवालाहरूलाई संयुक्त प्रयास गर्न वाध्य पारेको पनि छ । खास गरी सरकार प्रत्येक परिवारमा पुग्न नसक्ने र निजी क्षेत्र व्यवसायिक लाभ नहुने भए प्रत्येक परिवारमा पुग्न नचाहने अवस्थामा सहकारी नै यस्तो माध्यम हुनसक्छ जसले राज्य नपुगेको र निजी क्षेत्र पुग्न नचाहेको क्षेत्रमा दिगो विकासका कार्यक्रमहरू कार्यान्वियन गर्न सकोस । दिगो विकास लक्ष्यले सरकार, निजी क्षेत्र, सामुदायिक क्षेत्र र उत्पादकदेखि उपभोक्तासम्मलाई सामाजिक र वातावरणीय रुपमा टिकाउ हुने क्रियाकलापलाई प्रोत्साहन गरेको हुनाले पनि यसका लागि समुदायमा आधारित विकासको ढाँचाले उल्लेख्य योगदान पुऱ्याउने कुरा निश्चित छ ।

दिगो विकास लक्ष अन्तर्गत निरपेक्ष गरिवीको सन् २०३० सम्ममा अन्त्य गरी सक्ने, सबै प्रकारका गरीबी, (आय गरीबी, आधारभूत सेवाबाट वञ्चितिकरण, सामाजिक वहिस्करण आदि), कम्तिमा आधा गर्ने, सबैलाई न्यूनतम् सामाजिक सुरक्षाको दायरामा ल्याउने, आर्थिक स्रोत साधनमा सवैको पहुँच बढाउने, गरीवको भूस्वामित्व र उत्पादक सम्पत्तिमाथि पहुँच पुऱ्याउने र गरीव तथा निम्छरा (vulnerable) हरूको आर्थिक संकट, सामाजिक समस्या र जलवायु परिवर्तनसंग जुध्ने क्षमता विकास गर्ने कुरा पर्छन् । सहकारीले स्वरोजगारीमार्फत आयआर्जन, आधार भूत शिक्षा, स्वास्थ्य, खानेपानी तथा सफाईका सेवामार्फत आफ्ना सदस्यहरूलाई यी सेवामा पहुँच बढाउने, सामाजिक सुरक्षण (वीमा) का माध्यमबाट सबै सदस्यलाई सुरक्षा प्रदान गर्ने, सहकारी खेती एवम् व्यवसाय प्रर्वद्धन गरी सवै सदस्यहरूलाई उत्पादनसंग जोड्ने र समाजप्रतिको चासो (उत्तरदायित्व) को रुपमा गरीव, असहाय र जोखिममा परेका परिवारहरूलाई सहयोग गरेर पनि दिगो विकासको पहिलो लक्ष्य कृषिलाई सघाउ पुऱ्याउने छन् ।

त्यस्तै दिगो विकास लक्ष्य अन्तर्गत सन् २०३० सम्ममा भोकमरी तथा कुपोषण अन्त्य गर्ने, सबैलाई खाद्य सुरक्षा प्रदान गर्ने (वाल वालिका, किशोर किशोरी, प्रजनन् अवस्थाका महिला तथा वृद्धवृद्धा लगायत), कृषि उत्पादकत्व १५ वर्षमा दोव्बर गर्ने र साना किसानहरूको आय वृद्धि गर्ने विषयहरू छन् । नेपालमा खाद्य सुरक्षाका लागि कृषि सहकारी, बिक्री वितरण सहकारी, प्रशोधन सहकारी, कृषि सामग्री आपूर्ति गर्ने सहकारी, कृषि ऋण प्रवाह गर्ने सहकारी र सहकारी सदस्यहरूको आय आर्जनमा सघाउ पुऱ्याउने सहकारीको भूमिकामार्फत खाद्यान्न किन्नसक्ने हैसियत वृद्धि गर्ने कार्यबाट दिगो विकासको लक्ष्य प्राप्तिमा सहयोग पुग्नेछ । सहकारी खेती, सामूहिक रुपमा लघु यान्त्रिकरण, उन्नत प्रविधिको प्रयोग र उत्पादनको सुरक्षित भण्डारण र प्रशोधन गर्ने कार्यबाट सहकारीले कृषि उत्पादकत्व बढाउन सघाउ पुऱ्याउन सक्ने छन् । साना किसान विकास कार्यक्रमलाई कृषि सहकारी संस्था र साना किसान बैंकमार्फत अभियानको रुपमा अघि बढाउन सके साना किसानकै वाहुल्य भएको हाम्रो मुलुकमा समावेशी आर्थिक वृद्धि र कृषिको रुपान्तरण दुवै हासिल गर्न सकिन्छ ।

दिगो विकास लक्ष्यले लैङ्गिक समानता हासिल गर्ने र महिला सशक्तिकरण गर्ने, महिला विरुद्धका सवै भेदभावहरूको अन्त्य गर्ने लैङ्गिक हिंसाको अन्त्य गर्ने, बालबिवाह एवम् महिला बेचबिखनको अन्त्य गर्ने, राजनैतिक, व्यवसायिक र सामाजिक जीवनमा महिलाहरूलाई नेतृत्वदायी भूमिकामा

पुऱ्याउने र प्रजनन् स्वास्थ्यसम्वन्धी अधिकारहरू स्थापित गर्ने विषय समेटिएका छन् । सहकारी संस्थाहरूले महिला सहकारी संस्थाको विकास, सहकारी संस्थाहरूमा महिलाको उच्च सहभागिता, संस्थाको सञ्चालक समितिमा उल्लेख्य महिला सदस्यको प्रावधान, महिलाकेन्द्रित व्यवसाय र आयआर्जनमार्फत महिला सशक्तिकरण जस्ता माध्यमबाट यो लक्ष्य हासिल गर्नमा सघाउ पुऱ्याउन सक्नेछन् । सहकारीमा महिला सदस्यको बाहुल्य हुनु, व्यवस्थापनमा पनि ४० प्रतिशत महिला हुनु र महिलाद्वारा मात्र सञ्चालित सहकारी सफल हुँदै जानुले लैंगिक समानता र महिलाको सशक्तिकरणतर्फ सहकारीको भूमिका हालसम्म नै महत्वपूर्ण देखिइसकेको पनि छ ।

अहिलेको विकास प्रणाली समृद्धिसंगै असमानता बढाउने खालको छ । हामीले खोजेको समृद्धि चाहीं समतामूलक, सामाजिक न्यायमा आधारित र समाजवाद उन्मुख हो । दिगो विकास लक्ष्यले पनि राष्ट्र राष्ट्रहरूबीच र मुलुकभित्र परिवारहरूबीच असमानता घटाउने, यसका लागि आय श्रृङ्खलामा सवैभन्दा तल्लो आयस्तर हुने ४० प्रतिशत जनताको आयवृद्धि मुलुकको औसत प्रतिव्यक्ति आयवृद्धि भन्दा उच्च रहनु पर्ने, सबै उमेर, लिङ्ग, शारीरिक अवस्था, जाति, समुदाय, धर्म र आर्थिक स्तरका व्यक्तिहरू समान अवसर र आर्थिक वृद्धिको लाममा सहभागिता जनाउनु पर्ने, आर्थिक नीतिहरू, श्रमबजार नीतिहरू र सामाजिक संरक्षण नीतिहरू असमानता घटाउने गरी तर्जुमा गर्नुपर्ने, अन्तर्राष्ट्रिय नीति निर्माणमा विकासशील मुलुकहरूको उच्च सहभागिता हुनुपर्ने र आप्रवासन नीति र नियमन विभेदकारी हुन नहुने जस्ता विषय समेटेको छ । सहकारी संस्थाहरूले आफ्नो अन्तर्राष्ट्रिय मञ्चमार्फत मुलुकहरूवीच बढ्दो असमानताको आवाज उठाउन सक्नेछन् भने आन्तरिक रुपमा आयको असमानता घटाउने गरी संगठन निर्माण गर्ने र कार्यक्रमहरू सञ्चालन गर्न सक्नेछन् । समान मताधिकार र लाभमा समन्यायिक सहभागिता हुने सहकारी प्रणालीले नीति-निर्णयमा सवैको सहभागिता जुटाउने र व्यवसायिक लाभको वितरण पनि समन्यायिक ढंगले गर्दा अवसर र उत्पादनको लाभको वितरण पनि समन्यायिक ढंगले गर्दा अवसर र उत्पादनको लाभको वितरणमा असमानता स्वतः घट्दै जानेछ । तर सहकारी प्रणाली साना-मझौला, किसान व्यवसायी र स्वरोजगार व्यक्तिहरूलाई संगठित गर्दै उनीहरूको आय वृद्धि मुलुकको प्रतिव्यक्ति आयवृद्धि भन्दा धेरै हुने काम गर्नु चाहीं जरुरी छ ।

दिगो विकास लक्ष्यले सम्पूर्ण उपभोग र उत्पादन प्रणालीलाई दिगो बनाउने आकांक्षा राखेको छ । खासगरी प्राकृतिक साधन स्रोतको व्यवस्थित दोहन गर्ने खाद्यान्न नोक्सानी (वाली उठाउँदादेखि उपभोगको तहसम्म) अहिलेकोबाट आधा घटाउने, रासायनिक वस्तुहरूको उपभोग घटाउने, एकपटक प्रयोग भएका वस्तुहरू सम्भव भएसम्म रिसाइक्लिङ्ग गर्ने, पुनः उपयोग हुनसक्ने तुल्याउने, खेर जान नदिई उपयोगमा ल्याउने र खेर जानबाट नै बचाउने र प्रकृतिसम्मत उत्पादन र उपभोगलाई प्रोत्साहित गर्ने कुराहरू यस अन्तर्गत छन् । यो लक्ष्य दिगो विकास लक्ष्यको सवैभन्दा चुनौतिपूर्ण पाटो हो भने कृषि, उद्योग, व्यवसाय, स्रोत संरक्षण आदिमा नयाँ पद्धतिको विकाससंगै उपभोक्ताहरूलाई प्रकृति, वातावरण र समाजप्रति जिम्मेवार बनाउने विषय पनि हो । समग्रमा यस लक्ष्यले यस्तो अपेक्षा गरेको छ कि विश्वमा सामाजिक र वातावरणीय उत्तरदायित्वसहितको यस्तो उत्पादन र उपभोग प्रणाली होस् जसले आगामी पुस्ताहरूलाई अझ स्वच्छ, अझ स्वस्थ र अझ समृद्ध रुपमा विकास गर्नका लागि अवसर कायमै राखोस् । सामाजिक र वातावरणीय जिम्मेवारी सहितको आर्थिक व्यवसाय गर्ने कि त सरकार हो कि सहकारी । निजी क्षेत्रले विद्यमान कानून पालना गर्दै शेयरधीनका हितमा अधिकतम् लाभका लागि काम गर्ने हो न कि समाजको लागि (संस्थागत सामाजिक उत्तरदायित्व भनेर केही सांकेतिक कार्य गर्न बाहेक) । सहकारीले पनि शेयरधनीका हितमा नै कार्य गर्ने हो तर निश्चित सामाजिक जिम्मेवारीसहित । अब बेला भएको छ यो देखाउने कि सहकारीहरू साँच्चै सामाजिक र वातावरणीय जिम्मेवारी साथ व्यवसायहरू सञ्चालन गर्दछन् । यसै पनि सहकारी सिद्धान्तले नै मानव स्वास्थ्य बिगार्ने, प्रकृति मास्ने वा सामाजिक विकृति ल्याउने व्यवसाय नगर्न त भनेको छ नै ।

### ४. सहकारीको आगामी कार्यदिशा

मुलुकको अबको कार्यभार भनेकै समावेशी, समतामूलक र आत्मनिर्भर अर्थतन्त्रको निर्माणसंगै समृद्धितर्फको यात्रा हो । यस क्रममा कार्यान्वयन गर्नुपर्ने दिगो विकास एजेण्डा पनि हो । अहिले राष्ट्रिय योजना तथा विकास कार्यक्रम अन्तर्राष्ट्रिय सहयोग र प्रविधि हस्तान्तरण, विकाशोन्मुख राष्ट्रहरूवीचको सम्वन्ध सरकार र निजी क्षेत्र, सरकार र सहकारी क्षेत्र तथा निजी क्षेत्र र सहकारी क्षेत्रवीचको विकास साझेदारी पनि दिगो विकास लक्ष्यकै खाकामा चल्नुपर्ने देखिदैछ । यस अवस्थामा सहकारी क्षेत्रले सहकारीको विश्वव्यापी अनुभव, योगदान र नेपालमा दिगो



विकास लक्ष्य प्राप्तिमा पुऱ्याउनसक्ने सहयोगबारे यथेष्ठ कार्य गरी दिगो विकासमा सहकारीका योगदानका क्षेत्रहरू वा कार्यहरू सुक्ष्म रुपमा निर्क्यौल गर्ने र ती कार्यहरू संस्थाका विकास योजना र वार्षिक विकास योजना र वार्षिक विकास कार्यक्रमहरूमा सहकारीको भूमिका अन्तर्गत स्पष्ट उल्लेखित हुनुपर्ने देखिन्छ। दोस्रो, सहकारी क्षेत्रले आफ्नो स्रोत साधन परिचालन र केही हदसम्म वजेट सहयोगमार्फत सामाजिक न्याय र वातावरण संरक्षण कायम गर्दै सहकारी व्यवसायको प्रवर्द्धनमार्फत दिगो विकास गर्ने आफ्नै रणनीति पत्र र कार्यान्वयन योजना तयार गर्नुपर्ने देखिन्छ। तेस्रो, सहकारी संस्थाहरू निजी क्षेत्रभन्दा भिन्न प्रकारले व्यवसाय गर्दछन् र उनीहरूले त्यसवापत राज्यबाट संरक्षण, सहुलियत वा सहयोग पाउनुपर्छ भन्ने दावी गर्न सुहाउने ढाँचामा सहकारी व्यवसाय अघि बढाउनुपर्ने देखिन्छ। चौथो, दिगो विकास लक्ष्य कार्यान्यनमा सहयोग पुऱ्याउने अन्तर्राष्ट्रिय दातृ निकाय, संयुक्त राष्ट्र संघ, क्षेत्रीय सहयोग संगठन (जस्तो सार्क वा विमिष्टेक) अन्तर्राष्ट्रिय गैर सरकारी संस्थाहरू र क्षेत्रीय विकास वैठकहरू (जस्तो एडिवि वा एआइआइवि) समेतले आफ्नो दिगो विकास लक्ष्यको कार्यान्वयन साझेदारको रुपमा सहकारीलाई मान्यता दिने र रणनैतिक साझेदारको रुपमा नै ग्रहण गर्नुपर्ने देखिन्छ। यसमा सहकारीका शीर्ष राष्ट्रिय, क्षेत्रीय र अन्तर्राष्ट्रिय संस्थाहरूको वकालत, दवाव र सहकार्यका लागि आव्हान गर्ने भूमिका अझ सशक्त बनाउनुपर्ने देखिन्छ।

पछिल्लो ६० वर्षको अवधिमा विश्वका विभिन्न महादेशहरूमा आर्थिक वृद्धिमा अभूतपूर्व प्रगति देखा परेको भए तापनि उक्त आर्थिक वृद्धि समावेशी हुन नसक्दा आर्थिक संकट, असमानता, र सामाजिक द्वन्द्व देखापरे। यसलाई सम्बोधन गर्दै समावेशी विकास हासिल गर्न सहकारीमा आधारित आर्थिक विकासको ढाँचा अवलम्बन गर्न थालिएको छ। आर्थिक विकास प्रयासमा सफलता हासिल गर्न नेपाल जस्तो अतिकम विकसित मुलुकले मध्यमकालमा समावेशी, रोजगारीयुक्त उच्च अंकको आर्थिक वृद्धि हासिल गर्ने लक्ष्य लिनै पर्दछ। यसका लागि कृषि, जलस्रोत, पर्यटन, निर्यात प्रवर्धन क्षेत्रको विकासबाट मात्र सम्भव हुने देखिन्छ भने समुदायमा आधारित सहकारीको ढाँचा नै यसका लागि उत्तम विकल्प हुनसक्छ।

सहकारी स्वःस्फूर्त आन्दोलन हो। यो आर्थिक-सामाजिक रूपान्तरणको बलियो माध्यम हो। आर्थिक सामाजिक रूपान्तरण सहभागितामूलक विकास, उत्पादकत्व बृद्धि, शिक्षा तथा साक्षरता, स्वास्थ्य तथा सरसफाइ, लैङ्गिक समानता, विभेद र बञ्चितीकरणको अवस्थामा सुधार नआइ सम्भव छैन। यस अभियानलाई अघि बढाउन राज्यका सबै निकाय र समुदाय तथा निजी क्षेत्रको समेत सहयोग आवश्यक छ। तर राज्यको सहयोगको अपेक्षामा सहकारी आन्दोलन राज्य निर्देशित वा राज्य निर्भर नबनोस् भन्नेतर्फ हामी सजग हुनु जरूरी छ।

सहकारी अभियानका लागि नयाँ संविधानका साथै राष्ट्रिय एवम् अन्तर्राष्ट्रिय क्षेत्रबाट सिर्जना भएको अनुकूल वातावरणको अधिकतम लाभ लिँदै नेपालमा पनि सहकारी आन्दोलनलाई तीब्रता दिनका लागि यसका सरोकारवालाको सक्रिय अगुवाई आवश्यक देखिएको छ। सहकारीका माध्यमबाट पूँजी निर्माण, उपलब्ध उत्पादनका साधनहरूको उच्चतम उपयोग गर्दै उत्पादन, प्रशोधन, बजारीकरण, रोजगारी सिर्जना, आयआर्जनमा वृद्धि गरी कुल गार्हस्थ्य/राष्ट्रिय आय वृद्धिमा प्रत्यक्ष एवम् परोक्ष योगदान पुऱ्याउन सकिने प्रशस्त सम्भावना बढेर गएको छ। लोकतन्त्र, खुला समाज र नागरिक चेतनाले यसलाई अनुकूलता थपेको छ।

सहकारीको संलग्नतामा कुल गार्हस्थ्य/राष्ट्रिय आय वृद्धिले आयको वितरणमा समन्याय कायम गर्न मद्दत पुग्ने कुरा सिद्धान्त र व्यवहारबाट पुष्टी भैसकेको छ। आर्थिक विकासले समृद्धि ल्याउने र समृद्धिमार्फत दीर्घकालमा आर्थिक स्वाधीनता हासिल गर्न सकिन्छ। तर सहभागिता र समन्यायिकताबिनाको समृद्धि पनि टिकाउ हुँदैन। त्यसैले दिगो विकासको कुरा गर्दा विकास प्रक्रियामा सहभागिता र त्यसको प्रतिफलमा पहुँचको उपयुक्त माध्यम हुने सहकारीको महत्वपूर्ण भूमिकालाई मूर्तरुप दिनु अनिवार्य सर्त हो।

अन्त्यमा, दिगो विकास एजेण्डाले 'कोही नछुटुन वा कोही पछि नपरुन्' भन्ने दर्शन अघि बढाएको सन्दर्भमा सहकारी प्रणालीले पनि समाजका पछि परेका लिङ्ग, वर्ग, क्षेत्र, समुदायहरूलाई समेट्दै उनीहरूको उद्यमशीलताको विकास र उत्पादनका साधनमाथिको पहुँच बढाउने तथा काम र आय आर्जनका अवसरहरू बढाउनेतर्फ विशेष ध्यान दिनुपर्ने देखिन्छ। सामाजिक व्यवसायको नमूना बन्दै सहकारी प्रणालीले निजी क्षेत्रभन्दा फरक ढंगले समृद्धिमा योगदान गर्नसक्छ भन्ने मान्यता स्थापित गराउँदै यस आन्दोलनप्रति थप विश्वास जगाउँदै जानु पनि अबको थप कार्यभार भएको छ।



# नेपालमा सहकारी, संघीयता र जनसचेतनका पच्चीस बर्ष

डा. खगराज शर्मा

**१. नेपालमा सहकारीहरूको विस्तार**

नेपालमा वि.सं. २०१० सालमा सहकारी विभागको स्थापना र वि.सं. २०१३ सालमा चितवन जिल्लाको बखानपुर भन्ने स्थान (हालको शारदानगर गा.वि.स.) मा गठित श्री बखान सहकारी ऋण समितिको प्रथम जगसँगै नेपालमा औपचारिक र संस्थागत सहकारिता प्रारम्भ भयो जसले ६ दशक पार गरिसकेको छ। यता जनकपुर अञ्चलको पहाडी जिल्ला दोलखाको काब्रे, नाम्दू, मिर्गे र गैरीमुदी गरी ४ वटा गा.वि.स.लाई कार्यक्षेत्र बनाई वि.सं. २०५० आश्विनमा जन्म भै २०५० मंसीरमा विभागबाट स्वीकृति प्राप्त गरेर आजसम्म आइपुग्दा चौबिस बर्षको यात्रा पुरा गरी पच्चिसौं वसन्तमा जनसचेतन साकोस प्रवेश गरिसकेको छ।

'**गरिबले बचत गर्न सक्दैनन्**' केवल केही आम्दानी हुनेहरूले मात्र सहकारी संस्थामा आवद्ध भै बचत कार्य प्रारम्भ गर्नुपर्दछ भन्ने अज्ञानताबीच जन्मेको भए पनि '**वास्तवमा गरिबले बचत गर्न सक्दछन्**' भन्ने नारालाई नै प्रमुखता दिंदै वर्तमानमा अगाडि बढिरहेको यस साकोसको प्रारम्भिक काल र नेपालको सहकारी आन्दोलनको उक्त अवधिको काल खण्डलाई स्मरण गर्दा नेपालमा वि.सं. २०४६ सालको जनआन्दोलनका कारण राजनीतिक परिवर्तन भैसकेको थियो । सहकारीहरू राज्य निर्देशित साझा कार्यक्रमको अलमलमा थिए । के गर्ने र कसरी अगाडि बढ्ने भन्ने अलमललाई चिर्दै नीतिगत रूपबाट एवम् दृष्टिकोणमा समेत ठोस सुझाव प्राप्त गर्नका निम्ति श्री राधाकृष्ण मैनालीको अध्यक्षतामा सात सदस्यीय राष्ट्रिय सहकारी महासंघ परामर्श समिति-२०४७ गठन गरिएको थियो । जसले साझा कार्यक्रमको विस्तार र स्वायत्ततालगायत थुप्रै सुझाव नेपाल सरकारलाई दिएको थियो भने परिवर्तित राजनीतिक परिस्थिति र आम जनसमुदाय एवम् सहकारीप्रेमी महानुभावहरू समेतका मागलाई दृष्टिगत गरी तत्कालीन साझा संस्था ऐन-२०४१ खारेज गरी वर्तमान सहकारी ऐन-२०४८ जारी गरियो । जसको आगमनसँगै नेपालमा सो ऐन आउनुपूर्व ८३० को संख्यामा रहेका सहकारीहरूको विकासको क्रम तीव्र भै हाल आइपुग्दा ३३ हजार भन्दा बढी भैसकेको स्थिति छ। सोही परिवर्तनपछि आठौं पञ्चवर्षिय योजना (२०४९-२०५४) समेत लागू भयो । उक्त योजना अवधिसम्ममा नेपालमा ३७११ वटा प्रारम्भिक सहकारी संस्था स्थापना भैसकेका थिए भने ३२ करोड ४७ लाख शेयर पूँजी र १० लाख ५१ हजार शेयर सदस्यहरू सहकारी संस्थामा आवद्ध भएका थिए । उपर्युक्त पूँजीको स्तर र शेयर सदस्य संख्याभित्र जनसचेतनको ३४ जना शेयर सदस्य रु. ३४०० शेयर पूँजी समेत समाविष्ट भएको थियो। फेरि जुन वर्ष जनसचेतनको स्थापना भयो त्यसै वर्ष अर्थात वि.सं. २०५० सालमा नै राष्ट्रिय सहकारी संघ नेपाल, नेपाल बचत तथा ऋण केन्द्रीय सहकारी संघ लि. र केन्द्रीय उपभोक्ता सहकारी संघ लि.को पनि स्थापना भएको थियो ।

यस्तो महत्वपूर्ण काल खण्डलाई पछ्याउँदै ४ वटा गा.वि.स.बाट प्रारम्भ भएको जनसचेतनले आज जिल्लाभरि आफ्नो अभियान प्रारम्भ गरेको छ। भोका, नाङ्गा, निरक्षर, स्वास्थ्य सेवाबाट बञ्चित, गरिब दोलखाबासी जनसमुदायको नाङ्गो आङ्ग ढाक्ने, भोको पेट भर्ने, बिरामी हुँदा उपचार गर्ने, निरक्षरहरूलाई साक्षर र विद्यालय नजाने बच्चाहरूलाई विद्यालय जान सक्ने बनाउने अभियानले निश्चय नै सार्थकता प्राप्त गर्दै गएको छ। "सदस्यका बच्चा बोर्डिङ्ग स्कुलमा पढ्ने हुन्, सदस्यको घरमा एउटा टि.भी. र एकवटा फ्रिज होस्" भन्ने उद्देश्यका साथ हाम्रो अभियान अगाडि बढेको छ भन्ने केही वर्ष अगाडि उक्त संस्था अवलोकन गर्दा तत्कालिन अध्यक्षज्यूले भनेको समेत स्मरण गर्न सकिन्छ। किनकि उपर्युक्त सूचकले मात्रै पनि सदस्यको जीवनमा धेरै परिवर्तन आउनसक्ने कुरामा स्पष्ट हुन गाह्रो पर्दैन। यही उच्च सोच र अभिलाषा लिएर अगाडि बढेकै कारण आज दशौं हजारभन्दा बढी दोलखाबासीको प्रत्यक्ष संलग्नता रहेको छ भने हजारौं हजार दोलखाली जनताको माया र प्रेरणाबीच संस्था अगाडि बढिरहेको निसन्देह अनुमान गर्न सकिन्छ। निश्चित रूपमा संस्थामा चुनौति



हुन्छन् जसलाई समाधान गर्दै अगाडि बढ्न सके आगामी कार्यक्रमका लक्ष्यहरू सजिलै हासिल गर्न सकिन्छ ।

वर्तमानमा यसरी देशको विभिन्न स्थानका सहकारीकर्मीहरू "एकपटक दोलखाको जनसचेतन हेरौं र सहकारिता सिकौं" भन्ने गरेको सुनिन्छ । जसलाई अझ सार्थक तुल्याउँदै आन्तरिक पर्यटन प्रवर्द्धन गर्न सकिने एउटा अवसर एकातर्फ छ भने छिमेकी मुलुकबाट नेपालको सहकारिता हेर्न र बुझ्न आउनेलाई समेत एउटा महत्वपूर्ण पाठशाला बनाउन जनसचेतनलाई आवश्यक देखिन्छ । तथापि समग्र नेपालको सहकारितामा देखिने जटिलताहरूबाट मुक्त भने जनसचेतन पनि छैन जसलाई सामुहिक अभियानबाट नै चिर्दै जान सकिन्छ ।

**२. सहकारी क्षेत्रका सम्भावनाहरू**

छ दशक पार गरिसकेको नेपालको सहकारी आन्दोलनमा सहकारी ऐन २०४८ को आगमनपश्चात पूँजी परिचालन र संस्थागत बृद्धि एवम् विकासमा ठूलै उपलब्धि भएको देखिन्छ । त्यति मात्र होइन, व्यक्तिसँगको चर्को ब्याजमा कर्जा लिई आफ्नो गर्जो टार्नुपर्ने ग्रामीण किसानहरूलाई उक्त अवस्थाबाट मुक्ति मिलेको छ । निष्क्रिय अवस्थामा रहेका स-साना रकमहरू गाउँ-गाउँमा बचतका रूपमा जम्मा हुन गै परिचालित भएका छन् । विभिन्न जातजाति र समुदायबीचको निकटतामा उपलब्धि हासिल भएको छ । परिवारमा महिलाहरूको आर्थिक अधिकार स्थापित हुने होस् वा नेतृत्व विकासमा महत्वपूर्ण उपलब्धि हासिल हुने होस् सहकारी क्षेत्रले थुप्रै महत्वपूर्ण उपलब्धिहरू नेपाली समाजमा दिएको छ। तर पनि विश्वका तमाम सहकारी आन्दोलन हेर्दा वा छिमेकी राष्ट्रहरूमा नै सहकारितामार्फत समाजले विविध किसिमबाट फड्को मारेका उदाहरणहरू हेर्दा हामीले अझै धेरै गर्न बाँकी छ जुन हामी गरेर देखाउन सक्दछौं भन्ने नै लाग्दछ । हुन त देशका विभिन्न भागमा थुप्रै नमुना सहकारीहरू पनि नभएका होइनन् तर त्यस्ता कतिपय सहकारीभित्र छिरेर हेर्दा कतै न कतै देशको सहकारी ऐन, नियम र मापदण्ड एकातर्फ संस्थाका क्रियाकलापहरू अर्कोतर्फ भेटिन्छन् । यति मात्र होइन कतै सहकारीकर्मीहरू संस्थालाई उच्च व्यवसायिकतासहित अगाडि बढाउन चाहान्छन् तर सम्बन्धित डिभिजन कार्यालयले कुरा बुझ्दैन वा सहकारी भावनामा नै अंकुश लगाउन खोज्दछ त कतै डिभिजन कार्यालय अगाडि बढ्न चाहन्छ तर सहकारीकर्मीहरू उचित मार्ग लिन सक्दैनन् । कतिपय सन्दर्भमा नीति नियमहरूले नै सरल र सहजतापूर्वक सहकारिता अगाडि बढाउन बन्देज लगाउँछन् त कतिपय डिभिजन सहकारी कार्यालयबाट अपव्याख्या हुन गै निरुत्साहित समेत बनाइन्छ । ती सबै कुरा देखिनुका पछाडि निश्चित रूपमा केही समस्याहरू छन् । जसको समाधानबाट मात्रै नेपालको सहकारिताले पनि अन्य देशको सहकारिता जस्तै प्रभावकारी फड्को मार्न सम्भव देखिन्छ ।

वास्तवमा हाम्रो सहकारी अभियानले पनि जापानको सहकारी अभियानमा जे.ए. मार्फत एकीकृत रूपमा गरिने कार्यहरू जस्तैः कृषि उत्पादन, पशुपालन, सबै उत्पादनको बजारीकरण, थोक तथा खुद्रा बिक्री, उत्पादनको प्रशोधन, बैकिङ्ग सेवा, कृषि वीमा, स्वास्थ्य सेवा, दुर्घटना वीमालगायत थुप्रै मानव आवश्यकीय कार्यको एउटै संस्थामार्फत सेवा प्रदान भै रहेको छ । त्यस्तै भारतको महाराष्ट्रमा अवस्थित Buldana Urban Cooperative Credit Society जसका ५ लाख भन्दा बढी सदस्यहरू छन्, देशका सातवटा राज्यहरूमा ३०६ वटा शाखाहरू मार्फत कारोबार भै रहेको छ । एम्बुलेन्स, शववाहन सेवा, विद्यालय, कलेज, महिला र पुरुषका छुट्टाछुट्टै छात्रवास, होटल का अतिरिक्त पर्याप्त बैकिङ्ग सेवा सञ्चालन भै रहेको छ । त्यसैगरी दक्षिण कोरियाको Agricultural Cooperative Federation जसले ग्रामीण क्षेत्रको खाद्यान्न आपूर्तिमा ४८ प्रतिशत योगदान दिनुका साथै २० हजार यू.यस. डलर भन्दा बढी प्रति व्यक्ति आय बनाउने सन्दर्भमा यस संस्थाको ठूलो योगदान रहेको देखिन्छ । यी र यस्ता उदाहरणका रूपमा थुप्रै देशका प्रशस्त संस्थाहरू भेटिन्छन् जसले विद्युत उत्पादन र वितरण, कृषि उत्पादन र वितरण, उपभोक्ता पसल, सुपर मार्केट, यातायात, ट्राभल एजेन्सी, अस्पताल, होटल, विद्यालय, कलेज, होस्टेल आदि बृहत स्तरबाट सञ्चालन गरी लाखौं सदस्यहरू र करोडौं सर्वसाधारणलाई एउटै संस्थामार्फत सेवा प्रदान भै रहेको पाइन्छ ।

यस्तो व्यवसायिकता र सेवाका निम्ति नेपालको सहकारिताबाट पनि सम्भव छ । बहुआयामिक व्यवसायिकताका अन्तर्राष्ट्रिय नमूनाहरूलाई साथ लिंदै नेपालीहरूको आवश्यक्ता परिपूर्ति गर्ने एकीकृत थलो बनाउनका निम्ति नेपालको संवैधानिक व्यवस्था अनुरूप वर्तमानको संघीय प्रणाली उपयोगी हुने देखिन्छ । किनकि संविधानतः संघ र प्रदेशको साझा अधिकार स्थानीय तहको अधिकार एवम् संघ, प्रदेश र स्थानीय तहको अधिकारको साझा रुचि अन्तर्गत सहकारी क्षेत्रलाई राखिएको छ ।

४ महानगर, १३ उपमहानगर, २४६ नगर र ४८१ गाउँपालिका गरी ७४४ स्थानीय निकायमार्फत जनतालाई विभिन्न सेवा तथा अधिकारहरू प्रदान

गर्न खोजिँदै छ । संविधानतः राजनीतिक अधिकारको पूर्णतासंगै आर्थिक समानता, समृद्धि र सामाजिक न्यायको सुनिश्चित गर्न समानुपातिक समावेशी र सहभागितामूलक सिद्धान्तहरूका आधारमा समतामूलक समाजको निर्माण सुनिश्चित गर्न खोजिएको छ । लोकतान्त्रिक मूल्य र मान्यतामा आधारित समाजवादप्रति प्रतिवद्ध रही समृद्ध राष्ट्र निर्माणको प्रत्याभूतिका लागि धारा ५० को निर्देशक सिद्धान्तहरूको उपधारा ३ मा भनिएको छ– "सार्वजनिक, निजी र सहकारी क्षेत्रको सहभागिता र विकासमार्फत उपलब्ध साधन र स्रोतको अधिकतम परिचालनद्वारा तीव्र आर्थिक वृद्धि हासिल गर्दै दिगो आर्थिक विकास गर्ने तथा प्राप्त उपलब्धिहरूको न्यायोचित वितरण गरी आर्थिक असमानताको अन्त्य गर्दै शोषणरहित समाजको निर्माण गर्न राष्ट्रिय अर्थतन्त्रलाई आत्मनिर्भर, स्वतन्त्र र उन्नतिशील बनाउँदै समाजवाद उन्मुख स्वतन्त्र र समृद्ध अर्थतन्त्रको विकास गर्ने राज्यको आर्थिक उद्देश्य हुनेछ ।" त्यस्तै धारा ५१ को राज्यका नीतिहरूको उपदफा (घ) को अर्थ, उद्योग तथा वाणिज्यसम्बन्धी नीतिको (१) मा "सार्वजनिक, निजी र सहकारी क्षेत्रको सहभागिता र स्वतन्त्र विकासमार्फत राष्ट्रिय अर्थतन्त्र सुदृढ गर्ने" र (३) मा "सहकारी क्षेत्रलाई प्रवर्द्धन गर्दै राष्ट्रिय विकासमा अत्यधिक परिचालन गर्ने" । संविधानमा गरिएको यस किसिमको व्यवस्थाले वर्तमान र भावी नेपाली समाजको विकास र समृद्धिमा सहकारी क्षेत्रको भूमिकाको अपरिहार्यतालाई पुष्टि गर्दछ । जसबाट संघ प्रदेश र स्थानीय तहमा भएका अधिकारका सूचीलाई कसरी कार्यान्वयन गर्ने सहकारी क्षेत्रमार्फत सम्भव हुने कार्यहरू कसरी सम्पन्न गर्ने ? भन्ने जस्ता प्रश्न एकातर्फ छन् भने संविधानको प्रस्तावनामा उल्लेख गरिए मुताविक समाजवादप्रति प्रतिवद्ध रही समृद्ध राष्ट्र निर्माण गर्ने सपना साकार पार्न सहकारी क्षेत्रलाई कसरी अगाडि बढाउन पर्ला भन्ने विषयसमेत अब छलफल र चर्चामा आउन आवश्यक देखिन्छ ।

मानव दिनचर्या जोडिएको तमाम विषयहरूको समस्या पहिचान गरी समाधानको पर्खाइमा नागरिकहरू रहेका छन् । भर्खर सम्पन्न भएका स्थानीय निकाय निर्वाचनबाट निर्वाचितहरूसंग नागरिक थुप्रै अपेक्षाहरू राखिरहेका छन् । हामीले देखेका समस्या मात्रैलाई पनि चित्रण गर्ने हो भने पनि समाज अस्थिरता र तदर्थवादबाट अगाडि बढिरहेको छ । जसको प्रमुख कारकतत्व अस्थिर राजनीति नै हो । सामाजिक र सांस्कृतिक क्षेत्र विकृत बन्दै गएको छ । जसले विपन्न र मध्यम वर्गीय आर्थिक अवस्थाको जीवनशैली अन्यन्त पीडामा देखिन्छ । कुसंस्कार र कुरीतिले नयाँ नयाँ स्वरूप बदलेर समाजमा प्रवेश गरिरहेको छ । जसलाई समाजका सम्भ्रान्त वर्गले समेत मलजल गरिरहेको भेटिन्छ । भ्रष्टाचार, कालोबजारी जस्ता विकृतिहरू दिन प्रतिदिन नयाँ नयाँ स्वरूप र आकारबाट गुज्रिरहेका छन् । जसको न्युनीकरणमा गरिएका व्यवस्थाहरू कमजोर र तिनका कार्यहरू प्रभावहीन बन्दै गैरहेका छन् । असल शासनको नागरिकको चाहना सपना जस्तै हुने अवस्था बन्दै गैरहेको छ । पद, प्रतिष्ठा र पैसाका निम्ति मरिहत्ते गर्ने राजनीतिक नेतृत्व र यिनै कुरालाई प्रश्रय दिन रुचाउने राजनीतिक दलका निर्णयले जनता आक्रान्त बनिसकेका छन् ।

दैनिक उपभोग गर्ने खाद्यान्य, तेलहरू, फलफूल, तरकारी, मासु तथा दूधजन्य पदार्थलगायतमा भैरहेको मिसावट र अखाद्यताको अवस्थाप्रति ध्यान दिने हो भने अत्यन्त कहालीलाग्दो स्थिति देखिन्छ । गुणस्तरीय प्राविधिक शिक्षा न्यून र मध्यम वर्गीय परिवारका लागि दुर्लभ नै बन्दै गएको अवस्था एकातर्फ छ भने अर्कातर्फ स्वास्थ्य सेवामा भैरहेको मुल्य बृद्धिले सामान्य नागरिकलाई बिरामी भएपछि बाँच्ने आशा कम गर्नुपर्ने परिस्थिति सिर्जना भैरहेको छ । यी र यस्ता तमाम समस्याको समाधान नागरिकहरू स्थानीय निकायबाट नै चाहन्छन् । स्थानीय निकाय नीति, नियम र कानुनको पर्खाइमा छ । फेरि कुन विषयका निम्ति कस्तो कानुन निर्माण गर्दा राज्यको मूल कानुनको मर्म जनताको कुन अपेक्षाबीच तादाम्यता हुन्छ भन्ने जस्ता विषयलाई पनि गम्भीरतापूर्वक लिनुपर्ने नै हुन्छ ।

### ३. स्थानीय तहमा के गर्न सकिन्छ ?

यसरी माथि उठाइएका विषयहरू नागरिकका प्रत्यक्ष सरोकारसंग जोडिएका छन् भने यी विषयको सम्बोधन सहकारीले कसरी गर्ला ? संघीय प्रणालीमा के गर्दा र कसको कुन कुन स्तरका जिम्मेवारी र अधिकारभित्र राखी दिंदा यी सबै विषयमा सहमत रहला भन्ने तमाम प्रश्नको चित्त बुभ्दो उत्तर पनि वर्तमानमा सर्वत्र खोजी भैरहेको छ । यसै सन्दर्भमा लेखकका केही निजी विचारहरू समेत प्रस्तुत गर्नु सान्दर्भिक हुनेछ । सामान्यतया प्रारम्भिक संस्थाको दर्ता, नियमन अनुगमन जस्ता विषयहरू स्थानीयतहमा रहनुपर्दछ । जसबाट कृषि योग्य जमिनलाई सहकारीकरण गरी बहुआयामिक उत्पादनशील क्षेत्रमा उपयोग गर्ने जसबाट भएका उत्पादनहरू सहकारीले खरिद गर्ने र उपभोक्ताले आवश्यक प्रशोधनपश्चात सहकारीबाट नै खरिद गर्ने गरी नीति निर्माण गर्दा उपयुक्त हुन्छ । कृषि सहकारीहरूमा



स्थानीय तहले अल्पकालिन लगानीमार्फत क्षमता विकास र बजार व्यवस्थापनमा सहयोग गर्न सक्दछ। सहकारी सक्षम भएपछि उक्त लगानी स्थानीय तहले फिर्ता लिन सक्दछ। त्यसै गरी सहकारीका सदस्यहरूलाई प्रवर्द्धन गरी तमाम उपभोग्य वस्तु उपलब्ध गराउने मिष्ठान्न भण्डार, चमेना गृह, रेष्टुरेन्ट, होटल सञ्चालन गर्न सकिन्छ। जुन सामुहिक पनि हुनसक्छ । व्यक्तिगत पनि हुन सक्दछ । जसमा सहकारीले पनि लगानी गर्नसक्छ । साथमा गुणस्तरको नियमित निरीक्षण अनुगमन सहकारीका साथै स्थानीय निकायले पनि संयन्त्र बनाइ गर्दछ। जसमा उपयुक्त मुल्य र गुणस्तरमा कुनै किसिमको सम्झौता नहुने गरी कार्य गर्ने गरी स्थानीय तहले नीति बनाउनुपर्दछ । जसमा औषधी, तरकारी, फलफूल, खाद्यान्य लगायतका उपभोग्य वस्तुहरू पनि सोही विधिबाट निरीक्षण र नियमनमा राखिनुपर्दछ।

सहकारीहरूले कृषिजन्य सामाग्रीको प्रशोधन उद्योगहरू तथा कृषि, पेय, दूग्धजन्य उत्पादनमा आधारित कच्चा पदार्थ प्रयोग गर्ने गरी विभिन्न उत्पादनमूलक उद्योग सञ्चालन गरी रोजगारीको सिर्जना र अभिवृद्धि गर्न सक्दछन् । जसमा स्थानीय तहबाट विभिन्न सुविधा र अनुदानहरू प्रदान गर्न सकिन्छ । त्यस्तै शिक्षा र स्वास्थ्य आधारभूत सेवाका रूपमा रहेको छ । जसको सरकारीस्तरबाट भएको उपलब्धताप्रति कतिपय अवस्थामा गुणस्तरमा त कतिपय अवस्थामा सेवा प्रवाहमा प्रश्नचिन्ह उठ्ने गरेको छ। यी दुवै चरम समस्याको समाधान सहकारी विधिबाट सञ्चलन गरिने शिक्षा र स्वास्थ्य सेवाबाट सम्भव देखिन्छ। गुणस्तरीय शिक्षा, प्राविधिक शिक्षा सञ्चालनमा स्थानीय समुदायको सहभागीता सहकारीमार्फत ईच्छा र क्षमताअनुसार सम्भव रहन्छ । जसमा स्थानीयतह पनि अल्पकालिन साझेदार बन्न सक्दछ। स्वास्थ्य सेवामा पनि यो विधि सम्भव छ। यस्ता तमाम मुद्धाहरू जस्तै फोहर व्यवस्थापन तथा प्रशोधन, खानेपानी, उत्पादन, प्रशोधन र वितरण, विद्युत उत्पादन र वितरण, जेष्ठ नागरिक रेखदेख र आवास व्यवस्थापन, असहाय र अनाथ बालबालिकाको रेखदेख र पालनपोषण जस्ता कार्यहरू स्थानीय तहको मातहतमा सहकारी विधिबाट सञ्चालन सम्भव छ । तदनुरूप नीति नियम र ऐन पनि यस्ता विषयहरूलाई सहज बनाउने गरी ल्याइनुपर्ने वर्तमानको आवश्यक्ता हो। त्यस्तै संघ र प्रदेशको साझा अधिकारभित्र सहकारी बैंङ्क, विषयगत संघहरू, सहकारी संघ तथा जिल्ला र प्रदेश कार्यक्षेत्र बनाइ सञ्चालन गरिने प्रारम्भिक संस्थाहरूलाई व्यवस्थापन नियमन गर्ने गरी नीति निमार्ण गरिनु उपयुक्त हुने देखिन्छ।

**४. नीतिगत तहमा के गर्न सकिन्छ ?**

माथि उल्लेखित विभिन्न समस्याहरू समाधानको लागि निश्चित रूपवाट तीनवटै तहका निर्वाचन सम्पन्न भएपछि बनेका सरकार र जनप्रतिनिधिहरूसंग नागरिकको अपेक्षा ठूलो रहन्छ। सो अपेक्षाको परिपूर्तिमा संविधानको परिकल्पना मुताविक अर्थतन्त्रका तीनवटै क्षेत्रको आ–आफ्नो स्थानमा त्यत्तिकै महत्वपूर्ण भूमिका रहेको छ । सरकारी, सहकारी र निजी कुनै पनि क्षेत्र एक अर्काका प्रतिद्वन्द्वी होइनन् बरु परिपूरक अर्थात सहयोगी हुन् केवल हामीमा भएको अल्प र अधुरो ज्ञानका कारण आपसमा प्रतिद्वन्द्वीता रहेको ठानी एकअर्काप्रति पक्षपातपूर्ण व्यवहार देखिन्छ। यदि यस्तै अज्ञानताकाबीच वास्तविकता नबुझी नीति निर्माण गरिएमा परिवर्तनको अनुभूति नागरिकले प्राप्त गर्नसक्ने छैनन् । तसर्थ सुझबुझ र व्यवहारलाई राम्ररी बुझेर संघीय प्रणालीमा नीति नियमहरू बनाइनु उपयुक्त हुनेछ।

समस्याहरूलाई सामुहिक भावना, योजना र सहभागितावाट समाधानको विकल्प सहकारी क्षेत्रले दिने हुँदा यिनै कुराहरू समेट्ने गरी निर्माण गरिनुपर्ने स्थानीय तहको सहकारीसम्वन्धी नीति नियम तथा केन्द्रमा बनाइने सहकारी ऐनबीच उचित तादाम्यता मिलाएर अगाडि बढ्नुपर्ने वर्तमानको आवश्यक्ता देखिन्छ। यस किसिमको सोच रहन सकेमा मात्रै नेपालको सहकारीताले उचित फड्को मार्न सक्दछ । साथै नेपालको सहकारितालाई विश्वको नमुनायोग्य सहकारी बनाउन निश्चित रूपमा तपशिलका केही महत्वपूर्ण कार्यहरू समेत थप गर्नुपर्ने देखिन्छ।

» विद्यालयदेखि विश्वविद्यालय तहसम्म सहकारीसम्बन्धी पाठ्यक्रम तयार गरेर लागू गर्नुपर्ने।
» सहकारी कार्यालयमा आउने कर्मचारीहरूलाई प्रथम पटक कम्तीमा पनि सैद्धान्तिक विषयको प्रशिक्षण दिएर मात्रै खटाउनुपर्ने।
» सहकारीसम्बन्धी अध्ययन, अनुसन्धान र पाठ्यसामाग्री तयार गर्न एक उपयुक्त इकाई केन्द्रीयस्तरमा स्थापना गरिनुपर्ने तथा राष्ट्रिय सहकारी प्रशिक्षण केन्द्रको वर्तमान कार्य प्रणालीको उपलब्धि मूल्याङ्कन गरी बृहत परिवर्तन गरिनु पर्ने।
» सहकारी विकास बोर्डलाई सहकारीसम्बन्धी राष्ट्रिय नीति निर्माण गर्ने, देखिएका समस्याहरू समाधानको मार्ग पहिचान गर्ने, ऐन, नियम आदिको प्रभावकारिता मूल्याङ्कन गरी आवश्यक

रायसुझाव सरकारलाई दिने र समग्रमा सहकारी सम्बन्धमा मुलुकको Think Tank को कार्य गर्ने बनाउनु पर्ने ।

- » सहकारी संस्थाहरूको अनुगमनका निम्ति प्रभावकारी व्यवस्था गर्ने तथा वित्तीय कारोबार गर्ने संस्थाहरूका हकमा छुट्टै केन्द्रियस्तरको अनुगमन युनिट बनाई देशभर आवश्यक संयन्त्र विस्तार गर्ने ।
- » कृषि उत्पादनसँग सम्बन्धित सहकारीहरूको एउटै संघ निर्माण गर्ने ।
- » प्रभावकारी सहकारी शिक्षा हरेक सदस्यका लागि अनिवार्य गर्ने ।
- » वर्तमान कर प्रणालीलाई पूर्ण रूपमा खारेज गरी पूँजीको स्तर, भौगोलिक अवस्थिति, कार्यक्षेत्रभित्र सदस्यहरूको संस्थामा आवद्धता स्तर, ऐन, नीति नियम र सिद्धान्तहरूको पालनाको अवस्था, लैङ्गिक समानता आदि जस्ता विभिन्न विषयहरू समेटी सूचक तयार गरेर सोही अनुरूप वैज्ञानिक कर प्रणाली लागू गर्नुपर्ने ।
- » सदस्यहरूमा व्यवसायिकताको सिर्जना र अभिबृद्धि गराउने स्तरका प्रशस्त तालिम र अवलोकन भ्रमणहरू संस्थाहरूबाट आयोजना गरिनुपर्ने ।
- » सहकारी संस्था वा संघहरूमा क्षमतावान, लगनशील र सहकारी बुझेको व्यक्तिले नेतृत्व लिने र दिने संस्कारको विकास गर्ने ।
- » नेपालको संविधानमा भएको व्यवस्था अनुरूप सहकारी ऐन, नियम, मापदण्डलाई समयसापेक्ष संशोधन गर्दै संघ, प्रदेश र स्थानीय तहमा तोकिए मुताविकको अधिकार स्थापित हुने वातावरण गरी सहकारी संस्थाहरूको व्यवसायिकता बढाउन सक्ने बनाउनुपर्ने ।
- » सहकारीका नीति नियमहरू हचुवा प्रवृत्तिबाट बनाइने कुरालाई निरुत्साहित गरी यसको भावना, मर्म र यसका सिद्धान्तलाई बुझेका व्यक्तिको अगुवाइमा बनाइनुपर्ने ।

यी र यिनै महत्वपूर्ण सुझावहरूलाई व्यवस्थापन र कार्यान्वयन गर्नसके नेपालको सहकारी आन्दोलनले निश्चित रूपमा छिमेकी मुलुकको भन्दा अझ प्रभावकारी र सक्षम भएर जाने निश्चित देखिन्छ । त्यति मात्र होइन विगत दशकदेखि नै गरिबी निवारण अभियानमा राज्यका योजनाहरू केन्द्रित हुँदै आएको भए पनि ठूलो उपलब्धि हासिल हुन नसकी रहेको परिप्रेक्ष्यमा सहकारिताको प्रभावकारी प्रयोगले ठोस र अपेक्षित उपलब्धिका निम्ति छिटोछरितो हुने निश्चित छ ।

**अन्तमा,**

दिगो विकासका निम्ति सहकारिता र सहकारिताको विकासका निम्ति सहकारी शिक्षाको प्रभावकारिता अत्यावश्यक पक्ष मानिन्छन् । जुन कार्यमा जनसचेतन बचत तथा ऋण सहकारी संस्थासमेत निरन्तर जुटिरहेको देख्दा हामी हरेक सहकारीकर्मीहरूमा गर्व लाग्दछ । त्यसैले आम जनलाई सचेत पार्दै आफ्नो यात्रा अगाडि बढाउन जनसचेतन सधैं सफल रहोस् । रजत महोत्सवको मंगलमय शुभकामना !

***(लेखक : राममणि ब. क्याम्पस, मणिग्राम, रूपन्देहीका सह–प्राध्यापक हुनुहुन्छ ।)***

**सन्दर्भ सामग्री**


- अर्थ मन्त्रालय (२०७४), आर्थिक सर्वेक्षण आ.व. (२०७३ /७४), काठमांडौ , नेपाल ।
- सहकारी विभाग (२०७३), नेपालको सहकारी संघ संस्थाहरूसम्बन्धी तथ्याङ्कीय विवरण, काठमाडौ, नेपाल ।
- सहकारी विभाग (२०७०), सहकारी ऐन, नियमावली र मापदण्ड संगालो, काठमाडौं, नेपाल ।
- राष्ट्रिय सहकारी संघ लि. (२०६६), सहकारी विकासको पचास वर्षीय ग्रन्थ, काठमाडौं, नेपाल ।
- राष्ट्रिय सहकारी संघ लि. (२०६५), जापानमा कृषि सहकारी, काठमाडौं, नेपाल ।
- बडाल, केशव (२०६९), समृद्ध अर्थतन्त्रका लागि सहकारी, साझा प्रकाशन, ललितपुर, नेपाल ।
- शर्मा, खगराज (२०६७), गरिबी न्यूनिकरणमा बचत तथा ऋण सहकारी संस्थाहरू, मिर्मिरे आर्थिक लेख विशेषाङ्क, अंक १०, पूर्णाङ ३०५, नेपाल राष्ट्र बैंक, केन्द्रिय कार्यालय, काठमाडौं, नेपाल ।
- वार्षिक प्रतिवेदन (२०७१), जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि. काब्रे, दोलखा, नेपाल ।



# संयुक्त राष्ट्रसंघका दिगो विकास लक्ष्यहरू र सहकारी क्षेत्रको भूमिका



यज्ञराज ढुङ्गेल

## १. पृष्ठभूमि

प्रस्तुत लेखमा संयुक्त राष्ट्रसंघद्वारा घोषित दिगो विकास लक्ष्यहरू र ती लक्ष्यहरू प्राप्तिका लागि सहकारी क्षेत्रले गर्नसक्ने योगदानको चर्चा गरिएको छ । यस खण्डमा उल्लिखित विषयहरू र दोस्रो खण्डका विकास लक्ष्यका विवरणहरू संयुक्त राष्ट्रसंघको Transforming our world: The 2030 Agenda for Sustainable Development को आधारमा चर्चा गरिएको छ ।

आर्थिक विकास, गरिवी निवारण, वातावरणीय स्वच्छता, सूचना तथा शिक्षा, न्यायपूर्ण समाजको निर्माण आदि उद्देश्यहरू लिएर सन् २००० मा संयुक्त राष्ट्रसंघद्वारा ८ वटा सहस्राब्दी विकास लक्ष्यहरूको घोषणा गरियो र यी लक्ष्यहरू सन् २०१५ सम्ममा हासिल गर्ने लक्ष्य राखेको थियो ।

संयुक्त राष्ट्रसंघको सहस्राब्दी विकास लक्ष्यसम्वन्धी प्रतिवेदन २०१५ अनुसार निर्धारित समयमा यी विकास लक्ष्यहरूले विकासका लागि महत्वपूर्ण आधार तयार गर्नुको साथै विभिन्न क्षेत्रहरूमा उल्लेखनीय उपलब्धिसमेत हासिल गरेका छन् । तर ती उपलब्धिहरूले धेरै समस्याहरूको समाधान गरेको भए तापनि सबै लक्ष्यहरू पूर्ण रूपमा हासिल भने हुन सकेका छैनन् । खासगरी अफ्रिका महादेश, अल्प विकशित देशहरू, भूपरिवेष्ठित देशहरू र विकासोन्मुख देशहरूको मातृ-स्वास्थ्य, नवजात शिशुको स्वास्थ्य र प्रजनन-स्वास्थ्यको क्षेत्रमा सहस्राब्दी विकास लक्ष्यहरूले खास प्रभाव पार्न सकेनन् । यसकारण संयुक्त राष्ट्रसंघले सन् २०१६ देखि २०३० सम्मका लागि पुनः १५ वर्षे दिगो विकास लक्ष्यहरू अगाडि सारेको छ । सहस्राब्दी विकास लक्ष्यहरूले हासिल गरेको उपलब्धिहरूको जगेर्ना गर्नु र विश्वमा सन्तुलित तथा दिगो विकासको प्रत्याभूत गर्नु यी लक्ष्यहरूको मुख्य उद्देश्य रहेको छ ।



**अन्तर्राष्ट्रिय सहकारी महासंघ (ICA) ले पनि संयक्त राष्ट्रसंघका यी लक्ष्यहरू हासिल गर्न सहकारीले कुन कुन क्षेत्रबाट सहयोग गर्न सक्तछ भन्ने खाकासमेत दिइसकेको हुनाले विश्व सहकारी आन्दोलनको ध्यान यसतर्फ मोडिएको छ ।**

२५ देखि २७ सेप्टेम्वर सन् २०१५ मा सम्पन्न संयुक्त राष्ट्र संघको ६९औं महासभाले विश्व रूपान्तरणका लागि दिगो विकास लक्ष्यहरू भनेर सन् २०३० सम्मका लागि १७ वटा लक्ष्यहरू र १२९ वटा गन्तव्यहरू **(targets)** निर्धारण गरी नेपाललगायत विश्वका १९३ देशका प्रतिनिधिहरूले हस्ताक्षर गरी दिगो विकासका साझा लक्ष्यहरूको रूपमा स्वीकार गरेका छन् । यी १७ वटा लक्ष्यहरूले सहस्राब्दी विकास लक्ष्यहरूले हासिल गर्न नसकेका उपलब्धिहरू हासिल गराउने, सबै क्षेत्रमा मानव अधिकारको प्रत्याभूत गराउने, महिलाहरूमाथि हुने भेदभावको अन्त्य गर्न उनीहरूलाई सशक्तीकरण गर्ने तथा दिगो विकासका तीनवटा आयामहरू**:** आर्थिक, सामाजिक र वातावरणीय क्षेत्रको सन्तुलित रूपमा विकास गर्ने उद्देश्यहरू राखेका छन् ।

नेपालले पनि यी लक्ष्यहरू हासिल गर्न मञ्जुर गरिसकेको हुनाले सोही अनुरूप नेपालमा पनि कार्यक्रमहरू सञ्चालन गर्नुपर्ने अनिवार्यता छ । यी लक्ष्यहरू हासिल गर्न सरकार, निजी क्षेत्र वा सहकारी क्षेत्र एक्लैले सम्भव छैन । नेपालको संविधानले अंगीकार गरेको तीन खम्बे अर्थनीति अनुसार सरकारी, निजीक्षेत्र र सहकारीको संयुक्त प्रयासबाट मात्र यो कठिन कार्य सम्पन्न हुनसक्नेछ । त्यसकारण आजदेखि नै सबै क्षेत्रले आ-आफ्नो दायित्व पूरा गर्न आफ्नो क्षेत्रको कामको पहिचान गरी कार्यसम्पादन गर्न आवश्यक ठानी यस लेखवाट सहकारी क्षेत्रका खास खास कामहरूको

पहिचान गर्ने जमर्को गरिएको छ ।

अन्तर्राष्ट्रिय सहकारी महासंघ (ICA) ले पनि संयक्त राष्ट्रसंघका यी लक्ष्यहरू हासिल गर्न सहकारीले कुन कुन क्षेत्रबाट सहयोग गर्न सक्तछ भन्ने खाकासमेत दिइसकेको हुनाले विश्व सहकारी आन्दोलनको ध्यान यसतर्फ मोडिएको छ । यसकारण नेपालको सहकारी आन्दोलन पनि यसबाट प्रभावित भएको र यी लक्ष्यहरू पूरा गर्न आफ्नो गहन जिम्मेवारी भएको स्वीकार गर्दछ। सहकारीको मुख्य उद्देश्य नै गरीव र पिछडिएका वर्गको आर्थिक, सामाजिक र सांस्कृतिक अवस्थामा सुधार गरी उनीहरूलाई समृद्ध र सम्पन्न बनाउने भएको हुनाले संयुक्त राष्ट्र संघका यी लक्ष्यहरू सहकारी क्षेत्रका लागि अवसरको रूपमा ग्रहण गर्नुपर्ने आवश्यकता छ । हामीले आगामी १५ वर्षमा यी लक्ष्यहरू हासिल गर्न जति सक्षम हुन्छौं त्यति नै मानव उत्थानमा मद्दत पुग्नेछ, देश विकासमा टेवा पुग्नेछ, देशमा सहकारीको महत्व अझ प्रष्ट हुनेछ र विश्वभरमा सहकारीको साख बढ्न गई अन्तर्राष्ट्रिय क्षेत्रमा यसको अपरिहार्यताको महशुस हुनेछ ।

## २. विकास लक्ष्यहरू र सहकारीको भूमिका

जनसचेतनले पनि संरासद्वारा अगाडि सारेका दिगो विकास लक्ष्यहरू अनुरूप आफ्ना कार्यक्रमहरू निर्धारण गरी यी लक्ष्यहरू हासिल गराउन केन्द्रित हुनु नितान्त आवश्यक ठानी यस लेखमा विकास लक्ष्यका गन्तव्यहरू र सहकारीले गर्नसक्ने क्रियाकलापहरूको चर्चा गरिएको छ ।

### लक्ष्य १ः विश्वका सबै देशका सबै क्षेत्रमा सबै प्रकारको गरिबीको अन्त्य गर्ने ।

**क. गन्तव्यहरू (Targets)**

- हाल प्रति दिन १.२५ डलरभन्दा कम आम्दानी भएका सबै मानिसहरूलाई चरम गरिबीबाट मुक्त गर्ने, बालकदेखि बृद्धसम्मका सबै उमेरका मानिसहरूलाई राष्ट्रिय परिभाषा अनुसारको सबै किसिमको गरिबीबाट मुक्त गर्ने, अति गरीब र असहायसमेत सबै मानिसहरूलाई समेट्ने गरी प्रत्येक देशले सामाजिक सुरक्षा प्रणालीको विकास गर्ने ।
- सन् २०३० सम्ममा सबै महिला र पुरुष खासगरी गरीब र जोखिममा परेका व्यक्तिहरूका लागि आर्थिक श्रोतमा समान अधिकार, आधारभूत सेवाहरूमा पहुँच, जग्गा तथा अन्य सम्पत्तिको स्वामित्व र नियन्त्रणको अधिकार, प्राकृतिक श्रोतमाथिको समान अधिकार, उपयुक्त प्रविधि र लघुवित्त लगाएतका वित्तीय सेवामा पहुँचको सुनिश्चितता गराउने ।
- चरम गरिबीमा रहेका र असहाय व्यक्तिहरूमा प्राकृतिक प्रकोप तथा अन्य आर्थिक, सामाजिक तथा वातावरणीय कारणवाट उत्पन्न हुने आपत-विपतबाट बच्न सक्षम बनाउने ।

**ख. सहकारीले गर्नसक्ने त्रियाकलापहरू**

- आवश्यक्ता अनुसार सहकारी संस्थाहरूको प्रवर्धन र विकास गरी प्रत्येक गाउँ र टोलमा लघुवित्त तथा अन्य वित्तीय सेवाहरू पुऱ्याउने र कृषि, उद्योग तथा अन्य उत्पादनको क्षेत्रमा लगानी गर्न प्रोत्साहित गर्ने ।
- बढी भन्दा बढी गरीब र असहाय मानिसहरूलाई सहकारीमा आवद्ध गराउने ।
- कृषि सहकारीमार्फत सुपथ मूल्यमा मल बीउ तथा प्रविधि उपलव्ध गराइ बढी भन्दा बढी किसानहरूलाई कृषि उत्पादनमा संलग्न गराउने ।
- वचत तथा ऋण सहकारी संस्थाहरूले गरीब र पिछडिएका वर्गलाई कृषि, उद्योग र व्यवसाय गर्न सहज र सुलभ तरिकाले वित्तीय सहयोग गर्ने ।
- वित्तीय साक्षरताको माध्यमबाट उनीहरूलाई आम्दानी खर्चको व्यवस्थापन गर्न सिकाउने तथा फजुल खर्च गर्नबाट रोक्ने ।
- मद्यपान, धुम्रपान तथा दुर्व्यसन विरुद्ध अभियान चलाउने ।
- सबै किसानहरूलाई बाली वीमा तथा पशु वीमा कार्यक्रममा सहभागी गराउने ।
- नियमित रूपमा वचत गर्न लगाई आपत परेको बखत प्रयोग गर्न लगाउने ।
- खेती तथा घँडेरीका लागि जग्गा खरिद र चक्लावन्दी गर्न सहकारीवाट सुलभ ऋण उपलव्ध गराउने ।
- साधन श्रोतहरूको समान अधिकारका लागि



सचेतनामूलक कार्यक्रम सञ्चालन तथा वकालत गर्ने ।

**लक्ष्य २ः भोकमरीको अन्त्य गर्ने, खाद्य सुरक्षा र पोषणयुक्त खानाको व्यवस्था गर्ने तथा दिगो कृषि प्रणालीको विकास गर्न सक्षम हुने ।**

**क. गन्तव्यहरू (targets)**

- सन् २०३० सम्ममा सबै मानिसहरू खासगरी गरीबी र जोखिममा परेका बच्चाहरू समेतका लागि वर्षभरि पौष्टिक र पर्याप्त आहारको सुनिश्चितता गर्ने ।
- सन् २०३० सम्ममा सबै किसिमका कुपोषणहरूको अन्त्य गर्ने, ५ वर्षमुनिका बच्चाहरूमा हुने कुपोषणको सन् २०२५ भित्र नै अन्त्य गरिसक्ने र किशोरी, गर्भवती महिला, दूध खाने वच्चाको आमा तथा बृद्ध-बृद्धाहरूका लागि पोषणयुक्त खानाको प्रत्याभूत गर्ने ।
- कृषिको उत्पादकत्व दोब्बर गर्ने र साना किसानहरू खासगरी महिला, आदिवासी, पारिवारिक कृषकको आम्दानीमा पनि दोब्बर बनाउन जमिन र अन्य उत्पादनका साधनहरूमा सबैको समान पहुँचको सुनिश्चितता गर्ने, तथा वित्तीय सेवा, वस्तु बजारीकरणका अवसरहरू र गैरकृषि क्षेत्रको रोजगारी समेतको ग्यारेण्टी गर्ने ।
- जलवायु परिवर्तनसँग अनुकुल हुनेखालको वातावरणीय सन्तुलन कायम गर्ने, विषम मौसम, खडेरी, बाढी पहिरो र अन्य प्राकृतिक प्रकोपको बावजुद पनि जमिन र माटोको गुणस्तरमा सुधार हुने खालको कृषि प्रविधिको प्रयोग गर्ने र दिगो खाद्य उत्पादन प्रणालीको सुनिश्चितता गर्ने ।
- सन् २०२० सम्ममा बीउ बिजन, खेती गरिएका बोट बिरुवाहरू, घरपालुवा जनावरहरू र तीसँग सम्बन्धित जंगली बोट बिरुवा तथा जनावरहरूको जैविक विविधता कायम राख्ने ।

**ख. सहकारी क्षेत्रले गर्नसक्ने क्रियाकलापहरू**

- खाद्य उत्पादन र विक्री बितरण गर्न कृषि सहकारीको विस्तार गर्ने, खाद्य भण्डारणको लागि सहकारी खाद्य भण्डारण गृहको निर्माण गर्ने ।
- कृषि उत्पादन बृद्धिका लागि नयाँ प्रविधिको प्रयोग गर्ने, जैविक खेतीको विकास गर्ने, बीउ बिजनको शुद्धीकरण गर्ने ।
- सहकारीका सहदस्यहरूबीच बीउ बिजन र प्रविधिको आदान प्रदान गर्ने ।
- रासायनिक मलको प्रयोगमा कम गर्ने र प्राङ्गारिक एवम् जैविक मलको प्रयोग गर्ने ।
- किसानहरूले उत्पादन गरेका वस्तुहरूको बजारीकरण गर्न स्थानीय, क्षेत्रीय, राष्ट्रिय एवम् अन्तर्राष्ट्रिय तहसम्ममा सहकारी व्यापार सञ्जालको विकास गर्ने ।
- जैविक विविधताको संरक्षण गर्न समुदायमा चेतनामूलक कार्यमक्रहरू सञ्चालन गर्ने ।

**लक्ष्य ३ः सबै उमेरका मानिसहरुको स्वस्थ्य र समृद्ध जीवनको सुनिश्चित गर्ने ।**

**क. गन्तव्यहरू (targets)**

- सन् २०३० सम्ममा प्रत्येक एकलाख बच्चाहरूको जन्ममा मातृ मृत्युदर ७० प्रति लाखमा झार्ने ।
- सन् २०३० सम्ममा ५ वर्षमुनिका र नवजात शिशुहरूको रोकथाम र नियन्त्रण गर्न सकिने रोगबाट हुने मृत्युको निराकरण गर्ने र नवजात शिशुको मृत्युदर १२ प्रति हजारमा झार्ने तथा ५ वर्ष मुनिका बालवालिकाको मृत्युदर २.५ प्रति हजारमा झार्ने ।
- सन् २०३० सम्ममा AIDs, क्षयरोग, मलेरिया जस्ता महामारीको अन्त्य गर्ने । हेपाटाइटिस, प्रदुषित पानीबाट उत्पन्न हुने रोगहरू र अन्य सरुवा रोगहरूसँग जुझ्नसक्ने क्षमता बढाउने ।
- सन् २०३० सम्ममा नसर्ने रोगहरूबाट असामयिक रूपमा हुने मृत्युदरलाई रोकथाम र उपचारको माध्यमबाट एक तिहाईले घटाउने तथा रोगीहरूमा मानसिक स्वास्थ्य तथा समृद्धिका लागि प्रेरित गर्ने ।
- लागूऔषधहरू, लागू पदार्थहरू, लट्याउने औषधीहरूको गलत प्रयोग हटाउन रोकथाम तथा उपचार प्रणालीलाई अझ कडा पारिनेछ ।
- सन् २०२० सम्ममा सडक दुर्घटनाबाट मृत्यु हुनेको संख्या आधा घटाइनेछ ।
- सन् २०३० सम्ममा आधारभूत यौन तथा प्रजनन स्वस्थ्य सेवाहरू सबैलाई उपलब्ध गराउने । परिवार नियोजनलगायतका शिक्षा

तथा सूचनाहरूको सुनिश्चितता गर्न राष्ट्रिय नीति तथा कार्यक्रमहरूमा समावेश गरिनेछ ।

- विश्वव्यापी रूपमा सबै प्रकारका स्वस्थ्यसम्बन्धी सेवाहरू जस्तै आवश्यक गुणस्तरीय स्वास्थ्य सेवा, सुरक्षित, सुलभ र गुणस्तरीय औषधीहरू तथा खोपहरूमा सबैको पहुँच पुऱ्याउने र स्वस्थ्योपचारका लागि आवश्यक पर्ने आर्थिक स्रोतको समेत व्यवस्था गर्ने ।
- सन् २०३० सम्ममा खतरायुक्त रासायनिकहरू, हावा, पानी र माटोको प्रदुषण र फोहोरबाट हुने मृत्यु उल्लेखनीय रूपमा कम गर्ने ।

**ख. सहकारी क्षेत्रले गर्नसक्ने क्रियाकलापहरू**

- देशका विभिन्न भागहरूमा सहकारी अस्पतालहरू र Birthing Centre हरू सञ्चालन गरी सस्तो र सुलभ स्वास्थ्य सेवा प्रदान गर्ने ।
- स्वास्थ्यसम्बन्धी सचेतनामूलक र सूचनामूलक कार्यक्रमहरू सबै खाले सहकारी संस्थाहरूवाट सञ्चालन गर्ने ।
- आफ्नै तरिकाले स्वास्थ्य वीमा सञ्चालन गर्ने वा सरकारबाट सञ्चालन गर्ने वीमा कार्यक्रमको एजेण्टको रूपमा सेवा प्रदान गर्ने ।
- धुम्रपान, मद्यपान तथा लागूऔषधको प्रयोगविरुद्ध र सडक प्रयोगसम्बन्धी जनचेतनामूलक कार्यक्रम सञ्चालन गर्ने तथा आफ्ना सदस्यहरूलाई यस्ता कुलतहरू त्याग्न प्रोत्साहित गर्ने ।
- फलफूल तथा तरकारीमा प्रयोग हुने विषादिको मात्रा कम गर्न सहकारीले जैविका खेतीको विकास गर्ने तथा वैकल्पिक मल तथा औषधीको खोजी गर्ने ।

**लक्ष्य ४: गुणस्तरीय, समावेशी तथा न्यायपूर्ण शिक्षाको सुनिश्चितता गर्ने तथा सबैका लागि आजीवन सिकाइका अवसरहरुको विकास गर्ने ।**

**क. गन्तव्यहरू (targets)**

- विश्वका सम्पूर्ण छात्र तथा छात्राहरूका लागि समानताको आधारमा प्रभावकारी र सान्दर्भिक सिकाइ उपलव्धिसहितको गुणस्तरीय तथा निःशुल्क प्राथमिक र माध्यमिक शिक्षाको सुनिश्चितता गरिनेछ ।
- सबै बालबालिकाहरूमा गुणस्तरीय बाल हेरचाह तथा बाल विकासको प्रत्याभूतिको साथै प्राथमिक तहको तयारी स्वरूप पूर्व प्राथमिक शिक्षाको सुनिश्चितता गरिनेछ ।
- सबै महिला तथा पुरुषहरूलाई धान्नसक्ने हिसाबले गुणस्तरीय प्राविधिक तथा व्यवसायिक शिक्षा दिइने तथा विश्वविद्यालय लगायतका सबैखाले शिक्षा हासिल गर्ने अवसर हुनेछ ।
- सम्बन्धित क्षेत्रमा आकर्षक रोजगारी प्राप्त गर्न र व्यवसायिकता अँगाल्न आवश्यक पर्ने प्राविधिक तथा व्यवसायिक सीपयुक्त जनशक्तिको संख्या उल्लेखनीय रूपमा वृद्धि हुनेछ ।
- सबै तहको शिक्षाको पहुँचमा लैङ्गिक असमानताको अन्त्य गरिनेछ । प्राविधिक तथा व्यवसायिक शिक्षालगायत सबै किसिमका शिक्षामा असहाय, अपाङ्ग, आदिवासी, जनजाति आदि सबैको समान पहुँच हुनेछ ।
- सबै युवा युवतीहरू र पुरुष तथा महिलाहरूले उल्लेखनीय संख्याको लागि साक्षर बन्ने अवसर पाउनेछन् ।
- दिगो विकास र दिगो जीवनशैली, मानव अधिकार, लैङ्गिक समानता, शान्ति र अहिंसाको प्रवर्धन, विश्व नागरिकता र सांस्कृतिक विविधताको कदर गर्ने बानी र दिगो विकासमा संस्कृतिको योगदान आदि विषयहरूमा योगदान पुऱ्याउन आवश्यक पर्ने ज्ञान र सीप प्राप्त गर्ने अवसरको प्रत्याभूत गरिनेछ ।

**ख. सहकारी क्षेत्रले गर्नसक्ने क्रियाकलापहरू**

- शिक्षामा लैङ्गिक तथा जातीय विभेद विरुद्ध सहकारीले अभियान चलाउने ।
- प्रौढ साक्षरता कक्षाहरू सञ्चालन गरी सबैलाई साक्षर बनाउने अभियान सञ्चालन गर्ने तथा सहकारी शिक्षा तथा वित्तीय साक्षरता शिक्षा आदि कार्यक्रम सञ्चालन गर्ने ।
- दिगो विकाससम्वन्धी चेतनामूलक कार्यक्रमहरू सञ्चालन गर्नुको साथै सहकारीका हरेक कार्यक्रम र व्यवसायहरू दिगो विकासको



लागि योगदान गर्नसक्ने बनाउने ।

- प्राविधिक र व्यवसायिक शिक्षा हासिल गरेको जनशक्तिलाई सीप अनुसारको व्यवसाय गर्न आवश्यक पूँजी उपलब्ध गराउने तथा उनीहरूबाट उत्पादित बस्तुको बजारीकरणमा सहयोग गर्ने ।

**लक्ष्य ५ः लैङ्गिक समानता हासिल गर्ने र सबै महिलाहरूको सशक्तीकरण गर्ने ।**

**क. गन्तव्यहरू (targets)**

- संसारभर महिला विरुद्धका सबै किसिमका विभेदहरू अन्त्य गर्ने ।
- सार्वजनिक वा निजीक्षेत्रमा महिलामाथि हुने हिंसा तथा शोषण, उत्पीडन र महिला बेचबिखन तथा यौनशोषण आदि सबैखाले हिंसाको अन्त्य गर्ने ।
- चेलीबेटी बेचबिखन, बाल बिबाह, करकापी बिबाह तथा यौनिक अपाङ्गता जस्ता खराव व्यवहारहरूको अन्त्य गर्ने ।
- आफ्नो देशको परिस्थिति अनुसार घरायसी काममा महिला तथा पुरुषहरूमा बराबरी सहभागिताको व्यवस्था गर्ने । अन्य कामहरूको तुलनामा घरायसी कामको पनि मौद्रिक मूल्याङ्कनको आधारमा तुलना गर्ने ।
- राजनीतिक, आर्थिक र सामाजिक क्षेत्रको हरेक तहको निर्णय गर्ने तहमा महिलाहरूको पूर्ण र प्रभावकारी सहभागिताको सुनिश्चितता गर्ने ।
- जनसंख्या र विकाससम्वन्धी अन्तर्राष्ट्रिय सम्मेलनको कार्ययोजना तथा Beijing Plateform for Action and the outcome and the documents of their review conference अनुसार विश्वव्यापी रूपमा यौन तथा प्रजनन स्वास्थ्यको र प्रजनन अधिकारको सुनिश्चितता गर्ने ।

**ख. सहकारी क्षेत्रले गर्नसक्ने क्रियाकलापहरू**

- सहकारी संस्थाहरूमा महिला सहभागितालाई अत्याधिक प्राथमिकता दिने ।
- सहकारीको सबै तहको निर्णय प्रक्रियामा महिला सहभागिता उल्लेखनीय रूपमा बृद्धि गर्ने ।
- महिला हिंसाविरुद्ध सहकारीले अभियान सञ्चालन गर्ने ।
- पुरुष र महिलाहरूमा बराबरी कामको महत्वबारे सदस्यहरूलाई प्रशिक्षित गर्ने तथा सभा, गोष्ठी गर्ने ।
- महिला बेचबिखन र महिला हिंसाबारे सचेतनामूलक कार्यक्रम सञ्चालन गर्ने ।

**लक्ष्य ६ः सबैका लागि खानेपानी र सरसफाइको प्रत्याभूत गराउने ।**

**क. गन्तव्यहरू (targets)**

- सन् २०३० सम्ममा विश्वव्यापी रूपमा सुरक्षित, सर्वसुलभ र न्यायोचित रूपमा खानेपानीमा पहुँच पुऱ्याउने ।
- खासगरी महिला, बालबालिका र असहायहरूलाई दृष्टिगत गरी सबैका लागि पर्याप्त मात्रामा न्यायोचित तरिकाले खुल्ला दिसावाट मुक्तिलगायत सरसफाइ तथा वातावरणीय स्वच्छतामा सबैलाई पहुँच पुऱ्याइनेछ ।
- पानीलाई प्रदुषित पार्ने तत्वहरू जस्तै फोहोर थुपार्ने, जोखिमयुक्त रासायनिकहरूको उत्सर्जन गर्ने आदिलाई कम गर्ने । पानीको शुद्धीकरण गर्ने र आधा जनसंख्यालाई शुद्ध पानी उपलव्ध गराउने तथा फोहोरको पुनः प्रयोग र पुनउत्पादन गर्ने ।
- सन् २०३० सम्ममा पानी प्रयोग हुने सबै क्षेत्रमा पानीको समुचित उपयोगको व्यवस्था गर्ने तथा ताजा पानी उपलव्ध गराउनका लागि र पानीको अभाव हटाउनका लागि दिगो पानी प्रयोगको सुनिश्चितता गर्ने । सफा पानीवाट बन्चित जनसंख्या उल्लेखनीय रूपमा घटाउने ।
- सन् २०३० सम्ममा सबै तहमा एकिकृत पानी व्यवस्थापन गर्ने । उपयुक्त भएमा अन्तर-सीमा सहकार्यसमेत गर्ने ।
- सन् २०२० सम्ममा पानीसँग सम्बन्धित वातावरणीय अनुकूलन कायम गर्न तथा पानीको स्वच्छताको पुनस्थापन गर्न पहाड, जंगल, सिमसार, नदी र तालहरूको समेत

संरक्षण र सम्वर्धन गर्ने ।

**ख. सहकारी क्षेत्रले गर्नसक्ने क्रियाकलापहरू**

- सहकारीले सफा खानेपानी उपलव्धताका लागि स्थानीयतह तथा केन्द्रसँग समन्वय गरी आफनो कार्यक्षेत्रमा खानेपानीको व्यवस्था मिलाउने, सहकारी र जनसहभागितामा स-साना खानेपानी योजनाहरू निर्माण गर्ने र जल उपभोक्ता समूहको निर्माण गर्ने तथा पानी व्यवस्थापनमा सहयोग गर्ने ।
- नदीनाला, सिमसार, तलाउ पोखरी आदिमा फोहोर फाल्न नदिने, आफ्नो क्षेत्रको फोहोर व्यवस्थापन गर्न समुदाय परिचालन गर्ने ।
- पानीका श्रोतहरू भएको स्थानका रुखहरू काट्न नदिने, यस्ता ठाउँहरूको संरक्षण सम्वर्धनमा सहकारीले पूर्ण सहभागिता जनाउने ।
- सदस्यहरू र समुदायको सहभागितामा आ-आफ्नो क्षेत्रमा सरसफाई अभियान चलाउने तथा सरसफाइसम्वन्धि जनचेतनामूलक कार्यक्रम सञ्चालन गर्ने ।

**लक्ष्य ७ः सबैको लागि सर्वसुलभ, भरपर्दो, दिगो र आधुनिक उर्जामा पहुँच पुऱ्याउने ।**

**क. गन्तव्यहरू (targets)**

- सन् २०३० सम्ममा विश्वव्यापी रूपमा खरीद गर्नसक्ने मूल्यमा सबैका लागि भरपर्दो र आधुनिक उर्जा सेवा उपलव्ध गराउने ।
- संसारको उर्जा शक्तिको हिस्सामा नवीकरणीय उर्जाको हिस्सा उल्लेखनीय रूपमा वृद्धि गर्ने ।
- विश्वव्यापी उर्जा क्षमताको सुधारमा दोव्वरले बृद्धि गर्ने ।

**ख. सहकारी क्षेत्रले गर्नसक्ने क्रियाकलापहरू**

- सहकारीले स-साना जलविद्युत आयोजनाहरूको निर्माण गर्ने तथा सौर्य उर्जाको प्रयोगका लागि आवश्यक उपकरण तथा प्रविधि उपलव्ध गराउने, आधुनिक चुल्होको प्रयोग र गोवरग्यास प्लान्ट पनि सहकारीको आफ्नै पहलवाट गर्न सकिन्छ ।

**लक्ष्य ८ः टिकाउ हुने खालको, समावेशी र दिगो आर्थिक बृद्धि, पूर्ण र उत्पादनशील रोजगारी तथा सबैका लागि मर्यादित कामको व्यवस्थाको लागि प्रोत्साहित गर्ने ।**

**क. गन्तव्यहरू (targets)**

- हाल भएको प्रतिव्यक्ति आयको बृद्धि दरलाई निरन्तरता दिने र खासगरी अविकसित देशहरूमा कुल राष्ट्रिय उत्पादनको कम्तिमा ७% ले बृद्धि गर्ने ।
- आर्थिक उत्पादकत्वको उच्चतम दरमा बृद्धि गर्न श्रमको अत्यधिक प्रयोग हुने क्षेत्रहरूलाई प्राथमिकता दिंदै विभिन्न प्रविधिको स्तरीकरण र नयाँ खोज र अन्वेषण गर्ने ।
- उत्पादनशील क्रियाकलापको प्रवर्धन गर्ने, मर्यादित कामको सिर्जना गर्ने, उद्यमशीलताको विकास गर्ने, अध्ययन अनुसन्धान गर्ने र साना र मध्यम खालका उद्योगहरूको प्रवर्धन गर्न वित्तीय उपलव्धतासहित समावेश भएको विकासमा आधारित नीतिहरू निर्माण गर्ने ।
- सन् २०३० सम्ममा श्रोत र साधनहरूको उत्पादन र उपभोगमा व्यापक सुधार गर्ने, आर्थिक विकासलाई वातावरणीय क्षयीकरणवाट अलग राख्ने र विकशित देशहरूको नेतृत्वमा दिगो उत्पादन र उपभोगको १० वर्षे कार्यक्रमको खाका तयार गर्ने ।
- सन् २०३० सम्ममा युवा युवती र अपाङ्गलगायत सबै महिला, पुरुषहरूलाई उत्पादनशील रोजगारीको व्यवस्था गर्ने र समान कामको समान ज्यालाको सुनिश्चित गर्ने ।
- रोजगारी, शिक्षा र तालीम आदिबाट बञ्चित रहेका युवा युवतीहरूको अनुपात यथेष्ट मात्रामा घटाउने ।
- जबरजस्ती काममा लगाउने प्रथाको उन्मूलन गर्न, आधुनिक दासता र मानव बेचबिखनको अन्त्य गर्न, बाल सैनिकलगायत सबै खाले बालश्रमको निषेध र निर्मूल गर्न तत्काल प्रभावकारी कदम चाल्ने र सन् २०२५ सम्ममा सबै प्रकारका बालश्रमहरूको अन्त्य गर्ने ।
- श्रमिकको अधिकारको संरक्षण गर्ने, सबै



आप्रवासी खासगरी महिला आप्रवासी श्रमिकहरू लगायत सबै श्रमिकहरूको सुरक्षित रूपमा काम गर्ने वातावरणको सिर्जना गर्ने ।

- स्थानीय संस्कृति र उत्पादनलाई प्रोत्साहन गर्ने किसिमको र दिगो पर्यटनको विकास गर्न सहयोग पुऱ्याउने नीति नियमको निर्माण गरी लागू गर्ने ।
- वित्तीय सेवाहरूमा सबैको पहुँच पुऱ्याउन स्थानीय वित्तीय संस्थाहरूको क्षमता अभिबृद्धि गर्ने र बैंकिङ्ग, बीमा र वित्तीय सेवाहरूमा सबैको पहुँच पुऱ्याउने सेवा विस्तार गर्न प्रोत्साहित गर्ने ।

**ख. सहकारी क्षेत्रले गर्नसक्ने क्रियाकलापहरू**

- सहकारीले विभिन्न उद्यम व्यवसाय गर्नका लागि सदस्यहरूलाई प्रोत्साहित र प्रशिक्षित गर्ने तथा आवश्यक पूँजीको व्यवस्था गर्ने । सकेसम्म स्थानीय तहमा पाइने कच्चा पदार्थ र श्रमको प्रयोग गरी सञ्चालन गरिने उद्योगलाई प्राथमिकता दिई आर्थिक तथा प्राविधिक सेवा उपलब्ध गराउने ।
- कमैया, हलिया प्रथाबाट मुक्त भएकाहरूलाई दृष्टिगत गरी उपयुक्त कार्यक्रमहरू सञ्चालन गर्ने र उनीहरूको स्वाभिमान रक्षा गर्ने खालका कामको व्यवस्था गर्ने ।
- श्रम र कामप्रति सकारात्मक सोच जगाउन तालिम तथा गोष्ठीहरूको आयोजना गर्ने ।
- देशका सबै भागमा वित्तीय सेवा पुऱ्याउन आवश्यक ठाउँमा सहकारी संस्थाहरूको स्थापना गर्ने, भएकाहरूको क्षमता अभिवृद्धि गरी आवश्यक सेवा प्रदान गर्न सक्षम बनाउने । स्थानीय पूँजीवाट माग पूरा हुन नसक्ने भएमा बैंक तथा वित्तीय संस्थाहरू र सरकारी श्रोतहरूबाट पूँजी जुटाई परिपूर्ति गर्ने ।
- सहकारीले वचत र ऋण सेवाको अतिरिक्त वीमा, विप्रेषण सेवाहरू आफ्नै पहलमा वा सम्वन्धित संस्थाहरूसँग समन्वय गरी सञ्चालन गरी सदस्यहरूको घरदैलोमा वित्तीय सेवाहरूको पहुँच पुऱ्याउने ।
- आवश्यक परेको स्थानमा लघुवित्त सेवामार्फत घरदैलोमा वित्तीय सेवा प्रदान गर्ने ।

**लक्ष्य ९ः टिकाउ पूर्वाधारको निर्माण गर्ने, समावेशी र दिगो औद्योगीकरणको प्रवर्धन गर्ने र नवीनतम विचारलाई प्रेरित गरिने ।**

**क. गन्तव्यहरू (targets)**

- सबैका लागि न्यायोचित र सर्वसुलभ तरिकाले विकासको प्रतिफलमा पहुँच पुऱ्याउन मानव कल्याण र आर्थिक विकासलाई सहयोग हुनेगरी क्षत्रीय वा अन्तरसीमा समेतमा स्तरीय, भरपर्दो र टिकाउ पूर्वाधारको विकास गर्ने ।
- समावेशी र दिगो औद्योगिकरणको प्रवर्धन गर्ने र सन् २०३० सम्ममा आफ्नो परिस्थितिअनुसार कुल राष्ट्रिय उत्पादनमा औद्योगिक क्षेत्रको हिस्सा बढाउदै जाने र कम विकसित देशहरूमा हालको हिस्साको दोब्बर बनाउने ।
- सन् २०३० सम्ममा खासगरी कम विकसित देशहरूका साना उद्योगहरू र अन्य व्यवसायहरूको वित्तीय सेवाहरूमा पहुँच पुऱ्याउने र सुपथ व्याजमा ऋण र वस्तु बजार सञ्जालको पहुँचमा बृद्धि गर्ने ।
- साधनको उपयोग क्षमतामा अभिबृद्धि, स्वच्छ वातावरणमैत्री प्रविधिहरू र औद्योगिक प्रणालीको अङ्गीकार गर्न पूर्वाधारहरूलाई उन्नत बनाउने तथा उद्योगहरूको रूपान्तरण गर्ने ।
- सबै देशहरूमा खासगरी विकासोन्मुख देशहरूमा वैज्ञानिक खोज तथा अनुसन्धानको विकास गर्ने, औद्योगिक क्षेत्रको प्राविधिक क्षमतालाई उन्नत बनाउने । सन् २०३० सम्ममा नवीनतम खोज तथा आविष्कारलाई प्रोत्साहन गरिनेछ र खोज तथा आविष्कारमा संलग्न कार्यकर्ताहरूको संख्या र त्यसको लागि आवश्यक लगानीमा उल्लेखनीय रूपमा बृद्धि हुनेछ ।

**ख. सहकारी क्षेत्रले गर्नसक्ने क्रियाकलापहरू**

- यो लक्ष्य पूरा गर्न सहकारीहरू आपसमा मिलेर उद्योग सञ्चालन गर्न सक्तछन् वा जिल्ला संघ, केन्द्रीय संघ वा राष्ट्रिय संघको

संयोजकत्वमा पनि यस्ता उद्योगहरू सञ्चालन गर्न सक्तछन् । सहकारीद्वारा वित्तीय सहयोग प्राप्त निजी उद्योगहरूले पनि यो लक्ष्य पूरा गर्न सहयोग पुऱ्याउन सक्तछन् ।

**लक्ष्य १०: एउटा देशभित्रका परिवारहरू र राष्ट्रहरू वीचको असमानतालाई घटाउने ।**

**क. गन्तव्यहरू (targets)**

- सन् २०३० सम्ममा हालसम्म कायम भएको आम्दानीलाई घट्न नदिने र प्रगतिशील तरिकाले वृद्धि गर्ने तथा तल्लो तहमा रहेको ४०% जनसंख्याको आम्दानीको बृद्धिदरमा राष्ट्रिय औसतभन्दा माथि पुऱ्याउने ।
- सन् २०३० सम्ममा जाति, धर्म, उमेर, लिङ्ग, अपाङ्गता, आर्थिकस्तर आदिको बावजुद पनि आर्थिक, सामाजिक र राजनैतिक क्षेत्रमा सबैको समावेशिताका लागि प्रवर्धन तथा सशक्तीकरण गर्ने ।
- सबैलाई समान अवसरको सुनिश्चितता गर्ने, प्रतिफलको असमान वितरणमा कमी गर्ने र विभेदकारी ऐन नियम र कानूनहरूको अन्त्य गर्ने तथा उपयुक्त नीति नियम र कार्यक्रमहरूको निर्माण गर्ने ।
- वेतन नीति, आर्थिक नीति र सामाजिक सुरक्षा नीतिहरूको निर्माण गर्ने र अत्याधिक समानता दिलाउन सफल हुने । यी नीतिहरूको पालना गराउन विश्व वित्त वजार र वित्तीय संस्थाहरूको नियमन र अनुगमनमा सुधार गर्ने ।
- नियमित, सुरक्षित, र जिम्मेवार आप्रवासनको लागि योजनावद्ध र व्यवस्थित आप्रवसन नीति निर्माण गरी लागू गर्ने ।

**ख. सहकारी क्षेत्रले गर्नसक्ने क्रियाकलापहरू**

- सहकारीले आर्थिक असमानता हटाउन निम्नस्तरीय जनसंख्यालाई उपयुक्त हुने उद्यम व्यावसायको प्रवर्धन गरी उनीहरूको आम्दानीमा वृद्धि गर्न सक्तछ र आर्थिक समानतामा टेवा पुग्न सक्तछ ।
- आफ्ना राष्ट्रिय र अन्तर्राष्ट्रिय सञ्जालहरू मार्फत समानताका लागि राष्ट्रिय र अन्तर ाष्ट्रियस्तरमा वकालत गर्ने, समन्वय गर्ने र आवाज उठाउन सक्तछ ।

**लक्ष्य ११ः मानव वस्ती तथा शहरहरूलाई समावेशी, सुरक्षित, सबैले धान्नसक्ने र दिगो वनाउने ।**

**क. गन्तव्यहरू (targets)**

- सबैका लागि सुरक्षित, पर्याप्त, र तिर्नसक्ने घर र आधारभूत सुविधाहरूको व्यवस्था गर्ने तथा अव्यवस्थित बसोबासको व्यवस्थापनको सुनिश्चितता गर्ने ।
- सबैका लागि सुरक्षित, सुलभ, सबैको पहुँच पुग्ने र दिगो यातायात प्रणालीको विकास गर्ने । खासगरी असहाय, महिला बच्चा र असक्तहरूलाई उपयुक्त हुने खालका सडकको विस्तार गर्ने र सार्वजनिक यातायातको सुधार गर्ने ।
- विश्व सांस्कृतिक र प्राकृतिक सम्पदाको संरक्षण र हिफाजत गर्न प्रयत्न गर्ने ।
- गरीव र असहाय व्यक्तिहरूलाई दृष्टिगत गरी जलप्रकोप लगायत सबै किसिमका प्रकोपवाट हुने मानवीय वा भौतिक क्षतिको उल्लेखनीय रूपमा कम गर्ने ।
- सन् २०३० सम्ममा शहरहरूमा हावाको र शहरी खाने पानीको गुणस्तरमा सुधार गरी प्रतिव्यक्ति वातावरणीय प्रतिकूल प्रभावको मात्रामा न्यूनीकरण गर्ने ।
- सन् २०३० सम्ममा खासगरी महिला, बृद्धबृद्धा तथा अशक्तहरूका लागि सुरक्षित र पहुँचयोग्य हरियालीयुक्त सार्वजनिक स्थानहरू उपलब्ध गराउने ।

**ख. सहकारी क्षेत्रले गर्नसक्ने क्रियाकलापहरू**

- सहकारीले आवासका लागि ऋण प्रदान गर्दा मापदण्डलाई ध्यानमा राखेर मात्र ऋण प्रदान गर्ने । आवास सहकारीले व्यवस्थित र सुरक्षित आवास निर्माण गरी उचित मूल्यमा सदस्यहरूलाई उपलव्ध गराउन सक्तछन् ।
- शहरको हरियाली, खुल्ला स्थान, धार्मिकस्थल आदिको संरक्षणमा सहकारीले सहभागिता



जुटाउन सक्तछ ।

- साझा यातायातले जस्तै सहकारीले महिला, बृद्धबृद्धा तथा अपाङ्गमैत्री यातायात साधनहरू सञ्चाालन गरेर सुविधा दिन सक्तछ ।

**लक्ष्य १२ः दिगो उत्पादन तथा उपभोग प्रणालीको सुनिश्चितता गर्ने ।**

**क. गन्तव्यहरू (targets)**

- दिगो उत्पादन र उपभोगको १० वर्षे कार्यक्रमको ढाँचा सबै देशमा लागू गर्ने ।
- सन् २०३० सम्ममा प्राकृतिक साधन र श्रोतहरूको उत्तम प्रयोग गर्न दिगो व्यवस्थापन गर्ने ।
- सन् २०३० सम्ममा खुद्रा व्यापारी र उपभोक्ता तहमा खेर जाने गरेका प्रतिव्यक्ति खाद्य नोक्सानीमा आधाले घटाउने र उत्पादन र वितरण प्रणलीमा र बाली थन्क्याउँदा हुने खाद्य नोक्सानीलाई घटाउने ।
- सन् २०३० सम्ममा अन्तर्राष्ट्रिय तहमा स्वीकृत ढाँचाअनुसार रासायनिक  र फोहोर उत्सर्जन गर्ने तथा  पुनप्रयोग गर्ने बारेमा स्वास्थ्य व्यवस्थापन गर्ने तथा तिनीहरूबाट हावा, पानी र माटोमा हुने प्रदुषणबाट मानव स्वास्थ्य र वातावरणमा पर्ने प्रतिकूल प्रभावलाई घटाउने ।
- सन् २०३० सम्ममा रोकथाम, न्यूनीकरण र पुनःप्रयोगबाट फोहोर उत्सर्जनमा उल्लेखनीय रूपमा घटाइने ।
- राष्ट्रिय नीति तथा प्राथमिकताको आधारमा सरकारी दिगो खरिद प्रणाली अवलम्वन गर्ने ।
- सन् २०३० सम्ममा संसारका सबै मानिसहरूका लागि दिगो विकास र प्रकृतिमैत्री जीवन प्रणाली सम्वन्धमा सचेतना र सूचनाहरूको उपलव्धता हुनेछ ।

**ख. सहकारी क्षेत्रले गर्नसक्ने क्रियाकलापहरू**

- बाली उठाउँदा, खाना पकाउँदा र प्रयोग गर्दा हुने खाद्य नोक्सानी र त्यसवाट खाद्य सुरक्षामा पर्ने असरबारे  सचेतना कार्यक्रम सञ्चालन गर्ने तथा खाद्य सञ्चिती र उपयुक्त प्रयोग गर्ने बानी बसाल्न सहकारीले प्रभावकारी रूपमा कार्य गर्न सक्तछ ।
- फोहोरमैला व्यवस्थापन, पुनःप्रयोग र पुनःउत्पादन गरी स्वच्छ वातावरणको निर्माण गर्न सहकारीको महत्वपूर्ण भूमिका रहन्छ । फोहोर मैलावाट खाना पकाउने ग्यास तथा प्राङ्गारिक मल तथा अन्य सामानहरूको उत्पादन गर्ने कार्य पनि सहकारीबाट सम्भव छ ।
- प्राकृतिक श्रोत, खासगरी जंगलको संरक्षण र व्यवस्थापन पनि सहकारीलाई जिम्मा दिएमा अझ बढी प्रभावकारी हुनसक्छ ।

**लक्ष्य १३ः जलवायु परिवर्तन र यसको प्रभावसँग जुझ्नको लागि तत्काल कार्य शुरू गर्ने ।**

**क. गन्तव्यहरू (targets)**

- सबै देशहरूमा जलवायु परिवर्तनको कारणबाट हुने जोखिम र महामारीबाट बच्ने तथा अनुकूलित हुने क्षमताको विकास गर्ने ।
- प्रत्येक देशका  राष्ट्रिय नीति, रणनीति तथा कार्यक्रमहरूमा जलवायु परिवर्तनसम्वन्धी विषय समावेश गर्ने ।
- जलवायु परिवर्तनसँग लड्न, अनुकूलन गर्न, प्रभाव न्यूनीकरण गर्न र पूर्व सूचना दिन मानवीय तथा संस्थागत क्षमताको विकास गर्ने ।

**ख. सहकारी क्षेत्रले गर्नसक्ने क्रियाकलापहरू**

- जलवायु परिवर्तन हुने कारणहरूबारे समुदायमा प्रष्ट पार्ने, वन जंगल, नदी नाला, ताल तलैया आदिको संरक्षण गर्ने तथा जलवायु परिवर्तनसंगै कृषि प्रणालीलाई अनुकूलित बनाउने कार्य पनि सहकारीबाट सम्भव हुन्छ ।

**लक्ष्य १४ः सामुद्रिक श्रोत र साधनहरुलाई दिगो विकासको लागि संरक्षण तथा प्रयोग गर्ने ।**

**क. गन्तव्यहरू (targets)**

- नेपालमा समुद्रको प्रभाव नपर्ने हुनाले यस सम्वन्धमा चर्चा गरिएन ।

**लक्ष्य १५: वातावरणीय जैविक विविधताको क्षति, जंगल फाडानीबाट हुने मरुभूमीकरण र जमीनको क्षयीकरण आादिको रोकथाम, जंगलको पुनप्राप्ति गर्ने तथा भौगालिक तथा वातावरणीय सन्तुलन बनाउने ।**

**क. गन्तव्यहरू (targets)**

- सन् २०२० सम्ममा जंगल, सिमसार, पहाड र सुख्खा जमिन आदिलाई ध्यानमा राख्दै देशभित्र र देशबाहिर सम्मका लागि ताजा खानेपानी प्रयोगको दिगो व्यवस्थापन गर्ने तथा पानीको श्रोतको संरक्षण र पुनःप्राप्तिको सुनिश्चितता गर्ने ।
- सबै किसिमका जंगलहरूको दिगो व्यवस्थापन लागू गर्ने । जंगल फँडानीमा रोक लगाउने, जंगल नष्ट भएका ठाउँहरूमा पुनःप्राप्ति गर्ने तथा विश्वभर वृक्षारोपण गर्ने ।
- सन् २०३० सम्ममा बाढी पहिरो, खँडेरी, आदिबाट मरुभूमीकरण भएको जमिन वा माटोलाई पुनःप्रयोगमा ल्याउने र मरुभूमिकरणसँग जुध्ने उपायहरू अपनाउने ।
- सन् २०३० सम्ममा दिगाो विकासका लागि आवश्यक पर्ने कुराहरू उपलब्ध गराउन हिमाली वा पहाडी जैविक विविधताको संरक्षण गर्ने ।
- सन्र २०२० सम्ममा दुर्लभ जंगली जनावर हरूको संरक्षण गर्न, जैविविक विविधतामा ऱ्हास आउने कार्यहरू रोक्न तथा जनावरहरूको बसोबास नष्ट हुन नदिन तत्काल प्रभावकारी कदम चाल्ने ।
- जैविक साधन र श्रोतहरूको प्रयोगवाट प्राप्त हुने लाभको समानता र न्यायको आधारमा वितरण गर्ने, यस्ता साधनहरू अन्तर्राष्ट्रिय मान्यताअनुसार उपयुक्त तरिकाले उपलव्ध गराउने ।
- खास क्षेत्रमा संरक्षित जनावरहरूको शिकार गर्ने वा बेचबिखनमा रोक लगाउन तत्काल कदम चाल्ने तथा जंगली जनावरहरूबाट उत्पादित वस्तुहरूको माग र पूर्ति सम्वन्धमा प्रष्ट नीति बनाउने ।

**ख. सहकारी क्षेत्रले गर्नसक्ने क्रियाकलापहरू**

- मरुभूमीकरण हुन लागेका जमिनहरू जस्तै, डाँडाहरू, बगर आदिमा सिंचाईको प्रवन्ध मिलाएर वा उपयुक्त ठाउँमा उपयुक्त खाद्यान्न, फलफूल तथा जडिबुटी लगाएर उपयोग गर्न सकिन्छ । सहकारी सदस्यहरूको सहभागितामा वृक्षारोपण गर्ने र संरक्षण गर्ने काम पनि सहकारीबाट सम्भव छ ।
- जंगलको व्यवस्थापनलाई नै सहकारीकरण गरेर जंगलको संरक्षण, विकास र व्यवस्थापन जिम्मा दिनसकेमा जंगलको संरक्षणको साथै गरिव, पिछडिएका र भूमिहीन किसानहरूका लागि रोजगारीको सिर्जना गर्न सकिन्छ ।

**लक्ष्य १६ : दिगो विकासको लागि शान्त र समावेशी समाजको सिर्जना गर्ने, सबैका लागि न्यायमा पहुँच पुऱ्याउने तथा सबै तहमा प्रभावकारी, समावेशी र जिम्मेवार संस्थाहरूको निर्माण गर्ने ।**

**क. गन्तव्यहरू (targets)**

- सबै ठाउँमा सबै किसिमका हिंसाहरूबाट मृत्यु हुनेको संख्यामा उल्लेख्य रूपमा कम गर्ने ।
- बालबालिकाहरूमा हुने सबै किसिमका दुर्व्यवहार, शोषण, बेचविखन, उत्पीडन आदि उल्लेखनीय रूपमा घटाउने ।
- सबैका लागि न्यायको पहुँच हुने गरी नियम कानूनको निर्माण गर्ने ।
- सन् २०३० सम्ममा गैरकानूनी वित्तीय कारोवार र हतियारको अवैध ओसार-पसारमा उल्लेखनीय रूपमा कमी गर्ने र चोरिएका वा लुटिएका सबै सम्पत्ति फिर्ता गराउने र संगठित रूपमा हुने सबैखाले अपराधसँग जुध्ने ।
- सबैखाले भ्रष्टाचार र घुस प्रथाको उल्लेखनीय रूपमा कमी गर्ने ।
- सबै तहमा प्रभावकारी, जिम्मेवार र पारदर्शी संस्थाहरूको विकास गर्ने ।
- सबै तहमा प्रतिक्रियाशील **(responsive)**, समावेशी, सहभागितामूलक र प्रतिनिधिमूलक निर्णय प्रक्रियाको प्रत्याभूत गराउने ।
- शासनसम्वन्धी अन्तर्राष्ट्रिय संस्थाहरूमा

 

विकासोन्मुख देशहरूको प्रतिनिधित्वलाई फराकिलो बनाउने ।

- सन् २०३० सम्ममा सबैलाई जन्मदर्ता लगायतका कानूनी परिचयपत्रहरू उपलब्ध गराउने ।
- आफ्नो राष्ट्रको नियम, कानून र अन्तर्राष्ट्रिय सम्झौताअनुसार सूचनामा सार्वजनिक पहुँचको पक्का गर्ने र मौलिक स्वतन्त्रताको हकको संरक्षण गर्ने ।

**ख. सहकारी क्षेत्रले गर्नसक्ने क्रियाकलापहरू**

- हिंसामा कमी गर्ने, मेलमिलाप गर्ने, सामाजिक सद्भाव कायम गर्ने, सहभागिता र सहयोगको सिर्जना गर्ने, विकृति र विसंगतिविरुद्ध लड्ने, समावेशी संस्कृतिको विकास गर्ने आदि कार्यहरू नितान्त सामाजिक चासोका विषयहरू भएको र सहकारी समाज सुधार र परिवर्तनको वाहक भएको हुनाले यी सबै कार्यहरू सहकारीबाट सम्भव छन् ।

**लक्ष्य१७ : लक्ष्यहरू कार्यान्वयन गर्ने साधनहरूलाई मजवुत वनाउने र दिगो विकासका लागि अन्तर्राष्ट्रिय साझेदारीलाई पुनर्जीवित गर्ने ।**

**क. गन्तव्यहरू (targets)**

- वित्तः आफ्नै आन्तरिक श्रोतवाट वित्त संकलन गर्ने तथा अन्तर्राष्ट्रिय सहयोग जुटाउने कार्यहरू गर्ने ।
- प्रविधिः विश्वव्यापी रूपमा प्रविधिको आदान-प्रदान, हस्तान्तरण, विज्ञान तथा प्रविधि बैंकको निर्माण, विकासोन्मुख देशहरूका लागि उपयुक्त प्रविधिको व्यवस्था मिलाउने ।
- क्षमता अभिबृद्धिः विकासोन्मुख देशहरूमा दिगो विकासका कार्यक्रमहरूको निर्माण गर्न र लागू गर्न ती देशहरूको क्षमता अभिबृद्धि गर्ने ।
- व्यापारः अन्तर्राष्ट्रिय मान्यतामा आधारित, भेदभावरहित, न्यायसंगत, वहुपक्षीय व्यापारको प्रवर्धन, विकासोन्मुख देशहरूको निर्यात प्रवर्धन, विकासोन्मुख देशहरूको वस्तुमा भन्सार नलगाउने वा कोटा तोक्ने व्यवस्था मिलाउने ।

> **नेपालको सहकारी क्षेत्र असमावेशी, असन्तुलित र अव्यवस्थित रूपमा अगाडि बढिरहेको अवस्थामा यसलाई नै दिगो, भरपर्दो र व्यवस्थित बनाउनु पहिलो आवश्यकता देखिन्छ ।**

**ख. सहकारी क्षेत्रले गर्नसक्ने क्रियाकलापहरू**

- यस लक्ष्यका लागि सहकारीहरूले स्थानीय तहमा खास योगदान गर्नसक्ने सम्भावना नभए पनि सहकारीका अन्तर्राष्ट्रिय सञ्जालहरू **ICA** र **WOCCU** मार्फत वित्त, प्रविधि र व्यापारको क्षेत्रमा अन्तर्राष्ट्रिय साझेदारीमा प्रभावकारी भूमिका खेल्न सक्तछन् ।
- नेपालको सहकारी क्षेत्र असमावेशी, असन्तुलित र अव्यवस्थित रूपमा अगाडि बढिरहेको अवस्थामा यसलाई नै दिगो, भरपर्दो र व्यवस्थित बनाउनु पहिलो आवश्यकता देखिन्छ । जबसम्म सहकारी अभियान दूरदृष्टिका साथै कार्यक्रम बनाएर अगाडि बढ्दैन तबसम्म संयुक्त राष्ट्रसंघले विश्व मानव कल्याणका लागि अगाडि सारेका लक्ष्यहरू पूरा गर्ने कार्यमा योगदान गर्न सम्भव हुँदैन । तसर्थ हाम्रो पहिलो कर्तव्य भनेको देशमा तन्दुरुस्त सहकारी प्रणालीको विकास गरेर १५ वर्षभित्रमा यी लक्ष्यहरू पूरा गर्न योगदान गर्न सकेमा दिगो विकास लक्ष्यको साथसाथै दिगो सहकारी प्रणालीको पनि विकास हुनेछ । यस अभियानलाई अगाडि बढाउन सहकारीका केन्द्रीय संघ र राष्ट्रिय संघहरूले तत्काल कार्यक्रम बनाएर सम्पूर्ण अभियानलाई परिचालन गर्नु आवश्यक देखिन्छ ।

जय सहकारी ।



# जनसचेतनलाई नजिकबाट हेर्दा...

**शिवजी सापकोटा**
प्रमुख कार्यकारी अधिकृत, नेफ्स्कून

**१. सहकारी यात्रामा नेपाल**

विश्वका अन्य मुलुकहरूमा झैं समुदायको आर्थिक, सामाजिक र साँस्कृतिक विकासमा सामूहिक जिम्मेवारी र दायित्व वहन गर्ने गरी २०४८ को सहकारी ऐनको अधीनमा रही दर्ता हुने क्रम, जनलहरलाई पछ्याउँदै नेपालमा थुप्रै सहकारीहरू संगठित भए । यसरी वैधानिक जनमुखी सहकारी दर्ताको अधिकार प्राप्त गरेको २८ वर्षभित्रमा करिब ३४,००० सहकारीहरू दर्ता भए, करिब ६० लाख सदस्यहरू यसमा आवद्ध भई सहकारिताको माध्यमबाट आपसी सहयोगका क्रियाकलापहरू गर्दै आइरहेका छन् ।

विश्व परिवेशमा सिर्जित र अभ्याससिद्ध सहकारीताको पद्धतिलाई नेपालले आत्मसात् गरी देशका कुनाकुनासम्म यसको प्रवर्धन गर्ने अर्थात सबैमा सहकारीको पहुँच र सहभागिता नै प्रमुख मुद्धाको रूपमा करिब पन्ध्र वर्ष रह्यो । यो अवधिमा सहकारीका बारेमा शिक्षा शिविर, जानकारी, सचेतना, जागरण र सहभागीताको अवसर प्रदान गरी सेवा लिने दिने कार्य गरी Inform, involve and empower को अभ्यास गरिएको पाइन्छ ।

**२. सहकारी अभियानमा जनसचेतन**

सहकारीता, आपसी सहयोगमार्फत समुदायका सबै तह र तप्काका व्यक्तिहरूको साझा थलो सहकारी हुन सक्छ र यसैले समुदायको मुहार फेर्न सक्छ भन्ने मर्मका साथ २०५०/५१ मा दोलखाको तत्कालीन काब्रे गा.वि.स.मा ३४ जनाबाट शुरुवात गरिएको जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि.ले देशको केन्द्रीय सञ्जाल (नेफ्स्कून) मा आवद्ध रही प्रवर्धन, संस्थागत विकास, स्तरीकरण र प्रविधि उपयोग/हस्तान्तरणको माध्यमबाट अनुशासित र मर्यादित सहकारीको संस्कृतिबारे जानकार हुँदै आएको छ ।

शुरुका दिनहरू देखि नेफ्स्कूनको प्रत्यक्ष मार्गनिर्देशनमा प्रवर्धन तह- संस्थाको विनियम, नीतिहरू निर्माण र सदस्यता अभिवृद्धिको क्षेत्र, संस्थागत विकास तह- आवश्यक अनिवार्य नीतिहरू, पर्ल्स अनुगमन प्रणालीमार्फत सहकारीको वित्तीय एवम् आत्मनिर्भरता/दिगोपना परीक्षण, सुशासनमार्फत भूमिका र जिम्मेवारी विषयमा छलफल र वहस, सहकारी एवम् लेखा व्यवस्थापनमार्फत दैनिक सञ्चालनमा चुस्त एवम् दुरुस्तता कायम, स्तरीकरण तह : पर्ल्स अनुगमन, अन्तर्राष्ट्रिय (एक्सेस) मापदण्डहरूको निर्माण, कार्यान्वयन, परीक्षण र स्तरीकरणको फड्को मारी आजका दिनसम्म ९० करोड बढीको सम्पत्तिसहित एशियली स्तरमा उत्कृष्ट उपलब्धि हासिल गरेको छ ।

नेफ्स्कूनले सहकारी, वित्तीय साक्षरता, वित्तीय व्यवस्थापन र व्याप्त गरिबी न्यूनीकरणका लागि गरेको जागरण अभियान, संस्थागत विकास, व्यावसायिक परिकल्पना र उपलब्धिको चरणमा सामेल हुँदै अब जनसचेतन बचत तथा ऋण सहकारी संस्था आफ्नो सुरक्षित वित्तीय संरचना निर्माण, सदस्यलाई उपलब्ध गराइने सेवाको स्तरबृद्धि, संस्थाको आन्तरिक क्रियाकलापको प्रभावकारिता र उपलब्ध मानव संशाधनको ज्ञान तथा सिकाइमा निखार ल्याउन वि.सं २०६५ मा एक्सेस ब्राण्डमा सहभागी भई २०६९ मा ब्रोञ्ज र २०७३ देखि सिल्भर ब्राण्ड प्राप्त गरी एशियाली बचत तथा ऋण सहकारी अभियानमा देशको नाम अग्रपंक्तिमा ल्याउन महत्वपूर्ण योगदान गरेको छ ।

बचत तथा ऋण सहकारीको विभिन्न समयमा भएका विकास र परिवर्तनको उपलब्धिलाई संस्थागत गर्दै पछिल्लो पटक एशियाका साकोस (बचत तथा ऋण सहकारी) हरूलाई लक्षित गरी सिफारिस गरिएको मोडेलसहितको एकीकृत प्रविधि उपयोगको तहः क्यानडा, अमेरिका र कोरियामा अभ्यास गरिएका आधुनिक नवप्रवर्तनहरूको हस्तान्तरण **साकोस यूनिफिकेशन मोडेल**ले देशको समग्र साकोस अभियानलाई अझ बढी मर्यादित, अनुशासित, सुरक्षित र जिम्मेवार बनाउने लक्ष्य लिएकोले दोलखा जिल्लाबाट यसको नमूना अभ्यास गरी नेफ्स्कूनले आफ्ना सम्पूर्ण कार्यन्वयनको संयन्त्र परिचालन गरेको छ ।



**३. साकोस यूनिफिकेशन**

विश्वका सफल बचत सहकारी अभ्यासकर्ता मुलुकहरूमा अवलम्वन गरिएको यस मोडेलले केन्द्रीकृत नीतिगत सर्वोच्चता, कार्यगत स्वायत्तताको आधारमा केन्द्रले तयार गरेको नीति एवम् मार्गदर्शनहरूको पालना गरी आफ्नो संस्थालाई एक सुरक्षित र कुनै निकायबाट निर्देशित एवम् संरक्षित वित्तीय सहकारीको रूपमा पहिचान दिलाउँछ । यस मोडेलमा केन्द्रीय संघका सदस्य संस्थाहरू सबै केन्द्रको नेटवर्कमा सामेल हुन्छन् र केन्द्रले जारी गरेको समयानुकूल नीति, कार्यविधि, वस्तु विविधीकरण एवम् मार्गनिर्देशनहरूलाई स्वीकार गर्दछन् । विशेष गरी सुशासनका नीतिहरू, लेखा अभिलेख, व्यवस्थापकीय क्षमता विकास, प्रविधि प्रयोगमा एकरूपता र वस्तु तथा सेवामा केन्द्रीय संघको नीतिगत सर्वोच्चता रहन्छ भने संस्थाले यसलाई आफ्ना सदस्यहरू सामु लैजाने तौरतरिका एवम् प्रजातान्त्रिक तवरले नेतृत्व चयन र सञ्चालनमा स्वायत्तता रहन्छ । यस यूनिफिकेशन मोडलमा साकोस अभियानको ऐक्यवद्धता प्रदर्शनका लागि केन्द्रीय संघको पहिचान संकेत प्रयोग गर्नुपर्ने हुन्छ र अनिवार्य रूपमा संघको अनुगमनमा रहनुपर्ने साथै निश्चित अवधिमा संघले तोके बमोजिमको ढाँचामा व्यवस्थापन, पहुँच र वित्तीय प्रतिवेदन पेश गर्नुपर्ने हुन्छ ।

यसरी केन्द्रले तयार गरेको प्रविधिको उपयोगमार्फत एकै सञ्जालमा सदस्य साकोसहरू आइसकेपछि अभियानको पहुँच र क्षमता केन्द्रीय संघमा जानकारी हुन्छ र आफ्नो सञ्जालमा परिचालित मानवश्रोत, व्यक्तिगत सदस्यता, पूँजीको अवस्था र आर्थिक विकासमा साकोस क्षेत्रले पु¥याएको योगदानलाई मापन गर्न सकिन्छ । यसका अलवा यसको कार्यगत तहमा तत्काल जानकारीहरू केन्द्रमा पुग्ने भएकाले संस्थाको वित्तीय एवम् व्यवस्थापकीय जोखिमको स्थितिप्रति जानकार हुने र तत्काल सम्बोधन गरी निराकरणमा सहयोग पुग्नेछ जसले गर्दा वित्तीय क्षेत्रमा कार्य गर्ने साकोसहरू सुरक्षित हुनेछन् र समुदायमा साकोसको छवि उच्च हुनेछ ।

**४. साकोस यूनिफिकेशनका चार पक्षहरू**

साकोस यूनिफिकेशन मोडेलमा निम्न विषयहरूमा पहुँच, आदान प्रदान र एकरूपता कायम हुन्छन्:

१) **श्रोतहरूमा पहुँच र एकरूपता:** साकोस अभियानले विकास गरेको प्रविधिहरू, तालिम, शिक्षाका सामाग्रीहरू, तरलता व्यवस्थापनका सेवाहरू, वित्तीय सेवालाई सरल बनाउने सफ्टवेयर, एटिएम एवम् साकोसका सदस्यहरूलाई लक्षित गरी सञ्चालन गरिने एकिकृत बीमाका सुविधाहरूलाई केन्द्रमार्फत सदस्य साकोसहरूले उपयोग गर्न सक्नेछन् ।

२) **स्तरीय कार्य सञ्चालन:** साकोसको पहिचानसहित समुदायमा बेग्लै छवि कायम गर्न हरेक साकोसमा स्तरीय नीति, कार्यविधि, लेखा, प्रविधि, सुरक्षित लगानी र लोगो तथा प्रतिनिधित्वमा केन्द्रले एकरूपता कायम गर्नेछ ।

३) **करारीय ऐक्यवद्धता:** साकोसहरूले केन्द्रको आवद्धतालाई करारीय ऐक्यवद्धताको रूपमा लिनुपर्नेछ जसमा केन्द्रले लागू गरेका नीति एवम् स्तर कायम गर्न सबै सदस्य साकोसहरू मञ्जुर हुनुपर्नेछ । जसमा केन्द्रका वस्तु तथा सेवाहरू एवम् स्थिरीकरण कोषमा अनिवार्य आवद्धता जनाउनुपर्नेछ ।

४) **सुशासन एवम् स्वनियमन कायम:** केन्द्रको नीति एवम मार्गनिर्देशन बमोजिम स्वनियमनमा रहने, अनिवार्य प्रतिवेदन पेश गर्ने, तोकिएको ढाँचामा लेखा अभिलेख राख्ने र साकोसमा प्रजातान्त्रिक अभ्यासको प्रत्याभूति गर्नुका साथै सदैव जोखिम सुपरिवेक्षण गर्ने गराउने व्यवस्था मिलाउनुपर्नेछ ।

**अन्त्यमा,**

यसरी साकोस यूनिफिकेशनले समुदायका व्यक्तिहरूको लगानी एवम् वचतलाई सुरक्षित गर्दै साकोस अभियानले समग्र राष्ट्रको आर्थिक समुन्नतिमा विशेष टेवा पु¥याउने कुरामा नेपाल सरकार, सम्बन्धित निकायहरू एवम् अभियान सुनिश्चित हुने अवस्थाको सिर्जना गर्ने भएकाले यसलाई दोलखा जिल्लाका बचत तथा ऋण सहकारीहरूले यस कार्यमा एकत्रित गराउन जनसचेतन साकोसले नेतृत्व लिने विषयमा विस्वस्त रहेका छौं ।



# शैक्षिक विकासमा सहकारी अभियान

**शङ्करलाल श्रेष्ठ**
**प्रधानाध्यापक, कुटीडाँडा मावि मकैबारी**

नेपालको सामाजिक-आर्थिक-शैक्षिक विकासमा सहकारी अभियानले युगान्तकारी परिवर्तन गर्नुको साथै शैक्षिक विकासमा पनि दर्विलो इँटा थपेको छ । साहुको ऋणको बोझले थिचिएर कहिल्यै आर्थिक विकास गर्न नसकेको नेपालीको सामाजिक-आर्थिक अवस्थाबाट फड्को मार्नमा सहकारी आन्दोलनले चमत्कारी विकास गरायो । यद्यपि सहकारीमा वास्तविक पहुँच भने तल्लो तह र सारै विपन्न वर्गमा भने पुग्न अझै बाँकी भएको पाइन्छ । तर पनि शिक्षाको विकासमा भने यसले उल्लेख्य प्रगति गर्नमा नितान्त सहयोग पुऱ्याएको छ ।

प्रायः नेपालीहरूको आय स्तर न्यून भएका कारण दैनन्दिन गुजारामा धौ- धौ को अवस्था जगजाहेर छ । यस्तो विषम परिस्थितिमा छोराछोरीहरूलाई विद्यालय पठाउनु, शहर पठाउनु, उच्च शिक्षा दिलाउनु, प्राविधिक शिक्षा पढाउनु र अध्ययनका लागि विदेश पठाउनु त एकादेशको कथामात्र हुने गर्थ्यो । दैनिक गुजारामा नै कठिनाइ भएको परिवेशमा छोराछोरीको पढाइ त गौण हुनु स्वाभाविक पनि हो । तर गाउँ गाउँमा जब सहकारी आन्दोलन अभियानको रूपमा फैलियो, यसको प्रभाव र महत्त्व शिक्षा क्षेत्रमा टड्कारो रूपमा देखिन थाल्यो । परिणामस्वरूप सहकारीको सहयोगमा धेरै आमाबुबाहरूले आफ्ना छोराछोरीहरूलाई शिक्षाको उज्यालो घाम तपाउन सफल हुनुभयो अनि साक्षर बनाउने; उच्च शिक्षाको अवसर दिलाउने; प्राविधिक एवं व्यावसायिक शिक्षा दिलाउने; सक्षम र सफल नागरिक उत्पादन गर्नमा सुअवसर प्राप्त भएको छ । सहकारीको ऋण सुविधाका कारणबाट मात्र धेरै विद्यार्थीहरूले चाहेको शिक्षा प्राप्त गरी सफल व्यवसायी, शिक्षक, कर्मचारी, डाक्टर, इन्जिनियर, व्यवस्थापक, प्राध्यापक, प्रबन्धक, सेना र प्रहरीको उच्च ओहोदामा समेत पुग्न सफल भएका थुप्रै दृष्टान्तहरू छन् । सहकारीको सहयोगका कारण यस्ता मार्ग निर्देश भएको हो । यदि सहकारीबाट यस्तो सहज र सरल तरिकाले ऋण प्रवाह नहुँदो हो त किसान, मजुदर, दलित, सिमान्तकृत र विपन्न समुदायका सन्ततीहरूले यस्ता सुअवसरहरू प्राप्त गर्न असम्भव थियो ।

**"जनसचेतन बचत तथा ऋण सहकारी संस्था काब्रेको छात्रवृत्ति व्यवस्थालाई हेर्ने हो भने संस्थाका सदस्यका छोराछारीहरूमध्ये कक्षा १ देखि कक्षा १० सम्म अध्ययन गर्ने गरिव तथा जेहेन्दार ५० जना विद्यार्थीहरूलाई जनही रु. १००० त्यसैगरी कक्षा ११ र १२ मा अध्ययन गर्ने १५ जना र उच्च तहमा अध्ययन गर्ने ५ जनालाई वार्षिक छात्रवृत्ति निरन्तर उपलब्ध गराउँदै आएको छ। त्यसै गरी एसएलसी परीक्षामा उच्च अङ्क प्राप्त गर्ने वा एस.इ.इ परीक्षामा उच्च जि.पि.ए प्राप्त एक छात्र र एक छात्रालाई जनही रु. ५,००० तथा सम्मानपत्र प्रदान गर्ने नीतिगत व्यवस्था रहेको छ।**

त्यसैगरी सहकारीले व्यक्तित्व विकासमा पनि त्यतिकै सघाउ गरेको छ । कतिपय साथीहरूको शैक्षिक योग्यता बृद्धिका लागि सहकारीले अहम भूमिका खेलेको छ । यदि सहकारीले सहज र सस्तो ऋण प्रवाह नगरेको हुँदो हो त दोलखा जिल्लाको सन्दर्भमा कयौं साथीहरूले आफ्नो शैक्षिक योग्यता बृद्धि गर्नमा प्रयास नै गर्नुहुने थिएन । दसजोड दुई वा स्नातक र स्नातकोत्तर प्राप्त गर्ने प्रायः साथीहरूको प्रमाण पत्रमा सहकारीको अंश परेकै छ । जसका लागि दोलखा जिल्लास्थित शिक्षक कल्याण बचत तथा ऋण सहकारी साक्षी छ, जसबाट प्राप्त सहयोगका कारण सयौं शिक्षक साथीहरूले माथिल्लो शैक्षिक योग्यता



प्राप्तिमा सफलता प्राप्त गर्नु भएको तथ्य हामी सबैसामु छ ।

शैक्षिक विकासमा सहकारीले सहयोग गरेको अर्को महत्त्वपूर्ण पक्ष भनेको छात्रवृत्ति हो । विपन्न, दलित, जनजाति, जेहेन्दार, बालिका, एसएलसी/एस.इ.इ, स्नातक तहका परीक्षामा उत्कृष्ट अङ्क प्राप्त गर्ने विद्यार्थीहरूलाई छात्रवृत्तिको व्यवस्थाले पनि विद्यार्थीहरूको पढाइमा उर्जा थप्ने काम गरेको छ । पुरस्कार वा सम्मानले मानिसमा सकारात्मक विचारको अभिवृत्ति गराउनुको साथै काममा थप मनोवल प्रदान गर्दछ । छात्रवृत्तिको व्यवस्थाका कारण कतिपय बालबालिकाहरूको मनोवलमा र अध्ययनमा टेवा पुऱ्याएको छ । छात्रवृत्तिको रमकले आफूलाई आवश्यक पर्ने किताव, कापी, पोशाक, ट्युसन शुल्क, मासिक शुल्क, स्टेशनरीलगायतका सामग्री खरिद गरी न्यूनतम आवश्यक्ता परिपूर्ति गर्नमा सहयोग पुगेको छ । उदाहरणका लागि जनसचेतन बचत तथा ऋण सहकारी संस्था काभ्रेको छात्रवृत्ति व्यवस्थालाई हेर्ने हो भने संस्थाका सदस्यका छोराछारीहरूमध्ये कक्षा १ देखि कक्षा १० सम्म अध्ययन गर्ने गरिव तथा जेहेन्दार ५० जना विद्यार्थीहरूलाई जनही रु. १००० त्यसैगरी कक्षा ११ र १२ मा अध्ययन गर्ने १५ जना र उच्च तहमा अध्ययन गर्ने ५ जनालाई वार्षिक छात्रवृत्ति निरन्तर उपलब्ध गराउँदै आएको छ । त्यसै गरी एसएलसी परीक्षामा उच्च अङ्क प्राप्त गर्ने वा एस.इ.इ परीक्षामा उच्च जि.पि.ए प्राप्त एक छात्र र एक छात्रालाई जनही रु. ५,००० तथा सम्मानपत्र प्रदान गर्ने नीतिगत व्यवस्था रहेको छ । प्रत्येक वर्षको यो सुविधाले उनीहरूमा प्रतिस्पर्धाको भावना जागृत हुन गई शैक्षिक सुधारमा अभिवृद्धि ल्याएको  पाइन्छ ।

छात्रवृत्तिले एकातर्फ भौतिक सामग्री व्यवस्थापनमा सहयोग छ भने अर्कातर्फ मानसिक रूपले सिकाइमा उर्जा थप्नमा सहयोग गरेको छ । यसका कारण प्रत्यक्ष वा परोक्ष शैक्षिक विकासमा सहकारीको सहयोगको प्रशंसा गर्नैपर्दछ ।

प्रायः सहकारीले विद्यालय तहमा अतिरिक्त क्रियाकलापको आयोजना गरेर पनि शैक्षिक विकासमा सकारात्मक सन्देश दिएको पाइन्छ । विद्यालयगत र अन्तर विद्यालयमा प्रतिस्पर्धात्मक कार्यक्रम आयोजना गरी सीप र क्षमताको विकासमा संलग्न भएको देखिन्छ । जस्तैः हाजिरीजवाफ , वक्तृत्वकला, Spelling Contest, भलिवल, फुटवल, दौड, सांस्कृतिक कार्यक्रम, निबन्ध लेखन, कविता लेखन आदिजस्ता प्रतियोगितात्मक रचनात्मक कार्यक्रमको आयोजनद्वारा विद्यार्थीहरूको अन्तरनिहित प्रतिभाको उजागर गर्नमा समेत ठुलो भूमिका रहेको छ ।

सहकारी अभियानले दोलखा जिल्लाका केही विद्यालयहरूको तहन्नोति समेत भएको छ । कक्षा ११ र १२ सञ्चालनका लागि तत्कालिन उच्च माध्यमिक शिक्षा परिषद्मा एकमुष्ठ आठ लाख बैंक व्यालेन्स गर्नुपर्ने वाध्यात्मक कानुनी प्रावधान गरिएको छ । यो नियम कतिपय विद्यलायका लागि फलामको चिउरासरह भएको थियो र छ । कतिपय विद्यालयका लागि आठ लाख भनेको सामान्य कुरा थिएन र जसका कारण सम्बन्धन पाउन नसकिरहेको स्थिति थियो । यस्तो अवस्थामा सहकारीले सजिलै विद्यालयका लागि ऋण प्रवाह गरी उच्च माध्यमिक शिक्षा परिषद्बाट सम्बन्धन पाउन सफल भएर कक्षा ११ र १२ सञ्चालन भएका थुप्रै दृष्टान्तहरू छन् ।

सहकारी अभियानले केही शिक्षकहरूलाई नेतृत्व विकास समेत प्रदान गरेको छ । आर्थिक मितव्ययिता, सामाजिक अनुशासन, चेतना अभिवृद्धि लगायतका विषयमा विशेष ज्ञान प्रदान गरेको छ । जसको प्रभाव प्रत्यक्षरूपमा शिक्षा क्षेत्रमा प्रतिविम्बित छ । गाउँ गाउँमा सहकारी आन्दोलन र त्यसको नेतृत्व शिक्षकहरूले गर्नुले पनि समाजमा सकारात्मक प्रभाव पार्नुको साथै सामाजिक सम्बन्धमा सुमधुरता र सामिप्यता कायम गर्नमा समेत सहकारीको अहम् भूमिका छ । सामाजिक सुसम्बन्धले पनि शिक्षामा सुधार ल्याउनमा सहयोग पुगेको हुन्छ र यसमा सहकारी अभियन्ताले रक्त सञ्चारको काम गरेका छन् ।

सहकारीको अर्को सकारात्मक पक्ष बाल सहकारी अध्ययन केन्द्रको स्थापना हो, जुन कार्य जनसचेतन साकोसले आफ्नो कार्यक्षेत्रभित्रका केही विद्यालयहरूमा शुरुवात नै गर्ने गरेको पाइन्छ । बालबालिकाहरूलाई सानै उमेरदेखि नै बचत गर्ने बानीको विकास गर्ने, संस्थामा आवद्ध हुने, सङ्गठनको मूल्य र मान्यताको सीप सिक्ने, सङ्गठित हुने पद्धतिको बानी बसाउने र भविष्यमा अध्ययनका लागि समेत आर्थिक सहयोग पुग्ने उद्देश्यका साथ उक्त अभियान नै चलाएको पाइन्छ । यसले पनि सहकारी अभियानले शिक्षाको विकासमा पृष्ठभूमिगत सघाउ पुगेको देखिन्छ ।

कतिपय सहकारीहरूले विद्यालयको शैक्षिक उन्नयनका लागि भौतिक सामग्रीसमेत उपलब्ध गराएका छन् । शिक्षाको विकासले मात्र समाजमा परिवर्तन आउँछ र सामाजिक रूपान्तरणद्वारा मुलुकको गतिलाई रूपान्तरण

गर्नका लागि यस्ता गतिविधिहरू अपानाइएको पाइन्छ। जस्तैः जनसचेतन साकोसले नै कालिका माध्यमिक विद्यालय ठुलोपातललाई २ थान कम्प्युटर उपलब्ध गराएको थियो भने हेटौँडाको सहकारीले त विद्यालय नै सञ्चालन गरेको जानकारी पाइन्छ । सहकारीको माध्यमबाट विद्यालय नै सञ्चालन गरी आफ्ना सदस्यका छोराछोरीहरूलाई गुणस्तरीय शिक्षा प्रदान गर्नु सारै राम्रो कुरा हो ।

वास्तवमा हाल सञ्चालनमा आएका प्रायः सामुदायिक विद्यालयप्रति समुदायको विश्वास घट्दै गएको र अभिभावकहरूमा अङ्ग्रेजी मोह बढ्दै गएको पाइन्छ, जसका लागि सरकारले सामुदायिक विद्यालयका लागि उपयुक्त वातावरण तयार पार्न सकिरहेको छैन। संस्थागत विद्यालयले पनि विद्यार्थीहरूको स्वप्रतिभा उजागर गराउन नसक्नुको अतिरिक्त एकोहोरो शिक्षण गरेको जस्ता गुनासाहरू विद्यमान समाजमा असरल्ल छन् भने अर्कातर्फ आर्थिक रूपले पनि सामान्य अभिभावकको पहुँचभन्दा टाढाको विषय बनेको छ संस्थागत विद्यालयहरू । यस्तो प्रतिकुल परिस्थितिमा अबका दिनमा सहकारी अभियन्ताहरूले समाजको शैक्षिक असन्तुलन र आवश्यकतालाई गम्भिरताका साथ सोच्न जरुरी देखिन्छ । राज्य र स्थानीय तहले पनि शिक्षाको वर्तमान अवस्था र भावी रणनीतिका बारेमा ध्यान दिन आवश्यक भएको छ । अब सहकारीको माध्यमद्वारा सबै अभिभावकहरूलाई अपनत्वको बोध गराउने, सस्तो र सुलभ प्रकृतिको, समुदायको चाहनालाई प्रतिबिम्बित हुने, उनीहरूले नै सञ्चालन, व्यवस्थापन र नियमन गर्ने गरी शिक्षाको अवधारणालाई स्थापित गर्ने योजना बनायो भने सायद फलिभूत होला भन्ने लाग्दछ । आवश्यक्ताका आधारमा विद्यालय स्थापना, स्थानीय पाठ्यक्रम, स्थानीय जनशक्ति व्यवस्थापन, स्थानीय अनुगमन, नियमन गरी उनीहरूकै प्रत्यक्ष निगरानीमा आफ्ना छोराछोरीहरूलाई कुन प्रकारको र कस्तो शिक्षा दिने भन्ने जिम्मेवारी दियो भने शिक्षामा अपनत्वको भावका साथ परिवर्तन आउने निश्चित छ । स्थानीय भावनाको कदर गर्दै केन्द्रीय सरकारले निश्चित नीति बनाउने र निश्चित विषयहरू सहकारी अभियन्ताहरूलाई नै जिम्मेवार बनाउने योजनाका साथ अगाडि बढ्न सकेको खण्डमा समग्र मुलुकले शैक्षिक विकासमा गति लिन सक्ला भन्ने अपेक्षा गर्न सकिन्छ ।

अन्त्यमा, नेपालको शैक्षिक विकासमा सहकारी आन्दोलनले राम्रो प्रभाव पारेको कुरा निश्चित छ, जुन कुरा नेपालका सहकारीहरूको अध्ययनले पुष्टि समेत गरेको छ । सहकारीको अभियानले समाजको सामाजिक-आर्थिक-शैक्षिक विकासमा ल्याएको परिवर्तन नै नेपाली समाजको मुख्य उपलब्धि हुन् ।



# स्थानीय तहमा सहकारी सञ्चालन तथा व्यवस्थापनः एक चिनारी



**रविचन्द्र आचार्य**
उपाध्यक्ष, वैत्यश्वर गाउँपालिका

मेला र भारी पर्मबाट एक आपसमा सहयोग आदानप्रदान गर्दै आपसी आवश्यक्ता र समस्या पूरा गर्नका लागि शुरुवाती समयमा यसको पृष्ठभूमिकाल रहे पनि आजको युगमा सहकारी संस्था नितान्त आर्थिक कारोवार गर्ने वित्तीय संस्थाको रूपमा परिचित छ । विशेष गरी ग्रामीण समाजमा पूँजी संकलन र संकलित पूँजीलाई व्यवस्थित लगानी गरी समाजका गरीब तथा विपन्न वर्गको आर्थिक हैसियत वृद्धि गर्नु संस्थाको मुख्य उद्देश्य मानिन्छ। हुन त शहरी क्षेत्रमा पनि सहकारीता नफस्टाएको होइन तर देशका विकट पहाडी भेगदेखि दूरदराजका क्षेत्रहरूमा सहकारी स्थानीय व्यक्तिहरूको आर्थिक समस्या टार्ने महत्वपूर्ण माध्यम रहेको तथ्य जगजाहेर छ ।

नेपालको संविधान २०७२ अनुसार देश संघीय राज्यमा परिणत भएको छ । केन्द्रिकृत शासन व्यवस्थाबाट जनअपेक्षा अनुरूप काम हुन नसकेपछि जनताको घरदैलोमै सेवा पुऱ्याउन यो व्यवस्था गरिएको हो तर मलाई के लाग्दछ भने राज्यको सोचाइभन्दा सहकारीताको विकासले आजभन्दा धेरै अगाडिदेखि संघीयताको मर्मअनुसार आर्थिक तथा वित्तीय प्रणली सुचारु गर्दै आइरहेका छन् । किनभने शहरी क्षेत्रमा बैंकहरूले सो सेवा प्रवाह गरिरहँदा ग्रामीण क्षेत्रमा बैंकले दिने वित्तीय सेवा सहकारी संस्थाले दिएको छ ।

नेपालको आर्थिक विकासका लागि राज्यले अङ्गीकार गरेको तीन खम्वे नीतिमा एक महत्वपूर्ण खम्वा सहकारी हो । सबैले स्वीकार गर्नैपर्दछ कि नेपालको प्रत्येक ग्रामीण बस्तीलाई आर्थिक हैसियतमा सम्पन्नता दिलाउने सहकारी मात्र हो । राज्यको तवरबाट जतिसुकै प्रयास भए पनि हालसम्म ग्रामीण क्षेत्रमा बैंकहरूको उपस्थिति कमजोर र नगन्य मात्रामा रहेको छ । बचत होस् या ऋण, एकल उद्देश्यीय होस् वा बहुउद्देश्यीय, नेपाल र नेपालीको मुहारमा आर्थिक चहक ल्याउने र म पनि केही गर्नसक्छु भन्ने आँट

> **आजको पुस्तालाई ईमान्दार, कर्मठ र सिर्जनशील बनाउन र उनीहरूको जीवनस्तरमा आमूल परिवर्तन गर्न सहकारीको महत्वपूर्ण भूमिका रहेको छ । यसका लागि राज्यले समेत उपयुक्त वातावरण तयार पारिदिनुपर्दछ।**

दिलाउने संस्था सहकारी नै हो । तसर्थ यसको महत्व अत्यन्त उच्च रहेको कुरा हामी सबैले स्वीकार गर्नैपर्दछ ।

जहाँ अवसर हुन्छ, चुनौति पनि संगै जोडिन्छ। राज्यमा जति सहकारी संथाहरू सञ्चालित छन् ती सबैको अनुहार एकै किसिमको छैन । कोही उदाउन नपाई अस्ताएका छन् भने कोहीले न्यानोपन र वात्सल्यता प्रदान गरिरहेका छन् । आजको पुस्तालाई ईमान्दार, कर्मठ र सिर्जनशील बनाउन र उनीहरूको जीवनस्तरमा आमूल परिवर्तन गर्न सहकारीको महत्वपूर्ण भूमिका रहेको छ । यसका लागि राज्यले समेत उपयुक्त वातावरण तयार पारिदिनुपर्दछ । आज सहकारी संस्थाले स्वरोजगारका थुप्रै अवसरहरू प्रदान गर्दै आएको छ । मानिसको दैनिक जीवनमा सम्पन्नता र खुसी ल्याउन यसले पुऱ्याएको योगदान अनुकरणीय र प्रशसंनीय छ ।

शुरुमा थोरै शेयर सदस्यबाट सञ्चालन गरेका सहकारी संस्थाहरू समयक्रमसंगै विस्तृत र वृहत हुँदै गइरहेका छन् । हजारबाट लाख, लाखबाट करोड र करोडबाट अर्बतिर संस्था लम्किरहँदा यसलाई सम्हालेर जनमत जित्दै अगाडि बढ्नु सहकारीकर्मीहरूका लागि आज थप चुनौति देखिएको छ । कदम अगाडि बढाउने थोरै मात्र विचार पुऱ्याउन सकिएन भने संस्था त दुर्घटित हुन्छ नै, सहकारीताको विश्वास नै घटेर जानसक्छ । यसका लागि

प्रत्येक सहकारीले अल्पकालीन र दीर्घकालीन योजना तयार पारी अगाडि बढ्न सक्नुपर्दछ । साथै आजभन्दा १०/२० वर्ष पछिको संस्थागत नीति तर्जुमा गर्दै अघि बढ्नुपर्दछ ।

हाल राज्यले सहकारीसम्बन्धी केही अधिकार तथा कर्तव्यहरू स्थानीय तहलाई सुम्पिएको छ । देशका सबै नगर तथा गाउँपालिकामा सहकारीसम्वन्धी विषयवस्तुमा जानकारी राख्ने जनप्रतिनिधिहरू निर्वाचित नभएकाहरू पनि हुन सक्दछन् । अधिकार प्राप्त गर्ने तर कर्तव्यबाट विमुख हुने परिपाटीले अन्तरविरोधबाहेक केही प्राप्ति हुँदैन । तसर्थ सबैका भावना र विचारहरू प्रतिविम्वित गर्दै सबल, सक्षम र समुन्नत नेपाल निर्माणमा सहकारी संस्थालाई अगाडि बढाउन हामी सबैको दायित्व एवम् कर्तव्य हुनजान्छ । आफू एक जनप्रतिनिधिसमेत भएको सन्दर्भमा सहकारीसम्बन्धी गाउँपालिकाका केही कार्य क्षेत्रहरू यस प्रकार रहेको व्यहोरा उल्लेख गर्न चाहान्छु:

१. सहकारीसम्वन्धी स्थानीय नीति, कानून निर्माण, कार्यान्वयन एवम् नियमन ।
२. सहकारी संस्थाको दर्ता, अनुमति, नवीकरण, खारेजी र विघटन ।
३. सहकारी बचत तथा ऋण परिचालन, प्रचलित मापदण्ड अनुकूल स्थानीय मापदण्ड निर्धारण र नियमन ।
४. सहकारीसम्वन्धी राष्ट्रिय, केन्द्रिय, विषयगत, प्रादेशिक र स्थानीय संघ, संस्थासंग समन्वय र सहकार्य ।
५. सहकारीसम्वन्धी स्थानीय तथ्याङ्क व्यवस्थापन र अध्ययन अनुसन्धान ।
६. स्थानीय सहकारी क्षेत्रको क्षमता अभिवृद्वि प्रवर्धन, परिचालन र विकास ।
७. स्थानीय सहकारी संस्थाहरूको वर्गीकरण ।

यसरी परिवर्तित समय र सन्दर्भअनुसार हाम्रा दायित्व तथा जिम्मेवारीहरूमा पनि केही परिवर्तन आएको छ । जे भए पनि समाजको विकास र विपन्न वर्गको आर्थिक हैसियतमा अभिवृद्वि गर्नु हामी सबैको मूल उद्देश्य हो भन्ने कुरामा कुनै दुईमत रहँदैन । समयको गति, समाजको अपेक्षा, सहकारीको मर्म र भावना अनुरूपको योजना तथा नीतिका साथ थप परिष्कृत र परिमार्जित ढंगले अगाडि बढ्नु हाम्रो दायित्व हो भन्ने कुरामा मतैक्यता हुनैपर्दछ ।

***जय सहकारी ॥***



# आमसञ्चारको प्राथमिकतामा सहकारी



राजेन्द्र मानन्धर



**मानिसहरू खसी–बोका, कुखुरा, अन्नपात, दूधजन्य पदार्थ बेचेर दैनिकी गुजार्नेतर्फ सोच्थे। तर अहिले त्यही काब्रे र आसपास विचित्रले परिवर्तन भएको छ। जसको केही जस ' जनसचेतन'लाई नै जान्छ।**

गुन्द्रुक, कुखुराको अण्डा, सागपात बेचेको पैसा पोल्टामा राख्ने र पोल्टाबाटै झिकेर खर्च गर्ने कथाबाट शुरु हुन्छ जनसचेतन बचत तथा ऋण सहकारी।

दोलखाको काब्रे गाविस र आसपासका क्षेत्रहरू आर्थिक दृष्टिले स्थिर र निराशाबीच अगाडि बढेको समाज थियो। ठूलठूला कारोबारी गर्ने व्यक्ति भेट्न शीला नै खोज्नुपर्थ्यो। सानातिना काम गर्न परे आर्थिक बन्दोवस्तीका कुनै उपाय नभएर लग्लग् काँप्नुपर्थ्यो। मानिसहरू खसी-बोका, कुखुरा, अन्नपात, दूधजन्य पदार्थ बेचेर दैनिकी गुजार्नेतर्फ सोच्थे। तर अहिले त्यही काब्रे र आसपास विचित्रले परिवर्तन भएको छ। जसको केही जस 'जनसचेतन'लाई नै जान्छ। जुनबारे राष्ट्रिय र जिल्लास्थित सञ्चारमाध्यममा बेलाबेला प्राथमिकताको विषय बनेर काब्रे गाविस आसपासका कथाहरू प्रकाशन प्रशारण भैरहेका हुन्छन्।

नेपाली मिडियामा अर्थ समाचारहरू प्राथमिकतामा राख्न थालिएको करिब दुई दशक जति भएको छ। राज्य नियन्त्रित दैनिक पत्रिका गोरखापत्र र निजी क्षेत्रको कान्तिपुरजस्तामा समेत फाट्टफुट्ट आर्थिक गतिविधिका समाचार भेटिन्थे। छुट्टै पेज दिने चलन पछिमात्रै आयो। अहिले त आर्थिक पत्रिकाहरू नै दैनिक रूपमा होडबाजी गर्दै प्रकाशन भइरहेका छन्। त्यस्तैगरी छलाङ मारेको जनसचेतन सहकारीले शुरुमा मानिसलाई पोल्टाको पैसा बचत गर्न सिकायो। पटक्कै थैलीबाट पैसा झिक्न अप्ठेरो मान्ने मानिसहरूलाई एउटा कुखुरा बिक्री भइहाल्यो भने पनि दौडेर सहकारीमा बचत गर्ने परिपाटी सिकायो। जनसचेतनका यस्तै अद्‌भूत कार्यको अनुकरण गर्दै काब्रेमा सहकारी स्थापना गर्न होडबाजी नै चल्यो। सहकारी सञ्चालनको होडबाजीमा जनसचेतनको भूमिका शीर्षकका समाचारहरू पनि बन्न थाले। त्यसैले जिल्लाको चर्चित सहकारीहरूले आफ्नो नामको शुरुमा ' जन' नै राखे, जुन नाम सबैलाई फलिफाप भएको छ।

नेपालमा सहकारीको उदय र उत्थानको इतिहास त्यति पुरानो होइन। पत्रकारिताको कुरा गर्दा, दुई दशक पहिलेसम्म आर्थिक समाचार पनि हुन्छ र भन्ने नेपाली पत्रकारलाई लाग्थ्यो। दैनिक एक-दुई समाचार कतैकतै मिलाएर कहिले देश त कहिले विदेशी समाचारका लागि छुट्याइएको पेजहरूमा थन्क्याइन्थ्यो। विस्तारै आर्थिक समाचार पनि हुँदो रहेछ भन्ने अवस्था विकास भयो । सहकारीहरू पनि शुरुका दिनमा कुनै महत्वका विषय मानिन्थेन। अहिले त साँच्चिकै सहकारी नै आर्थिक परिवर्तनको मूल बाहक हो कि भन्ने जनमानसमा पर्न थालेको छ। जनसचेतनका कुरा गर्दा संस्थापक यज्ञराज ढुङ्गेलका कथा कान्तिपुर दैनिकजस्ता ठूला सञ्चारमाध्यममा समाचार बने। नामी पत्रिकाहरू र विद्युतीय सञ्चारमाध्यममा उनको अन्तर्वार्ता प्रसारण भएका छन्।

जनसचेतन नाफामूलक सहकारी संस्था हो। व्यक्ति वा सञ्चालकका लागि नाफामूलक भने हैन। नाफा वा घाटा बचतकर्ताले सामूहिक बेहोर्नुपर्छ। सञ्चार उद्यमीको भने मुख्य उद्देश्य आफ्नो उत्पादनहरूबाट बढीभन्दा बढी नाफा कमाउनु हो। पत्रिका बेचेर वा विज्ञापन छापेर सञ्चार उद्यमीको पहिलो शर्त नाफामा जानु हुन्छ। एफएम रेडियो खोल्नु, टेलिभिजन चलाउनु या अनलाइन चलाउनु विजिनेसका लागि गरिएका काम हुन्। सबैलाई थाहा छ, व्यापार शुद्ध समाजसेवाका लागि गरिँदैन। त्यसैले बुझ्न जरुरी के छ भने, व्यापारीले जे बढी बिक्छ पसलमा त्यही राख्छ। सञ्चार उद्यममा पनि उक्त कुरा नै लागू हुने हो। यस्तो कुरा गर्दा पाठक, दर्शक र श्रोतामाझ जे बढी बिक्छ



**घरको छाना चुहियो अब के पैसाले छाउने भन्नेहरू सजिलै ऋण पाएपछि व्यापार गर्ने र मोटरसाइकल मात्र हैन ठूला गाडी किन्ने हैसियतमा पुगेका छन् । ऋण लिँदालिँदा खेत नै जाने भो भन्नेहरू सहकारीबाट पाएको ऋणले कारोबार बढाएर काठमाडौंमा घरजग्गा जोडने हैसियत बनाएका छन् ।**

त्यस्तै सामग्रीलाई प्राथमिकता दिइएको हुन्छ । यस अर्थमा सहकारीका समाचार सञ्चारमाध्यमले छायाँमा पार्‍यो, वा नेगेटिभ (सहकारीविरोधी) समाचारले प्राथमिकता पायो भन्ने सहकारीकर्मीको गुनासो स्वभाविक छ भन्ने लाग्छ । सामुदायिक रेडियोहरू भने गैर नाफामुलक सञ्चारमाध्यम भनिन्छ । तर बाँच्नका लागि भने उसले उद्यमकै शैलीमा आफूलाई प्रस्तुत गरिरहेको पाइन्छ ।

अहिले नेपाली आमसञ्चारमा बढी बिक्ने सामग्री राजनीति नै हो । जतिसुकै राजनीतिप्रति घृणा गर्नेहरू निस्किए पनि यसैका पाठक बढी छन् । सर्भेहरूले देखाएअनुसार राजनीतिक गतिविधिका ठूला, रोचक र जटिल घटनाहरू हुँदा पत्रिकाहरू बढी बिक्छन् । रेडियो बढीले सुन्छन । टेलिभिजन पनि राजनीति गतिविधिको चासो बढेकै बेलामा बढी हेरिन्छ । त्यसैले राजनीतिक गतिविधिका समाचारहरू प्रायः हेडलाइन अर्थात पत्रिकाको अगाडि पन्नामा हुन्छन्, रेडियो र टेलिभिनमा पनि शुरुमै हुन्छन् । ग्रामीण भेगको मानवीय आर्थिक व्यवहारमा आमूल परिवर्तन ल्याउँदै गरेका सहकारीका समाचारले मिडियामा राम्रो स्थान पाइहाल्यो भने पनि सहकारीकर्मीको भाषामा 'ती प्रायः नेगेटिभ खालका बढी हुन्छन्' । जस्तो कि, सहकारीको जोखिमका कुरा, अनियमिताका कुरा, सहकारीमा सञ्चालकबाट यदाकता हुनेगरेका अस्वभाविक गतिविधिका कुरा आदि । पछिल्ला समयमा बचत तथा सहकारीका उत्साहजनक विषय पनि मिडिया प्राथमिकतामा परिरहेका छन् । सहकारीकर्मीहरूका अनुसार सहकारी क्रान्तिले नेपालमा जसरी जनताको अर्थतन्त्रमा चमत्कारी परिवर्तन ल्याइरहेको छ, मिडियाले भने सहकारीका सकारात्मक समाचारलाई उठान गर्न कन्जुस्याइँ गरिरहेको छ ।

जनसचेतनका कुरा गर्दा हिजो घरको ठूलो खसी बेचेर दसैं मान्नेबारे सोच्नेहरू आज सहकारीको ऋण परिचालन गरेर ठूल्ठूला उद्यमी बनेका छन् । घरको छाना चुहियो अब के पैसाले छाउने भन्नेहरू सजिलै ऋण पाएपछि व्यापार गर्ने र मोटरसाइकल मात्र हैन ठूला गाडी किन्ने हैसियतमा पुगेका छन् । ऋण लिँदालिँदा खेत नै जाने भो भन्नेहरू सहकारीबाट पाएको ऋणले कारोबार बढाएर काठमाडौंमा घरजग्गा जोडने हैसियत बनाएका छन् । सहकारीकै ऋण लिएर विदेश गएकाहरूले घरायसी आर्थिक हैसियत माथी उठाएका छन् । यस्ता समाचारहरू मिडियाको प्राथमिकतामा पर्ने नै भए । यस्तै गतिविधिले जनसचेतन अरुभन्दा बढी मिडियाको प्राथमिकतामा पर्दा अन्य सहकारीको गुनासोहरू आउने पनि गरेको छ ।

नेपाली मिडियामा आजसम्म पनि अपराध र विपत् घटनाका सामग्री राम्रोसँग बिक्छन् । जस्तो कि हत्या, बलात्कार, राजनीतिक, सामाजिक, आर्थिक दुराचारको समाचारप्रति मानिसको चाख छ । विपतहरू, तहसनहसका कुराहरू र मनिसका दुःख पीडाहरू पढ्ने, हेर्ने र सुन्ने बिषय हुन्छन् । यौनका मामला पनि कम रुचिकर मान्दैनन हाम्रा पाठक, दर्शक र स्रोताले । मनोरञ्जन अर्थात फिल्मका कुरा, नायक नायिकाका इमोसनल गतिविधिका घटनाले भरिएका सामग्रीको बजारमा राम्रै माग छ । मिडियाले खोज्ने विषयवस्तु अर्कै भए पनि जनसचेतनको समाचार संकलनका अभिलेख हेर्दा चित्त दुःखाउने ठाउँ छैन भन्न सकिन्छ ।

मानवीय रुचिका विषयहरू मिडियाले प्राथमिकतामा पारेका हुन्छन् । सर्भेहरूका अनुसार अहिले उक्त विषय नै बढी रुचाएको पाइन्छ । पछिल्लो समयमा समावेशी मुद्दाहरू बढी उठ्ने गरेकाले जाति, धर्म र समुदायका विषय पनि मिडियाले प्राथमिकतामा राखेको पाइन्छ । तर त्यो बिषय कतिपय अवस्थामा जवरजस्त जस्तो पनि देखिन्छ । यस अर्थमा, सहकारीका समाचारहरू दिनहुँ जस्तो प्राथमिकतामा परिरहेका पाइन्छ । सहकारीका गतिविधि यति धेरै हुन थाले कि मिडियाले चाहेर नचाहेर महत्व दिइरहन बाध्य भएको देखिन्छ । यो सन्दर्भमा जनसचेतन मिडिया इस्युमा अग्रणी बनेको संग्रहित दस्तावेजले खुलाउँछ ।

नेपालमा पनि एकथरी वर्गका मानिसको दिनाङ्क आर्थिक उतारचढावमा निर्भर रहने भएकाले बिजिनेस न्यूज पनि कम प्राथमिकतामा पर्दैनन् । शेयर कारोबार, बैंकिङ कारोबार, उत्पादन, मूल्यको उतारचढाव आदिमा मानव जीवन निर्भर भएकाले आर्थिक समाचार हेरेर मानिसले दैनिक कारोबार सूची बनाउँछन् । उद्यमी, व्यापारी, सेयर दलाल र बैंकिङ क्षेत्रका लगानीकर्तालाई भने अर्थ समाचार

 

पलपलमा थाहा पाउनुपर्ने विषय बनिरहेको छ । सहकारी पनि सामुदायिक वित्तीय कारोबारीमा नामी बन्दै गएकाले यस सम्बन्धी समाचार खोज्नेहरू पनि धेरै भैसकेको हुनुपर्छ भन्ने लाग्छ, जसको कुनै अध्ययन भने भएको थाहा छैन ।

समाचार सामग्रीको दृष्टिले हेर्दा दोलखाको जेठो र अहिलेको सहकारी माहौलमा चर्चित जनसचेतन बचत तथा ऋण सहकारीले समाचार कक्षसम्म पहुँच राखेको पाइन्छ। यसका समाचारले राष्ट्रिय मिडियामा राम्रै स्थान पाएको छ। यसरी स्थान पाउनुमा उक्त सहकारीले गरेको गतिविधि नै प्रमुख कारण हुन् । यसले पाएको सफलता र योगदानको कदर मिडियाले गरेका हुन् । तथापि, भविष्यमा करिब २२ हजार बचतकर्ताको बचत जोखिम हुने अवस्था रह्यो भने उक्त सहकारीले नकारात्मक समाचार पनि थेग्नुपर्ने हुनजान्छ । जनताका बचतमा मनपरी गर्ने अधिकार कसैलाई छैन । पछिल्लो काभ्रेको एक सहकारीभित्रको घटनाले झण्डैझण्डै सहकारीको विश्वासनीयता समाप्त हुने अवस्थामा पुगेको थियो । तर, उक्त घटनामा बचतकर्ताको जोखिमबाट सहकारी जोगिन सफल भएपछि उक्त घटना सामसुम भएको छ । यस्तो अवस्था जनसचेतनमा नआओस् भन्ने शुभेच्छा यसै आलेखमार्फत दिन चाहन्छु ।

व्यापार, उद्यम र वित्तीय निकायहरू विज्ञापनका मूल स्रोत हुन् । त्यो बुझेका मिडिया टाइकुनले उनीहरूका लागि भए पनि आर्थिक समाचारको दायरा बढाउँदै लगेका छन् । स्पेस बढाउँदै लाँदा सहकारीको समाचारका पनि प्राथमिकता पनि बढ्दै गएको छ । मिडिया उद्यमीले समाचार प्रवाह गरेर कर्तव्य पूरा गरेको ठान्छन् भने व्यापार गरेर नाफाको अपेक्षा पनि गरिरहेका हुन्छन् । त्यसैले सहकारीले मिडियालाई के लाभ दिन सकिन्छ भन्ने हेक्का पनि राख्नुपर्ने हुन्छ । विज्ञापन, रेडियो, टेलिभिजनका लागि प्रायोजित कार्यक्रम आदिले मिडिया बलियो हुन्छ । स्तरीय प्रकाशनमा सफलताका कथा समेटिएका संस्करणहरूले संस्थाको ओझ बढ्छ । जनसचेतन सहकारीले उक्त विषयलाई बिचार गरेर अगाडि बढेको देखिन्छ। पत्रकारिताको फ्रेमबाट गरिने सम्पादन, इस्युहरूको छनौट र छपाइका गुणस्तरमा भने अझै जनसचेतनले आफूलाई परिस्कृत गर्न सकेको छैन ।

सहकारीले गरेको बचत संकलन र ऋण लगानीले ग्रामीण जीवनमा आमूल परिवर्तन ल्याइरहेको सबल पक्षलाई मिडियाले एकातर्फी औंल्याइरेका छन्। अर्कोतर्फ सहकारीको वित्तीय जोखिमको पक्षहरू पनि मिडियाको प्राथमिकतामा परिरहेको छ । जोखिम बढेकै कारणले सहकारीलाई राज्यबाट नियमन जरुरी रहेको तर्क पनि आइरहेका छन् । सीमित सञ्चालकको भरमा परेर जनताको लगानी सुरक्षित नहुने तर्कहरू आलोचकले गरिरहेका बेला जनसचेतनले जनताको निक्षेपलाई व्यवस्थित गर्ने प्रयत्न गरिरहेको पाइन्छ । सफ्टवेयरको व्यवस्था, धितो र ऋण लगानीको सुरक्षण विधिलाई ध्यान दिइरहेको छ। अन्तर्राष्ट्रिय गुणस्तर प्राप्त भएकाले यो सहकारी अलि होसियारीपूर्वक अगाडि बढिरहेको देखिन्छ ।

अहिलेसम्म मिडियाको हाइहाइ पाइरहेको जनसचेतनले जनताको ९२ करोड रूपैया बराबरको निक्षेप लिएर हिंडिरहेको छ । प्रशस्तै चुनौतिका बावजुद अहिलेसम्म सफल देखिएको जनसचेतनले मिडिया आक्रमणको सामना गर्नु नपरोस् भन्ने अपेक्षा गरौं । तर अलिकति चुक्यो भने जनसचेतनलाई पनि मिडियाले छाड्नेवाला छैन भन्ने हेक्का राख्नु आवश्यक छ ।



# सहकारी संस्थामा नेतृत्व विकास

**कमल दाहाल**
कोषाध्यक्ष

## १. पृष्ठभूमि

युरोपका अगुवा देशहरू बेलायत, फ्रान्स, जर्मनीलगायत अन्य देशहरूमा ई.सं. १९६० देखि १८३० मा भएका नयाँ-नयाँ आविष्कारसँगै औद्योगिक क्षेत्रमा क्रान्तिकारी परिवर्तन देखापरे । खासगरी सर जेम्स वाटले बाफबाट चल्ने इन्जिनको आविष्कार गरेपछि स्वचालित यन्त्रको निर्माणसंगै पूँजीवादि उत्पादन प्रणालीमा ठूलो फड्को मार्‍यो । पूँजीवादी उत्पादनमा भएको प्रगतिले हुने र नहुने बीचको खाडल बढ्दै गयो । उत्पादन केन्द्रीकरण हुँदै गएपछि केही व्यक्ति र कम्पनीहरू सम्पन्नताको शिखरमा पुगे भने श्रमजीवी जनताको ठूलो पंक्ति दिनदिनै गरिवीको खाडलमा झर्दै गए । घरेलु हाते उद्योगको स्थान ठुला-ठुला कारखानाले लिन थाले । तत्पश्चात कामदारहरूको श्रममा व्यापक शोषण भयो । घरेलु उद्योग र उत्पादनका साधनमा सीमितता हुँदै गएपछि समाज सुधारक समाजवादी नेता रोवट ओएनको नेतृत्वमा ,रोचडेली पायोनियरहरूले "उपभोक्ता सहकारीको" स्थापना गरेर आफ्ना समस्या आपसमा मिलेर आफैं हल गर्न यस्तो संगठनको स्थापना गरे । बेलायतको रेचडेल भन्ने नगरउन्मुख गाउँका २८ जना मजदुरको नेतृत्वबाट सञ्चालित उक्त सहकारीबाट प्रेरित भइ हाल संसारका कैयौं देश परिवर्तनको दिशामा अगाडि बढिरहेका छन् । यस्ता समाज र देश परिवर्तन गर्न सक्षम संस्थाको नेतृत्व कस्तो हुनुपर्छ भनी यहाँ चर्चा गर्न चाहन्छु ।

## २. नेतृत्व के हो ?

नेतृत्व व्यवस्थापनको महत्वपूर्ण कार्य हो । व्यवस्थापकले आफ्ना मातहतका कर्मचारीलाई अगुवाई गर्ने गुणलाई नेतृत्व भन्न सकिन्छ । यस्तो गुण सबै व्यक्तिमा हुँदैन, नेतृत्वको गुण भएका व्यक्तिले आफ्ना साथीहरू र मातहतका व्यक्तिहरूलाई कुशलता र प्रोत्साहित गर्दछ, उनीहरूमा विश्वास जगाँउछ, आफू एवम् संस्थाप्रति निष्ठावान बनाउछ । *"सामुहिक उद्देश्यहरूको प्राप्तिका लागि भित्रैदेखि ईच्छा जगाउनमा मानिसहरूलाई प्रभावित गर्ने कार्य नै नेतृत्व हो ।"* नेतृत्व सामुहिक उद्देश्य प्राप्तिका लागि परिस्थिति अनुसार अनुयायीहरूलाई प्रभावित गर्नसक्ने क्षमता वा गुणलाई जनाउँदछ । व्यवस्थापकले कर्मचारीलाई आत्मविश्वास र काम गर्ने भावना जनाउन सक्नुपर्दछ । त्यसैले यो भन्न सकिन्छ कि "एउटा नेता व्यवस्थापक हुन वा नहुन पनि सक्छ तर व्यवस्थापक नेता हुनै पर्दछ ।"

## ३. नेतृत्वको विशेषता कस्तो हुनुपर्दछ ?

- **नेतृत्व अनुयायी हुनुपर्दछः** नेतृत्वमा नेता, अनुयायीहरू र परिस्थितिको घनिष्ट सम्वन्ध हुन्छ । अनुयायीहरू बिनाको नेतृत्व हुनैसक्दैन ।
- **समान उद्देश्यः** नेतृत्व र अनुयायीहरूको एउटै र समान उद्देश्य हुनैपर्दछ किनकि सामुहिक उद्देश्य प्राप्तिका लागि नेताले नेतृत्व गर्दछ भने अनुयायीहरू पछि लाग्दछन् ।
- **कार्य सम्बन्धः** नेता र अनुयायीहरूले संगठनमा गर्नुपर्ने काम र त्यसको सम्बन्धमा स्पष्ट हुनुपर्दछ । उनीहरूको उद्देश्य एउटै हुनाले सो हासिल गर्नका लागि नेता र अनुयायीबीचको कार्य सम्बन्ध निश्चित गर्नुपर्दछ ।
- **उदारणीय आचरणः** समुहबाट नेतृत्व लिने नेताको आचरण, व्यवहार र योग्यता उदाहरणीय हुनुपर्दछ। अनुयायीबाट विश्वास प्राप्त गर्न आचरण, विशेष क्षमता र दक्षता प्रदर्शन गर्न सक्नुपर्दछ । तब उसको आचरणबाट अनुयायीहरूले सिक्ने, प्रोत्साहित हुने, प्रभावित हुने स्थितिको सिर्जना हुन सकोस् ।
- **परिस्थितिः** नेतृत्व निश्चित समयमा खास परिस्थितिसँग सम्वन्धित हुन सक्नुपर्दछ । परिस्थितिअनुसार अनुयायीले नेताको तानाशाही व्यवहारको पनि स्वीकार गर्दछन् भने अर्को



परिस्थितिमा सहभागीले नेतृत्व शैलीको सामान्य व्यवहार मात्रै स्वीकार गर्दछ ।

## ४. सहकारी संस्थाका नेतृत्वले गर्नुपर्ने कार्यहरू के हो ?

सहकारी संगठनमा नेतृत्वको ज्यादै महत्व हुन्छ । संस्थाको उद्देश्य हासिल गर्न कुशल नेतृत्वले मात्र मद्दत गर्दछ । सहकारी संस्थाको नेतृत्वले निम्न कार्यहरू सदैव गर्नुपर्दछः

- **लक्ष्यहरूको निर्धारणः** नेतृत्वले सदासर्वदा सिर्जनात्मक कार्यहरू गर्नुपर्दछ । योजना तथा नीति निर्माण गर्ने, लक्ष्यहरूको निर्धारण र अवगत गराउने तथा पथ प्रर्दशनको रूपमा सदा अगाडि बढ्ने ।
- **संगठकः** एउटा संस्थाको योग्य नेतृत्वले सदा संगठनात्मक संरचना तयार गर्न र वैज्ञानिक ढंगले संगठन ढाँचा बनाउन सहयोग गर्दछ । संस्थाको नीति प्रभावकारी कार्यान्वयन गर्नमा संगठनका विभिन्न अंङ्गको संवेदनशीलता बुझेर कार्यान्वयन गर्नुपर्दछ ।
- **समन्वयात्मक र निर्देशात्मकः** नेतृत्वले सदा सामूहिक हितको सिर्जना गर्न सक्षम हुनुपर्दछ । सामूहिक कार्यको बारेमा राम्रो जानकारी राख्ने र संस्थाका लक्ष्य र कार्यको समन्वय तथा निर्देशन दिने कार्य गर्नुपर्दछ ।
- **उत्प्रेरकः** सहकारी संस्थाका नेता आफ्ना अनुयायीहरूमा आत्मा विश्वासी, सिर्जनशील, निष्ठावान र विश्वासी,स्पस्टवक्ता, उत्प्रेरक जगाउनमा क्रियाशील हुनुपर्दछ । कर्मचारी अनुशासन कायम गराउने र उच्च मनोबल बढाउने कार्य सहकारीका नेतृत्वमा हुन आवश्यक छ ।
- **प्रतिनिधित्वः** संस्थाका नेताले सदैव आफ्नो समूहको प्रतिनिधित्व गर्ने हुनुपर्दछ । समूहको हित हुने सबै विषयहरूमा विशेष पहलकदमी लिनुपर्दछ । आफ्ना सदस्यहरूको मनोवैज्ञानिक आवश्यक्ता परिपूर्ति गर्नमा नेतृत्व सदैव प्रयासरत रहनुपर्दछ ।
- **कार्यकुशलता विकासः** व्यक्तिगत तथा सामुहिक स्वभाव र शैलीहरूका सुधार गर्दै कार्यकुशलता विकास गर्नुपर्दछ । त्यस्ता गुणहरूमा उदेश्यमा जोड, आत्मविश्वासी,राम्रो नेतृत्व, आवेगात्मक स्थिरता, इमान्दारीता, सहयोगी भावना, अनुकूल हुनसक्ने क्षमता, जिज्ञासु, पहल क्षमता, व्यवस्थापकीय गुण आदि लिन सकिन्छ ।

## ५. नेतृत्वको प्रकार र शैली

मूलतः नेतृत्वको किसिमलाई निरंकुश, प्रजातान्त्रिक र स्वतन्त्रमा विभाजन गर्ने गरिन्छ । यसैगरी परिचालन शैलीलाई पनि उत्पादनप्रेरित र सम्बन्धप्रेरितमा हेर्ने गरिन्छ । यस खण्डमा तिनको छोटो चर्चा गरिन्छ ।

### क. निरंकुश नेतृत्व

निरंकुश नेता तानाशाही हुन्छ जसले मातहतका मानिससंग विचार विमर्श गर्दैन, सम्पूर्ण अधिकार र उत्तरदायित्व उत्तराधिकारी पनि आफैंमा केन्द्रित गर्दछ । तल्ला कर्मचारी र सदस्यलाई आदेश निर्देशन दिने काम मात्र गर्दछ ,योजना तयार गरेर आउने र निर्णय गराउन जवरजस्ती गर्ने गर्दछ । अरुलाई किनाराका साक्षी मात्र बनाउँदै लान्छ र मानिसलाई मेशिनको रूपमा व्यवहार गर्दछ ।

### ख. प्रजातान्त्रिक नेतृत्व

प्रजातान्त्रिक नेताले सदैव आफ्नो मातहतका व्यक्तिलाई विश्वासमा लिन्छ, विचार विमर्श गर्दछ, उचित विचार र भावनाको कदर गर्दछ, नीति, नेतृत्व, पुस्ता हस्तान्तरणमा सामुहिक छलफल र स्वीकृति लिन्छ, दोहोरो सञ्चार प्रक्रिया हुन्छ, निर्णय प्रक्रियामा पनि तल्लो तहका कर्मचारीहरूको पनि सहभागिता हुन्छ । प्रजातान्त्रिक नेताको कामले संगठनको सुधार हुन्छ, तब सहकारी संगठनको वृहत विकासमा टेवा पुग्दछ ।

### ग. स्वतन्त्र नेतृत्व

स्वतन्त्र नेतृत्वले समूहको कार्यमा हस्तक्षेप गर्दैन, सम्पूर्ण कार्य गर्न समूहलाई छाडिदिन्छ, आफ्नै मातहतका सबै व्यक्ति योग्य छन्, उनीहरूले सबै कार्यहरू कुशलताका साथ सम्पन्न गर्न सक्छन् भन्ने कुरामा विश्वास राख्दछ । कार्यमा हस्तक्षेप गर्दैन, कर्मचारीलाई स्वतन्त्रता प्रदान गर्दछ, नेताले केवल सामान्य नेतृत्व प्रदान गर्दछ । शक्ति प्रयोग गर्दैन, स्वनिर्देशित र स्वनियन्त्रित हुन्छ । यस्तो नेतृत्व कमजोर हुने भएकोले सदस्य र कर्मचारीमा पनि काम गर्न र समन्वय गर्ने कुरामा छरपष्ट अवस्थामा सिर्जना हुनसक्छ ।

माथि उल्लेख गरिएका नेतृत्वका शैली र प्रकृतिले संस्थाको गुण निर्धारण गर्दछ । नेता समूहको प्रतिनिधि पात्र हो, जसले संस्थाको भविष्य निर्धारण गर्दछ । अबको सहकारी संस्था स्वभावैले उत्पादनशील कार्यमा लाग्ने र सदस्यहरूको आर्थिक, सामाजिक, सांस्कृतिक परिवर्तनको संवाहक बन्ने हो भने अबको नेतृत्व शैलीले विशेषतः यी दुई आधार हरूलाई अवलम्बन गर्न सक्नुपर्दछः

- **उत्पादन-केन्द्रितः** उत्पादनकेन्द्रित शैलीले प्रत्येक सदस्यको कामको निर्देशन, संरक्षण, अनुगमन, मूल्याङ्कन र समन्वयात्मक रूपमा उत्पादनमा प्रेरित गर्दछ । पदको शक्तिलाई उत्पादनमा जोड्दा आन्तरिक अन्यौलता हटाउनमा पनि प्रेरित गर्दछ । यसले सामुदायिक परिस्थिति अनुकूलको उचित मूल्याङ्कन गर्दै नेतृत्व निर्माण प्रक्रियामा मद्दत गर्दछ । नेतृत्व र उत्पादन कार्यमा सम्वन्ध स्थापित गर्न नेतृत्वले निर्देशनात्मक व्यवहार, उपलब्धिमूलक व्यवहार, सहभागीमूलक व्यवहार गर्दै सहकारी संस्थाका सिद्धन्तलाई व्यवहारमा उतार्न सक्ने नेतृत्व हुन आवश्यक छ ।
- **मानवीय सम्वन्ध-केन्द्रितः** मानवीय सम्वन्ध-केन्द्रित शैलीले प्रत्येक मानवीय व्यवहारलाई ध्यान दिन्छ । किनभने सहकारीमा विभिन्न स्वभाव र सह-अस्तित्व भएका मानिसको एकता सहकारी हो । त्यसैले यो शैलीले नेतृत्व हस्तान्तरणका लागि दोस्रो पुस्ताको तयारी, मानवीय संसाधनको प्रभावकारी प्रयोग र मानवीय गुणहरू नै तिनका इमान्दारीता, पारदर्शीता, भाईचारा, भातृत्व जस्ता भवनालाई पनि समेट्न सक्छ । वंशजको अंश जस्तो नठानी नेतृत्व विकास गर्दछ । अबका सहकारी संस्थाले उत्पादनकेन्द्रित र मानवीय क्षमता विकासका दवै पक्षलाई अगाडि बढाउने प्रयास गर्नुपर्दछ । जय सहकारी !



# निरन्तर अघि बढिरहनुपर्छ जनसचेतन



**भरत के.सी.**
सञ्चालक समिति सदस्य

एक आपसमा मिलेर बस्नु, मिलेर सोच्नु, मिलेर काम गर्नु नै सहकारीता हो । सामान्य अर्थमा सहकारी सह र कार्य शब्द मिलेर बनेको हो । सह शब्दको अर्थ संगै र कार्य शब्दको अर्थ काम हो । यसरी संगै कार्य गर्नु नै सहकारी हो । वास्तवमा सहकारी एक व्यवसायिक क्रियाकलाप सञ्चालन गर्ने पद्धति हो । यसमा सदस्यको आर्थिक तथा सामाजिक आवश्यक्ता, सामुहिक उदेश्य, समस्या र रुचिलाई सक्रिय सहभागिताका आधारमा पूरा गर्ने प्रयास गरिन्छ । सहकारीताका आधारमा व्यवसाय सञ्चालन गर्दा आफ्ना सदस्यको आर्थिक तथा सामाजिक उन्नति गर्ने उद्देश्य राखेको हुन्छ । यसमा आम सदस्यलाई समान प्रतिबद्धतामा ढाल्दै आफ्नो व्यवसायमा समावेस गरेर कारोबार बढाउँदै लैजाने ध्येय रहेको हुन्छ । सहकारीले न्युन आयस्तर भएका मानिसहरूको वचत तथा पूँजीलाई एकत्रित गरी आफ्नो लागि आफैं अग्रसर भै कार्य गर्ने सामुहिक भावनाको विकास गराउने कार्य गर्दछ । यसै अवधारणालाई आत्मसात गरी हाम्रा अग्रजहरूले आजभन्दा २४ बर्षअघि जनसचेतन बचत तथा ऋण सहकारी संस्थाको स्थापना गर्न पुग्नुभयो जसमा ३४ जना शिक्षक, बुद्धिजीवि, किसानले ३४०० रकम जम्मा गरेका थिए ।गरिबले बचत गर्न सक्दैनन् भन्ने परम्परागत मानसिकतालाई केही समयको अन्तरालमै चिर्न सफल भएका थिए । कोही गरिब गरिब मात्र हुँदैन भन्ने भावनाको विकास गराउन सफल जनसचेतन विभिन्न आरोह अवरोह, कठिन घडी र मोडहरू पार लाउँदै हाल "सवल र सुरक्षित संस्था, समृद्ध सदस्य" भन्ने नाराका साथ २२ हजार नजीक सदस्य र करिब १ अर्बको पूँजी निर्माणमा पुगी एक्सेस ब्रान्डिङ कार्यक्रममार्फत Silver Brand प्राप्त गरी नेपालको उत्कृष्ट सहकारी बन्न सफल भएको छ ।

सहकारी संस्थाको पहिलो उद्देश्य बढीभन्दा बढी सदस्य र पूँजी संकलन गरी गुणस्तरीय सेवा प्रदान गर्नु रहेको हुन्छ । सदस्यहरूले आफूसंग भएको सीप, स्रोत, साधन र श्रमको उच्चतम प्रयोग गरी आफू र परिवारको लागि स्वरोजगारी तथा रोजगारी सिर्जना गर्न सफल हुन्छन् । यस संस्थामा सदस्यहरूले नियमित वचत तथा ऋणबाहेक सदस्य शिक्षा, सीपमूलक तालिम, व्यापार, उद्योग व्यवसाय सञ्चालन आदि क्षेत्रमा संलग्न रहँदै आएका छन् ।

जनसचेतन साकोस माथी निर्दिष्ट गरिएका उदेश्यहरू पुरा गर्दै अगाडि बढ्ने क्रममा केही कुराहरू पूरा गर्न अझै बाँकी नै छ र सो कुराहरू आगामी दिनमा पूरा गर्ने नै छ । सहकारी संस्था आर्थिक कारोबार मात्र गर्ने संस्था नभई सामाजिक तथा सांस्कृतिक क्षेत्रमा पनि यसको उल्लेखनीय भूमिका रहेको हुन्छ । वर्तमान समयसम्म उत्पादक कृषक तथा साना उद्यमीलाई हेलाको दृष्टिले हेर्ने परिपाटी रहिआएको सर्न्दभमा सहकारीमार्फत व्यवसायमा संलग्न सदस्यहरूले आफूलाई मालिकको रुपमा स्थापित गर्न सफल भएका छन् । यसबाट उनीहरूको सामाजिक सम्मानमा बृद्धि भएको छ । सहकारीमार्फत आयआर्जन गर्न सफल सदस्यहरूको सामाजिक सम्बन्ध सम्मानजनक मात्र भएको हैन कि उनीहरूको आत्मसम्मानमा समेत बृद्धि भएको छ । सदस्यहरूमा हिजो अरुको घरमा पैसा ऋण काढेर घर खर्चको जोहो गर्नुपर्ने अवस्था फेरिएको र आज उनीहरू आफ्नो व्यवसायिक संगठनबाट छिटै सरल र सुलभ ढंगले कर्जा सुविधा पाउन सक्षम भएका छन् । यसबाट साहुको ऋण लिँदा भोग्नुपरेको पीडा र ग्लानी तथा आर्थिक र सामाजिक असुरक्षाको वातावरणबाट मुक्ति पाएका छन् । सहकारीमा आबद्ध सदस्यहरूमा स्वावलम्बी भावनाको विकास भएको छ र उनीहरू जातीय ,वर्गीय उत्पीडनबाट मुक्ति पाउन सफल हुँदै गएका छन् । यसका साथै कुरीति, कुसंस्कार र अन्याय विरुद्धको लडाइँमा आवाज उठाउन सक्ने भएका छन् । यसका अलावा जनसचेतन साकोसले आफ्ना सदस्यका सिर्जनात्मक प्रतिभाको विकासमा समेत उल्लेखनीय सहयोग पुऱ्याउनका लागि विभिन्न कार्यहरू गरिरहेको छ । यस्ता कार्यहरूमध्ये गरिब तथा जेहेन्दार बिद्यार्थीहरूलाई छात्रवृत्ति, सदस्य सुरक्षा कोष सेवा, मनिट्रान्फर सेवा, सदस्यहरूलाई शिक्षा तथा तालिम, उच्च शिक्षा छात्रवृत्ति, किरिया खर्च सहयोग, दैवी प्रकोपमा सहयोग, जेष्ठ सदस्य सम्मान, जनसचेतन आजीवन साहारा जस्ता कार्यहरू सदस्यको हितमा सञ्चालन गर्दै आइरहेको छ ।

यसरी जनसचेतन साकोसले सभ्य र सु-संस्कृत समाजको निर्माण र राष्ट्रिय स्वाभिमानको विकासमा आफूलाई उत्कृष्ट साकोसको रुपमा उभ्याउन र सदस्यहरूलाई स्वावलम्बी बनाउन समुदायमा वचत गर्ने बानीको विकासका साथै आयआर्जनका क्षेत्रहरूको विस्तार र अनावश्यक खर्च कटौती गर्ने व्यवहार सिकाएको छ । जनसचेतनले सदस्यहरूलाई अझ विकासको सगरमाथा छुन सिकाउनुपर्छ ।

जय सहकारी ॥



# उद्यमशीलता प्रवर्द्धनमा सहकारीको भूमिका

**नवराज दाहाल**
व्यवसाय विकास अधिकृत

## १. पृष्ठभूमि

नेपाल एक विकासोन्मुख देश हो । नेपालमा धेरै जनसंख्याको हिस्सा बेरोजगारीको समस्याबाट माथि उठ्न सकेको छैन । नेपालमा साक्षरता प्रतिशत धेरै भए तापनि वित्तीय साक्षरताको प्रतिशत भने निकै नै कम रहेको छ । मानिसहरूमा केही गर्ने जोश, जाँगर, सीप र क्षमता हुँदाहुँदै पनि केही पनि गर्न नसक्नुमा वित्तीय साक्षरताको कमी तथा आवश्यक स्रोत साधनको अभाव प्रमुख कारण बनेको छ। जोसंग आफ्नो लागि आफैंले केही गर्छु भन्ने भावना छ उनीहरूसंग पर्याप्त मात्रामा लगानी गर्ने स्रोत छैन। छरिएर रहेको पूँजी संकलन गरी आवश्यक र उपयुक्त स्थानमा लगानी गर्ने कार्य वित्तीय संस्थाहरूको हो । केही बर्ष अघिसम्म स्थापित बैंक तथा वित्तीय संस्थाहरू शहरकेन्द्रित भएर सेवा प्रदान गरिरहेका थिए तर नेपालको धेरै भूभाग ग्रामीण समुदायले ओगटेको भए पनि उनीहरूले आफ्नो सेवा सुविधालाई ग्रामीण तहसम्म विस्तार गर्न सकिरहेका थिएनन् । जहाँ वित्तीय संस्थाहरू पुगेका छन् त्यस ठाउँमा पनि पहुँच हुनेवालाहरूले मात्र सेवा पाइरहेका थिए। जोसंग थोरै स्रोत साधन छ उनीहरूले सजिलैसंग वित्तीय सेवाहरू पाउन सकिरहेका थिएनन् जसको कारण उनीहरूमा केही गर्ने जोश, जाँगर र क्षमता हुँदाहुँदै केही उद्यम गर्न नसकिरहेको अवस्था थियो । हाल ग्रामीण तहसम्म वित्तीय साक्षरतासम्बन्धी कार्यक्रहरू सञ्चालन हुने गरेका छन्, प्रायः सबै मानिसहरूले वित्तीय सेवाहरू प्राप्त गरिरहेका छन् । उद्यम गर्न चाहनेहरूले उद्यम गरिरहेका छन् र आफ्नो आर्थिक पक्षलाई सबल बनाएका छन् जसको श्रेय जान्छ सहकारी संस्थाहरूलाई ।

सहकारीमार्फत ग्रामीण तहसम्मका सबै मानिसहरूले वित्तीय सेवाहरू प्राप्त गरेका छन् । केही गर्ने ईच्छा भएका मानिसहरूले आफ्नो क्षमता प्रस्तुत गरेर आफ्नो आयस्रोतको बाटो खोलेका छन् । केही हदसम्म बेरोजगारी समस्या कमी हुँदै गइरहेको छ। सहकारी संस्थाहरूले ग्रामीण तहमा आफ्ना सदस्यहरूबीचमा व्यवसायिक शिक्षा शिविर आयोजना गर्ने, उद्यमशीलतासम्बन्धी तालिमहरू प्रदान गर्ने (जस्तैः सिलाई-कटाई, च्याउखेती, बाख्रा पालन, बाँसबाट बन्ने सामग्री निर्माण, ढाका बुनाइ आदि) र केही गर्छु भन्ने सदस्यहरूको लागि आवश्यक आर्थिक स्रोत उपलब्ध गराउने कार्य गरिरहेका छन् । जसबाट प्रत्यक्ष रुपमा नै सहकारीका सदस्यहरूले सहकारीको सहयोगमा आफ्नो क्षमता र सीपको उपयोग गरी आर्थिक पक्ष बलियो बनाउन सफल भएका छन् । सहकारीले आफ्ना सदस्यहरूलाई उद्यमशीलताको बाटोमा डोऱ्याउने र उनीहरूको आर्थिक जीवनस्तर उकास्ने कार्य गरिरहेका छन् ।

## २. उद्यमशीलताको परिचय

उद्यमशीलता भनेको कुनै पनि व्यक्तिको क्षमता, दक्षता, सीप र ज्ञानको प्रयोग गरेर कुनै पनि स-सानो व्यवसायको शुरुवात गरी त्यसमा उत्पन्न हुनसक्ने जोखिमलाई कम गरी नाफा आर्जन गर्नसक्नु हो । आफ्नो क्षमता र सीपको उपयोग गरी कुनै पनि व्यवसायिक कार्यको थालनी गर्नु नै उद्यमशीलता हो । जमीन, श्रम, प्राकृतिक स्रोत र आर्थिक स्रोत (आर्थिक पक्ष) को उचित प्रयोग गर्न सकेमा नाफा कमाउन सकिन्छ। जसले यी ४ चिजको सदुपयोग गर्छ त्यो नै उद्यमी हो । बेरोजगार मानिसले कुनै पनि नाफामूलक व्यवसाय सञ्चालन गर्छ भने त्यो उसको उद्यमशीलता हो।

आफूसंग भएको स्रोत, साधन र सीपको संगठन निर्माण गरेर त्यसको परिचालन गरी आयमूलक स-सानो व्यवसाय सञ्चालन गर्नु र आम्दानीको स्रोत निमार्ण गर्नु नै उद्यमशीलता हो ।

## ३. सहकारी र उद्यमशीलताबीचको सम्बन्ध

सहकारीको परिभाषाबाट नै पुष्टि हुन्छ कि सहकारी के र कसका लागि भनेर ? आफ्ना सदस्यहरूलाई

व्यवसायिक शिक्षा प्रदान गर्ने र उनीहरूको व्यवसायिक दक्षतालाई व्यवहारमा उतार्नको लागि सहयोग गर्नु पनि सहकारी संस्थाको मुख्य कार्य हो । अर्को शब्दमा भन्नुपर्दा सदस्यहरूको आम्दानी वृद्धि गराइ आर्थिक पक्ष बलियो पार्नु नै सहकारीको उद्देश्य हो । सदस्यहरूको पेशामा सेवा तथा टेवा दिनु, उत्पादनमा वृद्धि गराउनु, उत्पादित वस्तुको बजारीकरण गर्नु पनि सहकारीको कार्य हो । यसको अर्थ सहकारीले सदस्यहरूलाई माछा मारेर दिने नभई माछा मार्न सिकाउने र सदस्यहरूलाई उद्यमी बनाउने हो । आफ्नो सीप, क्षमता र आफूसंग उपलब्ध स्रोत साधनको प्रयोग गर्दै स-सानो व्यवसाय सञ्चालन गरी आयआर्जन गर्छु भन्ने सदस्यहरूको लागि आवश्यक आर्थिक तथा प्राविधिक सहयोग गरी व्यवसाय सञ्चालनमा टेवा पुऱ्याउने कार्य पनि सहकारी संस्थाहरूको हो । एउटा सहकारी संस्थाले आफ्नो सदस्यलाई ऋण मात्र प्रवाह गर्दैन, ऋण संगसंगै व्यवसायिक ज्ञान पनि प्रदान गर्ने गर्दछ जुन ज्ञान प्रयोग गरी उनीहरू आफ्नो आर्थिक पक्ष सुधार गर्न आफैंले केही व्यवसायिक कार्य गर्न सक्षम र सफल बन्न सकुन् । एउटा सामान्य परिवारको मानिसले म आफैं उद्यमी बन्छु त्यसको लागि मलाई थोरै आर्थिक अभाव छ भनेर बैंक तथा वित्तीय संस्थाबाट ऋण प्राप्त गर्नु उसको लागि फलामे चिउरा चपाउनु बराबर जस्तै छ । तर सहकारी संस्थाबाट सामान्य आर्थिक अवस्था भएको तर केही गर्ने सोच, ईच्छा र सीप भएमा ऋण प्राप्त गर्न सक्दछ र आफ्नो उद्यमी बन्ने सपना साकार पार्न सक्दछ ।

सहकारीले आफ्ना सदस्यहरूबीचमा वित्तीय साक्षरतासम्बन्धी, व्यवसायिक योजनासम्बन्धी विभिन्न कार्यक्रमहरू सञ्चालन गर्ने र व्यवसायिक तालिमहरू प्रदान गर्ने कार्य गरि नै रहेका छन् । जुन कार्यक्रम र तालिमबाट प्रभावित भएर धेरैजनाले आफ्नो व्यवसायिक कौशल प्रस्तुत गर्नुभएका उदाहरणहरू हामी सबैका माझमा नभएका होइनन् । सहकारीहरूले आफ्ना सदस्यहरूलाई वैदेशिक रोजगारीका समस्याहरूका बारेमा समेत सचेत गराउँदै आफ्नै देशमा स-सानो लगानी गरेर आफ्नो आर्थिकस्तर सुधार्न सकिने बारेमा कार्यक्रमहरू प्रस्तुत गरी उद्यमी र स्वावलम्बी बन्न उत्प्रेरित गर्दै धेरै सदस्यहरूलाई उद्यमी बन्न सहयोग गरिरहेका छन् ।

**४. उद्यमशीलता प्रवर्द्धनमा सहकारीको भूमिका**

आजका सहकारीहरूको प्रमुख उद्देश्य नै आफ्ना सदस्यहरूको आर्थिक पक्ष सुधार गर्नु हो । जसको अर्थ आफ्ना सदस्यहरूको आर्थिक जीवनस्तर सुधार गर्नको लागि आवश्यक रणनीति बनाउने, सदस्यहरूलाई उद्यमी बनाउने, वित्तीय साक्षरतासम्बन्धि कार्यक्रम सञ्चालन गर्ने, व्यवसायिक तालिमहरू प्रदान गर्ने आदि हुन्छन् । यसबाट के कुराको पुष्टि हुन्छ भने सम्पूर्ण सहकारी संस्थाहरू आफ्ना बेरोजगार सदस्यहरूलाई कसरी व्यवसायिक वा उद्यमी बनाउन सकिन्छ भनेर होमवर्क गरिरहेका छन् । आज एउटै कार्यक्षेत्र गरेर धेरै सहकारीहरू खुलेको अवस्था छ । एउटा सहकारीले अर्को सहकारीको तुलनामा कसरी बढीभन्दा बढी सेवा सुविधाहरू प्रदान गर्न सकिन्छ र कसको सदस्य बढी उद्यमी, बढी व्यवसायी भन्ने कुरामा बहस गरिरहेको अवस्था छ । जसको प्रत्यक्ष अर्थ सहकारीहरू आफ्ना सदस्यहरूलाई उद्यमी बनाउन र उनीहरूको उद्यमशीलतालाई उपयुक्त ढंगबाट प्रर्वद्धन गर्न लागि परिरहेका छन् ।

मलाई लाग्छ सहकारी र उद्यमशीलता एक-अर्काका पुरक जस्तै हुन । जुन ठाउँमा सहकारीहरूले आफ्ना सदस्यहरूको आर्थिक जीवनस्तर माथि उकास्न सक्दैनन् त्यो ठाउँमा अब सहकारीको भविष्यमा नै प्रश्न चिन्ह खडा हुन्छ । त्यस्तो भएमा सहकारीहरूले सदस्यहरूबाट बचत संकलन गर्न सक्दनैन्, लगानी भएको ऋण असुली गर्न सक्दैनन् । यो अवस्था भनेको सहकारी संस्थाको अस्तित्व संकटमा पर्नु हो । तर जुन सहकारीहरूले आफ्ना सदस्यहरूको आर्थिक जीवनस्तर माथि उकास्नको लागि सदस्यहरूलाई व्यवसायिक योजना तथा तालिमको व्यवस्था गरी उद्यमी बनाई उद्यमशीलताको विकास गर्दछन् ती सहकारीहरू अझ बढी लोकप्रिय बन्दै जानेछन् ।

**५. दोलखा जिल्लामा सम्भावित उद्योग व्यवसायहरू**

दोलखा हिमाली जिल्ला हो । यहाँ हिमाली श्रृङ्खला, उच्च र होचा पहाड रहेका छन् । यो जिल्ला प्राकृतिक छटाले भरिपूर्ण रहेको छ । यहाँ गौरीशंकर हिमालको श्रृङखला, च्छोरोल्पा हिमताल, कालिञ्चोक भगवती, दोलखा भीमसेन, शैलुङ, जिरी बजार लगाएयका अन्य पर्यटकीय स्थलहरू रहेका छन् । थोरै लगानीबाट शुरु गर्न सकिने व्यवसायमध्ये पर्यटनको हिसाबले होमस्टे व्यवसाय सञ्चालन गर्न सकेमा मात्र पनि धेरै बेरोजगार मानिसहरूको आर्थिक जीवनस्तर सुधार गर्न सकिन्छ । उच्च पहाडमा बाखापालन, चौंरीपालन, गाईपालन, मच्छिनो खेती, अर्गेली खेती, व्यवसायिक आलु खेती तथा अन्य जडिबुटीहरूको व्यवसायिक खेती, संकलन

र प्रशोधनसम्बन्धी कार्य गर्न सकिन्छ । उत्पादित दूधलाई प्रशोधन गरी चीज, छुर्पीलगायतका अन्य परिकारहरू बनाइ बिक्रीसमेत गर्न सकिन्छ । त्यस्तै मध्य पहाडमा खरी उत्खनन तथा प्रशोधन, ढुङ्गाखानीको उत्खनन, अलैंची र अम्रिसो खेती, सल्लाको रुखबाट खोटो संकलन तथा प्रशोधन, बाख्रापालन, गाई तथा भैंसीपालन, कुखुरापालन, व्यवसायिक तरकारी खेतीलगायतका अन्य थुप्रै व्यवसायहरू सञ्चालन गर्न सकिन्छ। आफूसँग उपलब्ध रहेका स्रोतहरूको प्रयोग गरेर अन्य धेरै व्यवसायहरू पनि सञ्चालन गर्न सकिन्छ । जस्तै, दोलखामा प्रशस्त मात्रामा निगालो र बाँस पाइने भएकाले त्यसबाट बन्ने डोका, मुडालगायत अन्य सजावटका सामग्रीहरू निर्माण गरी बिक्री गर्न सकिन्छ । नेपालबाट हातले बनेका धेरै सामग्रीहरू विदेश निर्यात हुने गरेका छन् । त्यसमध्ये केही बाँस र निगालोबाट बनेका सामग्रीहरू पनि पर्दछन् । यहाँ नरम प्रजातिका काठहरू पाउने भएकाले काठबाट समेत कलात्मक वस्तुहरू निर्माण गरेर निर्यात गर्न सकिन्छ । यहाँ एबोकार्डो, रुद्राक्ष, बुद्धचित्तलगायतका रुखहरू लगाएर पनि उत्पादन लिन सकिन्छ । सुन्तला र  जुनार खेती पनि दोलखाको तल्लो भेगका लागि उपयुक्त मानिन्छ ।

**६. सदस्यहरूको उद्यमशीलता विकासमा जनसचेतनको भूमिका**

जनसचेतन एक अन्तर्राष्ट्रियस्तरको एक्सेस सिल्भर ब्राण्ड प्राप्त गर्न सफल सहकारी संस्था हो । यसको कार्यक्षेत्र दोलखा जिल्लाभर फैलिएको छ । यसले आफ्नो कार्यक्षेत्रभित्रका अधिकभन्दा अधिक सदस्यहरूलाई स्वावलम्वी बन्नको लागि उत्प्रेरित र सहयोग गरिरहेको छ । यसले सदस्यहरू माझ व्यवसायिक तालिमहरू, वित्तीय व्यवस्थापनसम्बन्धी तालिमहरू तथा कार्यक्रमहरू सञ्चालन गर्दै आएको छ । संस्थाको परिकल्पना नै "सवल र सुरक्षित संस्था, समृद्ध सदस्य" भन्ने रहेको छ । यो परिकल्पनाबाट नै पुष्टि हुन्छ कि जनसचेतन आफ्ना सदस्यहरूको  आर्थिक समृद्धि चाहन्छ । सो परिकल्पना पूरा गर्नको लागि सञ्चालक समिति र सिंगो व्यवस्थापन लागि परेको छ । संस्थाले सदस्यहरूको क्षमता, सीप र चाहनाअनुसार सहुलियत दरमा ऋण प्रदान गरी संगसंगै व्यवसायिक योजनाहरूको बारेमा समेत जानकारी प्रदान गर्ने गर्दछ । यसले कार्यक्षेत्र भित्र परिवेश सुहाउँदो व्यवसायिक शिक्षा शिविर र व्यवसायिक तालिमहरू प्रदान गर्दै आएको छ र उनीहरूलाई उद्यमी बन्न उत्प्रेरित गरिरहेको छ ।

संस्थाले "सदस्यहरूको आर्थिक र सामाजिक स्तर अभिवृद्धि गरी समुन्नत समाजको विकास गर्ने" लक्ष्य लिइ अगाडि बढिरहेको छ । जनसचेतनको आँखामा २/४ जना सदस्य मात्र उद्यमी बनेर हुँदैन, सिंगो समाज नै समुन्नत हुनुपर्छ भन्ने सपना छ । यसले आफ्नो सपना पूरा गर्नको लागि नै व्यवसाय विकास केन्द्र खोली सदस्यहरूबाट उत्पादित वस्तु तथा सेवाको बजार व्यवस्थापनमा लागी परेको छ । जनसचेतन चाहन्छ कि धेरैभन्दा धेरै सदस्यहरू उद्यमी बन्न सकुन् र आफ्नो आर्थिक, सामाजिक स्तर उकासुन् । जनसचेतन साकोसले आफ्ना सदस्यहरू माझ लघुवित्त कार्यक्रमसमेत सञ्चालन गरी बढीभन्दा बढी सदस्यहरूलाई उद्यमी बन्न र बनाउन लागिरहेको छ । जनसचेतन चाहन्छ, यसको कार्यक्षेत्रभित्रका युवाहरूले विदेशी भूमिमा गएर पसिना बगाउन नपरोस् ।

**६. निष्कर्ष**

सहकारी संस्थाहरूको प्रमुख लक्ष्य नै आफ्ना सदस्यहरूलाई व्यवसायी, उद्यमी बनाउँदै समाजको सम्मुन्नत विकास गरी राष्ट्रिय अर्थतन्त्रमा टेवा पुऱ्याउने हो । सहकारीहरूले संस्थाको विकासको लागि सदस्यहरूको आर्थिक, सामाजिक जीवनस्तर उकास्न आवश्यक रहेको भन्ने कुरालाई अङ्गीकार गर्दै सदस्यहरूको आर्थिक विकासका लागि लागिपरिरहेका छन् । सबै सहकारी संस्थाहरूको बुझाई यो भैसकेको छ कि संस्थाको दिगोपन र विकासको लागि सदस्यहरूको आर्थिक विकास र सदस्यहरू माझ उद्यमशीलताको विकास हुन आवश्यक छ । सहकारीहरूले आफ्ना सदस्यहरूलाई उद्यमी बनाउदै जाँदा एकदिन यस्तो परिकल्पना गर्नुपर्दछ, जुन दिन आफ्नो जीविकोपार्जनको लागि वैदेशिक रोजगारीमा जाने नेपाली युवाहरूको संख्या शुन्य होस् ।

मलाई लाग्छ सदस्यहरूलाई उद्यमी बनाउँदै उद्यमशीलताको विकास गर्न नसकेमा सहकारी संस्थाहरूको दिगोपन र अस्तित्वमा प्रश्नचिन्ह खडा हुनेछ । आजको दिनमा सहकारी र उद्यमशीलता एक-अर्काका पुरक जस्तै बनेका छन् । सहकारीहरूले आफ्ना सदस्यहरूको आर्थिक जीवनस्तर माथि उकास्नको लागि सदस्यहरूलाई उद्यमी बनाउँदै समाजमा उद्यमशीलताको विकास गर्नको लागि सहकारी संस्थाहरूको भूमिका महत्वपूर्ण हुने देखिन्छ ।



# Roles of Cooperative to Enhance Financial inclusion and Achieve the Sustainable Development Goal-1"No Poverty by 2030"



Nav Raj Simkhada

Having access to affordable and easily accessible financial services helps to start new enterprises and improve the existing ones currently in place. It also helps to contribute to improving the overall well-being of individuals. Client friendly and easily available financial services are considered one of the major determinants of progress for a society. A strong financial system is often described as a backbone to economic prosperity and achieving sustainable development goals. Financial services, however, are still inaccessible to a certain segment of the society. It is estimated that approximately two billion people globally do not have access to formal financial services. Therefore, donors and the Government’s specific development strategies should emphasize the importance of universal access to financial services for the economic and social development of the people.

Despite a rapid growth in the financial sector over the last two decades, access to institutional and tailor-made financial services are still limited within Nepal. According to the World Bank's FINDEX study (2014); only 34% of adults hold an account with a formal financial institution. The “Making Access Possible” survey, conducted by UNCDF and Nepal Rastra Bank in 2014, revealed that only 40% of Nepalese adults have access to banks and financial institutions (FIs). Nepal’s financial system displays a significant institutional gap. This leaves micro and small enterprises, VC actors, semi subsistence farmers, and poor households without access to appropriately designed financial services. Many individuals are excluded from formal financial services due to myriad reasons. This includes: lack of collateral, lack of awareness and financial literacy and a lacking mechanism for an appropriate service delivery and its products. Small and Micro Entrepreneurs (SMEs), the poor, and individuals residing in remote areas must rely on informal finance providers such as money lenders, friends or relatives or they must be dependent on the limited financial services that are provided by semi-formal FIs like cooperatives and savings groups.

There is an ongoing debate as to whether financial institutions are dedicated to improving society’s economic prosperity or if they are more focused on maximizing profits for their own personal gains. Lending in opposition of sufficient and saleable collateral, as well as lending to clients having sufficient, steady cash flow and good credit history are the lending *Mantra* of conventional FIs. A person is considered ineligible for receiving loan from conventional bankers, even if he/she has a brilliant and original business idea.

The concept of microfinance emerged to fulfill the gap created by the conventional banking system. The microfinance movement originated with the strong desire and mission to support poor individuals, so that they may be able to overcome poverty. The fundamental

components of microfinance services were once to target the most impoverished within society, by providing them with awareness, skills training and other activities to reach economic success. Presently however, these initiatives have become known as “the good old days" as most Micro Finance Institutions (MFIs) have forgotten their noble mission. Microfinance banks are often criticized as one of the highest profit making and dividend paying ventures.

The Government, regulators, practitioners, and technical service providers all agree that the current regulated financial institutions (Banks and MFIs) are unable to appropriately serve SMEs, poor and disadvantaged communities. Discussions on different occasions with both staff and clients have revealed that there is a significant exclusion of the poor and disadvantaged groups from financial services. There is exclusion even in urban areas where there is tough competition among the different financial service providers. This evidence indicates that the current regulated financial mechanisms are not capable of serving the unserved and underserved.

Study conducted by Quebec International Summit of Cooperatives, 2016 found that the presence of FIs and banks other than cooperative is barely seen in remote areas. Formal FIs are concentrated in urban and accessible areas. Even in the areas where formal financial services are available, people are not using their services due to lack of awareness of importance of using financial services, or considering that banks are for rich people not for them or products offered, lending methodology and opening time of FI is not suitable for them. People in several occasions have mentioned that they don’t feel comfortable to visit sophisticated office of banks and hesitate to talk with banks' staff. The lending process is very cumbersome and most of the poor people could not fulfill the lending conditions of banks and formal FIs. Moreover, it is very costly for rural people to take services of formal FIs, as it takes several hours or day for people to visit bank branches and travel back home. Hence, it is not possible to serve to small borrowers through conventional banks unless their methodology, products and priority are revised and lending procedures are totally restructured. Therefore, we may need to explore appropriate institutional set up to serve thousands of isolated and diverse communities residing in the hills and mountains of Nepal.

Experiences have shown that community based savings and credit cooperatives and other financial cooperatives are capable of providing services in line with members’ need as they are based on local community and they are owned and managed by the members themselves on cost effective manner. Cooperatives are in better position to understand the local dynamic and needs and design services accordingly. For example, I have visited **Janasachetan Savings and Credit Cooperatives** several times and interacted with board, staff and members. As of July, 2017 Janasachetan have collected Rs. 902,843,740 as share and savings from about 22000 members and outstanding loan balance is Rs.708,417,970.

The growing numbers of members and savings and share collected from members is clear evidence that members are satisfied with the services of cooperatives. Moreover, impact study conducted by Center for Microfinance in 2006 revealed that cooperative's services have helped to improve socio-economic status of members. Janasachetan have been successful to provide sustainable, accessible and affordable financial services in remote villages of Dolakha districts. Janasachetan is one example; there are several beautiful examples in the corner of remote villages of Nepal. Therefore, financial inclusion strategy should consider cooperatives as one of the potential partners to promote inclusion in remote communities. The experiences have shown that if current cooperative sector is strengthened by providing training, technical supports and wholesale credit, it can greatly contribute to promote universal access to finance in Nepal.

People living in absolute poverty, which is characterized by those with poor health and suffering from chronic diseases, poor living

 

conditions, poor sanitation and irregular income, present a major obstacle for providing financial services. These individuals require more support to improve their health, sanitation, financial education, skill training and a start-up grant for initiating micro enterprises. This category of people can utilize credit only if they possess some skills and income generating activities which can be further increased. Community based cooperatives are in better position to identify the poorest of the poor and provide services to them. Government and donors can effectively channelize grant fund and technical supports through cooperatives to uplift socio-economic condition of disadvantaged members.

Similarly, SMEs need flexible credit to improve and expand their enterprises. The current financial system is also incapable of serving SMEs. Many SMEs lack access to appropriate financial services as commercial banks and other FIs primarily focus on serving only high-end customers. MFIs contribute to this issue by only providing services to the semi-poor and middle-class people. Hence, SMEs becomes known as the 'missing-middle' and do not receive the assistance they need. Enhancing financial access for SMEs and the impoverished requires a strong commitment from the board and management. Cooperatives are extending SME loan to upgraded potential members.

SMEs and the poorest within society are neglected due to a lack of appropriate lending methodologies and products as well as their considerations for demand being disregarded. A group-lending methodology requires: a formation of a group, weekly or monthly meetings, and being able to save a specific amount of money, before financial services can be obtained. This has proven to be a barrier that is difficult to overcome for most SMEs and the most impoverished. In group methodology, members select each other based on: trust, their neighborhood and their past relationships. Generally, very poor members are rejected or excluded because the group believes they will be unable to repay the loans, thus jeopardizing the credit-worthiness of the group. SMEs and the poor have complained that they are unable to find sufficient members to form new groups and that they lack qualified physical collateral to be considered for individual borrowing from a bank. The cooperative provide loan to individual, hence there is no or less chances of selection bias.

The main source of income for the poor and very poor is based upon daily wage earnings and subsistence farming. This type of work occurs from dawn to dusk, giving them little time to attend group trainings and meetings. The transportation cost (travelling to and from group meeting or location of FIs) and the opportunity cost of attending meetings has proven to be another barrier for this part of society. Many SMEs and the poor often complain that they don't have the time to attend group meetings and that the amount and terms to receive a loan do not match their needs. These individuals require flexible savings and credit, as well as services for micro-insurance and money transfers that are appropriate to their local context, rather than standard products. The very poor need a social safety-net program that would enable them to become credit-worthy clients overtime. Furthermore, donors and the Government must support cooperatives, so that they may be able to serve the most impoverished.

Without addressing the needs of SMEs and the poorest within Nepal, it is not possible to promote universal financial access and eradicate poverty by generating income and employment. Considering the current limitations of the financial system, Nepal needs a unique and special financial products and services delivery mechanism to serve SMEs and help the poor rise out of poverty. From my 25 years of experience in cooperatives and microfinance sector I have suggested three main financial windows in cooperatives and also in MFIs:

**Window-1** will serve the SMEs and the commercial agricultural venture.

**Window-2** will mostly serve the clients currently being served by MFIs, and

**Window-3** will serve the poorest segment of the society in Nepal.

Window-3 will provide both financial and social mobilization services to the poor currently being left out. This window will mobilize part of the revenue generated from Windows 1 and 2 and mobilize the funds from donors and the Government. The services of Windows 1, 2 and 3 are designed in such a way that no one in these particular communities will be excluded from the services that help people to achieve sambridhi (prosperity). Each unit/window will be managed by a different general manager, produce separate financial statements and have separate performance evaluations. When clients of Window-3 become prosperous they will be transferred to Window-2; and graduated clients of Window-2 will be moved to Window-1. In the long run, or after 2030, we may no longer need Window-1 once all the poorest people within Nepal have graduated above the poverty line.

The experiences of Jansachetan and other cooperatives so far has shown that cooperatives are more suitable mechanism to serve the people in rural and remote areas and promote financial inclusion. The cooperative alone cannot accomplish the noble goal of financial inclusion. A partnership and coordinated effort from the Government, development organizations, and the people themselves can ensure universal financial inclusion.

*(Mr. Simkhada is one of the recognized experts in cooperative, microfinance and financial inclusion fields. He is pursuing PhD in "Leadership Studies" with Kathmandu University. He can reach at navraj.simkhada@gmail.com )*



# Janasachetan SACCOS in Historical Cooperative Development in Nepal



Prof.Kamal Raj Dhungel (Phalekghare Kanchho)

## 1. Introduction

When sitting to developing a story of Janashachetan Saving and Credit Cooperative Society (JASACCOS), I was in dilemma on which contributory components to choose that can address its role as it has multi dimensional faces to include to kick off. I think it is the pioneer organization to introduce practically successful cooperative and bring people into the cooperative folder not only in Dolakha District but also it inspired and influenced the people of Nepal as a whole on which the country today has been planning to introduce and establish co-operative organization in all of the VDCs and municipalities of Nepal. Twenty years ago, a group of school teachers under the leadership of Mr. Yagya Raj Dhungel, the then head teacher of Hanumanteswor Higher Secondary School followed by Mr. Pusker Dahal a teacher of another school of the same village, have initiated to establish a cooperative, in Kabre, a model VDC of Dolakha District. At the time in which almost people of the entire village were unaware about the cooperative, it was almost a difficult task to start a new venture. At that time majority of villagers have no source of income rather than subsistence farming which has been barely supported their livelihood was unable to provide them income to submit even a *paisa* to become a member of the cooperative. This situation clearly reveals that majority of villagers in those days were incapable to save a sum of 100 rupees per month in the cooperative as it is a minimum amount a member should have to submit in every month of the year. People in the village have been discriminated in terms of caste, gender and poor. This obviously, has put things into a difficult situation to bring them into the cooperative folder.

## 2. JASACCOS helped poor people in the initial stage

Promoters had placed hard effort to bring poor people into the cooperative folder. They had initiated to take loan out of their own saving to poor people irrespective of caste and gender to enable them to operate small scale local level businesses for putting them into work when they spared a leisure time that generate income to become a member of the cooperative. Their inspiration worked effectively to those who were in below poverty line. People including the women, Janajati and Dalit have been operating small businesses like livestock and vegetable farming, woodcarving; metal works etc with the financial support of JASACCOS. This has been enabling them to earn better from their own effort to stand independently to get out of the poverty. Influenced from the inspiration, people of other adjacent VDCs have been attracted and in turn they started to become the member to kick off economic activities in their corresponding places in the financial support of JASACCOS. Women cover more than 50% of population are oppressed and depressed in the society. Today almost all women of these VDCs become member of this cooperative. Consequently, it provides women an opportunity on access to household property. Every woman has their own account in the cooperative like their counterparts. It implies that JASACCOS is helping to empower women in sharing the household resources.

## 3. Conclusion

Still the promoters are working in the cooperative. They have been placed efforts in bringing the local leaders of all political parties into consensus to make JASACCOS a successful and exemplary. Their effort carries JASACCOS in a new height. People not only in Dolakha Distrct and its immediate neighbors but also Nepal have been influenced by this cooperative venture. People particularly women have started to open cooperative today just because of its successful operation. It has been recognized by national and international entities related to cooperative.



# ग्रामीण विकासमा ऋण सहकारी संस्थाहरूको भूमिका

डा. शङ्कर प्रसाद घिमिरे

## १. विषय प्रवेश

वर्तमान विश्व अर्थतन्त्रमा वित्तीय संस्थाहरूले प्रदान गर्ने ऋण सेवाहरूको प्रयोजन अत्यधिक रूपमा बढ्दै गएको छ । विशेष गरी, विकासशील देशका ग्रामीण समुदायमा धेरै उद्यमीहरू शुरुवाती व्यावसायिक लगानीका लागि ऋण संस्थाहरूमा भरपर्ने गर्दछन् । यसरी लिएको ऋणले व्यापारीहरूको सफलतामा उल्लेख्य प्रभाव रहेको अध्ययनले देखाउँछ । ती सफलताहरूमा व्यापार प्रवर्धन तथा रोजगारीका अवसरहरू उत्पन्न गर्ने क्षमता समावेश हुन्छन् । त्यस सन्दर्भमा, यो लेख सन् २०१६ मा दोलखा जिल्लामा सम्पन्न एक अनुसन्धानमा आधारित छ । विशेष गरी अनुसन्धानले मुख्यतः माइक्रोफाइनान्स तथा अन्य ऋण संस्थाहरू तथा ऋण सहकारी संस्थाहरूले प्रदान गरेको लघुऋणले हालको बैतेश्वर गाऊँपालिका अर्थात तत्कालिन काब्रे गाउँ विकास समितिको मैनापोखरी वरपर रहेका व्यापारी तथा कृषकहरूको व्यापार व्यवसाय तथा रोजगारीमूलक कार्यक्रममा कत्तिको असर पारेको छ भनेर अध्ययन गर्न खोजेको थियो ।

## २. सर्वेक्षण तथ्याङ्क

उक्त अध्ययनमा व्यापार व्यावसायीहरू लगायत कृषक तथा ऋण दिने संस्थाका अधिकारीहरूसँग सर्वेक्षण तथा अन्तरक्रियामार्फत विवरण सङ्कलन गरिएको थियो । अनुसन्धानका क्रममा तत्कालीन काब्रे गाउँ विकास समितिका १२९ साना व्यवसायीहरूको सर्वेक्षणको प्रयोग गरेर मात्रात्मक र गुणात्मक जानकारी संकलन गरिएको थियो । साथै, तीन सफल किसानहरूको व्यवसाय अध्ययन र जनसचेतनसहित चार स्थानीय ऋण सहकारी संस्थाहरूसँग साक्षात्कार पनि गरिएको थियो । सर्वेक्षणमा सहभागीहरूमध्ये ५३% पुरुष र ४७% महिला थिए; ६०% सहभागीहरू २०-४० वर्ष उमेर समूहका थिए; व्यापारीहरूमध्ये ९०% विवाहित थिए । सहभागीहरूको शिक्षास्तरमा धेरै ठूलो फरक थियो । सहभागीहरूमध्ये अलि उमेर पुगेका व्यक्तिहरू तथा महिलाहरू प्रायः औपचारिक शिक्षा भएका थिएनन् । प्रायले चार कक्षा वा सो भन्दा तलमात्र पढेका थिए । तर, युवा व्यवसायीहरू सामान्यतया १० कक्षा वा त्यो भन्दा बढी पढेका थिए । सर्वेक्षण गरिएका व्यावसायीहरूमध्ये झन्डै ९९% ले आफ्नो व्यवसाय आफैंले चलाएका थिए भने बाँकी एक प्रतिशत व्यवसायीहरूले मात्रै कामदारहरू राखेको पाइयो । ती व्यवसायहरूमध्ये झन्डै ६० % पछिल्ला १५वर्षहरूमा शुरु भएका थिए र बाँकी मात्र त्यो भन्दा पुराना थिए ।

सर्वेक्षण सहभागीहरू स्थानीय ऋण सहकारी संस्थाहरूसँग राम्ररी परिचित थिए र उनीहरूको समुदायमा ती संस्थाहरूको योगदानको बारेमा खुलेरै प्रसंशा गरेका थिए । ८८ प्रतिशत सहभागीहरूले समुदायमा भएका वित्तीय संस्थाहरूले व्यवसायिक विकासमा प्रोत्साहन दिएको उल्लेख गरे । सहभागीहरूमध्ये ९०% ले वित्तीय संस्थाहरूले उद्यमशीलतालाई प्रोत्साहित गरेको बताए भने ७७% ले रोजगारी सिर्जनामा प्रोत्साहन गरेको उल्लेख गरे । सर्वेक्षणमा १२९ जनामध्ये ७०% ले वित्तीय संस्थाहरूले उनीहरूको व्यवसायमा सीधा फाइदा पुऱ्याएको बताए । सर्वेक्षणअनुसार ८६% ले आफ्नो व्यक्तिगत बचतमा ऋण थपथाप गरेर व्यवसाय शुरु गरेको बताए भने ऋण लिएकामध्ये ५३% ले लगानीको पुरै रकम विभिन्न संस्थाको ऋणमा भरपर्नु परेको बताए । औसतमा, व्यवसाय शुरु गर्न रु. ३१६,००० लिएका पाइयो भने ७४% सहभागीहरूले समयमै ऋण तिर्न सक्षम भएको बताए ।

## ३. व्यवसायिक सफलता र ग्रामिण विकासमा सहकारी तथा अन्य ऋण संस्थाहरूको योगदान

सर्वेक्षण गरिएका व्यावसायीहरूका अनुसार व्यावसायिक कारोबार बढ्दै गएको पाइयो । ६०% सहभागीहरूले उनीहरूको प्रारम्भिक राजस्वको तुलनामा उनीहरूको राजस्व बढेको बताए । त्यस्तै ६०% सहभागीहरूले आफ्नो व्यवसाय कारोबार 'औसत' मा रिपोर्ट गरे, जबकि २६% को 'औसत



भन्दा राम्रो' भएको उल्लेख गरे र ३% ले 'उत्कृष्ट' । उक्त सर्वेक्षणमा सहभागी व्यावसायीहरूमध्ये १% ले मात्र आफ्नो व्यावसायले 'औसत भन्दा नराम्रो' प्रदर्शन गरिरहेको बताए। यी व्यावसायिक सफलताका बीच सहकारी तथा अन्य ऋण संस्थाहरूको ग्रामिण विकासमा भएको योगदानको चर्चा गर्दै गर्दा एउटा ध्यान पुऱ्याउनुपर्ने कुरा छः सर्वेक्षण अनुसार ब्यापारिक नाफामा भएको वृद्धिभन्दा रोजगारीमा भएको प्रगति चाहिँ थोरै पाइयो । व्यापारिक नाफामा वृद्धि भयो भन्ने व्यवसायीहरू ६०% थिए भने रोजगारीमा पनि वृद्धि भयो भन्ने व्यवसायीहरू केवल २८% मात्र थिए ।

अध्ययन टोलीले गरेको सर्वेक्षण विश्लेषण गर्दा व्यावसाय त विस्तार भएको देखिएको छ, तर सहकारी संस्थाहरू मात्रैले गर्दा यो सफलता मिलेको हो भनेर किटानका साथ भन्न मिल्ने अवस्था चाहिँ छैन। किनभने प्रायः व्यवसायहरू गएका १५वर्षमा शुरु भएका छन् धेरैले आफ्नो बचतबाट पनि केही रकम लगानी गरेका छन। ऋणको कारणले गर्दा व्यवसायिक सफलता मिलेको हो या अन्य कारणले हो भन्ने थाहा पाउन छुट्टै अध्ययनको आवश्यक्ता पर्दछ। तर एउटा कुरा चाहिँ के ढुक्कका साथ भन्न सकिन्छ भने अध्ययन टोलीले सहकारीलगायतका संस्थाहरूबाट ऋण प्रयोग गर्ने व्यवसायीहरूको सफलताका कथाहरूको प्रमाण भेट्टाउन सक्षम भएको थियो । अनुसन्धान टोलीले जनसचेतन सहकारी संस्थाद्वारा लगानीमा सहयोग गरेका केही बिशेष व्यवसायीहरूको वस्तुगत अध्ययन गर्दा प्रत्येक घटनामा व्यवसायिक विस्तार र रोजगारीमा वृद्धि भएको देखियो ।

**अन्त्यमा,**

सर्वेक्षण तथ्याङ्कका परिणामहरू केही हदसम्म अझै केलाउनुपर्ने अवस्था छ । तर पनि परिणामहरू ग्रामीण अर्थव्यवस्था कसरी सञ्चालन हुन्छ भन्ने सन्दर्भमा आधारित नै भेट्टिएका छन् । ग्रामीण क्षेत्रहरूको व्यावसाय मुख्यतः पारिवारिक स्वामित्वमा सञ्चालित हुन्छन् । ग्रामीण क्षेत्रमा मान्छेहरू ठूलो निर्माण व्यवसाय वा औद्योगिक क्षेत्रको सपना देख्दैनन् । ती क्षेत्रहरूमा बजार अनुसन्धानको बारेमा अभ्यास त परै जाओस् त्यसको बारेमा कुनै जागरूकतासम्म पनि छैन । त्यहाँ व्यावसायिक हिसाब किताब राख्नको कुनै उपयुक्त प्रशिक्षण छैन र जोखिम कम गर्नका लागि कुनै उचित संयन्त्र छैन । अर्कोतर्फ ऋण सहकारी संस्थाहरूले साना पसलहरू, जसलाई सजिलै अनुगमन गर्न सकिन्छ त्यस्ता व्यावसायीलाई नै आफ्नो प्राथमिकतामा राखेको पाइयो किनभने तिनीहरू कम जोखिममूलक हुन्छन् र नियमित रूपमा गरेको बिक्रीबाट ऋण तिर्न सक्छन्। यसले गर्दा ग्रामीण क्षेत्रमा सहकारीहरूको भूमिका सिमित रूपमा मात्र छ भन्दा फरक नपर्ला । यदि सहकारी संस्थाहरूले ग्रामीण इलाकाहरूमा बलियो व्यावसायिक धरातल बनाउन खोज्ने हो र रोजगारी सिर्जनामा महत्वपूर्ण भूमिका खेल्न चाहने हो भने, उनीहरूले आफ्नो ऋण दिने नीतिमा नै केही परिवर्तन गर्नुपर्ने देखिन्छ । त्यस्ता कार्यहरूमध्ये केही सुझावहरू यहाँ उल्लेख गर्न चाहन्छु:

(१) साना किराना पसलहरूमा मात्र ध्यान केन्द्रित गर्नुको सट्टा उनीहरूले ठूलो मात्रामा नगदेबाली तथा कुखुरा र पशुपालन खेती गर्ने किसान र व्यवसायहरूलाई प्रोत्साहन गर्ने ।

(२) उनीहरूको क्षमता वृद्धिका लागि शैक्षिक कार्यक्रमहरू चलाउनेः जस्तै उचित हिसाव किताब राख्ने, बजार माग अध्ययन गर्ने, उत्पादन गर्ने सामानहरूको नक्कल गर्न भन्दा पनि आफ्नो छुट्टै "ब्रान्ड" विकास गर्ने ।

(३) उनीहरूले सेवाउन्मुख रोजगारीहरूमा स्थानीयलाई प्रशिक्षण प्रदान गर्ने । केही सहकारीहरूले केही मात्रामा त्यस्ता कार्यलाई प्रोत्साहन दिन खोजे पनि सिलाई बुनाई, ब्युटीसियन, मेकानिक जस्ता प्रशिक्षण अत्यन्त न्युन मात्रामा छन् ।

संक्षेपमा, ऋण सहकारी संस्थाहरूले गर्दै आएको साना उद्यमी र स्व-रोजगारी लक्षित कार्यक्रमबाट माथि उठेर मध्यम तथा ठूला व्यवसायीहरूलाई पनि प्रोत्साहन गर्ने नीति लिनुपर्ने आवश्यकता देखिन्छ जसले गर्दा व्यापार व्यवसाय विस्तारमा मात्रै हैन ग्रामीण क्षेत्रमा रहेको बेरोजगारीको समस्या कम गर्न सहयोग पुगोस् । सफलताको लागि शुभकामना ।

(लेखक अमेरिकाको Western Illinois University मा अर्थशास्त्रका प्राध्यापक हुनुहुन्छ ।)



# सहकारी र सञ्चार

जीवन लामा



**दोलखाका सहकारी संस्थाहरू दक्षिण एसियाकै लागि अनुसन्धान र अवलोकन गर्ने थलो बनेको छ।**

दोलखाका सहकारी संस्थाहरू दक्षिण एसियाकै लागि अनुसन्धान र अवलोकन गर्ने थलो बनेको छ । आर्थिक तथा सामाजिक हिसाबले पनि दोलखाका सहकारीहरू उर्वर भूमिको रूपमा लिन सकिन्छ । हिजोको दिनमा सहकारी बचत गर्ने र ऋण लिने हिसाबले मात्र बुझिन्थ्यो भने पछिल्लो अवस्थामा हरेक निकायले सहकारीलाई सामाजिक विकासको रूपमा लिन थालेका छन् । सहकारी र सञ्चार एकअर्काको परिपूरक नै बन्न थालेका छन् । अहिले को पत्रकार, को कृषक, को शिक्षक अनि धनी, गरिव हरेक समुदायले विषयगत रूपमा सहकारी संस्था सञ्चालनमा ल्याएका छन् ।

नमूना सहकारीको नाम लिंदा दोलखा जिल्लाको लागि मात्र होइन अन्य देशको लागि समेत परिचित सहकारी जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि. काब्रेको नाम आउँछ । कतिपय अवस्थामा त दोलखा जिल्लाको जनसचेतन सहकारी होइन कि जनसचेतन सहकारी दोलखाको भन्ने बुझाइ छ राष्ट्रिय स्तरका सहकारीकर्मीहरूलाई । जनसचेतन सहकारी जस्ताले गर्दा नै अन्य गाउँपालिका, नगरपालिका, जिल्लामा सहकारी खोल्ने होडबाजी चलेको छ । दोलखाकै कुरा गर्नुपर्दा यिनै सहकारीले गर्दा कसरी इन्टरनेशनल ब्राण्ड एक्सेस लिने भनेर लागिपरेका धेरै सहकारीहरू छन् ।



**जनसचेतन जस्ता सहकारीहरूको प्रभावले पत्रकारहरू पनि आर्थिक र सामाजिक रुपमा बलियो हुनुपर्छ भन्ने भावनाकासाथ नेपाल पत्रकार महासंघ दोलखा जिल्ला शाखाले दोलखा सञ्चार सहकारी संस्था स्थापना गरेको छ।**

शुरुमा ३/४ वटा वडाहरू मात्र कार्यक्षेत्र भए तापनि स्वेच्छाले अन्य गाउँपालिका र नगरपालिका मानिसहरू समेत सदस्य बनेको अवस्था थियो जनसचेतनको । विस्तार विस्तार अन्य गाउँपालिका र नगरपालिका समेटेपछि अहिले हजारौं सदस्य बनेका छन् । अधिकांश पत्रकारहरू समेत जनसचेतनको सदस्य बनेका छन् । सेवा सुविधाभन्दा पनि म पनि जनसचेतनको सदस्य हुँ भन्ने गर्व गर्छन् । जनसचेतन जस्ता सहकारीहरूको प्रभावले पत्रकारहरू पनि आर्थिक र सामाजिक रूपमा बलियो हुनुपर्छ भन्ने भावनाकासाथ नेपाल पत्रकार महासंघ दोलखा जिल्ला शाखाले दोलखा सञ्चार सहकारी संस्था स्थापना गरेको छ । पत्रकारहरू आर्थिक हिसाबले पनि बलियो बन्नुपर्छ भन्ने कुरा सहकारीले दिन्छ । समाचार लेखेको भरमा मात्र बाँच्न गाह्रो हुन्छ । पाएको पारिश्रमिकबाट केही रकम बचत गर्न थाल्यो भने पत्रकारलाई चाहिने भौतिक सामग्रीहरू ल्यापटप, क्यामेरा, रेकर्डर, मोटरसाइकल किन्नको लागि सुपथ व्याजदरमा ऋण लिन सकिन्छ । साथै पत्रकारहरूमा बचत गर्ने बानी पनि बस्छ । यहाँ पत्रकारिताको भरमा मात्र बाँच्ने पत्रकारहरू पनि छन् । तिनीहरूले आफ्नो भविश्य सम्झेर पत्रकारिता गरिरहेका छन् कि साथीहरूको लहलहैमा गरिरहेका छन् ती कुरा दोस्रो भयो । तर पत्रकारहरू पनि आर्थिक पाटो बलियो हुनु पर्छ नै । पर्याप्त मात्रामा साधन स्रोत भएमा मात्र गुणस्तर पत्रकारिता हुन्छ नत्र भने अभावै अभावको पत्रकारिता हुन बेर छैन । तसर्थ आफूलाई चाहिने ल्यापटप, क्यामेरा, रेकर्डर जस्ता अति आवश्यकीय सामग्री भएमा मात्र भनेजस्तो खोजेजस्तो हुनसक्छ । साथै पत्रकारहरू चाहिं खाली अरुकै भरमा मात्र काम गर्छन् भन्ने बुझाई नहुनको लागि पनि आर्थिक सामाजिक रूपमा पूर्ण हुन



आवश्यक छ । त्यसको लागि सजिलो, विश्वासिलो उपाय भनेको सहकारी नै हो । यिनै कुरालाई मध्यनजर गर्दै दोलखामा हाल दुईवटा सञ्चार सहकारी शैलुङ र दोलखा सञ्चार सहकारी स्थापना भएका छन् ।

जनसचेतन सहकारीले पत्रकारहरूलाई वार्षिक साधारणसभा तथा अधिवेशनमा सम्मान गर्दै आएका छन् । जसले पत्रकारहरूको मनोवल बढ्नुको साथै आर्थिक पत्रकारिताप्रतिको मोह बढेको देखिन्छ । पत्रकारहरूले पनि जनसचेतनको विषयमा धेरै समाचारहरू प्रकाशन, प्रसारण गर्ने गर्छन् । जसले गर्दा दोहोरो सम्बन्ध देखिन्छ । केही हदसम्म सहकारीकै कारणले आर्थिक समाचारलाई प्राथमिकता दिने गरेका छन् विभिन्न सञ्चारमाध्यमले । आर्थिक बिट बन्नु पनि सहकारीको केही हदसम्म भूमिका छ । कतिपय सहकारीहरूले वार्षिक रूपमा पत्रकार महासंघलाई पुरस्कार छनोटमा राखी सहकारी पत्रकारिता पुरस्कार दिँदै आएका छन् । कति सहकारीले पत्रकारको लागि भनेर पुरस्कार कोषनै खडा गरेका छन् । त्यस्तै सहकारीमध्येमा पहिलो नै होला जनसचेतनले पत्रकार र सञ्चारमाध्यमलाई सम्मान गर्दै आएको । सञ्चारमाध्यमले नै सहकारी सम्बन्धी जनचेतना फैलाउन मुख्य भूमिका हुन्छ भनेर रेडियो कार्यक्रमसमेत प्रसारण गरेका थिए । जनसेचतनले दोलखामा कालिञ्चोक सामुदायिक एफएम र रेडियो शैलुङबाट २०६९ सालमा १२ अंक सहकारी आवाज प्रसारणमा ल्याएको थियो । यसको साथै कालिञ्चोक एफएमले साप्ताहिक रूपमा प्रसारण गर्दै आएको बहसमुखी कार्यक्रम नागरिक बहसमा समेत सहकारी अगुवा तथा राष्ट्रिय प्रशिक्षक यज्ञराज ढुङ्गेलसँग सहकारी सम्बन्धी कार्यक्रम सञ्चालन गरेको छ । जसले गर्दा पत्रकार र सहकारीकर्मीहरूबीच सुमधुर सम्बन्ध कायम भएको देखिन्छ ।

jibanyatra37@gmail.com





# यसरी पनि सोच्ने कि सहकारीले !

चिरञ्जीवी मास्के

- *मैनापोखरीका गीताप्रसाद दाहाल मिल व्यवसायी हुन् । जनसेचतन सहकारी संस्थाबाट ऋण लिएर व्यवसाय गरेका गीताप्रसाद अहिले पाँचजनाको परिवारसहित आरामको जीवन बाँचिरहेका छन् । ०५४ सालमा जनसचेतनको सदस्य बनेका गीताप्रसादले अहिले परिवारका सबैलाई सदस्य बनाएका छन् । उनी भन्छन्- सहकारीले ग्रामीण मानिसलाई व्यवसायी बनाउन सहयोग गरेको छ ।*
- *शिवकुमार दहाल गोलभेडा खेती गर्छन् । उनी पनि जनसचेतनको सदस्य हुन् । सहकारीबाट सहज रुपमा ऋण लिन सकेकोले आफूले शुरु गरेको गोलभेडा खेतीको लागि निक्कै सहयोग पुगेको दाहालको भनाइ छ । बजारको अवस्थाअनुसार मुनाफा लिने गरेको बताउने शिवकुमार सहकारीबाट सहज ढङ्गले ऋण लिन सकेकै कारण व्यवसाय सफल भएको बताउँछन् ।*
- *गोमा खडकाको गाउँमै सानो पसल छ । जनसचेतनबाट ऋण लिएर पसललाई व्यवसायिक रुपमा अगाडि बढाएको गोमाले त्यही पसलको आम्दानीबाट छोराछोरीलाई राम्रो शिक्षा दिएकी छन् । सहकारीबाट सहज ढङ्गले ऋण पाउन नसकेको भए छोराछोरीलाई राम्रो शिक्षा दिन सक्थें कि सक्दिन थिएँ - गोमाले भनिन् ।*

सहकारीले ग्रामीण भेगका मानिसलाई व्यवसायिक बनाउन उत्प्रेरित गरेको केही उदाहरण हुन् माथिका पात्रहरू । लामो समयदेखि दोलखाको ग्रामीण भेगलाई आधार बनाएर सञ्चालनमा रहेको जनसचेतन बचत तथा ऋण सहकारी संस्थाले स्थापनाको २४ वर्ष पुग्दा जिल्लाको विशेष गरी ग्रामीण भेगका धेरै मानिसलाई व्यवसायी बनाएको छ ।

**व्यवसायको लागि सहकारी**

सहकारीबाट सहज ढङ्गले ऋण लिन सकिने भएपछि धेरै मानिसहरू विदेशमा रोजगारीको लागि जान छोडेर गाउँघरमै व्यवसाय शुरु गरी आत्मनिर्भर बन्दैछन् । कति ग्रामीण महिलाहरू नुन तेल र घरखर्चको लागि श्रीमानको मुख ताक्नुपर्ने बाध्यताबाट मुक्त भएका छन् । धेरै महिलाहरूले सानोतिनो पसल र कृषि व्यवसाय गरेर घरखर्च र परिवारको गुजारा सजिलै चलाउन सक्षम भएका छन् ।

दोलखा जिल्लाको सबै गाउँपालिका र नगरपालिकालाई सडकको सञ्जालले छोएको छ । सडकको सञ्जाल जोडिएपछि केही बर्षसम्म मानिसहरू सदरमुकाम चरिकोट आउँदा उपलब्धि कम, खर्च बढीको अवस्थामा थिए । तर अहिले सहकारीबाट सहज ढङ्गले ऋण लिनसक्ने भएपछि अधिकांश मानिस व्यवसायिक बनेकाले सदरमुकाम आउँदा खर्च कम र उपलब्धि बढीको अवस्थामा पुगेका छन् । किनभने अब हरेक मानिस सदरमुकाम चरिकोट आउँदा खाली हात आउनुपर्ने अवस्था छैन । आफूले उत्पादन गरेको सामान बिक्री गर्ने या सदरमुकामबाट आफ्नो व्यवसायको लागि आवश्यक पर्ने सामान खरीद गर्ने प्रयोजनको लागि मानिसहरू सदरमुकाम आउने गरेका छन् ।

विगतमा मानिसहरू आफ्नो जग्गा जमिन भएर पनि कृषि उत्पादन या अन्य व्यवसाय गर्न पूँजीको अभावका कारण असमर्थ थिए । त्यसैले मानिसहरू गुजाराको लागि कि त विदेश जान बाध्य थिए कि रोजगारीमा लाग्नु पर्थ्यो । विदेश जाने अवस्था पनि नहुने र रोजगारी पनि नभएको मानिस जग्गा जमिन प्रशस्त भएर पनि गरीव बन्न बाध्य थिए । तर अहिले सहकारीको विकास र विस्तारकै कारण पूँजीको अभावमा व्यवसाय गर्न नसकिने अवस्था छैन । जग्गा जमिन, सीप, लगनशीलता र ईच्छाशक्ति भएका मानिस सजिलै व्यवसायी बन्न सक्छन् ।

**केही सुधार आवश्यक**

ग्रामीण क्षेत्रमा व्यवसायको विस्तार गर्न र हरेक



मानिसलाई व्यवसायी बनाउन सहकारीको भूमिका महत्वपूर्ण हुँदाहुदै पनि सहकारीको सेवा अरु बढी विपन्न, बेरोजगार र गरीवमैत्री बनाउन केही सुधार आवश्यक देखिएको छ ।

सहकारीबाट ऋण लिन सहज भए पनि त्यसको ब्याजदर बढी भएको र हर्जाना झन् महँगो रहेकोले केही समस्या देखिएको छ । हुन त सहकारीको कुल सदस्य संख्यालाई विश्लेषण गर्ने हो भने ऋण लिने सदस्यको तुलनामा बचतमात्र गर्ने सदस्यको संख्या अत्यधिक नै छ । जन सचेतनमा नै २१ हजार ५ सय सदस्य रहेका छन् भने लगानीमा रहेका ऋणी संख्या करीब २४ सयमात्र छन् । त्यसैले बचतकर्तालाई अधिक ब्याज दिनु सहकारीको प्राथमिकता हो । र, बचतकर्तालाई बढी ब्याज दिएपछि ऋण लगानीमा पनि बढी ब्याज असुली हुनु स्वभाविक रहन्छ । तर सहकारीको अर्को उद्देश्य राष्ट्रको आर्थिक समृद्धिमा योगदान पुऱ्याउने समेत रहेकोले हरेक सदस्यलाई व्यवसायी बनाउन प्रोत्साहित गर्नुपर्ने दायित्व पनि हुनुपर्छ ।

सहकारी संस्थाहरूले बचतकर्तालाई दिने ब्याजदर बढाउने र ऋणीसंग लिने ब्याजदर घटाउने प्रयोजनको लागि केही विशेष आर्थिक योजना ल्याउनसक्छ । तर त्यसको लागि सहकारी नीतिमा व्यवस्था नभएकोले सरकारलाई सहकारी नीति परिर्वतनको लागि सुझाव दिनुपर्छ । अहिले सहकारी विधेयकसमेत संसदबाट पारित भइसकेको अवस्थामा सबैले आयमूलक व्यवसायमा सहकारीले पनि लगानी गर्नसक्ने वातावरण निर्माणमा ध्यान दिनु जरुरी छ ।

जस्तो, दोलखा जिल्ला जल विद्युत आयोजनाको महत्वपूर्ण हव बन्दै गइरहेको छ । करोडौंको कारोवार गर्ने दोलखाको सहकारी संस्थाहरूले हाइड्रो पावरमा लगानी गरेर मुनाफा लिने अवस्था बन्यो भने सदस्यहरूलाई त्यसको हिस्सा दिने र कार्यालय सञ्चालनमा त्यो मुनाफालाई खर्च गर्नसक्ने अवस्था रहन्छ । जसको कारण ब्याजदरमा सन्तुलन कायम गर्न सहयोग मिल्छ । त्यसैगरी रेमिट्यान्स लगायतका गतिविधिबाट समेत सहकारी संस्थाहरूले कार्यालय सञ्चालनमा खर्च जुटाउन सक्छन् । जिल्लामा रहेका हरेक सहकारी संस्थाले हाइड्रो पावर या अन्यत्र लगानी गर्ने अवस्था नरहे पनि जनसचेतन जस्तो ठूलो कारोवार रहेको सहकारीबाट त्यो सम्भावना रहेको छ ।

त्यसैगरी सहकारी संस्थाहरूले अध्यन भ्रमणलगायतका कुरामा आवश्यकभन्दा बढी खर्च गरिरहेको गुनासो आम सदस्यहरूबाट आउने गरेको छ । अध्ययन भ्रमणमा गरिने खर्च कटौती गर्ने हो भने पनि त्यसले सदस्यहरूलाई थप सुविधा दिनसक्ने अवस्था रहन्छ । यदि कुनै उत्कृष्ट सहकारीको अध्ययन गर्नैपऱ्यो भने पनि सबै सहकारीले दामासाही खर्च गर्ने गरी जिल्ला सहकारी संघको नेतृत्वमा भ्रमणमा जाने हो भने पनि फजुल खर्च कटौतीमा टेवा पुग्न सक्छ ।

सरकारको तीन खम्बे नीतिभित्र पर्ने सहकारीले सदस्यहरूलाई बचतमा विश्वासनीयता र ऋणमा सहजता प्रदान गर्न वैकल्पिक उपायको खोजी गर्नैपर्छ । र, यो कामको शुरुवात जिल्लामा सहकारी आन्दोलनलाई गति प्रदान गर्ने जनसचेतन जस्ता सहकारीबाटै हुनुपर्छ ।

**र अन्तमा,**

अधिकांश मानिसहरू अहिले सहकारीमा बचत गर्न अभ्यस्त छन् । फजुल खर्च कटौती गरेर सय, पचास बचत गर्ने बानीको विकास भएको छ । र दोलखामा यसको शुरुवात जनसचेतन, मिलिजुलीलगायतका सहकारी संस्थाले नै गरेका हुन् । चुरोट, खैनी, मदिरा जस्ता कुरामा खर्च गर्ने पैसा कटौती गरेर पनि मानिसहरू अहिले सहकारीमा बचत गर्छन् । महिलाहरूले पनि पेवाको पैसा बचत गर्न थालेका छन् । जुन पैसा श्रीमान वा आफन्तले कुलतमा खर्च गरिदिने खतरा रहन्थ्यो ।

यदि दोलखामा सहकारीको शुरुवात नभएको भए ग्रामीण क्षेत्रका मानिसले न बचत गर्थे, न व्यवसाय नै । त्यसैले बचतकर्ता र व्यवसायी दुवैलाई आर्थिक अभियानमा जोड्दै थप सफल बनाउने दायित्व पनि सहकारीको हो । २४ बर्ष पुरा गरेको जनसचेतनले यसको शुरुवात गर्छ भन्ने अपेक्षा राख्नु पनि सबैका लागि स्वाभाविक नै हो ।



# अन्तर्राष्ट्रियस्तरको सहकारी जनसचेतन

**दिल बहादुर केसी**
**आर्थिक पत्रकार**

**१.सहकारी अभियानमा जनसचेतन**

दोलखा जिल्ला सहकारीको उर्वर भूमिको रूपमा विकास भएको पाइन्छ । त्यसमाथि काब्रेमा सञ्चालनमा आएको जनसचेतनले सहकारी भनेको जनसचेतन नै हो कि ! भन्ने पनि बनाएको छ । काब्रे र आसपासका गाउँलाई आफ्नो कर्मभूमि बनाएर जनसचेतनले स-सानो छरिएर रहेको पूँजीलाई संकलन गरेर सहकारीको माध्यमबाट वचत र ऋणको कारोबार गर्न थालेपछि यसबाट धेरै नागरिक लाभान्वित भएका छन् ।

काब्रेमा गुरु यज्ञराज ढुङ्गेलको नेतृत्वमा स्थानीय अगुवाहरूले शुरु गरेको सहकारी अभियान तुरुन्तै आसपासका गाउँहरू जुँगू, क्षेत्रपा, मिर्गे, नाम्दुलगायतका गाउँमा फैलियो । प्रभाव जनसचेतनकै थियो ।



**यसले सञ्चालन गरेका क्रियाकलापहरूले सदस्यहरूको आर्थिक, सामाजिक तथा सांस्कृतिक रूपान्तरणको लागि कोशेढुंगा सावित हुनाले नै आज यो संस्थाले राष्ट्रिय तथा अन्तर्राष्ट्रिय क्षेत्रमा ख्याति प्राप्त गर्न सफल भएको छ ।**

यस जिल्लाको सहकारी आन्दोलनमा अग्रणी भूमिका खेल्न सफल जनसचेतन वचत तथा ऋण सहकारी संस्थाले स्थापनाको २४ वर्ष पूरा गरेको छ । यस अवधिमा यस क्षेत्रका मानिसहरूको दयनीय आर्थिक र सामाजिक अवस्थाबाट उनीहरूलाई मुक्त गर्न कोसिस गरेको पाइन्छ । यसले सञ्चालन गरेका क्रियाकलापहरूले सदस्यहरूको आर्थिक, सामाजिक तथा सांस्कृतिक रूपान्तरणको लागि कोशेढुंगा सावित हुनाले नै आज यो संस्थाले राष्ट्रिय तथा अन्तर्राष्ट्रिय क्षेत्रमा ख्याति प्राप्त गर्न सफल भएको छ । आफूलाई सम्पूर्ण वित्तीय समाधानसहितको समुदायमा आधारित सहकारी संस्थाको रूपमा विकास गर्दै सबै वर्ग, तह, पेशा र क्षेत्रका मानिसहरूलाई समान अवसर प्रदान गरी उनीहरूको आर्थिक र सामाजिक विकास गर्ने जनसचेतनले समेट्ने कोसिस गरेको देखिन्छ । बालबालिका, युवा र वृद्धहरूका लागि छुट्टाछुट्टै कार्यक्रमहरू सञ्चालन गरी सामाजिक सुरक्षाको प्रत्याभूति दिन जनसचेतन सफल भएको छ ।

विद्यार्थीहरूलाई छात्रवृत्ति तथा शैक्षिक ऋण, युवाहरूलाई चाहेको काम गर्न आवश्यक पूँजीको उपलब्धता, वृद्धवृद्धाहरूलाई जनसचेतन आजीवन सहारा तथा ज्येष्ठ नागरिक सम्मान जस्ता क्रियाकलापहरूले जनसचेतनलाई बुढेसकालको सहाराको रूपमा हेर्न थालिएको छ । यस संस्थाले प्रत्येक मानिस ६५ वर्ष पुग्दा आफ्नो बाँकी जीवन सुखमय रूपमा निर्वाह गर्नको लागि नियमित वचतलाई बुढेसकालको सहाराको रूपमा मात्र प्रयोग गर्न सवै सदस्यहरूलाई सचेत गराउने कार्यक्रम अघि सारेको छ । नेपालको एउटा नमूना सहकारीको रूपमा स्थापित जनसचेतनलाई एसियाली ऋण महासंघले सिल्भर ब्राण्डको प्रमाणपत्र प्रदान गरी अन्तर्राष्ट्रिय मापदण्डमा पुग्न सफल सहकारीको रूपमा प्रमाणीकरण गरिसकेको छ । यो स्टाण्डर नेपालका अति थोरै संस्थाहरूमध्येको एक जनसचेतन हो । यसले पनि संस्थाको वित्तीय सक्षमता, गुणस्तरीय सेवा सुविधा, कुशल व्यवस्थापन, संस्थागत दिगोपना जस्ता कुराहरूको विशिष्टतालाई प्रमाणित गर्छ ।

**२. दोलखाको सहकारी अभियान**

दोलखा जिल्लाको सहकारी आन्दोलनको चर्चा गर्ने हो भने यस जिल्लामा २०३४ साल जेष्ठ २ चरिकोटमा कालिञ्चोक बहुउद्देश्यीय सहकारी संस्था नामक एक संस्थाको दर्ता भएको देखिन्छ । हालसम्मको रेकर्ड अनुसार यो नै दोलखा जिल्लामा दर्ता भएको पहिलो सहकारी संस्था हो । यद्यपि यसको दर्ता नं.३४ भएकोले यसभन्दा अगाडि पनि यस



जिल्लामा सहकारी संस्था दर्ता भएको हुनसक्छ तर कुनै निकायसंग स्पष्ट प्रमाण छैन ।

सहकारी ऐन २०४८ आउनुअघि २०४७ सालमा दोलखाको जिरीमा अरनिको यातायात वचत तथा ऋण सहकारी संस्थाको स्थापना भइसकेको थियो भने तत्कालै जिरीमा नै फ्रेन्डसिप वचत तथा ऋण सहकारी संस्थाको पनि स्थापना भयो । यिनै संस्थाका अगुवा नेताहरूको प्रभावले २०५० सालमा जिल्लाको काब्रेमा जनसचेतन साकोस, चरिकोटमा मिलिजुली साकोस, क्षमावती, डाँडाखर्कलगायतका स्थानमा सहकारी संस्थाहरू स्थापना भए भने २०५० सालमा नै जिल्ला सहकारी संघ र २०५२ सालमा जिल्ला वचत तथा ऋण सहकारी संघको पनि स्थापना भयो । ऐन जारी भएपछि दोलखा जिल्लामा सहकारी संघ/संस्था दर्ता हुने क्रममा तीव्रता आउनथाल्यो । अझ खासगरी २०५० सालपछि दोलखा जिल्लामा सहकारी संघ/संस्था दर्ताको क्रम बढ्न थाल्यो ।

डिभिजन सहकारी कार्यालय दोलखाको रेकडअनुसार हाल दोलखा जिल्लामा १ जिल्ला सहकारी संघ, ५ वटा विषयगत जिल्ला संघ, वचत तथा ऋण सहकारी संस्था १९८, कृषि १९९, बहुउद्देश्यीय ३८ (हाल दर्ता गर्न बन्द गरिएको), पर्यटन ८, दूग्ध ७, विद्युत ५, यातायात १, उपभोक्ता ३७ (हाल निष्क्रिय), चिया २, स्वास्थ्य ३, सञ्चार २, तरकारी तथा फलफूल ६, कोसेली घर ३, मौरीपालन १ गरी जम्मा ५२३ वटा सहकारी संघ/संस्था खुलेका छन् भने डिभिजन सहकारी कार्यालय दोलखाले हालै प्रकाशित गरेको सूचना अनुसार ३० वटा सहकारी संघ/संस्थाहरू खारेजीमा परेका छन् । खारेजीमा पर्नेमा एक जिल्ला पर्यटन सहकारी संघ रहेको छ भने अधिकांश पर्यटन सहकारी संस्था छन् । बहुउद्देश्यीय, दूग्धलगाएतका संस्थाहरू पनि खारेजीमा परेका छन् । जिल्लामा दर्ता भएका सहकारी संस्थामध्ये उपभोक्ताका संस्थाहरू सबैभन्दा निष्क्रिय छन् ।

पछिल्ला समयमा जिल्लामा हाल आएर कृषि सहकारी दर्ता गर्ने क्रम बढ्यो । केही बचत तथा ऋण र बहुद्देश्यीय सहकारी संस्थाले आफ्नो नाम र उद्देश्य परिवर्तन गरी साना किसान कृषि राख्ने लहर पनि चले । तर दोलखामा बचत तथा ऋण सहकारीहरू जसरी चले त्यही अनुशरण मात्र अरुले गरे ।

दोलखा जिल्लामा लागू भएको हिमाली परियोजना र राज्यबाट पनि कृषि सहकारीमार्फत केही सहयोग उपलव्ध गराउने योजना भएकोले यस्ता सहकारी संस्था दर्ता गर्ने क्रम बढी भएको विश्लेषकहरूको अनुमान थियो । अहिले कृषिले कृषि नै बिर्सन थालेपछि, बहुद्देश्यले आफ्नो लक्ष्य के हो भन्ने ठम्याउन नसकेपछि, साँच्चै त्यो आरोप सही हो कि ! भन्ने लाग्न थालेको छ ।

आवश्यक्ताका आधारमा केही सहकारीहरू एक आपसमा मर्ज् हुने क्रमसमेत शुरु भएको छ । महिलाहरूले मात्र चलाएका सहकारी संस्था पनि यस जिल्लामा निकै राम्रा छन् । दोलखा जिल्लाका यी सहकारी संस्थाहरूमा एक लाखभन्दा बढी मानिस आवद्ध भइसकेको तथ्य विभिन्न तथ्याङ्कहरूले देखाएका छन् । जसमा झन्डै साँढे २ अर्ब रूपैयाँ पूँजी संकलन भइसकेको छ । केही संस्थाहरूले माथिल्लो तामाकोसी जलविद्युत आयोजनामा स्थानीयको नाममा शेयर लगानी गर्ने निर्णय गरेर आफ्नो तयारीमा लागि सकेका छन् । केही सहकारी संस्थाहरू आफ्नो निश्चित पूँजी कुनै जलविद्युत आयोजनामा लगानी गर्न अध्ययन गरिरहेका छन् । यसबाट के स्पष्ट हुन्छ भने स्थानीय तथा राष्ट्रिय आवश्यक्ता र बजारलाई हेरेर ठूला परियोजनामा समेत लगानी गर्न सहकारीमार्फत शुरुवात भएको छ ।

### ३. जनसचेतन अग्रणी सहकारी

अहिले पनि देशभरबाट धेरै सहकारीकर्मी वार्षिक रूपमा जनसचेतन भ्रमणमा आउँछन् । त्यसबाट प्रभावित भएर आफ्नो संस्थामा लागू गर्ने कोसिस गरेका छन् । दोलखाका सहकारीहरूमा लाखभन्दा बढी सदस्यहरू आवद्ध भइसकेका छन् तथा उनीहरूबाट झन्डै ५ अरब रूपैया पूँजी संकलन भएको छ । यस जिल्लामा वचत तथा ऋण सहकारी संस्थाहरूको स्थापना २०४८ सालतिरबाट नै शुरु भएको हो । तर २०५० सालमा जनसचेतन सहकारी संस्था स्थापना भएपछि सहकारी आन्दोलनले झन् गति लिएको पाइन्छ ।



**सहकारीका पहुँच नपुगेका ठाउँमा जनसचेतनले ५ वर्षअघि कार्यक्षेत्र विस्तार गरी जिल्लाभर बनाएर सेवा केन्द्रसमेत राखेर नागरिकहरूलाई सहकारीमा आवद्ध गराएको छ ।**

जिल्लामा सहकारी संस्थाहरू धेरै भए तापनि पूँजी, सेवा र सदस्यका आधारमा सीमित संस्थाहरू गणनामा आउँछन् । सहकारीका पहुँच नपुगेका ठाउँमा जनसचेतनले ५ वर्षअघि

कार्यक्षेत्र विस्तार गरी जिल्लाभर बनाएर सेवा केन्द्रसमेत राखेर नागरिकहरूलाई सहकारीमा आवद्ध गराएको छ । हजारौं सदस्य जनसचेतनमा आवद्ध छन् । २५ वर्षमा एक अर्बको नजिक पूँजी पुऱ्याएको छ ।

अहिले काभ्रेमै जनसचेतनको गतिलो प्रतिस्पर्धी सहकारी जनमुखी साकोस छ । जनसचेतनभन्दा पुरानो संस्था फ्रेण्डसिप जिरीको अगुवाइमा ११ वटा अन्य सहकारी एकीकरण गरी एउटै सबल सहकारी बनेको छ । भीमेश्वर नगरपालिकाभित्रका मिलीजुली र हाम्रो जनकल्याण साकोस, स्वर्णसहितका दर्जन सहकारीहरू पनि प्रतिस्पर्धी संस्थाहरू हुन् ।

ती संस्थाहरूभन्दा फरक तर सरल सेवा दिएर सदस्यहरूको मन जितेर काम गर्नुपर्ने जनसचेतनको चुनौति पनि छँदैछ । अन्य सहकारीहरू पनि एकअर्कामा एकीकरणका लागि वार्ता छलफल चले तापनि जनसचेतन एक्लै दौडेर पहिलो बन्न लागेको हो कि भन्ने पनि देखिन्छ । सहकारीका क्षेत्रमा धेरै राम्रो काम गरेको जनसचेतन एकीकरणको नेतृत्व गर्ने विषयमा अरुभन्दा पछि देखिएको छ ।

**४. परिवर्तित मैनापोखरी**

२५ वर्षअघिको मैनापोखरी र अहिलेको मैनापोखरी तुलना गर्दा कल्पना पनि गर्न सकिन्न कि मैनापोखरीले यति चाँढै फड्को मार्छ भन्ने । काभ्रेका अगुवाहरूको एकता योजना र कार्यान्वयले सबै सम्भव भएकोमा कुनै दुई मत छैन । छाप्राबाट आज आधुनिक महल बनेका छन् । गाउँ गाउँसम्म यातायात सेवा पुगेर धेरै बजार केन्द्रहरू विस्थापित भए पनि मैनापोखरीको आकर्षण कम छैन । वित्तीय पहुँच भएकैले व्यापार व्यवसाय र कृषिलाई आधुनिकीकरणमा सहकारी क्षेत्रले ठूलो भूमिका खेलेको छ । उच्च शिक्षा अध्ययनका लागि काभ्रे धेरैको गन्तव्य बनेको छ ।

हुन त अहिले मैनापोखरी बजारमा बैंकको शाखा विस्तार भएको छ । चरिकोट शाखा रहेका वाणिज्य बैंकहरू पनि आफ्नो सुरक्षित लगानीको गन्तव्यको रूपमा मैनापोखरी हानिएका छन् । आधा दर्जन सहकारी संस्थाहरू पनि काभ्रेभित्र छन् । तर जति सहकारी संस्थाहरू काभ्रे र त्यस आसपासमा भए तापनि त्यसको जग जनसचेतन नै हो । बैंकहरूको सुरक्षित गन्तव्य मैनापोखरी बन्नु र समृद्ध बजार केन्द्र बन्दै जानु साथै काभ्रे आसपासको बजारकेन्द्र मैनापोखरी कायमै हुनु सहकारीहरूको भूमिका मुख्य छ ।

जनसचेतन अहिले काभ्रे आसपासका क्षेत्रबाट विस्तार भएर जिल्लाभर छ । सदरमुकाममा पनि पहिलादेखि रहेका संस्थाहरूसँगको गतिलो प्रतिस्पर्धी भयो । जनसचेतनले क्षेत्र विस्तार गरेपछि भीमेश्वर नगरपालिकाभित्रका अरु संस्थाहरूले समेत सदस्यता विस्तारमा चासो राखेर तीव्रता दिए । कारण जनसचेतनको क्षेत्र र सदस्यता विस्तार अभियान नै हो । जनसचेतन आफू जति ठूलो भयो, उसका प्रतिस्पर्धी क्षमता पनि बढेका छन् । यो अरुका लागि पनि अनुकरणीय पक्कै हुन्छ । यसको पछिल्लो प्रमाण सन् २०१७ को एसियाली ऋण महासंघले गरेको सुक्ष्म मूल्याङ्कनबाट प्राप्त सिल्भर ब्राण्ड नै काफी छ ।

जय सहकारी ‼

dilsagarkc@gmail.com



# महिला सहकारी सञ्चालनमा मेरो अनुभव



प्रतिभा घिमिरे

**१. अनुभवको पृष्ठभूमि**

अनुभवको यो कथा त्यो बेलादेखिको हो, जब म सहकारी अभियानमा आवद्ध हुँदा १४ वर्षको मात्र थिएँ र कक्षा ८ मा पढ्दै थिएँ। त्यो २०५२ सालको कुरा हो। त्यसपछिका २२ वर्ष बितिसके, अझैसम्म सहकारी यात्रा जारी नै छ। २०५० मा जनसचेतन स्थापनाको १ वर्षपछि संस्थाले आफ्नो कार्यक्षेत्रभित्रका महिला तथा पुरुषहरूमा साक्षारताको साथै सहकारी शिक्षामार्फत सहकारी अभियान विस्तार गर्ने उद्देश्यले नाम्दु, काब्रे गाविसमा प्रौढ कक्षा सञ्चालन गरेको थियो । विद्यालयका विभिन्न सामाजिक, शैक्षिक गतिविधिमा म सहभागी भइरहेको कारण पनि हुनसक्छ, म पनि काब्रे १ चोरखर्क केन्द्रको प्रौढ कक्षा सहजकर्तामा नियुक्त हुनपुगें । ६ महिनासम्म चलेको प्रौढ कक्षाका सबै केन्द्रहरूमा महिलाहरूको संख्या अत्यधिक थियो । उनीहरूले अक्षर चिन्दै सहकारी पनि चिने र वचत गर्न शुरु गरे। जनसचेतन भर्खरै विकासको क्रममा रहेको थियो र सदस्यहरू पनि पुरुष मात्र अत्यधिक रहेका थिए। साथै काब्रेको पश्चिम भागका (वाड नं. १,२,३) जनताहरूको सहभागीता पनि सहकारीमा निकै कम रहेको थियो। यस्तो अवस्थामा प्रौढ कक्षामार्फत सानो समूहमा जम्मा भइरहेको वचतलाई संस्थागत रूप दिनुपर्छ भन्ने क्रममा महिला सहकारी अलग्गै स्थापना गरौं भन्ने धारणा धेरैमा आएकाले २०५२ को फागुनबाट (संयोगवश माओवादी युद्ध पनि यसै हप्ताबाट शुरु भएको थियो । उ फर्किसक्यो तर हामी हिंडिरहेकै छौं) काब्रे गाविसको वाड नं. १,२,३ र ४ मा सञ्चालन भएका प्रौढ कक्षाका महिलाहरूको वचत एकै ठाउँ संकलन गर्न शुरु भयो। यो अभियानले २०५३/३/२५ मा भविष्य निर्माण महिला वचत तथा ऋण सहकारी संस्था लि. मा पुगेर संस्थागत स्वरूप लियो। स्थापनाको क्रममा म नागरिकता लिने उमेरभन्दा कम भए तापनि शुरुमै सदस्य बनेको र पछि संस्था दर्ता गर्ने समितिमा अरु नै भए तापनि पुरानै नामलाई सदस्यता कायम गर्दै गएको हुँदा मेरो सदस्यता नं. ९ कायम भयो। त्यही २०५२ देखि म यस महिला सहकारीमा संलग्न रहँदै आएको छु। लेखा संयोजक पदबाट समितिमा प्रवेश गरेकोमा ४ वर्ष लेखा संयोजक, सञ्चालक समितिको सचिव ३ वर्ष, उपाध्यक्ष १५ वर्ष गरी जम्मा ९ कार्यकालमा हाल उपाध्यक्ष पदमा रहेको छु । यो अनुभव लेखन यही अवधिका गतिविधिहरूमा केन्द्रित छ । आशा छ, यो अनुभव लेखनले सहकारी अभियानमा लाग्नुभएका महिला दिदी बहिनीलगायत सबैलाई महिला सहकारीसम्बन्धी केही व्यवहारिक सवालहरू बुझ्न धेरै मद्दत पुग्नेछ र ती संस्थाहरूमा महिला सशक्तिकरण योजना निर्माण र कार्यान्वयनमा पनि केही प्रेरणा मिल्नेछ। यो अनुभव लेखिरहँदा आफ्नै गाउँमा पाँचवटा वचत तथा ऋण सहकारी संस्थाहरू एउटै सानो बजारमा मुख्य कार्यालयसहित कारोबार गरिरहेका छन् । तीमध्ये जनसचेतनले दोस्रोपटक Silver Bronze (अन्तर्राष्ट्रिय वर्गीकरण अनुसार दोस्रो तहको चाँदीको पदक) प्राप्त गरिसकेको छ भने उसको पूँजी ९१ करोडभन्दा माथि पुगिसकेको छ। गाउँ र जिल्ला गरी आफू ५ वटा प्राथमिक सहकारी संस्थामा आवद्ध छु भने वचत तथा ऋण सहकारी संघको जिल्ला सञ्चालक समितिमा पनि आवद्ध छु।

**२. कमाएका अनुभवहरू**

साधारण लेखपढ भएका सहकारीकर्मीलाई समेत सकेसम्म पढ्न, बुझ्न र मनन गर्न सजिलो होस् भन्ने उद्देश्यले यस शीर्षकमा सहकारी विकासका विभिन्न विषयहरूलाई उपशीर्षकमा राखी अनुभवहरू प्रस्तुत गरेको छु।

**२.१ सहकारी स्थापना**

माथि पनि भनियो, त्यसबेलासम्म गाउँमा संस्थागत रूपमा आर्थिक कारोबार गर्ने संस्था नभएको कारण, भर्खरै शुरु भएको संस्थामा पनि सबै मान्छेहरू (विशेष गरी ओल्लो काब्रे भनिन्छ) आवद्ध भइनसकेको तर सहकारीप्रति उत्साह र विश्वास बढ्दै गएको कारण महिला सहकारी अलग्गै स्थापना भयो । त्यसबेला संस्था स्थापना भइ शुरुका केही महिनासम्म दैनिक सञ्चालन गर्नमा व्यक्तिगत तथा संस्थागत रूपमा जन आँकुरा संघका सस्थापक श्री बिर्ख छेत्रीलगायतका अभियन्ताहरूको विशेष योगदान थियो भने संस्था स्थापनाको आधार तयार गर्न, दर्ता गर्नमा

र पछिल्ला वर्षहरूसम्म प्राविधिक सहयोग गर्न संस्थागत रूपमा जनसचेतनका संस्थापक अध्यक्ष श्री यज्ञराज ढुङ्गेलको विशेष योगदान रहेको थियो । यसैगरी शुरुका केही वर्षसम्म प्राविधिक सहयोगमा जनमुखी साकोसका संस्थापकहरू कृष्ण प्रसाद दाहाल र माधव प्रसाद दाहालको पनि उल्लेख्य सहयोग रहेको थियो । यसरी सहज परिस्थितिमा महिला सहकारी स्थपना र सञ्चालन भएको थियो । सहकारी दर्ता गर्ने सूचीमा जम्मा २५ जनाको सहभागीता थियो ।

**२.२ सदस्यता र क्षेत्र विस्तार**

दर्ता भएको मिति २०५३/३/२५ सम्ममा १६० जना सदस्य रहेको संस्थामा असार २०७४ सम्म आइपुग्दा ११६० जना सदस्यहरू पुगेका छन् । शुरुमा काब्रे गाविसको १, २, ३ र ४ कार्यक्षेत्र रहेकोमा हालको कार्यक्षेत्र काब्रे गाविस र नाम्दु ४ सम्म विस्तार भएको छ । यद्यपि सदस्यहरूको यो संख्या र कार्यक्षेत्रलाई संगैका अरु सहकारीको तुलनामा निकै सीमित मान्नुपर्छ । २२ वर्षको अवधिमा विशेष गरी संस्था स्थापनाको प्रारम्भिक चरणमा सहकारीको संख्या पनि कम भएको र नयाँ अवधारणा पनि भएको कारण सदस्यता र क्षेत्र विस्तार तीब्र रूपमा अघि बढ्यो । २०६५/०६६ पछि भने यसमा खासै वृद्धि हुनसकेको छैन । यसो हुनुको मुख्य कारण एउटै गाउँमा एउटै प्रकृतिका धेरै सहकारी संस्था र कडा प्रतिस्पर्धा साथै एउटै व्यक्ति धेरैतिर सदस्य बन्नु यस सहकारीका लागि मुख्य कारण देखिन्छ ।

**२.३ पूर्वाधार तथा प्रविधि विकास**

पूर्वाधारतर्फ अचल सम्पत्तिमा संस्थाको नाममा मैनापोखरी बजारमा ४२ व.मी. जग्गा र उक्त घँडेरीमा रहेको संस्थाको ३ तलाको ५ कोठे भवन छ । कार्यालयलाई आवश्यक पर्ने आधारभूत फर्निचर, रेकड व्यवस्थापन सामग्री, कम्प्युटर लगायतका सामानहरू उपलब्ध छन् भने प्रविधितर्फ नेफ्स्कुनको नेकोस प्लस सफ्टवेयरमा लेखा राख्ने गरिएको छ ।

**२.४ कर्मचारी व्यवस्थापन**

संस्थापक सदस्यहरूमध्ये संस्थापक अध्यक्ष कृष्णकुमारी बस्नेत, शारदा घिमिरे, सुर्यकुमारी बस्नेतले संस्था दर्ता गर्नुभन्दा पहिला पाँच महिना र दर्तापछि प्रतिभा घिमिरे (म आफैं) गोमा बस्नेत, चन्द्रमाया खडकालगायतले लगभग १ वर्षसम्म नि:शुल्क रूपमा स्वयम्सेवाबाट सदस्यता विस्तार, वचत संकलन तथा लेखा व्यवस्थापनको काम गर्दै संस्थालाई अघि बढाएको थियो । २०५४ पछि न्युनतम भत्ता मासिक रु.२०० पाउने गरी कोषाध्यक्ष गोमा वस्नेत (हाल व्यवस्थापक) लाई दैनिक व्यवस्थापन हेर्ने जिम्मा दिइयो भने मिति २०६९ चैत्र १५ गतेबाट मात्र औपचारिक रूपमा २ जना कर्मचारी नियुक्त गरियो । त्यसबेला २ जनाबाट शुरु गरेको कर्मचारी संख्या हाल ३ जनामा पुगेको छ जसमा व्यवस्थापक, वचत सहायक र कार्यालय सहयोगी रहेका छन् । तीमध्ये १ स्थायी र २ अस्थायी कर्मचारी राखिएको छ ।

सामान्य कर्मचारीहरू राख्नुपर्ने हुँदा स्थानीयबासी र महिला नै राख्नुपर्ने भएकोले व्यक्ति र उसको काम गर्ने समय पर्याप्त उपलब्ध भए तापनि शुरुमा सहयोगी कर्मचारीहरूलाई पर्याप्त तालीम, अभ्यास, अनुगमन र सुविधाको व्यवस्था कम भएको हुँदा उनीहरूको लामो अवधिसम्म टिकाउ हुन सकेन । वर्तमान अवस्थामा सेवा सुविधा र सिकाइका अवसरहरू पर्याप्त भए तापनि ठूला सहकारीहरूसंग प्रतिस्र्धात्मक तुलनामा संस्थाको दीर्घकालीन योजनाको कमी र नीति नियम कार्यान्वयनको अनुगमनलाई अझै प्रभावकारी बनाउन नसकिएको हुँदा कर्मचारीहरूको समय र सिर्जनशीलतालाई पूर्ण रूपमा परिचालन गर्न सकिएको छैन । एकै स्थानमा पाँचवटा सहकारीहरू भएकोले अन्तरसहकारी सिकाइ तथा सहयोग प्रणालीलाई अझ बलियो बनाउनुपर्ने आवश्यक्ता छ ।

**२.५ नेतृत्व विकास**

स्थापनादेखि हालसम्म ९ पटक निर्वाचन भइ ९ वटा सञ्चालक समितिले काम गरिसक्यो । यो अवधिमा सञ्चालक समिति र लेखा समिति गरी कुल १३२ जनाले नेतृत्व गरिसके भने यसमा दोहोरिएका पदाधिकारीहरूको संख्या आधाभन्दा बढी रहेको देखिन्छ । कार्यावधिको विवरण हेर्दा शुरुमा समितिको कार्यकाल २ वर्षको थियो भने पछि २०६४ सालबाट ३ वर्षको बनाइयो जुन हालसम्म पनि यही नै कायम छ । यसैगरी सञ्चालक समितिमा पदाधिकारी संख्या शुरुमा ११ जनाको रहेको थियो । पछि २०६४ सालबाट १३



जनाको बन्यो भने यो पनि हालसम्म कायम नै छ । २०५३ सालदेखि उपसमितिहरू पनि गठन गर्ने काम शुरु भयो । शुरुमा जम्मा ३/३ जना रहेको २ वटा (शिक्षा र ऋण) उपसमितिबाट शुरु भइ हाल कृषि उपसमिति समेत थप भइ ३ वटा (शिक्षा, ऋण र कृषि) उपसमितिहरू पुगेका छन् जसमा ५७ जनाको सहभागिता पुगिसकेको छ । यो अवधिमा हामीलाई नेतृत्व गठनमा सबैभन्दा सहज हुने गरेको विषय समिति गठनमा आन्तरिक विवाद हुने गरेको छैन तर समस्यातर्फ हेर्दा यही विषयमा यदाकदा बाहिरी हस्तक्षेप देखिने गर्छ । नेतृत्वको सीप, दक्षता विकासका लागि विभिन्न तालिम, गोष्ठी, भ्रमण, सम्मानका अवसरहरू राम्रा थिए र त्यसको उपयोग गरी सीप विकासमा मद्दत पुगेको थियो । दुई दशकको अवधिलाई फर्केर हेर्दा हामीले नेतृत्वको क्षमता विकासमा कम्तीमा पनि निर्धक्क भएर बोल्न सक्ने (जस्तै सभा, समारोह आदि) संगठित भएर महिलाहरूको विषयमा उठेका सवालहरूलाई वकालत गर्न सक्ने पक्षमा प्रगति गरेको भन्न सकिन्छ । यति हुँदाहुँदै पनि सहकारी व्यवस्थापनको प्राविधिक पक्षमा भने तुलनात्मक रूपमा पछि नै मान्नुपर्ने अवस्थामा छ । महिला नेतृत्वहरूको सीप तथा क्षमता विकासमा अवरोध गर्ने मुख्य विषयहरूमा महिलाहरूका लागि पर्याप्त र खुला सिकाइ वातावरणको अभावमा आत्मविश्वासको कमी भइ अरुमा भर पर्नुपर्ने हुँदा त्यहींबाटै सहयोगको साथै विभिन्न पक्षहरूको आ-आफ्नो रुचि पनि बाभ्फिन गइ बेला बेला हस्तक्षेप तथा दबावका प्रवृत्तिहरू पनि खेप्नुपर्ने अवस्थाहरू आइरहन्छ । यी सबै कुरालाई मनन गर्दा आगामी दिनका लागि संस्थालाई बलियो बनाउनका लागि सञ्चालकबीच साझा बुझाई, व्यवस्थापकीय क्षमतामा पर्याप्त विकास, समय अनुसार चलनसक्ने, पुस्ता हस्तान्तरण गर्ने र जस्तोसुकै परिस्थितिमा पनि खट्न सक्ने किसिमको नेतृत्व आवश्यक परेको छ । यसको लागि मुख्य गरी नेतृत्वलाई आत्म निर्णय गर्नेसक्ने क्षमता विकास गर्दै लैजानु आवश्यक बन्दै गएको देखिन्छ ।

**२.६ पुंजी परिचालन**

संस्था दर्ता गर्दा मासिक वचत रु २० बाट शुरु भएको कारोबार २०५३ सालको निर्णयपछि रु.३० देखिमाथि जतिसम्म पनि वचत गर्न पाउने व्यवस्था गरियो । हालसम्म नियमित वचत संकलन रु.३० देखि १४०० सम्म कायम छ । असार २०७४ सम्म संस्थाको कुल पूँजी रु.२ करोड ७३ लाख ६० हजार २ सय ९२ पुगिसकेको छ भने यसमा वचत निक्षेप १ करोड ८९ लाख २९ हजार ३ सय २६, ऋण लगानी २ करोड ०५ लाख ७७ हजार ८ सय ३५ र विभिन्न जगेडा कोषमा २८ लाख ०४ हजार ३ सय ४९ तथा अन्य कोषहरूमा ८ लाख ४५ हजार ६ सय ९० पुगेको छ भने छ । संस्थाले २०५२ सालदेखि रु.५०० बाट ऋण लगानी गर्न शुरु गरेकोमा हाल अधिकतम ऋण रकम रु. ३ लाखसम्म पुर्याइएको छ जसलाई ४ वटा क्षेत्रहरूमा विभाजन गरिएको छ । ऋणको अवधि ६ महिनादेखि १ वर्षसम्म कायम छ । अन्य संस्थाहरू राष्ट्रिय सहकारी वैंक, जिल्ला सहकारी संघ, जिल्ला वचत तथा ऋण सहकारी संघ, नेफ्स्कुन, जनसचेतन, जनमुखी र डेरीमा पनि संस्थाले केही मात्रामा शेयर लगानी गरेको छ । पूँजी निर्माणको वृद्धिदरलाई हेर्ने हो भने यो सन्तोषजनक अवस्था मात्र हो । माथि नै भनिएजस्तै पूँजी निर्माणमा पनि तीव्र विकास हुन नसक्नुमा सानो कार्यक्षेत्रमा बहुप्रतिस्पर्धा नै हो ।

**२.७ बजार प्रतिस्पर्धा**

सहकारीको लागि बजार प्रतिस्पर्धा मुख्य काम हो । हाम्रो कार्यक्षेत्रमा एकै ठाउँमा ५ वटा वचत तथा ऋण सहकारी संस्थाहरू भएकोले तीमध्ये ठूला २ वटा संस्थाबाट संरक्षक र प्रतिस्पर्धी दुवै सम्बन्ध कायम रहँदै आयो । वास्तवमा यो नै हाम्रा लागि कालान्तरमा अवरोधको कारक बन्यो । किनभने हामी न त पूर्ण रूपमा आश्रित भएर चल्न सक्यौं न त पूर्ण प्रतिस्पर्धीको भावनाबाट आफूलाई माथि उठाउने वा पलायन हुने अवस्थामा पुग्न सक्यौं । जसको कारण औसतमा हामी सामान्य अवस्थामा मात्र सञ्चालन भइरह्यौं । तर, यति हुँदाहुँदै पनि हाम्रो अवस्था खराबमा भने छैन । उच्च प्रतिस्पर्धाको कारण सदस्यता त्याग्ने वा लगानीहरू खराब अवस्थामा पुग्ने क्रम भने नगण्य नै छ । बजार प्रतिस्पर्धामा नयाँ सेवाका साथ अघि जान संस्थाले आगामी साधारणसभाबाट नयाँ नीतिहरू लिने तयारी गरिरहेको छ ।

**२.८ आर्थिक समृद्धि**

सहकारीको मूल लक्ष्य भनेकै आर्थिक समृद्धि हो । समग्रमा हेर्दा काब्रे गाविसमा सहकारीहरूको स्थापनापछि आम सदस्यहरूको आर्थिक कारोबारमा धेरै सुधार आएको छ । लगभग सबै घरधुरी सदस्य बनिसकेको उक्त ठाउँमा सदस्यहरूलाई वित्तीय संकटबाट ठूलो मुक्ति मिलेको छ । तर यसले मूलतः ठूला कारोबारी र केही मध्यमस्तरीय व्यवसायी तथा कृषकहरूले मात्र बढी फाइदा लिन सकेका छन् । ऋणको उद्देश्य व्यवहारतः उत्पादनमुखी नभएकोले लगानीको दाँजोमा प्रतिफललाई हेर्दा खास आर्थिक प्रगति हुन सकेको छैन । एक सहकारीबाट ऋण झिकेर अर्कोलाई तिर्ने प्रवृत्ति पनि ठूलै मात्रामा छ । यसकारण आम सदस्यहरूको चेतना र चाहना पनि अब सहकारीहरू उद्यमशीलतामा जानुपर्छ भन्ने छ ।

**२.९ सामाजिक परिवर्तन**

सहकारीको अर्को आधारभूत उद्देश्य भनेको आर्थिकबाहेक सामाजिक परिवर्तन पनि हो । यस अन्तर्गत स्वास्थ्य, शिक्षा, वातावरण, सामाजिक, पारिवारिक तथा व्यक्तिगत संस्कारहरू पनि पर्छन् । हाम्रो कार्यक्षेत्रमा शिक्षा र स्वास्थ्य क्षेत्रमा केही उल्लेखनीय (स्वास्थ्य वीमा, एम्बुलेन्स सेवा, स्वास्थ्य सहकारी र अस्पताल सञ्चालन, सहकारी शिक्षा, छात्रवृत्तिलगायत) कामहरू भएका छन् जसको नेतृत्व जनसचेतनले नै गरेको थियो । वातावरण संरक्षण, मदिरापान आदि विकृति र सामूहिक विकास पद्धति जस्ता क्षेत्रमा भने उल्लेख्य प्रगति हुन अझ बाँकी नै छन् । यद्यपि सहकारीको माध्यमबाट सामाजिक परिवर्तन गर्न सकिन्छ र यसतर्फ पनि प्राथमिकतासाथ ठोस योजनाहरू राख्नुपर्छ भन्ने मान्यता सबैमा बढ्दै गएको छ ।

**२.१० सहकारीहरूको रूपान्तरण**

शान्ति र समृद्धिको लागि अहिले सिंगो देश नै रूपान्तरणको क्रममा छ । यही लक्ष्यका लागि सहकारीहरूमा पनि रूपान्तरणका सवालहरू देखा परिरहेका छन् । मैले अनुभव गरिरहेका केही मुख्य सवालहरू यस प्रकार छन्:

**क. लगानीको क्षेत्र**

- 'ऋण लेनदेन' मा मात्र केन्द्रित रहेका सहकारीहरू अब व्यापक उद्यमशीलतामा फड्को मार्नुपर्छ ।
- व्यक्तिगत तहमा दिँदै आएको ऋणलाई उद्यम योजनाको आधारमा सामुहिक र संस्थागत (कम्पनी, फर्म आदि) रूपमा पनि लगानी गर्नुपर्छ । नत्र उद्यमशीलताको व्यवसायिक विकास हुन सक्दैन । यस्तो अवस्थामा घर जग्गाबाहेकका सम्पत्ति पनि धितो राख्ने व्यवस्था हुनुपर्छ ।
- बहुसदस्यताको कारण लगानीको जोखिम घटाउनका लागि व्यवस्थित एकीकरण नभएसम्म अन्तरसहकारी ऋण सूचना प्रणाली (बैंकको CIB Report जस्तो) विकास गर्नुपर्छ ।

**ख. समावेशी नेतृत्व**

- थोरै र एकै किसिमका मान्छेले मात्र धेरै वर्षसम्म नेतृत्व गरिरहने परम्परा निरुत्साहित गरी नेतृत्वलाई विस्तारित र समावेशी बनाउनुपर्छ । पुराना, अनुभवी र दक्ष नेतृत्वले सहकारीको प्रत्यक्ष नेतृत्वपछि पनि उनीहरूको ज्ञान, सीप उपयोग गर्नका लागि सम्बन्धित सहकारी, तिनका संघहरू, स्थानीय सरकार र अन्य विकासे संस्थाहरूले पनि स्रोतव्यक्तिको रूपमा परिचालन गर्ने वातावरण बनाउनुपर्छ ।
- तथ्याङ्क हेर्दा स्थानीयदेखि जिल्ला र केन्द्रसम्म महिला नेतृत्व विकासलाई खासै महत्व दिएको देखिँदैन । सहकारीमा महिलाहरूको सदस्यता, नेतृत्व र उद्यमशीलतामा समानान्तर सहभागी गराउँदै लैजानुपर्छ ।

**ग. एकीकरण तथा विशिष्ठीकरण**

- एउटै कार्यक्षेत्रमा एउटै प्रकृतिका सहकारीमा एउटै व्यक्तिले बहुसदस्यता र बहुनेतृत्व गर्ने परम्परा अन्त्य गरी भरपर्दो सेवाप्रदायकको रूपमा एउटा प्रकृतिको एउटा मात्र सहकारी विकास हुनुपर्छ । बाँकी सहकारीहरू एक आपसका परिपूरक उद्देश्यका बनाउनुपर्छ । सदस्यले सबैखाले सेवा पाउने गरी सहकारीहरूको विशिष्ठीकरण गर्नुपर्छ । आजको सन्दर्भमा यस्तो सहकारीको स्वरूप कम्तीमा पनि गाउँपालिकास्तरमा विकास हुनुपर्छ ।

**३.अनुभवहरूको निचोड**

१. सहकारीलगायत सामाजिक नेतृत्वमा



महिलाहरूलाई पुरुषसरह समान अधिकार दिनु भनेको हाम्रो अहिलेको अवस्थामा असमानता नै हो। किनभने एउटै परिवारका महिला पुरुषले दिउँसो अफिस, कृषि, व्यापार वा अन्यत्र समान घण्टा काम गरे पनि घरमा खाना बनाउने, बालबच्चाको रेखदेख गर्ने र घर सफाइ गर्ने लगायतका निरन्तर कामले उनीहरूलाई साँझ बिहानको समय अत्यन्त व्यस्त हुने भएकोले घरमा थप सिक्ने अवसर अत्यन्तै कम हुन्छ । उनीहरूलाई पत्रिका पढ्ने, समाचार सुन्ने, प्रायःजसो साँझ बिहान होटलमा बसेर देश विदेशका गफ गर्ने त अवसरै हुन्न । यसकारण सक्रिय महिला पनि निष्क्रिय पुरुष जति क्रियाशील नभएको जस्तो देखिन्छ । थोरै मात्रामा सामाजिक रूपमा सक्रिय देखिने केही थोरै महिलामध्ये अधिकांशको अवस्थालाई हेर्ने हो भने पनि व्यक्तिगत र पारिवारिक जीवनमा खासै सन्तुलन रहेको पाइँदैन । यसकारणः

- महिलाहरूको कामलाई पनि आर्थिक मूल्यमा रूपान्तरण गरी घरधुरीको आयमा हिसाब गरिनुपर्छ ।
- नेतृत्व विकासका लागि महिलाहरूलाई समानताले पुग्दैन, 'विशेष अवसर' दिनुपर्छ ।

२. सामाजिक अभियानमा पुरुषको तुलनामा महिलाहरूको विकासको गति नै ढिलो हुने गरेको, महिलाहरूको समस्या नै फरक किसिमको हुने गरेको र त्यसमा पुरुष नेतृत्वहरूको संवेदनशीलता नै कम हुने गरेकोले महिलाहरूलाई अलग्गै संगठित भएर काम गर्ने र मिश्रित संगठनमा पनि प्रतिस्पर्धात्मक क्षमता विकास गर्न पाउने दुवै अवसरहरूलाई पर्याप्त प्रवर्धन गर्नुपर्छ । सहकारीको सन्दर्भमा कुरा गर्दा महिला सहकारी संस्थाहरूको संरक्षण र प्रवर्द्धन तथा मिश्रित सहकारीमा महिला सशक्तिकरणको प्रभावकारी नीति र संरचना लागू हुनुपर्छ ।

३. सहकारी अभियानलाई व्यापक उद्यमशीलतामा लैजानुपर्छ। साना, मझौला र ठूला आयोजनाहरूमा पनि सहकारीको संलग्नता छिटै बढाउनुपर्छ । व्यक्तिगतस्तरमा गर्दै आएको ऋण लगानीलाई ठोस परियोजनासहितको सामुहिक ऋण लगानीमा पनि विस्तार गर्नुपर्छ ।

४. सहकारीको माध्यमबाट साँच्चै गाउँमा आर्थिक रूपान्तरण गर्ने हो भने एउटा व्यक्तिले एउटै ठाउँमा एउटै प्रकृतिका सहकारीहरूमा दश ठाउँ बचत गर्दै गरेको अवस्थालाई पूरै रूपान्तरण गरेर त्यसको ठाउँमा एकीकृत र परिपूरक सहकारीहरू विकास हुनुपर्छ । यस्ता सहकारीहरूमा एउटाले पैसा दिने, अर्कोले प्रविधि दिने, अर्कोले उत्पादन, बजार हेर्ने र कसैले शिक्षा, संस्कृति, पर्यटनजस्ता क्षेत्रमा पनि काम गर्ने किसिमको हुनुपर्छ ।

## ४. अनुभवहरूको उपयोग

माथिका अनुभवहरूको निचोडमा पुग्न मलाई बाल्यकालदेखि अहिलेसम्म २२ वर्षको लगानी परिसकेको छ । मेरा लागि व्यक्तिगत रूपमा पनि यो महत्वपूर्ण पूँजी हो । अझ सहकारी संस्थाहरूको संस्थागत विकास र महिलाहरूको समग्र आर्थिक, सामाजिक अधिकारको लडाइँका लागि पनि एक महत्वपूर्ण स्रोत हो भन्ने मेरो बुझाइ छ । यसकारण यो पूँजीलाई म आगामी दिनहरूमा आफूले नेतृत्व लिएका र साधारण सदस्य मात्र रहेको सहकारी संस्थाहरू र जिल्ला संघसम्म निरन्तर आवाज उठाइ सबै पक्षलाई यसबारे महसुस गराउँदै रूपान्तरण गराउने प्रयासमा लाग्नेछु भन्ने विचार छ । यसबाहेक सहकारी सञ्चार, महिलाहरूको आर्थिक तथा उद्यमशीलता विकाससम्बन्धी कार्यक्रमहरूको माध्यमबाट पनि यी सवालहरू उठाइरहने प्रयत्न गर्नेछु । यो अनुभवको उपयोग कुनै दिन सहकारी अभियानको मूलधारसम्म पुग्नेछ भन्ने अपेक्षा राखेको छु ।

## ५. निष्कर्ष

नेपालको समग्र आर्थिक, सामाजिक विकासको गति निकै ढिलो नै छ । तर, राजनीतिक रूपमा समाज रूपान्तरणको संक्रमणमा छ । समाज परिवर्तनका विभिन्न कारकहरूमध्ये विशेष गरी ग्रामीण अर्थतन्त्रको रूपान्तरणमा सहकारीहरूको ठूलो भूमिका छ जसलाई संविधानले समेत स्वीकार गरेको छ । नयाँ सामाजिक संरचनामा प्रवेश गर्दै गरेको अवस्थामा सहकारी अभियानलाई अझ समावेशी, उद्यममुखी र दिगो विकास लक्ष्यसंग तालमेल गराउँदै अघि बढाउन सकेमा दिगो विकास लक्ष्यको अवधिभित्रै कम्तीमा आफ्नो कार्यक्षेत्रभित्र निरपेक्ष गरीबी न्युनीकरणमा यसले ठोस र उल्लेख्य योगदान पुर्‍याउन सक्छ ।

**इमेलः** pratibha_ghi@yahoo.com



# सहकारी संस्थाः चुनौति र अबको बाटो

**गीताकृष्ण शर्मा**
वैत्यश्वर ५, दोलखा

## १. विषय प्रवेश

नेपाली बृहत शब्दकोषमा सहकारीको अर्थ एकसाथ मिलेर काम गर्ने अथवा साथसाथै काम गर्ने भनेर उल्लेख गरिएको छ । सहको अर्थ सँगसँगै र कारीको अर्थ काम गर्ने हुन्छ । सहकारी एउटा यस्तो व्यवसाय हो जसमा संयुक्त रुपमा सदस्यहरूद्वारा आर्थिक संकलन गरिन्छ र उनीहरूमा नै सहुलियत दरमा ऋण लगानी गरिन्छ । सहकारी समुदायमा बस्ने समान आय भएका आमजनताको संयुक्त प्रयासबाट स्थापना भएको हुन्छ, जुन एकका लागि नभएर सबैका लागि हो । यो सदस्यकेन्द्रित र सहकारीका मूल्य र मान्यतामा आधारित हुन्छ । सहकारी भनेको सक्रियता हो र विशुद्ध आर्थिक तथा उत्पादनको कारोबार हो । अन्तर्राष्ट्रिय सहकारी महासंघका अनुसार सहकारीको अर्थ हो –"A co-operative is an autonomous association of person united voluntarily for the fulfillment of their common social and cultural needs and aspirations through a jointly owned and democratically controlled in enterprises."

समुदायमा छरिएर रहेका स्थानीय स्रोत, साधन र पूँजीहरूलाई एकत्रित गरी व्यवस्थापन गर्ने कार्यकुशलता वा क्षमता अभिवृद्धि गरी सदस्यहरूको आर्थिक, सामाजिक तथा सांस्कृतिक विकास गर्ने सबल माध्यम नै सहकारी हो । सहकारीको विकास पछिल्लो समयमा आएर आन्दोलनका रूपमा हैन, अभियानका रूपमा अगाडि बढेको अवस्था छ । नेपालको राजनीतिक इतिहासमा २००७ सालको फेरबदल नजिकै २०१० सालमा सहकारी विभाग स्थापना भयो र यसको तीन वर्षपछि २०१३ सालमा निर्देशनालय बने पनि व्यवस्थित र नीतिगत रूपमा गति लिन भने सकेन । २०१६ सालमा पहिलो सहकारी ऐन बनेको एक वर्षमै सरकारले हस्तक्षेप गरी गलत नियतपूर्वक नियन्त्रणमा राखी साझाको रूपमा सञ्चालन हुँदै थन्कियो । पञ्चायतकालभर सहकारीले चपेटाबाट मुक्त भइ अगाडि फड्को मार्न सकेन । ०४६ सालको राजनैतिक परिवर्तनसँगै नेपालमा सहकारी संस्थाहरूले संस्थागत विकास हुने मौका पाए । त्यसैले यतिखेर नेपालका हरेक गाउँ तथा शहरहरू सहकारीमय भएका छन् । गाउँ, शहर, बस्ती, टोल जताततै सहकारी संस्थाको साइनबोर्ड झुन्डिएको छ ।

## २. विद्यमान सन्दर्भ

सहकारी संस्थाहरूले अपार सम्भावनाका बाटाहरू पहिल्याउँदै आफ्नो कारोबारको स्तर र आकार निरन्तर बृद्धि गरिरहेका छन् । सहकारी संस्थाहरू शुरु हुँदा आजको अवस्थाको परिकल्पना गरिएको थिएन । तर पछिल्ला दिनहरूमा मानिसहरूको सहकारीतर्फ आकर्षण बढिरहेको छ । यस्तो अवस्थामा आम मानिसहरूलाई सामुहिक र उद्यममुखी कार्यमा लगाउन उत्साहित हुने खालका कार्यमा सहकारीको लगानी हुन जरुरी छ । सहकारी संस्थाका भावी सपना र परिकल्पनाहरू उत्पादन क्षेत्रको प्राथमिकतासँग सम्बन्धित हुनुपर्दछ । नेपालको परिप्रेक्ष्यमा सहकारीहरूको विकास जुन गतिमा अघि बढेको छ, त्यही गतिमा विकृति र विसंगतिहरू पनि बढेका छन् । नेपालका केही संस्थाहरूको बदमासीका कारण आज सहकारी गरिखाने जनताको आधार नभएर सीमित व्यक्तिहरूका लागि ठग्ने र शोषण गर्ने बलियो आधार बन्दै गएको छ भन्ने आरोप सहकारी संस्थाहरूले खेप्नु परिरहेको छ । केही निश्चित व्यक्तिहरूको स्वार्थ, हैकमवाद तथा अकर्मण्यताका कारण सिंगो सहकारी क्षेत्र बदनाम भएको छ । यस्ता क्रियाकलापहरूको नियन्त्रण र नियमन चुनौतिको विषय बन्दै मात्र छैन सहकारीमा गलत काम गर्ने र दुरूपयोग गर्नेहरूको मात्रा पनि दिनानुदिन बढ्न थालेको छ । त्यस्ता व्यक्तिलाई बिगोसहित समयानुकूल जरिवाना र कसुरअनुसार कैदको कानुनी सजाय गर्ने निकायहरू फितला देखिएका छन् । सहकारी सञ्चालनमा अस्वस्थ प्रतिष्पर्धा बढिरहेको छ । एउटा सहकारी संस्थाले अर्को सहकारीको अस्तित्व स्वीकार्न सकेको अवस्था छैन । सहकारी चिन्तन र विकासका योजना भएका व्यक्तिहरूलाई पाखा लगाउने र वैचारिक पृष्ठभूमिका आधारमा नेतृत्व चयन गर्दै राजनीति गर्ने थलोको रुपमा सहकारीको स्थापना भएको हो की ? वा हैकमवादलाई बढावा दिंदै सहकारीलाई



जागिर खाने वा भर्ति केन्द्र बनाउने वा पैसा कुम्ल्याउनकै लागि सहकारीहरू स्थापना भएको? वा कमजोर आर्थिक अवस्थाका मानिसहरूको आर्थिक पहुँचमा वृद्धिका लागि ?? आज आम रुपमा यो प्रश्न खड्किएको छ ।

निम्न आयस्तर भएका जनताहरूको जीवनलाई उकास्नु नै वर्तमान अवस्थामा सहकारीको मूल मर्म हुनुपर्दछ । संस्थाको उद्देश्यअनुसार सहकारीले आर्थिक विकासको माध्ययमबाट समाजको रुपान्तरण गर्नुपर्दछ । संख्यात्मक रुपमा वृद्धि भैरहेका सहकारीहरूले प्रतिस्पर्धा होइन, सहकार्य गरेर अगाडि बढ्नुपर्ने आजको आवश्यक्ता हो । किनकि सहकारी क्षेत्र कारवाहीको डन्डा बर्साएर नियमन गर्ने क्षेत्र नभई आफैँले आफूलाई नियमन गर्ने क्षेत्र हो । तसर्थ सहकारी अभियानले देशकै लागि सहकारी क्षेत्रमा रचनात्मक र प्रभावकारी कार्यको थालनी गर्नुपर्ने छ ।

## ३. सहकारी संस्थाहरूका चुनौति

सहकारी संस्थाहरू स्थापनाको गतिसँगै यसका चुनौतिहरू पनि थपिएका छन् । सहकारी संस्थाहरूले कर्जाका लागि प्राथमिकता क्षेत्रको पहिचान गर्न सकेका छैनन् । ऋणीहरूको आर्थिक अवस्था, परियोजना, उत्पादकत्व तथा बजारको अवस्थाको विश्लेषण नगरी उनीहरूको घरखेत धितो राखेर ऋण लगानी गर्नाले हरेक सहकारी संस्थाहरूमा ऋणको भाखा नाघेको प्रतिशत दिनानुदिन बढिरहेको छ । परिणामतः ऋण असुली नभएर धेरैजसो ऋणीहरूको नाम पत्रपत्रिकामा सार्वजनिक गर्नुपर्ने, धितो रहेको जायजेथा लिलामी गर्नुपर्ने अवस्थाले अबका केही वर्षमा विकराल अवस्था सिर्जना हुनसक्छ । तसर्थ सहकारीको अवधारणाबारे कमैलाई मात्र ज्ञान, व्यवस्थापकीय पक्ष फितलो, नेतृत्वशैली कमजोर वा नेतृत्व कुशलताको अभाव, संस्थामा दोहोरो सदस्यता, सहकारी-सहकारीबीच अस्वस्थ प्रतिस्पर्धा, संस्थाप्रतिको निष्ठा, पारदर्शिता र जवाफदेहितामा कमी, सहकारीमा सरकारी लगानी न्युन, नेतृत्व चयनमा राजनैतिक हस्तक्षेप, सञ्चालक तथा सदस्यहरूबाट इमानदारीपूर्वक स्वनियमनको पालना नहुनु, सहकारीको परिभाषा, ध्येय, उद्देश्य र लक्ष्यविपरीत क्रियाकलापहरू सञ्चालन, सहकारीकर्मीहरूका बीच एउटै क्षेत्रमा अस्वस्थ प्रतिस्पर्धा, सहकारी अनुगमन पद्धति फितलो आदि जस्ता चुनौतिहरूले आज सहकारी आन्दोलन र उद्देश्यलाई कमजोर मात्र पारेको छैन यसले आम सहकारीहरूलाई नै कुरूप र विरूपतिर तान्दै पनि छ । कतिपय सहकारी संस्थाहरू खराब कर्जाको शिकार भएका कारण सदस्यको बचत निक्षेपसमेत फर्काउन नसक्ने अवस्थामा पुगेका छन् । जति सहकारी संस्थाहरू स्थापना हुन्छन्, सबैमा सदस्य बन्ने र सबैमा ऋण कारोबार प्रवृत्तिको कारण सहकारीहरूमा चुनौति थपिएको छ ।

## ४. सहकारी संस्थाहरूको अबको बाटो

सहकारी अभियानले देशकै लागि रचनात्मक र प्रभावकारी कार्यको थालनी गर्नुपर्ने छ । हरेक संस्थाका भावी सपना र परिकल्पनाहरू उत्पादन क्षेत्रको प्राथमिकतासँग सम्बन्धित हुनुपर्छ । सहकारीहरूले भूमिहीन, उत्पीडित, सर्वहारा, मजदुर, सुकुम्वासी कमजोर आर्थिक अवस्थामा रहेका जनताको आर्थिक उन्नतिमा ध्यान केन्द्रित गर्नुपर्छ । सहकारीलाई पहुँच नपुगेको विकट र दुर्गम बस्तीसम्म राज्यको पुनर्संरचनाको आधारमा विकास गर्नुपर्छ । आर्थिक सङ्कटले मुलुक आक्रान्त भएर युवा जनशक्ति विदेशिन विवश भएको बेला उनीहरूलाई राष्ट्रिय रूपमा स्वाधीन, आत्मनिर्भर र स्वाभिमान बनाउनुपर्दछ । युवाहरूमा अर्थोपार्जनका आधारहरू निर्माण गर्दै स्तरीय जीवन स्वदेशमा नै निर्माण गर्न तथा सहकारीमा सक्रिय सहभागीता बढाउनका लागि सहकारी अग्रसर रहनुपर्छ । कृषिमा आधारित नेपालको अर्थतन्त्र व्यावसायिक बन्न सकेको छैन । केवल अहिलेसम्म निर्वाहमुखी मात्र बनेको छ । सहकारीहरूले अब कृषिमा र किसानको हितमा कार्य गर्नुपर्दछ । नेपालको जडीबुटीलाई सहकारीमार्फत् औद्योगिक उत्पादनको वस्तु बनाउनुका साथै जडीबुटीको उत्पादन तथा प्रशोधन एवम् पर्यटनको क्षेत्रमा जोड दिनुपर्दछ ।

सहकारी, जसले उत्पादन र सेवालाई प्राथमिकता दिएको छ, त्यसलाई राज्यको तर्फबाट चाहिंदो र सक्दो सहयोग पुर्‍याइनुपर्दछ । तब मात्र देशमा उत्पादन र उत्पादकत्व बढ्छ । स्वदेशमा नै पैसा टिप्ने प्रशस्त अवसरको सिर्जना गरेर युवाहरूको श्रम र शक्तिलाई उद्यम र परिश्रमीतर्फ उन्मुख गराउनुपर्दछ । सहकारीका क्रियाकलापहरू व्यवसायिक कृषि तथा पशुपालनको क्षेत्रसँग सम्बन्धित गराउनुका साथै स्वास्थ्य एवम् शिक्षा, सूचना तथा प्रविधिको क्षेत्रसँग जोड्न सके आज देशभर बदनाम भएको सहकारीको साख उँचाइमा ल्याउन सकिन्छ । नेपाल सरकारले गरिबी न्यूनीकरण, उत्पादन वृद्धि र स्वरोजगारलाई प्रोत्साहन गर्ने गरी लिएको नीतिलाई साकार बनाउन सहकारी संस्थाहरूले आफ्नो लगानीका क्षेत्रहरूलाई गरिबी न्यूनीकरण र उत्पादन अभियानसँग जोडिनुपर्दछ । बचत सङ्कलन गर्नु र ऋण दिनु मात्र सहकारीहरूको उद्देश्य हुनुहुँदैन । यसलाई व्यवसायीकरण

गर्दै गरिबी न्यूनीकरण र उत्पादनसँग जोड्नुपर्दछ। नेपाली समाजलाई परिवर्तन र समृद्धिको बाटोमा लैजान अग्रसर र सफल तथा सशक्त माध्यम भनेकै सहकारी संस्थाहरू हुन्।

हिजोका दिनहरूमा जताततै सहकारी संस्थाहरू नखुलेको अवस्थामा साहुले ग्रामीण क्षेत्रका निरक्षर जनतालाई ऋण दिंदा घरखेत बन्धक राखेर ऋणको सावाँलाई दसौं गुणा बनाएर असुल गर्दथे । गरीबहरूको उठिवास लगाउँथे । ऋण लगानीपूर्व सहकारीहरूले यो तथ्य बुझेर आफूले लगानी गर्ने कर्जालाई सरल र सुलभ ब्याजदरमा समाजमा पिछडिएर बसेका, काम गर्ने जोश, जाँगर र सीप भएका व्यक्तिलाई ऋण प्रवाह गर्नुपर्दछ । धितो नभएका तर समाजका इमान्दार, पत्यारिला, अति विपन्न तथा महिला वर्गलाई समेत बिनाधितो कर्जा प्रवाह गरिनुपर्दछ। कर्जा वीमा, पशु वीमा, बाली वीमा जस्ता नीति अगाडि सारेर किसानको आयस्तर बृद्धि गर्नेतर्फ आफ्नो योजना केन्द्रित गर्न जरुरी छ । शोषक र शोषित वर्गबीचको अन्तर्विरोधलाई सहकारी आन्दोलनले नै अन्त्य गर्दै किसान र श्रमिकवर्गको प्रगतिको सशक्त माध्यम सहकारी बन्न सक्नुपर्दछ।

लगनशील उद्यमी र परिश्रमी मानिसहरूका लागि नेपाल भूस्वर्ग नै छ । यही मातृभूमिमा परिश्रमी बन्न चाहेमा हामी सबै हरबखत तयार रहेर काम गर्नसक्छौं । कृषिमा आधारित साना उद्यम, घरेलु व्यवसायलाई बिना झन्झट छिटो-छरितो न्यून ब्याजदरमा कर्जा प्रदान गर्नेतर्फ सहकारीको मूल स्वरूप निर्धारण हुन्छ, गरि नुपर्दछ । कृषिमैत्री सहकारी वर्तमानको आवश्यक्ता हो । समूह धितोमा ऋण प्रदान गर्ने र समूहलाई कृषि उत्पादनमा सक्रिय पार्ने नीति हुनुपर्दछ । सहकारी संस्थाले उत्पादन क्षेत्रमा भएका उल्लेखनीय कार्यलाई अघि ल्याउनुपर्दछ ।

## ५. निचोड

नेपालका बचत तथा ऋण सहकारी संस्थाहरू हिजोको सामन्ती व्यवस्थाको साहुको प्रवृत्तिभन्दा माथि उठ्न सक्नुपर्छ। अहिले पनि सपन्नता र विपन्नताबीचको खाडल बढ्नुको कारण अनुत्पादक क्षेत्रमा भएको लगानी र ब्याजयुक्त कारोबार नै हो । यसलाई निरुत्साहित गर्न **एक घर-एक सदस्य, एक सहकारी र एक उत्पादन** नीति प्रभावकारी हुन्छ । यसका लागि सबै खाले र प्रवृत्तिमा रहेका विभिन्न सहकारीहरूबीच एकीकरण गर्दै सहकारीमा देखिएका विकृति विरुद्ध युद्धस्तरमा लड्नुपर्ने आवश्यक्ता छ । यदि यो कुरालाई बेलैमा आत्मसात हुन नसकेर हरेक सदस्यहरूले सहकारीको ऋणको भुक्तानी गर्न नसकी आत्महत्या गर्नुपर्ने अवस्था नआओस् ।

जय सहकारी !



# दिगो र समृद्ध समुदायको निर्माणमा जनसचेतन



**पुस्कर कुमार दाहाल**
वैत्यश्वर ३, मिर्गे

## परिचय

सह+कार्य अर्थात सहकारी आपसमा मिलेर गरिने कार्य अथवा परस्परको सह-सम्वधबाट आवश्यक्ता परिपूर्ति गरिने कार्य सहकार्य हो । सहकार्यको संस्थागत रुप नै सहकारी हो । अझ यसो भनौं समस्या समाधानको संयुक्त प्रयास नै सहकारी हो । अर्थात "एकका लागि सबै र सबैका लागि एक" नै सहकारी हो । सहकारी भन्नाले कुनै निश्चित उद्देश्य प्राप्त गर्नको लागि मिलेर गरिने सहकार्यलाई बुझाउँछ । सदस्यहरूको आर्थिक, सामाजिक तथा सांस्कृतिक उद्देश्य प्राप्तिको लागि समान अधिकारसहित स्वेच्छिक सहकार्य नै सहकारी हो । प्रजातान्त्रिक ढंगबाट समान तथा सामुहिक हितको लागि निर्णय गर्नु र निर्णयको इमान्दारिता र पारदर्शिताका साथ कार्यान्वयन गर्नु सहकारीको नीति हो भने स्थानीयस्तरमा अधिकतम् अवसरहरू सिर्जना गरी सदस्य तथा समुदायलाई लाभ पुर्‍याउनु यसको लक्ष्य हो । यसरी हेर्दा सहकारी मूलतः आर्थिक एवम् व्यवसायिक क्रियाकलाप सञ्चालनको पद्धति हो । त्यसैले सहकारीलाई सदस्यमा आधारित संगठनको रुपमा लिन सकिन्छ ।

सहकारी पद्धति अनुशासित ढंगले आफ्ना मूल्य मान्यता तथा सिद्धान्तको आधारमा सञ्चालन हुने भएकाले यसको महत्व तथा लोकप्रियता दिन प्रतिदिन बढ्ने क्रममा छ । हाल विश्वभरिमा डेढ अर्वभन्दा बढी मानिसहरू यस अभियानमा आवद्ध रहेका छन् भने पन्ध्र करोडभन्दा बढीलाई रोजगारी दिन सफल भएको छ । पछिल्ला वर्षहरूमा युरोपमा तथा नेपालमा आएको आर्थिक मन्दीको समयमा समेत सहकारी व्यवसायले सदस्यहरूलाई निरन्तर सेवा पुर्‍यायाबाट आर्थिक समृद्धिका लागि सहकारी व्यवसायको महत्व उच्च रहेको छ । यसैको फलस्वरुप सन् २०१२ लाई संयुक्त राष्ट्र संघले **"सहकारी व्यवसायद्धारा समृद्ध विश्वको निमार्ण"** भन्ने ध्येयका साथ अन्तर्राष्ट्रिय सहकारी वर्ष २०१२ विश्वभर



**यो संस्थाले आफ्ना क्षेत्र वरिपरि अन्य संस्थाहरूको स्थापना र प्रर्वधनमा पनि महत्वपूर्ण भूमिका खेलेको छ। जस अन्तर्गत मिर्गेका जनतालाई जागरण गराउने उदेश्यले जनजागरण, जनतालाई उत्थान गर्ने उद्देश्यले जनउत्थान,  किसानलाई जागरुक गराउन किसान सचेतन,  काब्रेमा नै जनतालाई मुक्ति दिलाउन जनमुखी, महिलाहरूको भविश्य निर्माण गर्न भविश्य निमार्ण महिला, नाम्दूका जनतालाई चेतना दिन चेतनशील र जुँगुमा जनतालाई उपकार गर्न जनउपकार वचत तथा ऋण सहकारी संस्था खुलाउन र तिनीहरूलाई आफू पछिपछि डोर्‍याउने, नेतृत्व विकास गर्ने र सहकार्य गरी प्रवर्द्धन गर्न महत्वपूर्ण भूमिका निवार्ह गरेको छ।**

महत्वका साथ मनाइएको थियो । सहकारीलाई अहिलेको सबै अर्थ व्यवस्थामा आत्मसात गरिएको छ । खास गरी गरिवी न्यूनीकरणको सबैभन्दा राम्रो प्रयत्न सहकारीलाई लिइएको छ । त्यसैले **"गाउँ गाउँमा सहकारी, घर घरमा रोजगारी र भकारी"** भन्ने नारा सफल बन्दै गएको छ ।

## सहकारीमा व्यवसायीकरण

**"जिउँदै मर्‍याको भनी नाम कसको, उद्यमबिना बित्दछ काल जसको"** भानुभक्त आर्चायको यो भनाइबाट हरेक मानिसमा उद्यमशीलता हुनैपर्दछ भन्ने बुझिन्छ र बास्तविकता पनि यही हो । Prof. Lambert ले सहकारीलाई यसरी

परिभाषित गर्दै भनेका छन् "सहकारी संस्था एउटा व्यवसाय हो, जुन प्रयोगकर्ताहरूको संघद्वारा निर्मित र निर्देशित हुन्छ, जसले आफूभित्र प्रजातन्त्रका नियमहरू अनुशरण गरेर आफ्ना सदस्यहरू र समुदाय दुवैलाई सेवा पुर्‍याउने प्रत्यक्ष ईच्छा राखेको हुन्छ ।" संयुक्त राष्ट्र संघका पूर्व महासचिव कोफी अन्नान भन्नुहुन्छ "प्रजातन्त्रका मूल्य, मान्यता र ऐक्यवद्धताद्वारा सघाइएका निजी सक्रियता, उद्यमशीलता र स्वरोजगारका सिद्धान्तहरू आधारशीला भएको सहकारी आन्दोलनले बढी न्यायपूर्ण तथा समावेशी आर्थिक व्यवस्थालाई मार्ग बिछ्याउन मद्धत गर्नसक्छ ।"

सहकारी संस्थाहरूले सामाजिक शर्तमा व्यवसाय गर्दछन् । 'आफ्नै लागि व्यवसायमा सर्वसाधारण' भनेर पनि सहकारितालाई जानिन्छ । सर्वसाधारणको व्यवसाय, सामाजिक शर्तको व्यवसाय अथवा मानवीय मूल्यको व्यवसाय भन्दैमा सहकारिताको मर्म भने बोध हुँदैन । सहकारिताको मर्म त व्यवसाय गर्ने विधिभन्दा पनि जीवनयापन गर्ने विधिमा खुल्दछ, जसका दुईमध्ये पहिलो पक्ष स्वावलम्बन हो ।

सहकारी ऋण वा लगानीको विषय प्रत्यक्ष रुपमा उत्पादनसँग जोडिन्छ । सदस्यले सहकारी संस्थावाट लिने ऋण होस् वा कुनै विषयगत सहकारीले आफ्नो शेयर पूँजीबाट गर्ने लगानी होस् यसको आर्थिक अंश उत्पादनसंग जोडिएन भने त्यस्तो सहकारीमा दिगोपन सम्भव छैन । सहकारीले उत्पादनका क्षेत्रमा कति योगदान गरिरहेको छ र यसको प्रतिफलको अवस्था के छ भन्ने विषयगत गम्भीरतापूर्वक सोच्ने विषयमा केही कमी छ कि भन्ने महशुस गराउनुपर्छ । राज्यले तीन खम्बे अर्थनीति अवलम्वन गरेको सहकारी क्षेत्रलाई पनि राष्ट्रिय अर्थतन्त्रको एउटा खम्वाको रुपमा लिएको अवस्थामा सरकारी, निजी र सहकारी क्षेत्रको राष्ट्रिय अर्थतन्त्रमा पृथक पृथक योगदान र यी तिनैका अन्तरसम्वन्धबाट पुगेको योगदानलाई सुक्ष्म रुपले अध्ययन र विश्लेशण गरिनु जरुरी छ । त्यसैका आधारमा अर्थतन्त्रका तिनवटा पिल्लरलाई उत्तिकै मजबुत बनाउन राज्य, निजीक्षेत्र र सहकारी क्षेत्रले सामुहिक प्रयास गर्नु आवश्यक छ ।

व्यवसाय भन्दैमा सहकारीमा नाफा कमाउने उद्देश्यलाई मात्र व्यावसाय भन्न सकिन्न । सहकारीको व्यावसायिकता आत्मनिर्भरता र पारस्परिकतामा भर पर्दछ । तर सहकारी आफैंमा नाफामुखी भने होइन । त्यसैले सहकारी व्यवसायले सेवा व्यवसायको रुप धारण गर्दछ । यसले सदस्यहरूलाई प्रत्यक्ष रुपमा वित्तीय सेवा तथा गैर वित्तीय सेवा प्रदान गर्दछ । हजारौ गरीव, सीमान्तकृत, महिला, उत्पीडित, सुकुमवासी तथा श्रमिकहरूलाई मालिक बनाएर सहकारी प्रणालीका व्यवसाय तथा उद्योग सञ्चालन गर्न सकिन्छ । सदस्यहरूको आर्थिक, समाजिक तथा मानसिक क्षमतामा सुधार तथा वृद्धि गर्ने आशय पनि यसैमा रहेको छ ।

समावेशी विकासको चेतना अभिवृद्धिसंगै पिछडा वर्गलाई नेतृत्व तहमा समेत समावेश गर्ने क्रम पनि धेरैजसो सहकारीमा देखिएको छ । कतिपय स्थानमा जहाँ छुवाछुत एवम् जातीय भेदभावका कारण दलित वर्ग सामाजिक उत्पीडन र उपेक्षामा बाँच्न बाध्य थिए सहकारीमा आवद्ध भएपश्चात यस्तो वर्गमा एक किसिमको आत्मसम्मान र सशक्तिकरणको अनुभूति जागेको छ ।

सहकारी संस्थाका दुईवटा पाटाहरू वचत तथा ऋण मध्य ऋणलाई अत्यन्त महत्वपूर्ण पाटाको रुपमा लिन सकिन्छ । तसर्थ बचत तथा ऋण कारोवार आफैंमा सम्वेदनशील व्यवसाय हो । **"नगदको कारोवार उधारो व्यापार"** यसको विशेषता भएकाले यसको उचित संयोजन र व्यवस्थापन गर्नु आवश्यक छ । संस्थालाई प्रगतितर्फ लैजाने जिम्मेवारी तपाई हाम्रै काँधमा छ ।

**जनसचेतनको योगदान**

जन र सचेतन दुईवटा शब्द मिलेर जनसचेतन बनेको छ । जसको अर्थ हुन्छ जन भनेको मानिस, सचेतन भनेको सचेत प्राणी हो । यसले जनतालाई जागरुक गराई व्यवसाय उन्मुख गराउने उदेश्यका साथ "एकका लागि सबै र सबैका लागि एक" भन्ने मूल नारासंगै, संगै बस्ने, संगसंगै मिलेर काम गर्ने, समान विचार भएका साझा हक र हितका लागि सामूहिक र संगठित प्रयत्नबाट आर्थिक, सामाजिक लगायतका कार्यहरू गरी जागरुक बन्नुपर्ने अवस्था छ ।

**"थोपा थोपा मिलेर समुन्द्र बन्छ र एक एक रुपयाँ मिलेर अरबौं, खरबौं बन्छ"** भन्ने मान्यताअनुरुप छरिएर रहेको स-साना रकमलाई संकलन गरेर त्यसलाई पूँजीको रुपमा रुपान्तरण गर्दै आफ्ना सदस्यहरूको आर्थिक, सामाजिक विकास गराउने ध्येयका साथ वि.स २०५० असोज २२ मा श्री जनसचेतन बचत तथा ऋण सहकारी संस्था स्थापना भइ शुरुमा काब्रे, मिर्गे र नाम्दूलाई कर्मथलो बनाइ विस्तार हुँदै गएर आज दोलखा जिल्लाभर कार्यक्षेत्र बनाएको छ ।



३४ जना बाट शुरु भएको यस संस्थामा २५ औं बर्षमा आइपुग्दा सो संख्या २२ हजारको नजीक पुगेको छ । संस्थाको नामलेझैं कामले पनि जनताहरूलाई जागरुक बनाइ हिजोका दिनहरूमा खोकिलामा हात लुकाई भाग्यमा विश्वास गरी साहु महाजनको घरदैलो कुरी दयनीय जीवन यापन गर्नेहरू यस संस्थाको सदस्यता ग्रहण गरिसकेपछि आर्थिक, सामाजिक, सांस्कृतिक र शैक्षिक क्षेत्रमा अगाडि बढ्न सफल भएका छन् । आफ्ना सदस्यहरूको भाग्य र भविष्यलाई मध्यनजर गर्दै उनीहरूकै सेवा र सुविधामा तल्लिन रहँदै विकासको द्रुत गतिमा अघि बढ्दै गर्दा संस्थाप्रति संकट र चुनौतिहरू नदेखिएका होइनन् । यद्यपि संस्थाका पहरेदारहरूले दिनुभएको रचनात्मक सुझाव र सल्लाहलाई अक्षरस पालन गरी सञ्चालक समितिले त्यसको समयमै सही निकाश दिन पनि सफल बन्दै आएको छ । आफना शेयर सदस्यहरूको चौतर्फी विकासमा प्रयत्नरत भइ विगत २५ वर्षदेखि आफ्ना सदस्यहरूको आर्थिक, सामाजिक, साँस्कृतिक, मानसिक, शैक्षिक तथा भौतिक विकासमा अहोरात्र लागि रहेकोले यो संस्था सहकारी आज राष्ट्रिय तथा अन्तर्राष्ट्रियस्रमा पुगेको छ । संस्थाले प्राप्त गरेको उपलब्धिलाई केलाएर हेर्ने हो भने यसले आर्थिक र सामाजिक क्षेत्रमा ठूलो परिवर्तन गर्न सफल भएको छ । किनभने यस संस्थाको सदस्यता ग्रहण गरेर अति विपन्न मानिसहरू पनि सानोतिनो व्यवसाय गर्ने र त्यसबाट आयआर्जनका कार्य गरी आफ्नै खुट्टामा उभिन सक्ने भएका छन् । आफ्ना सामान्य आवश्यकता वा समस्याहरू समाधान गर्नका लागि साहु महाजन तथा ठूला ठालुको दैलो कुर्नुपर्ने र चर्को ब्याजले गर्दा कहिल्यै उठ्न नसक्ने स्थितिलाई यस सहकारी संस्थाले अन्त्य गरिदिएको छ । सामान्यभन्दा सामान्य व्यक्तिहरू आज हजारौं, लाखौं र करोडौंको मालिक बन्न सफल भएका छन् । सामान्य पारिवारिक गुजारा चलाउनसमेत धौ-धौ पर्ने मानिस आज संस्थाको आड भरोसामा चमत्कारी रुपमा अर्थोपार्जनमा लागिरहेका छन् । सदस्यहरूले यस संस्थाको सहयोगमा आफ्ना छोराछोरीलाई देश विदेशमा उच्च शिक्षा हासिल गराउनसमेत सफल भएका छन् । यसरी यो संस्था बालक, युवा तथा बुढाबुढीको सहारा बनेर अगाडि बढिरहेको छ । संस्थाले सदस्यहरूलाई **नुनदेखि सुनसम्म** को आवश्यकता पुरा गरेको छ । यो संस्थाको लागि गौरवको कुरा पनि हो । यस संस्थाले आफ्नो प्रगति र उन्नति यही क्रममा अगाडि बढाउन सकेमा आगामी वर्षहरूमा यस संस्थामा आवद्ध सदस्यहरूको आथिक, सामाजिक र शैक्षिक क्षेत्रमा ठूलो परिवर्तन गर्न सकिनेमा कुनै दुईमत छैन । न्युन आय भएका व्यक्तिहरूलाई लगानीमा पहुँच पनि बढ्छ । जुन ग्रामीण क्षेत्रको परिवर्तन तथा सम्बृद्धिको लागि आवश्यक हुन्छ । ग्रामीण बासिन्दाहरू फलफूल, तरकारी, पशुपन्छी, नगदेवाली जस्ता सानोतिनो लगानीका व्यवसायमा संलग्न हुन्छन् । त्यसले पनि अपुग भएर आफ्ना सदस्यलाई वैदेशिक रोजगारमा पठाएपछि सदस्यहरूलाई रेमिटेन्स सेवा दिइरहेको छ । ती रकमहरू ठीक व्यवसाय, उद्योग, कलकारखाना सञ्चालन गर्न नसकेकाले उडाएर ल्याएको पैसा गुडाएर गएको हो कि भन्ने अवस्था छ । उद्यमशीलताको माध्यमबाट यसलाई रोक्नुपर्छ ।

यो संस्थाले आफ्ना क्षेत्र वरिपरि अन्य संस्थाहरूको स्थापना र प्रर्वधनमा पनि महत्वपूर्ण भूमिका खेलेको छ । जस अन्तर्गत मिर्गेका जनतालाई जागरण गराउने उदेश्यले **जनजागरण**, जनतालाई उत्थान गर्ने उद्देश्यले **जनउत्थान**, किसानलाई जागरुक गराउन **किसान सचेतन**, काब्रेमा नै जनतालाई मुक्ति दिलाउन **जनमुखी**, महिलाहरूको भविश्य निर्माण गर्न **भविश्य निमार्ण महिला**, नाम्दूका जनतालाई चेतना दिन **चेतनशील** र जुंगुमा जनतालाई उपकार गर्न **जनउपकार** वचत तथा ऋण सहकारी संस्था खुलाउन र तिनीहरूलाई आफू पछिपछि डोर्‍याउने, नेतृत्व विकास गर्ने र सहकार्य गरी प्रवर्द्धन गर्न महत्वपूर्ण भूमिका निवार्ह गरेको छ ।

२०५४ मा स्थापनाको केही समयमा नै मिर्गेमा LGP कार्यक्रमका कारण मृत्युको मुखमा पुगेको जनजागरणलाई महत्वपूर्ण भूमिका खेली मृत्युको मुखबाट जोगाइदिएको थियो । जनसचेतनले बनाएर अगाडि बढाएका नीति नियमहरू नै आज आसपासका सहकारी संस्था तथा देश विदेशमा लागू भएका छन् । यसका कारण यो संस्था नजीकका अन्य सहकीहका लागि मार्गदर्शक तथा समन्वयकर्ताको भूमिकामा समेत उभिएको छ ।

सहकारी संस्थाको प्राण र स्रोत भनेकै यसका शेयर सदस्य हुन् । त्यसैले यसलाई मनन गरी संस्थाले आफ्ना सदस्यहरूको हितको लागि बालक, युवा, वृद्ध सबैको पक्षमा कार्य गरिरहेको छ । यसको कारण सदस्यहरूलाई व्यवसायिक बनाउनका लागि महत्वपूर्ण भूमिका प्रदान गरेको छ । व्यवसायिक पशुपालन, व्यवसायिक तरकारी खेती, उच्च मूल्यका नगदेवाली लगायतका बालीहरूको



**यस वैत्यश्वर गाउँपालिकामा रहेको नेपालकै पहिचान बनाउन सफल र अगुवा संस्था भएकाले शुरुमा संस्था स्थापनाको चरण त्यसपछि संस्था विकास र विस्तारको चरण अब पूरा भएकाले अबको आवश्यक्ता भनेको संस्थाहरू एकीकरण भई "एकले थुकी सुकी सयले थुकी नदी" भनेझैं सवल र सक्षम भएर सदस्यहरूको इच्छा, चाहाना र आवश्यक्ताको परिपूर्ति गर्नुपर्ने जिम्मेवारी आएको छ जसको नेतृत्व जनसचेतनले नै गर्नु उपयुक्त देखिन्छ।**

विकास गराई आफ्ना सदस्यहरूलाई आर्थिक र सामाजिक विकासमा महत्वपूर्ण भूमिका प्रदान गरेको छ । जसका कारण यो संस्था सबैको मुटुको ढुकढुकी बन्न सफल भएको छ । यस संस्थाको  कारण यस क्षेत्रमा ठूलो फड्को मार्न सफल भएको छ। यसरी यो संस्था दोलखाको उदाउँदो सूर्य र नेपालको उदाउँदो ताराको रुपमा विकास भएको  छ। यस संस्थामा सदस्यता बनी सानोदेखि ठूलो बचत गरी आफ्नो बचत खातामा लाखौंसम्म बचत गरी भविश्यको सहारा बनेको छ । यस वैत्यश्वर गाउँपालिकामा रहेको नेपालकै पहिचान बनाउन सफल र अगुवा संस्था भएकाले शुरुमा संस्था स्थापनाको चरण त्यसपछि संस्था विकास र विस्तारको चरण अब पूरा भएकाले अबको आवश्यक्ता भनेको संस्थाहरू एकीकरण भई **"एकले थुकी सुकी सयले थुकी नदी"** भनेझै सवल र सक्षम भएर सदस्यहरूको इच्छा, चाहाना र आवश्यक्ताको परिपूर्ति गर्नुपर्ने जिम्मेवारी आएको छ जसको नेतृत्व जनसचेतनले नै गर्नु उपयुक्त देखिन्छ ।

सहकारी व्यवसाय सदस्य आफैंले आफ्ना लागि लाग्ने व्यवसाय हुने भएकाले दिगो, भरपर्दो, आत्मनिर्भर, स्वाधीन अर्थतन्त्र निमार्णको आधार हुनेछ । अतः सहकारीलाई राज्यको सहयोग र सहुलियत प्रदान हुनेछ। यसरी सहकारी संस्थाले जल, जमिन, जंगल, जडिवुटीको उचित प्रयोग गरी नेपालमा भएको आयातमुखी व्यवसायलाई विस्तारै निर्यातमुखी बनाएर लैजान सकेमा विदेशी मुद्रा आर्जन भइ देशको आर्थिक अवस्था सुदृढ भइ देश र जनताको भविश्य सुनिश्चित हुनेछ ।

अन्तमा, यस संस्थाले आथिक मेरुदण्डलाई दह्रो बनाउन सकोस् । माथि उल्लेख गरिएका कार्यक्रमका अलावा नयाँ नयाँ कार्यक्रमको थालनी गरी सदस्यहरूलाई सहयोग गर्न सकोस् । जनसचेतनको उत्तरोत्तर प्रगति होस् । रजत जयन्तीको शुभकामना ।

 

# जनसचेतनः भरोसा र अनुभूति



**हरि प्रसाद रिमाल**
बैत्यश्वर गाउँपालिका ७, हाल : भरतपुर, चितवन

**इतिहासको सम्झना**

आजभन्दा २४ बर्षअघिको कुरा हो, काभ्रेमा सहकारी संस्था खुल्यो रे भन्ने कुरा सुन्दा कसैले त्यति महत्व दिंदैनथे । स्थापनाको अवस्थामा प्रायः शिक्षकहरूको बाहुल्यता रहेको यस संस्थामा उहाँहरूप्रति अशोभनीय लाञ्छना पनि सुन्नुपर्ने अवस्था थियो । कतिपयले भन्ने गर्थे - **जागीरले पुगेनछ, मास्टरहरू अब पैसा उठाउन थाले ।** तर पनि मेरो कलिलो मानसपटलमा हामीलाई पढाउने र दीक्षित बनाउने गुरुहरूबाट नाजायज काम पक्कै हुँदैन भन्ने पूर्ण विश्वास थियो । त्यही विश्वास आज साकार भएर जनसचेतन मेरो अनि हाम्रो भरोसाको केन्द्र बनेको छ । २०५० सालमा ३४ जना सदस्य र ३४०० पूँजीबाट शुरु गरेको यो सहकारी आज २१ हजारभन्दा बढी सदस्य र ९२ करोडभन्दा माथिको पूँजी निर्माण गरेर नेपालकै नमुना सहकारी बन्न सफल भएको छ ।

जनसचेतन आज २५ वर्षको जवानीमा पाइला चाल्दै छ । यसले आफ्नो बाल्यकालको लालन-पालनमा असल अभिभावकत्व प्राप्त गर्‍यो । अहिलेसम्म त्यही अभिभावकत्वका कारण आफूलाई २५ वर्षे जवान देखाउन सफल भएको छ । २५ वर्षअघि यसलाई जन्म दिएर 'जनसचेतन' भनी न्वारन गर्ने हाम्रा अग्रजहरूको आज आफ्नो सन्तान पूर्ण जवानीमा प्रवेश गरेको देख्दा अवश्य पनि गर्वले छाती फराकिलो हुन्छ । अनि हामी ती जनसचेतनका जन्मदाताहरूलाई एउटा मूर्त सचेत संस्था प्राप्त भएकोमा हृदयदेखिको धन्यवाद दिन चाहन्छौं, जसले गर्दा आज हामी पनि गर्वले फराकिलो छाती बनाएर बस्न पाएका छौं ।

हिजोसम्म जनसचेतनलाई हुर्काउन बढाउन यसका अभिभावक र सहकारीका सहयात्री तथा यसका सदस्यहरूले धेरै डाक्टर, वैद्य र टनिकको मात्रा खर्चिनुपर्‍यो । आज उ आफैं जवान भएको छ । उसका धेरै सन्तान जन्मिएका छन् । अब जनसचेतन आफैं अभिभावक भएको छ । जन्मदातालाई यसले आदर र सम्मान गर्नुपर्छ । आफ्ना सन्तानलाई माया र प्रेमले हुर्काउनुपर्छ ।

**के दियौं हामीले जनसचेतनलाई**

१. जीवन्त कार्यसमिति ।
२. नियमित बचत ।
३. निरन्तरता ।
४. प्रतिबद्धता, जोस र जाँगर ।
५. सदस्य संख्या ।
६. सुशासन ।
७. अनुशासन ।
८. पद्धति र प्रक्रिया ।
९. प्रविधि
१०. असल नेतृत्व
११. मेहेनती र प्रतिवद्ध कर्मचारी
१२. कुशल व्यवस्थापक

**के पायौं हामीले जनसचेतनबाट**

१. सदस्यताको पहिचान ।
२. बचतको सुरक्षा ।
३. बचतमा मुनाफा ।
४. कर्जा सुविधा ।
५. बचत गर्ने संस्कार ।
६. लगानी गर्ने योजना ।
७. सदस्य सुरक्षा कोष सुविधा ।
८. सदस्यभित्रैबाट रोजगारी
९. संस्थालाई व्यवस्थित गर्न कार्यालय भवन ।
१०. सदस्यलाई पायक पर्ने शाखा कार्यालय ।
११. राजधानीसम्म संस्थाको पहुँचलाई विस्तार गर्ने अवसर ।
१२. जिल्लामा अगुवा सहकारीको भूमिका ।

१३. बिरामीको लागि एम्बुलेन्स ।
१४. देश, विदेशमा सहकारीको बारेमा सिक्ने र सिकाउने अवसर ।
१५. नेतृत्व विकास र व्यवस्थापनको सीप ।

**जनस्तरमा जनसचेतन**

विगत २४ वर्ष अघिको शिशु जनसचेतन शायदै कुपोषणको शिकार हुनु परेन तर पनि यो सहकारी सहजै रूपमा आजको अवस्थामा आइपुगेको भने होइन । जनस्तरमा यसको साख फैलिसकेको थिएन । सदस्यता लिन धेरै हदसम्म सहजीकरण गर्नुपर्ने अवस्था थियो । "**एक घर एक सहकारी सदस्य**" भन्ने नारालाई साकार पार्न पनि धौ-धौ थियो । विश्वासको वातावरण बनिसकेको थिएन । व्यवस्थापनको जिम्मेवारी पाएको कार्य समितिलाई धेरै चुनौतिहरू सामना गर्नुपर्ने अवस्था थियो । कतिपय पक्ष र क्षेत्रबाट संस्थालाई असफल गराउने दुस्प्रयास पनि हुने गरेको पाइन्थ्यो । कहीं कतै राजनीतिक प्रतिशोधका आधारमा पनि व्याख्या विश्लेषणहरू हुने गर्थे ।

तर आज त्यस्तो अवस्था छैन । सबैको मनको ढुकढुकी बनेर बसेको छ जनसचेतन । यसले आफ्नो वरपर आफू जस्तै धेरै सहकारीहरूलाई जन्म दिने प्रेरणाको स्रोत बनेको छ । यसका थुप्रै छिमेकी गाउँपालिकाहरूमा अहिले धेरै सहकारी संस्था जन्मेका र सञ्चालन भइरहेका छन् । यी सहकारीहरू जन्मने प्रेरणा पनि जनसचेतनले दिएको छ । त्यसैले हामी जनसचेतनलाई जेष्ठ सहकारी पनि भन्न सक्छौं ।

विगतको अवस्थामा संस्थाको सदस्यता बन्न करकाप गर्नुपर्ने व्यक्तिहरू आज आएर सदस्यता लिने अग्र पंक्तिमा लागेको देखिन्छ । घरको एकजना अनिवार्य सदस्यता भन्ने नारालाई उछिन्दै **घरका सबै सदस्य सहकारीको सदस्य** बन्ने लहर आजको वास्तविकतामा परिणत भएको छ । चार-पाँच वर्ष अघि सदस्य बनेकाहरू 'किन २०-२५ वर्ष अघि नै सदस्य बनिएन ?' भनी आफैंले आफैंलाई प्रश्न गरिरहेका छन् ।

**देश तथा विदेशमा जनसचेतन**

जनसचेतन सहकारी संस्थाका सदस्यहरू देश-विदेशसम्म पनि छरिएर रहेका छन् । उनीहरू सबैले आफैंले मलजल गरेर हुर्काएको सहकारीको सफलता सुनाउन उत्सुक देखिन्छन् । चाहे त्यो दार्चुलाको सेरी गाउँमा होस्, चाहे त्यो भोजपुरको दिङ्लामा होस्, जनसचेतनका सफलताका सिँढीहरूको आख्यान सुन्दै जाँदा एकपटक नजीक पुगेर साक्षात्कार हुन पाए हुन्थ्यो भन्ने अपेक्षाका स्वरहरू गुञ्जिएको पाइन्छ ।

देशबाहिर कतार, मलेसिया, यूरोप, अमेरिका किन नहोस् जनसचेतनको केही न केही प्रभाव र सहयोगमा उ त्यहाँ पुगेर क्रियाशील रहेको हुन्छ । अनि आर्थिक व्यवस्थापन गर्न जनसचेतनसँग नजीक रहेको देखिन्छ ।

जनसचेतनकै आँगनमा टेकेर फर्कनेहरू दोलखा घर हो भन्ने थाहा पाए भने तपाइँ पनि जनसचेतनको सदस्य होला हैन त भन्ने उत्साही प्रश्न गर्ने गर्दछन् । सदस्य नै भन्ने थाहा पाएपछि हामी त्यस्तै हुन के गर्नुपर्छ भनेर थप जिज्ञासु सोधाइ गर्छन् । त्यसैले जनसचेतनको शाख देश विदेशमा सुगन्धित भएर फैलिएको छ भन्दा अत्युक्ति नहोला । राष्ट्रियस्तरका सहकारीहरूमध्येमा अब्बल सहकारीको पहिचान दिन सफल यो संस्था विभिन्न अन्तराष्ट्रिय ब्रान्ड, पुरस्कार र विभूषणबाट सम्मानित भएको छ ।

**आर्थिक उन्नति र जीवनस्तर सुधारमा जनसचेतन**

जनसचेतनको प्रारम्भको एउटा आकर्षण योजना थियो "सहकारीको हरेक सदस्य २० वर्षको बचतपछि लाख पति" तर त्यतिमा मात्र सीमित रहेन योजना, बचतमा मात्र नभएर लगानीमा संस्था र सदस्यको बढी जोड रहेको पाइयो । धेरैले आफ्नो खरको छानालाई ढुंगा र जस्ताको छानामा परिणत गरे । धेरैले आफ्नो सन्तानलाई प्राविधिक उच्च शिक्षा हासिल गर्ने योजना पूरा गरे । धेरैले व्यापार व्यवसायलाई व्यवस्थित र नियमित आयको माध्यम बनाएर, बजार क्षेत्रका टिनका छाप्राहरू आर.सी.सी. महलमा परिणत भए । यो सबै हुनुको श्रेय जनसचेतनलाई नै जान्छ ।

**आर्थिक उन्नति र जीवनस्तर सुधारमा देखा परेको परिवर्तन**

१. साहु महाजनको चर्को व्याजबाट मुक्ति ।
२. किर्ते तमसुक र कोसेली प्रथाको अन्त्य ।
३. सबैमा उद्देश्य अनुरूप समान व्याज ।
४. लगानीको लागि स्पष्ट योजना ।
५. बचत गर्ने बानीको विकास ।
६. उद्यामशीलताको विकास ।
७. फजुल खर्च बचतमा परिणत ।



८. पैसाको महत्वबारे ज्ञान ।
९. तुरुन्त आइपर्ने समस्या समाधानमा सहजता ।
१०. भविष्यको योजना र भविष्यको जोहो ।

**आगामी दिनमा जनसचेतनले गर्नुपर्ने थप प्रयास**

१. कार्यक्षेत्रभित्र परिवारका सबै व्यक्ति सहकारीको सदस्य ।
२. सदस्य परिवारका सबै बालबालिका विद्यालय गएको सुनिश्चितता ।
३. एक घर एक फलफूल वृक्ष ।
५. एक घर एक चर्पीको अवधारणा र घोषणा ।
६. फोहोर व्यवस्थापन र सरसफाइयुक्त वातावरण ।
७. प्लाष्टिकरहित क्षेत्रको घोषणा ।
८. भूकम्प पीडितको लागि राहत तथा सहुलियत कार्यक्रम ।
९. नियमित सदस्यको लागि आवधिक योजना (जस्तैः २०, ४०, ५० बर्षपछि सुबिधा, सदस्यको स्थान के कस्तो हुने) ।
१०. आजीवन सदस्यता कार्यक्रम ।
११. सदस्य पेन्सन र वीमा कार्यक्रम ।
१२. जेष्ठ सदस्य आश्रम कार्यक्रम ।
१३. सदस्यकेन्द्रित दिगो तथा दीर्घकालीन योजना ।

यी बुँदाहरूमा सहकारीले लगानी गर्नुभन्दा पनि सहजीकरण र व्यवस्थापन गर्न सके मात्र पनि समाज परिवर्तनको लागि ठूलो योगदान पुग्नसक्छ ।

यस वर्ष हामी जनसचेतनको २५ औं जन्मोत्सव तथा रजत जयन्ती मनाइरहेका छौं । यसै गरी हामीले यस सहकारीको जन्मदिन आजीवन मनाइरहन पाउँ । भावी पुस्ताले समेत पुर्खाले सिर्जेको चिनो र निशानीको निरन्तर सञ्चालन गरी पुस्तौं-पुस्ता यो गर्विलो चिनो हस्तान्तरण गर्दै जान पाउन् । हामी सबैको यही शुभकामना छ जनसचेतनलाई ।

धन्यवाद ! जय जनसचेतन ! जय सहकारी !



# प्रेरणाको स्रोत जनसचेतन साकोस

जानुका खत्री

सँगसँगै मिलेर काम गर्नु सहकारी हो । सँगै मिलेर काम गर्न ईच्छा, चाहना र भावना मिल्नुपर्छ । अन्यथा काम सफल पार्न सकिँदैन । सहकारीताको भावना परापूर्वकालदेखि भएको पाइन्छ। यो भावना मानव जातिमा मात्र नभएर जीवजन्तु तथा जनावरमा पनि देख्न सकिन्छ। यसको असल नमुना हामी कमिला र माहुरीमा पाउन सक्छौं । जसको जीवनशैलीले हामीलाई जीवनमा सहकार्य गर्न प्रेरित गर्दछ ।

सहकारीको शुरुवात मानव सभ्यताको उत्पति सँगसँगै भएको अनुमान छ । आदिम साम्यवादी युगमा मानिसहरू एकआपसमा मिलेर बस्ने, आहारको खोजी गर्ने र त्यसको प्रयोग गर्ने काम सामुहिक रुपबाट नै गरेको पाइन्छ। आदिम साम्यवादी युगको सहकार्यको भावनाबाट प्रेरित सहकारी आधुनिक युगसम्म आइपुग्दा परिष्कृत र परिमार्जित हुँदै अनेक रुपबाट हामी हेर्न सक्छौं । सहकारी त्यस्तो संगठन हो जसले व्यक्तिहरूलाई समाजको हित र विकासमा लाग्न प्रेरित गर्दछ । समाजमा छरिएर रहेको श्रम, सीप र पूँजीलाई एकीकृत गरी समाजको सामाजिक, आर्थिक, साँस्कृतिक तथा वातावरणिय विकासको निम्ति समान आय, स्तर, भावना, चाहना र उद्देश्य रहेका व्यक्तिहरूद्वारा सामुहिक हितको भावनाबाट एकआपसमा मिलेर आत्मनिर्भर, भाइचारा, पारस्परिक सहयोग, संगठन तथा एकताको भावना जागृत गराउने उद्देश्यले खोलिएको सामुहिक संगठन नै सहकारी संस्था हो । यसको निश्चित मूल्य मान्यता तथा सिद्धान्तहरू हुन्छन् । यिनै मूल्य मान्यता तथा सिद्धान्तको परिधिभित्र रहने गरी सिन्धुपाल्चोक जिल्ला थुमपाखर गाविसमा २०५४ माघमा आत्मनिर्भर बचत तथा ऋण सहकारी संस्थाको जन्म भयो ।

जिल्ला प्रशासन कार्यालय सिन्धुपाल्चोकमा दर्ता नं ३८० कायम हुने गरी २०५५ बैशाख १५ मा वैधानिकता प्राप्त गरेको हो । स्थानीय साहु महाजनको चर्को व्याजदर र बैङ्कको झञ्झटिलो प्रक्रियावाट स्थानीयबासीलाई मुक्ति दिलाउने उद्देश्यले मुख्यतया शिक्षक तथा कर्मचारीहरूको माझबाट जन्मिएको यो संस्थाले केही समयसम्म अग्रगति लिन सकेन । सहकारी शिक्षाको कमी लगायत अन्य विविध समस्याको कारण पाइला अघि बढाउन कठिन परेको यो संस्था तब मात्र मूर्तरुप लिनपुग्यो जव सहकारीको सातवटा सिद्धान्तमध्ये छैटौं सिद्धान्त सहकारीबीच पारस्पारिक सहयोगलाई आत्मसात गर्दै काभ्रे दोलखामा संस्थाले पहिलो अवलोकन भ्रमण गऱ्यो ।

जनसचेतन साकोस आत्मनिर्भर साकोसको लागि प्रेरणाको स्रोत बन्न पुग्यो । अवलोकन भ्रमण र अन्तरक्रियासँगै जनसचेतनले हाम्रो मन मस्तिष्कमा उर्जा र हातमा योजना लिएर फर्कन उत्साहित तुल्यायो । उक्त योजनालाई सार्थकतामा परिणत गर्न जनसचेतनका तत्कालीन अध्यक्ष यज्ञराज ढुङ्गेल र कोषाध्यक्ष पुष्कर कुमार दाहालज्यूले महत्वपूर्ण योगदान दिनुभयो । अवलोकन भ्रमणको चिनजनलाई संथागत मित्रतामा परिणत गर्दै र हाम्रो आमन्त्रणलाई स्वीकारेर आत्मनिर्भर साकोसमा १ दिने अन्तरक्रियाको लागि समय दिनुभयो। त्यसले आत्मनिर्भरलाई साँच्चिकै आत्मनिर्भरतिर अग्रसर गरायो । सहकारी शिक्षा नै सहकारी संस्था विकासको पहिलो खुट्किला हो । जब सहकारी क्षेत्रको ज्ञान, सीप, धारणा प्राप्त हुन्छ, तब मात्र व्यवहारमा परिवर्तन गरी कुशल संस्था बनाउन सदस्यहरू अग्रसर हुन्छन् । त्यसबाट आर्थिक, सामाजिक तथा सांस्कृतिक क्षेत्रमा गुणात्मक नतीजा प्राप्त गर्न सकिन्छ । सभ्य, सुसंस्कार र नाफामूलक संस्था बन्नसक्छ । त्यस्ता संस्थाको छत्रछायाँमा धेरै व्यक्तिहरू ओतलाग्न आउँछन् भन्ने कुरा हाम्रो सिकाइ भयो । उक्त अवलोकन भ्रमण तथा अन्तरक्रियापश्चात आत्मनिर्भर साकोसमा सुधार भएका क्षेत्रहरू यस प्रकार छन् :

- कार्यालय व्यवस्थापनः- संस्था व्यवहारिक तवरबाट नै सञ्चालन भैरहेको थियो । अवलोकन भ्रमणपश्चात सहकारी संस्थालाई संस्थागत बनाइ अघि बढाउन कर्मचारी व्यवस्था गरी स्वयम्सेवकको रुपमा नै भए पनि काम गरियो ।
- शिक्षाको बिस्तारः- सहकारी शिक्षा नै सहकारी अभियानको महत्वपूर्ण मेरुदण्ड हो । सहकारी क्षेत्रको सक्षम जनशक्ति तयार गर्ने कार्यक्रम वार्षिक कार्ययोजनामै समावेश गरी संस्थामा सहकारी शिक्षा शिविरमा वृद्धि, समिति, उपसमिति र कर्मचारीलाई राष्ट्रिय तथा अन्तर्राष्ट्रिय तालिममा समावेश गर्न विभिन्न निकायहरूसँग समन्वय कार्य अगाडि बढाइयो।
- योजनाको निर्धारणः- कुनै पनि संस्थाको असल योजना



निर्माण नै संस्था सफलताको पहिलो सूचक मान्न सकिन्छ । कुनै पनि संस्थाको रणनीतिक योजनाको आधारमा वार्षिक कार्ययोजना निर्माण गरिन्छ । जुन नाप्न सकिने हुनुपर्छ । योजना निर्माण गर्दा आफ्नो "SWOT analysis" S= Strength (शक्ति), W= Weakness (कमजोरी), O= Opportunity (अवसर),T= threat (चुनौति) गरेर अगाडि बढ्नुपर्ने कुरा जनसचेतनले दिएको उपहार हो ।

- ऋणको वर्गीकरणः- ऋणलाई संस्थाको क्षमता र सदस्यहरूको अवस्थाअनुसार वर्गीकरण गरी उत्पादनशील क्षेत्रमा लगानी गर्न प्रेरित गर्दै ऋण नीति तय गर्नुपर्छ । ऋणलाई पशुपालन, कृषि, शिक्षा, व्यवसाय जस्ता विभिन्न क्षेत्र निर्धारण गरी लगानी गर्न सकिन्छ । ऋण लगानी गर्दा किस्ताको निर्धारण, मासिक व्याज असुली गर्दा ऋणी सदस्यलाई ऋण चुक्ता गर्न बोझ नपर्ने ऋण लगानी गर्नुपूर्व नै सदस्यलाई ऋण शिक्षा, लगानीपश्चात उद्देश्य अनुसार कार्यान्वयन भए नभएको अनुगमन गर्ने, उत्कृष्ट ऋणीलाई पुरस्कृत गर्ने, भाखामा नै ऋण तिर्नको लागि ऋणीहरूलाई नियमित ताकेता गर्ने जस्ता कुराहरू ऋणको क्षेत्रमा आत्मनिर्भर साकोसले कार्यान्वयन गरेका विषय हुन् ।
- नीति निर्माण तथा संशोधनमा सहयोगः- सहकारी संस्था नेतामा नभई नीतिमा सञ्चालन हुने संस्था हो । जुन कार्यक्रम संस्थामा सञ्चालन गर्न लागेको हो त्यसको लागि सर्वप्रथम सहजता आउनुका साथै कार्यक्रम व्यवस्थित र दीर्घकालीन हुन्छ भन्ने कुरा यस संस्थाले प्राप्त गरेको उपलब्धि हो ।
- बचतमा विविधिकरणः- सहकारी संस्थामा पूँजी निर्माणको मुख्य आधार बचत हो । बचतमा जति विविधिकरण गर्नसक्यो त्यति नै पूँजी संकलन धेरै हुने कुराको महसुस अन्तरक्रियापछि भएकाले संस्थाले नियमित बचतलाई पनि फरक फरक दरमा गर्न सकिने र बाल बचत सँगसँगै मुद्दति, दैनिक र ऐच्छिक बचतको नीति तयार गरी संस्थाले कार्यन्वयन गऱ्यो ।
- शेयर र बचतको अनुपातः- हाम्रो संस्थाले सदस्यता र बचत बृद्धिलाई मात्र ध्यानमा राखी काम गरिरहेको थियो । उक्त अवलोकन भ्रमण तथा अन्तर्क्रियाबाट बचत र शेयर रकमको अनुपात दश गुणाको बनाएमा मात्र संस्थालाई सन्तुलित तरिकाले सञ्चालन गर्न सकिने कुरा थाहा भयो । जुन कुरा व्यवस्थापन गर्न संस्था हाल पनि प्रयासरत नै छ ।
- सदस्यता बृद्धिः- संस्थामा जति बढी सदस्य भयो त्यतिनै संस्था सञ्चालनको लागि कठिन हुन्छ । सदस्यहरू पहिचान गर्न, लगानी र असुली गर्न समस्या हुनसक्छ भन्ने हाम्रो साँघुरो सोचलाई जनसचेतनले परिवर्तन गऱ्यो । जति सदस्य बृद्धि गर्नसक्यो त्यति नै संस्था व्यापक हुने कुरा हामीलाई सिकाइ भयो । त्यसपछि "एक घर एक सदस्य" को नीतिलाई अवलम्बन गर्दै कार्यक्षेत्र विस्तार एजेन्टको व्यवस्था र महिला, दलित र विपन्न व्यक्तिलाई सदस्यता शुल्कमा छुट जस्ता नीति तथा कार्यक्रम संस्थाले ल्याइ सदस्यता वृद्धितर्फ अग्रसर भयो ।

कुनै पनि क्षेत्रका अभियान शसक्त बनाउन अभियानकर्ताको भूमिका रहन्छ । सहकारी क्षेत्रको अभियानमा देखिएका चुनौतिहरूमध्ये सञ्चालकहरूले पूर्ण समय दिननसक्नु पनि एक हो जस्तो लाग्छ । जब हामीले जनसचेतनको अवलोकन भ्रमण गऱ्यौं त्यहाँ हामीले सञ्चालक समितिले संस्थाको लागि दिएको समय नमुनायोग्य लाग्यो । जसको परिणामस्वरुप हामीलाई पनि संस्थाकै निम्ति झोला बोकेर हिड्यौं जस्तो लाग्यो जसको फलस्वरुप हाम्रो संस्थाको सञ्चालक सदस्यहरू प्रायः अन्यत्र कार्यरत भए पनि संस्थालाई दिने समय गुणात्मक बन्दै गयो । यसरी हामीले आत्मनिर्भरलाई जन्माए पनि कर्म दिने मुख्य श्रेय जनसचेतन साकोसलाई नै जान्छ । जनसचेतनसँग भेट हुनु हाम्रो लागि ढुङ्गा खोज्दा देवता मिले जस्तै भयो । सहकारी अभियानमा कोशेढुङ्गा साबित हुनपुग्यो । १ जना महिलासहित २ ९ जनाबाट शुरु भएको यो संस्था आज ११३६ जना महिला र ६१४ जना पुरुषसहित जम्मा १७५० जना शेयर सदस्य, ११७७ जना बाल सदस्य, ११२ जना जेष्ठ सदस्य र लगभग ३ करोड सम्पतिको मालिक भएको छ । आत्मनिर्भर साकोसको संस्थागत विकासमा विशेष योगदान पुऱ्याउने जनसचेतन साकोस परिवार, अध्यक्ष यज्ञराज ढुङ्गेल र कोषाध्यक्ष पुस्कर कुमार दाहालप्रति यस संस्थाको संस्थापक सदस्य, तत्कालीन सञ्चालक, समिति, वर्तमान समिति, कर्मचारी एवम् सम्पूर्ण सदस्यको तर्फबाट हार्दिक धन्यवाद टक्र्याउँदछौं । साथै आगामी दिनमा हामी जस्तै मित्र संस्थाहरूको वृद्धि, विकास र समन्वयको लागि त्यस संस्थामा सिर्जनात्मक कार्यक्रम तय हुन सकोस् भन्ने शुभेक्षा व्यक्त गर्न चाहन्छु । साथै रजत जयन्तीको उपलक्ष्यमा सबैमा शुभकामनासहित उत्तरोत्तर प्रगतिको कामना गर्न चाहन्छु ।

जय सहकारी ॥

*(खत्री आत्मनिर्भर बचत तथा ऋण सहकारी संस्था लिमिटेड, थुम्पाखर ५, सिन्धुपाल्चोकमा सल्लाहकार हुनुहुन्छ ।)*



# जनसचेतनसँगका अठार वर्ष

**मेघराज घिमिरे**
सहायक अधिकृत, आर्थिक तथा प्रशासन विभाग

२०५२ साल श्रावण महिनाबाट काब्रे-६ बगरका रघुनाथ दाहाल पहिलो कर्मचारीको रुपमा नियुक्त हुनुभएपछि औपचारिक रुपमा यस संस्थाले दैनिक कामकाज कर्मचारीबाट गराउन शुरु गरेको हो । २०५५ साल कार्तिक महिनाबाट संस्थापक सदस्य तथा तत्कालीन उपाध्यक्ष मेरा पिता भवानी प्रसाद घिमिरे दोश्रो कर्मचारीको रुपमा लेखा सहायक पदमा नियुक्त भइ दैनिक कामकाज सञ्चालन गर्नुभएको हो । पछि २०५६ चैत्र महिनादेखि आफ्नो स्वास्थ्यको कारणले कामकाज गर्न नसकेको भनी उहाँ संस्थावाट बिदा हुनुभएको थियो ।

म तत्कालीन मेलुङ गाविसको एउटा प्राइभेट बोर्डिङ स्कुलमा पढाउने काम छोडेर जनसचेतन आएको थिएँ । २०५६ साल चैत्र महिना ७ गते बिहान घरवाट निस्कँदा केही समय संस्थामा काम गर्ने भनी मेरो यात्रा प्रारम्भ भयो । मेरो जनसचेतनको यात्रा काब्रे ३ निवासी सदस्यता नं. ६३१ को दुर्गा खतिवडाको नाममा स्वीकृत भएको पशुपालन शीर्षकको ऋण रकम रु. २०,००० को तमसुक लेखनवाट शुरु भएको थियो । तमसुक लेख्ने क्रममा संस्थाका कोषाध्यक्ष आदरणीय गुरु पुष्कर कुमार दाहालले सिकाउँदै जाने क्रममा १७ प्रतिशतका दरले हुने व्याजसमेत मिति २०५७ साल चैत्र महिना ७ गतेभित्र मासिक ८ किस्तावन्दीमा भनी लेख्नुपर्ने सन्दर्भमा द्विविधा भएकोले किन २०५७ साल भनी मैले टिप्पणी गर्दा “तिमीलाई भुरा मैंले भनेको लेखन” भनेको कुरा मेरा मानस्पटलमा ताजै छ । सो बेलासम्म स.नं. १५७८ जना सदस्य दर्ता भईसकेका थिए । सदस्यता नं. १५७९ को राजकुमार बराइलीलाई मेरो यात्राको पहिलो सदस्यको रुपमा दर्ता गरेँ । त्यसपछि चैत्र ९ गते नै लेखा सहायक पदको विज्ञापन निस्कियो, आवेदन दिएँ र म काम गर्दै आएँ । मसान्तको बेलामा कोषाध्यक्ष पुष्कर कुमार दाहालले भरपाइमा सही गराएर स्केल रु. १,८७५/- को तलब रकम दिनुभयो । व्यक्तिगत खर्च तथा घर व्यवहार चलाउनका लागि समस्या भएन र सोही तलबको पैसाले म २०५७ साल वैशाख ३ गते सदस्यता नं. १५८७ को शेयर सदस्य बनें । २०५७ साल वैशाख महिनाको २१ गते संस्थाले उपयुक्त ठहऱ्याएकोले मैले संस्थाको तेश्रो कर्मचारीको रुपमा अस्थायी लेखा सहायकको नियुक्ति पाएँ । सो बेला म लगभग २३ वर्षको भइसकेको थिएँ । मेरा संगैका दाजुभाई, संगीहरू नेपाली सेनामा जागीर खाने तयारीमा थिए र जागिरे भए पनि । तर म संस्थामा काम गर्दै गएँ, मानसिक रुपमा कहिलेकाहीं विचलन आए पनि कहिल्यै बाहिर जाने, सरकारी वा प्राइभेट जागिर अन्तै खोजेर खाने, व्यापार गर्ने, वैदेशिक रोजगारमा जाने योजना अहिले सम्झँदा मैले कुनै दिन पनि बनाइनँ ।

अध्यक्ष आदरणीय गुरु यज्ञराज ढुङ्गेल सो बेला हनुमन्तेश्वर उच्च मा.वि. मा प्र.अ. हुनुहुन्थ्यो । उहाँबाट ऋणसम्वन्धि, लेखा, भाखा नाघेको ऋणको रेटिङ, वासलात, सन्तुलन परीक्षण तथा नाफा नोक्सान हिसाबहरू, जर्नल भौचरबारे र अरु आवश्यकीय कुराहरूको बारेमा सिक्दै गएँ । सचिव आदरणीय गुरु भीम प्रसाद दाहाल हनुमन्तेश्वर उच्च मा.वि. मा शिक्षक र सो बेला ऋण उपसमितिको संयोजक हुनुहुन्थ्यो । उहाँवाट ऋण स्वीकृति विधि, पूर्वपरामर्श, परियोजना, ऋण तिर्ने श्रोत सम्वन्धमा काम सिक्दै गएँ । सो समयमा ऋण उपसमितिवाट स्वीकृत र अधिकार क्षेत्रभन्दा बाहेकका अनुमोदनका लागि सञ्चालक समितिमा लगिन्थ्यो । वचत बराबरका ऋणहरू अध्यक्ष र कोषाध्यक्षले तोक लगाएपछि लगानी गर्ने व्यवस्था थियो । त्यसबेला कोषाध्यक्ष पुष्कर कुमार दाहाल काब्रे गाउँ विकास समितिको अध्यक्ष हुनुहुन्थ्यो । बिदाको बेलाबाहेक उहाँहरू बिहान बेलुका मात्र अफिस बस्नुहुन्थ्यो । त्यसैले मलाई पनि हामी भएको बेलामा सिक्नुछ भनेर बिहानदेखि नै अफिसमा बोलाउनुहुन्थ्यो । त्यो बेला कार्यालय समय विहान ७ :०० बजेदेखि बेलुका ६:०० बजेसम्म थियो । अध्यक्ष तथा कोषाध्यक्षवाट मैले ऋण लगानी तमसुक, भरपाईका काम, भुक्तानी तालिका, पत्र लेखन, भाखा नाघेका ऋणी ताकेता पत्र लेखनको बारेमा सिक्ने मौका पाएँ । त्यसैगरी पहिलो कर्मचारी रघुनाथ दाहाल जसलाई

त्यतिबेलासम्मका सबै सदस्यको सदस्यता नं कण्ठस्थ र सिलसिलेवार हिसावले आउँदथ्यो, उहाँबाट ऋणको व्याज गणना, साक्षी जमानत, रसिद काट्ने, वचत प्रविष्टी, दैनिक खाता लेखन कार्य सिक्दै गएँ । त्यसपछि कोषाध्यक्ष पुष्कर कुमार दाहालबाट संस्थाको मुख्य हिसाव खाता, बैंक तथा नगदी खाता, शेयर खाता लेखन तथा शेयर कित्ता वितरण, सदस्यता दर्ता लेखन, ऋण खाता लेखन, कर्मचारी हाजिर रेकर्ड, कर्मचारीको बिदाको रेकर्ड, बैंक हिसाव मिलान, दर्ता चलानी, जर्नल भौचर तथा अन्य भैपरि आउने लेखनसम्वन्धी कार्यमा तल्लीन हुँदै गएँ ।

काम गर्दै जाने क्रममा म २०५८ साल मार्ग ८ गतेवाट लेखा सहायक पदमा स्थायी भएँ र त्यसपछि सञ्चय कोष पनि भयो, दशैं भत्ता, वोनस आदि हुँदाहुँदै जाँदा मेरो जीविकोपार्जन चल्दै गयो । यतिबेला हाम्रो परिवार ६ जनाको भइसकेको थियो वुवा, आमा,आफू, श्रीमती र २ छोरा । म त्यतै रमाउन थालें । मेरो बुबा आमाको पनि मनसाय छोरो संगै बसोस् भन्ने  नै थियो  । शुरुदेखि नै अहिलेसम्म सम्झँदा कसैले पनि मलाई सहकारीको जागिर तथा सेवा सुविधा नराम्रो भनेनन्  । सवैले यसको स्थायीत्व त्यसबेलादेखि नै बुझेका रहेछन् ।

वचत र ऋणको अलावा २०५७ साल आश्विन १ गतेबाट सदस्य सुरक्षा कोष कार्यक्रम सञ्चालन गरेपछि यो संस्था सबै सदस्यको केन्द्र बन्यो । यस कार्यक्रममा सदस्यले वार्षिक रुपमा  रु.२००/- तिरेपछि सदस्यको मृत्युपश्चात नजिकको हकवालाले रु. २००००/- देखि रु. ४००००/ सम्म सोही कोषवाट रकम पाउने व्यवस्था भयो । कागजी सिटमा सदस्यहरूको वचत तथा ऋण हिसाव लेखी क्यालकुलेटरले दिन गणना गरी सदस्यहरूको वचतमा व्याज दिएको यो संस्थाले पहिलोचोटि कम्प्युटर खरीद गरी २०५८ साल फल्गुण १ गतेदेखि कम्प्युटर अपरेटर अर्जुन प्रसाद दाहाल नियुक्त गरेपछि यो संस्थाले वर्ड तथा एक्सेलमा सदस्यहरूको वचत हिसाव किताव प्रविष्टी गरी  व्याज दिएर छिटो छरितो तथा गुणस्तरीयता र पारदर्शितामा अगाडि बढेको थियो र मैले पनि सोही समयमा अलिअलि कम्प्युटर सिक्ने मौका पाएँ ।

त्यो बेलाको उनको आगमनले बाहिर त झन् केही नहुने रहेछ भनेर झन् मलाई कहीं नजाने यहीं बस्ने उर्जा जगायो र काममा तल्लीन भएँ । अर्जुन र मैले तयार गरेका केही सदस्यतासम्बन्धी डाटा अपडेट हुँदै सोही बेलादेखिका पनि छन् । सो बेलामा संस्थामा ०४९-४२ ९१६२ को टेलिफोन लाइन जडान गरी एस.टी.डी र आइ.एस.डी. सेवा सञ्चालन गरिएको थियो जसले गर्दा परिवार विदेशमा हुने र स्वदेशमा पनि टाढा भएकालाई नजिक बनाएको थियो । २०५९ साल श्रावण १ गते देखि संस्थाको तथा सदस्यको हिसाव चुस्त, दुरुस्त तथा पारदर्शी बनाउनको लागि कम्प्युटरमा अर्को सफ्टवेयर प्रोग्राम थप्ने कार्यले संस्थामा नयाँ आयाम थप्यो । संगसंगै प्रिन्टर, स्क्यानर तथा फोटोकपी मेशीनको पनि व्यवस्था हुँदै गयो । तर त्यो सफ्टवेयरमा १ जनाले मात्र प्रविष्टी गर्न मिल्ने व्यवस्था थियो र क्लोजिङ गर्न सफ्टवेयर कम्पनीमा नै लैजानुपर्दथ्यो ।

२०६० साल आषाढ ६ गतेबाट दरवन्दी मिलान गरी लेखा सहायक र कम्प्युटर अपरेटरलाई ना.सु. सरहको दरवन्दी सिर्जना भयो र झन् काममा जिम्मेवारी बढ्दै गयो । तलब पनि बढ्यो । त्यसवेला मेरो परिवारमा १ छोरी थपिएर ७ जनाको परिवार भइसकेको थियो र यो समयसम्म आइपुग्दा पनि मैले अन्यत्र जाने सोच बनाइनँ । त्यसबेला मेरा साथीहरू सरकारी जागिरे, कोही सामुदायिक विद्यालयका शिक्षक र कोही क्यानडा, कोही उद्यमी व्यवसायी पनि भइसकेका थिए ।

२०६३ साल फाल्गुण २४ गते कवि न्यौपाने कम्प्युटर फिल्डको कर्मचारीको रुपमा  नियुक्त भएर उनीबाट संस्थाले ठूलो अपेक्षा राखेको थियो र विस्तार पूरा पनि हुँदै गयो । डाटाहरू पनि अपडेट हुँदै गए । सोही बेलादेखिका डाटाहरू अहिलेसम्म पनि अपडेट हुँदै प्रयोगमा छन् । त्यसपछि नेफस्कुन द्वारा निर्मित नेकोस नाम गरेको नेपाली सफ्टवेयर प्रयोगमा आयो । सो सफ्टवेयरले धेरै हदसम्म हिसाव कितावको प्रविष्टी तथा विश्वासनीयतामा सहयोग पुऱ्यायो । हिसाव कितावहरू परिष्कृत हुँदै गए    । संस्थालाई चुस्त दुरुस्त तथा पारदर्शी र व्यवस्थापनमुखी बनाउन २०६६ साल भाद्र महिना १ गतेबाट कमल बहादुर दाहाल नयाँ व्यवस्थापकमा नियुक्त भएपछि  व्यवस्थापनमा नयाँ जोश जाँगर थपियो । सो समयमा मेरो पद पनि पाँचौं सहायक व्यवस्थापक भइसकेको थियो र सो बेला पनि ऋण र लेखा सम्वन्धी नै काम गरियो । २०६७ फागुन १४ गते थप अपेक्षासहित संस्थाले कवि न्यौपानेलाई कायममुकायम व्यवस्थापकका रुपमा नियुक्त गऱ्यो । २०६८ साल श्रावण १ गतेबाट नेकोस प्लस सफ्टवयर प्रयोगमा ल्याई हिसाव किताव प्रविष्टि गरियो  जुन सफ्टवेयर २०७३ साल असार मसान्त सम्म संस्थामा सञ्चालनमा रह्यो । २०६८

असोजमा वर्ष कर्मचारीको रुपमा संस्थाबाट म पुरस्कृत भएँ । उत्साह नथपिने कुरै भएन किनकी यो जनसचेतन इतिहासमा कर्मचारी पुरस्कृत हुनेमा म दोश्रो कर्मचारी भएँ। यस बेलासम्ममा म आर्थिक, व्यवहारिक तथा सामाजिक रुपमा परिपक्व भइसकेको थिएँ । म आफूलाई सामाजिक, व्यवहारिक तथा सांस्कृतिक रुपमा स्थापित भएको महशुस भएकोले ममा विचलनको स्थिति पैदा हुने कुरै थिएन । यो संस्था मेरो सहाराको रुपमा स्थापित भइसकेको छ ।

२०७० साल कार्तिक १ गतेबाट सञ्चालक समितिमा अध्यक्ष भीम प्रसाद दाहालको नेतृत्वमा नयाँ सञ्चालक समिति निर्वाचित भएपछि संस्थाले व्यसायिकतातर्फको नयाँ सोच शुरु गरेको थियो । २०७२ साल भाद्र १६ गतेदेखि काभ्रेपलाञ्चोक जिल्ला पनौति नगरपालिका वडा नं. ४ निवासी कृष्ण कुमार श्रेष्ठ प्रमुख कार्यकारी अधिकृत पदमा नियुक्त हुनुभयो । जनसचेतन दोलखावासीको सहकारी वित्तीय सेवाको लागि सुरक्षित एक मात्र गन्तव्य हो भन्ने कुरा स्थापित गराउने कुरामा उहाँको नेतृत्वमा सिंगो जनसचेतनको व्यवस्थापन अग्रसर भइरहेको छ । सदस्यहरूलाई सहजताका साथ गुणस्तरीय सेवा प्रदान गर्ने एक मात्र ध्येय लिई व्यवस्थापकीय रुपमा अग्रसर रहेको यो व्यवस्थापन समूह सबै सेवा केन्द्रहरूलाई ईन्टरनेटको लिंकमा ल्याइ निःशुल्क ए.बि.बि. एस सेवा प्रदान गर्न, नयाँ र आधुनिक प्रविधिमा आधारित मोबाइल बैंकिङ, उच्चस्तरीय सफ्टवेयरको प्रयोगलगायत सदस्यहरूको सेवालाई सजिलो बनाउन अन्य प्रविधिमा आधारित सेवाहरू अन्वेषण तथा प्रयोग गर्ने सवालमा सफल रहेको पाएको छु। संस्थालाई जोखिमरहित ढंगले सञ्चालन गर्न आन्तरिक विधि र प्रविधिहरूलाई समुचित तरिकाले परिचालन गर्दै भाखा नाघेको ऋण नियन्त्रण गर्न, संस्थागत पूँजीको अनुपात बृद्धि गर्न र सदस्यहरूलाई उचित प्रतिफल दिई सन्तुष्ट बनाउन यो व्यवस्थापन नेतृत्वले महत्वपूर्ण भूमिका खेलेको अनुभूति गरेको छु। संस्थाको महत्वपूर्ण पूँजी मानव संसाधन हो भन्ने आदर्शलाई आत्मसात गर्दै कर्मचारी व्यवस्थापनको सिंगो समूहलाई उत्प्रेरित गर्दै अगाडि बढेको हालको जनसचेतन व्यवस्थापनको एक विभागीय प्रमुखको रुपमा काम गरिरहँदा गौरवको अनुभूति संगालेको छु । २०७४ साल जेष्ठ २ गतेवाट नवराज दाहाल व्यवसाय विकास अधिकृतमा नियुक्त भएपछि व्यवस्थापन टीममा गतिशिलता थप भएको छ। संस्थाको व्यवसाय विकासका साथै सदस्यहरूको आफ्नो व्यवसायलाई प्रवर्द्धन गर्न संस्थाले सहजीकरण गर्ने उद्देश्यले नियुक्त भएका व्यवसाय विकास अधिकृतले सजिलैसंग संस्थाले राखेको अपेक्षा पूरा गर्न सक्नेछन् भन्ने विश्वास पनि गरेको छु ।

२०७२ साल पौष १८ गते वाट आर्थिक तथा प्रशासन विभाग पाँचौ तह लेखा व्यवस्थापकको जिम्मेवारी पाएपछि काममा झन् जागरुकता थपिएको महशुस भएको छ। सोही समयमा कस्टोमर केयर र अभिलेख व्यवस्थापनको तालिम पनि लिने मौका मिल्यो । कामको मूल्याङ्कनस्वरुप २३ औं साधारण सभामा १ ग्रेड वृद्धिको निर्णय पनि भयो । यी सबै कामहरू पहिले पनि हुने गरेका थिए तर अहिले परिष्कृत हुँदै गएका छन् ।

व्यवस्थापनको कौशलतामा वृद्धि गर्नको लागि सही मान्छे, सही ठाउँमा राखेर काममा लगाउने सिद्धान्त अवलम्बन गरेको वर्तमान व्यवस्थापन समूहले हाल ऋण विभागको प्रमुखको जिम्मेवारी सम्हालिरहेका श्री राजेन्द्र प्रसाद ढुङ्गेल जसले १ वर्षसम्म का.मु. व्यवस्थापकसमेत रहेर संस्थामा योगदान पुऱ्याएका थिए, उहाँसंगको सहकार्यले मेरो जनसचतेनको यात्रामा धेरै खुड्किलाहरू थप्न मद्दत गरेको कुरा म भुल्न सक्दिनँ । त्यसैगरी संस्थाले मेरो यात्राको पूर्वार्द्धदेखिका मित्र रत्नबहादुर दाहाललाई लघुवित्त विभागको प्रमुखको जिम्मेवारी पछिल्लो समयमा प्रदान गरेको छ। उनको क्षमता, स्वभाव र व्यक्तित्वले उनले उक्त विभागमा निकै कुशलतापूर्वक काम गरी व्यवसायिकता वृद्धि गर्न मद्दत पुग्ने मैले देखेको छु। रत्नजी साह्रै सङ्लो भएका सहकर्मी मित्रको रुपमा मेरो मानस्पटलमा रहने कर्मचारी साथी हुन् ।

यसरी विगत झण्डै १८ वर्षदेखिको जनसचेतनसंगको मेरो सामीप्यता सुखद र सफल रहेकोमा म अत्यन्तै खुसी छु । जनसचेतन सयौं वर्षसम्म दोलखाली जनसमुदायको ढुकढुकीको रुपमा रहँदै जाओस् भन्ने कामना सधैं गरिरहन्छु !!!

जय सहकारी, जय जनसचेतन ॥

 

# सामाजिक सेवामा जनसचेतनको भूमिका



**रत्न बहादुर दाहाल**
स. व्यवस्थापक

हिमाली छत्रछायाँमा चरिकोट र जिरीको बीचमा अवस्थित मैनापोखरी प्रकृतिको मनोरम स्थल हुँदाहुँदै पनि सदरमुकाम चरिकोट र जिरी बजारमा बैंक स्थापना हुँदा यहाँ कसैले बैंक स्थापना गर्ने तथा बैंक चल्छ भन्ने सपना समेत देखेनन् । तर पनि यहाँका बुद्धिजीवी, समाजसेवी, किसान, व्यापारी, शिक्षक यो सपना देखेर सामाजिक परिवर्तत गरेरै छाडने विचारका साथ ३४ जना मिलेर जनसचेतनको स्थापना गर्नुभो । जसको परिणाम स्वरुप आज हजारौं आरोह-अवरोह पार गर्दै उहाँहरूको सपना साकार बन्दैछ । जिरी र चरिकोटमा स्थापना भएका बैंकहरूलाई आज जनसचेतन चुनौति दिंदैछ कि सर्वसधारण जनताको वित्तीय तागत कति हुन्छ भनेर । थोपा-थोपा मिलेर कुवा मात्र बन्दैन, पोखरी मात्र बनेर बस्दैन निश्चल समुन्द्र बन्दै समाजै सिंचन गर्नसक्छ भन्ने उदाहरण भएको छ जनसचेतन । यहाँ विभन्न जात, धर्म, संस्कृति, वर्ग, तह, तप्का र ओहोदाका मानिसहरू आवद्ध होलन् तर संस्थामा कसैलाई भेदभाव छैन ।

२०५० साल आश्विन २२ गतेका दिन कानूनी रुपमा जन्म लिएको जनसचेतन आज २५ औं वार्षिक उत्सव मनाउने तयारीमा पुगेको छ । २५ वर्षको अवधिमा जनसचेतनले उसका कार्यक्षेत्रका जनताको जीवन पद्धति नै परिवर्तन गरिदिएको छ , जुन कुरा राज्यबाट पनि असम्भव जस्तै थियो । राज्यले सामाजिक, साँस्कृतिक, आर्थिक विकास तथा गरिबी निवारणका लागि हजारौं नीति नियम बनायो तर चरम भ्रष्टचारका बावजुद कति कार्यन्वयनमा आए, कति नआइकन बीचैमा थन्किए त कति कार्यन्वयनमा आएका पनि कुनै ठेट नतीजा नदिइ बसिरहे । तर, आर्थिक विकासको माध्यमबाट मात्र सामाजिक विकास सम्भव छ भन्ने कुरा जनसचेतनले सत्य सावित गरिदिएको छ, जुन कुरा राज्यले पनि अनुकरण गर्नुपर्ने देखिन्छ । राज्यले बनाइदिएका नीति नियमभित्र रहेर आफ्ना सदस्यको हितमा समर्पित जनसचेतन स्थापनाको समयमा जनतालाई बचत गर्ने बानी पार्न जनताको घरदैलो चाहार्थ्यो जुन समयमा रु.१०० बचत गर्ने पैसा नभएर घरमुलीहरू अतालिन्थे । गाउँका साहु महाजनहरू सहकारी खुलेको छ भन्दा संस्थापकहरूलाई नै खिल्लीमा उडाउँथे । चर्को ब्याज लिएर सामान्य जनतालाई दाससरहको व्यवहार गरी घरबास उठाइ बसाईं सर्न बाध्य बनाउनेहरूको पनि कमि थिएन । तर पनि संस्थापकहरू आफ्नो दृढ संकल्प बोकेर अगाडि बढिरहे । एक घर एक सदस्यता बनाउन असम्भव भएको जनसचेतनमा विस्तारै जनताको मानसिकता परिवर्तन हुँदै गएर घरका सबै परिवार सदस्यता लिन थाले । शेयर सदस्यता लिएपछि उद्यम गर्न चाहने कुनै पनि व्यक्तिले पैसाको अभावमा तड्पिनु परेन । घमण्ड गरेर सदस्यता नलिएकाहरूले पनि उभन्दा म पछि पर्छु कि भनेर विस्तारै सदस्यता लिन थाले । भर्खर बिबाह गरेर ल्याएकी दुलहीलाई सहकारीमा आवद्ध गराउने तथा भर्खर जन्मेको बच्चालाई पनि जन्मदिनमा नै न्वारानभन्दा पहिले सहकारीमा आवद्ध गराइ नाम जुराउने र बचत गर्ने लहरले नसोचेको परिवर्तन ल्याइदियो ।

ईमान्दार सदस्य, जुझारु सञ्चालक, प्रेरणादायी सल्लाहाकार, मेहेनती कर्मचारी भएको कारणले नै आज जनसचेतनको यहाँका प्रत्येक व्यक्ति र समाजले नसोचेको फड्को मारेको छ । यहाँका जनतालाई कुनै पनि काम गर्न पैसा कहाँबाट र कसरी जुटाउँ भन्ने चिन्ता छैन । अव्वल र प्रतिभावान छोराछोरीले पैसाको अभावमा आफ्नो प्रतिभा मार्नु परेको छैन । देशले शैक्षिक बेरोजगारलाई बेवास्ता गरिरहेको बेला जनसचेतनले हात दिएको छ ।

आज जनसचेतनले प्रत्येक व्यक्तिलाई गर्भदेखि चिहानसम्म आफ्नो उपस्थिति जनाइ सहयोग गरेको पाइन्छ। बच्चा, युवा र वृद्धाको सहारा बनेको छ । रोगीहरूको उपचारमा औषधी लिएर पुग्छ त मृत्यु भएको ठाउँमा मृतकलाई श्रद्धाञ्जली तथा मृतकका आफन्तलाई शान्तवना दिन क्रिया खर्च लिएर घर-घर पुगेको छ। समाज स्वार्थतिर ढल्कँदै गएको बखत जनसचेतन निस्वार्थ सहयोगका साथ समाज विकासमा लागि परेको छ । समाज परिवर्तनको

मुख्य आधारस्तम्भ भनेको आर्थिक सम्पन्नता रहेछ जसले व्यक्तिको लुवाई-खुवाई, व्यक्तित्व विकास, शिक्षा, स्वास्थ्य तथा रोजगारका अवसरमा फरक पार्ने रहेछ। त्यही आर्थिक विकासको कोसेढुङ्गा आज जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि. हुन पुगेको छ। जनसचेतनले न त धनी भन्यो, न त गरीब, न त उपल्लो जात र सभ्रान्त वर्ग, न त दलित, न त जनजाति। जति पनि व्यक्ति यसको छहारीमा आए सबैलाई समान व्यवहार गरेर सुरक्षा प्रदान गर्दै आइरहेको छ। प्रत्येक सदस्य अब आफूलाई आर्थिक संकट पऱ्यो कि बाबा-आमा र भगवान सम्झनुभन्दा पहिला जनसचेतन सम्झन पुग्छ। हिजो एकसरो कपडा किन्न नसकेर तथा एक छाक टार्न नसकेर तड्पिनेहरू आज ठूला व्यापारी र उद्योगपति बनेका छन्। हिजो छोराछोरीलाई सामान्य विद्यालय पढाउन नसक्नेहरू अहिले अन्तर्राष्ट्रिय विश्वविद्यालयमा डाक्टर, इन्जिनियर, पाईलट र वैज्ञानिक बनाउन अभ्यस्त देखिन्छन्। शिक्षित युवा लगानीको अभावमा बेरोजगार बस्नु परेको छैन। के यो सामाजिक परिवर्तन जनसचेतबिना सम्भव थियो होला र !

जनसचेतनले ल्याएको अर्को परिवर्तन भनेको छुवाछुत, दाईजो, घरेलु हिंसा र महिला हिंसामा नियन्त्रण पनि हो। जब दलित यस संस्थामा आवद्ध भए सहकारी शिक्षाको माध्यमद्धारा बचत गर्ने बानी बसालियो। मादक पदार्थ सेवनलाई नियन्त्रण गरी आर्थिक सम्पन्नता र छोराछोरीको शिक्षामा जोड दिन थालियो जसको कारण उनीहरूले आफूमा परिवर्तन ल्याए र छुवाछुतको अन्त भयो। छोरीलाई दाइजो हैन, सहकारीमा सदस्य बनाउ र बचत जम्मा गरिदेउ जसको कारण छोरीले आफूले चाहे जति पढ्न सकोस् भन्ने अभियानले घरेलु हिंसा र महिला हिंसामा नियन्त्रण गऱ्यो। जनसचेतनमा आवद्ध प्रत्येक छोरीले बिबाह गरेर गएपश्चात पनि अर्को समाजमा चनचेतना फैलाउन अहम् भूमिका निर्वाह गरे। यो उपलब्धिलाई हेर्दा सामाजिक विकासको सञ्जाल विच्छ्याउन जनसचेतनले नेतृत्व लिइरहेको देखिन्छ। आगामी भविष्य अझ उज्यालो बनाउन सबैको सक्रिय र सकारात्मक सहभागिता अनिवार्य छ।



# सांस्कृतिक रुपान्तरणमा सहकारी



बिर्ख क्रान्ति

**१. के हो सांस्कृतिक रुपान्तरण ?**

असल कृति (काम) हरुको संस्मरण (निरन्तरता) नै 'संस्कृति' हो । असल कामको बाटोबाट दायाँ-बायाँ लाग्नु 'विचलन' हो । विचलनबाट फेरि आफू अनुकूलको बाटो बनाएर असल कर्मतिरै फर्किनु 'रुपान्तरण' हो । असल कर्मको विपरीत बाटो लाग्नु 'विकृति' हो । विकृतिबाट उठेर असल बाटोमा पुग्ने काम 'आमूल परिर्वन' हो । आज हाम्रो सभ्यताको स्टोरमा संस्कृति, विचलन, रुपान्तरण, विकृति र आमूल परिवर्तन सबै सामानहरु थुप्रिएका छन् । सभ्यताको स्टोर सधैं सफा राख्न हामीलाई नियमित रुपमा 'सांस्कृतिक शुद्धीकरण' (cultural sanitation) आवश्यक परिरहन्छ । देश विचलन र विकृतिहरुको डम्पिङ साइट बनिरहेको छ । यसका लागि 'सांस्कृतिक शुद्धीकरण' आवश्यक भइसकेको छ । माथिका शब्दार्थहरुको केही उदाहरणहरु:

- गम्भीर आपतमा परेको मान्छेलाई निशर्त उद्धार गर्नु **संस्कृति** हो ।
- स्वार्थसहित उसको उद्धार गर्नु र पछि उसको ईच्छा वा हैसियत विपरीत सहयोग मूल्यको सौदाबाजी गर्नु **विचलन** हो ।
- आपतको गहिराइ र सहयोगको उँचाइको मूल्यांकन गर्दै आपसी सहमतिमा सहयोगको मूल्य लेनदेन गर्ने परिपाटी बसाल्नु **रुपान्तरण** हो ।
- आपतको मौका छोपी उसैलाई लुटपाट मच्चाउनु **विकृति** हो ।
- उद्धार संस्कृति तथा रुपान्तरण स्थापित हुने गरी लुटपाटलाई पूरै नियन्त्रण गर्नु र पीडितलाई क्षतिपूर्ति भराउनु **आमूल परिवर्तन** हो ।
- समाजमा लेऊ लागेका विचलन तथा विकृतिहरु सफा गर्नका लागि अपनाइएका विभिन्न विधिहरु (शैक्षिक, सांस्कृतिक, धार्मिक, साहित्यिक, कानुनी आदि) **सांस्कृतिक शुद्धीकरण** हुन् ।

**२. सांस्कृतिक रुपान्तरण किन ?**

२०६२/०६३ को जनआन्दोलनपछि 'रुपान्तरण' शब्दले निकै चर्चा पाउँदै आएको छ । यस अन्तर्गत सामाजिक रुपान्तरण, आर्थिक रुपान्तरण, राजनीतिक रुपान्तरण, सांस्कृतिक रुपान्तरणलगायत अरु विषयगत रुपान्तरणका कुराहरु उठिरहेका छन् । यीमध्ये कुनै पनि विषयको रुपान्तरणबारे गहिरिएर आम बहस शुरु हुन सकेको छैन । वास्तवमा रुपान्तरण आम बहसको विषय हो । आम बहस भन्ने बित्तिक्कै सर्वसाधारणसमेतको सरोकार जोडिन्छ । तर आजको सन्दर्भमा बुद्धिजीवी, विषयगत विज्ञ, सामाजिक अभियन्ता, राजनीतिकर्मी र 'सर्वसाधारणहरु' ले खोज्दै र बुझ्दै आएको रुपान्तरणको स्वरुपमै पनि भिन्नता पाइन्छ । रुपान्तरणबाट सबैभन्दा बढी लाभ पाउने सबैभन्दा ठूलो समुदाय 'सर्वसाधारणहरु' नै यसको बहसबाट बाहिरै छन् । धेरै विषयहरुमा 'रुपान्तरण' हाम्रा लागि आधारभूत आवश्यक्ता बनिसकेको भए तापनि अझसम्म यो बौद्धिक रोमान्सको घेराभित्र मात्र अल्झिरहेको देखिन्छ । रुपान्तरणतिर साँच्चिकै अघि बढ्ने हो भने यसका विषयवस्तुलाई विषयगत गहिराइमा, स्पष्ट र ठोस रुपमा, सर्वसाधारण जो मुख्य लाभग्राही हुन्, तीसमेतको सहभागितामा योजनावद्ध बहस अघि बढाउने बेला भइसकेको छ ।

गणतन्त्र स्थापनापछि जनतामा परिवर्तन र समृद्धिको ठूलो आशा थियो । तर ती आशाहरु आज एक दशकभित्रै अविश्वासको गहिरो खाडलतिर भासिँदै गइरहेका छन् । विश्वासहरु मूर्छा पर्दै बौरिँदै गरिरहेका छन् । जसले गणतन्त्रमा सुखको सपना देखाएका थिए, तीबाटै सामाजिक सुशासनका गोठमा आगो झोसियो । संस्कृतिका जराहरु उखालेर विकृतिको आगो ताप्न लागियो । राज्य निर्माणको नेतृत्व लिनेहरुले जसले जेसुकै भनेर स्पष्टीकरण दिन खोजे पनि वा प्रतिरोध गर्न खोजे पनि नागरिकहरुको स्वाभिमानी शिर झोक्राउँदै गएको तथ्य अब लुकाउन सकिने अवस्थामा छैन । यसको क्षतिपूर्ति कसले व्यहोर्छ ?

आज आफ्नो शिर उठाउन आफैं लाग्नुपर्ने बेला आएको छ । रत्तिभर ढिला नगरी नागरिकस्तरबाट सांस्कृतिक रुपान्तरणको महाअभियान थालिहाल्नुपर्ने बेला भएको छ । यही बेलाको शुभारम्भलाई साथ दिने उद्देश्यले निकालिएको हो यो आवाज ।

**३. यो लेख कतातिर, कसका लागि?**

माथि भनिएझै सांस्कृतिक रुपान्तरणको अर्थ र दायरा निकै फराकिलो हुन्छ । प्रस्तुत लेख सांस्कृतिक रुपान्तरणको समग्र पक्षमा नगै जनसचेतनको रजत स्मारिकाको प्रयोजनका लागि सहकारी क्षेत्रले पहल लिनसक्ने आर्थिक रुपान्तरणका केही सवालहरुमा केन्द्रित गरिएको छ । प्रस्तुत

लेखले आर्थिक रुपान्तरणमा सहकारीहरुको भूमिकाबारे कम्तीमा सहकारीसम्वद्ध पक्षहरुबीच बहस चलाउन प्रेरित गर्नेछ र त्यही प्रेरणाको निरन्तरताले एउटा निश्चित समयमा सहकारीहरुको रुपान्तरणमा नयाँ फड्को मार्न मद्दत पुग्नेछ भन्ने अपेक्षा राखिएको छ ।

## ४. के गर्न सक्छन् सहकारीहरुले ?

अहिले देशमा धेरै उठेको विषय आर्थिक रुपान्तरणको हो । यो विषय किन रुपान्तरण हो भने आर्थिक समृद्धिका लागि हामीसंग आधारभूत स्रोत साधन पर्याप्त नै छन् तर परिचालन पद्धतिमा हामी कमजोर छौं । हाम्रो कार्यपद्धतिमा केही प्रगतिशील सुधार गर्ने बित्तिकै केही वर्षमा हामी आर्थिक रुपान्तरणको आशालाग्दो प्रतिफलमा पुग्नसक्ने अवस्थामा छौं । आर्थिक रुपान्तरणको नागरिकस्तरको पहलका लागि सहकारीहरु संगठन, स्रोत र वैधता सबै हिसाबले उपयुक्त सूत्रधार बन्नसक्छन् । सहकारीको माध्यमबाट आर्थिक रुपान्तरणको अभियान अघि बढाउन प्रारम्भिक चरणमा यसो गर्न सक्छन्:

- आमबहसलाई आन्तरिक, अन्तरसंस्था र सबै सरोकारवालाहरुबीच तीब्रता दिने ।
- आमबहसबाट प्राप्त भएका निचोडको आधारमा दीर्घकालीन कार्यदिशा तय गर्ने ।
- दीर्घकालीन कार्यदिशाको आधारमा विस्तृत कार्ययोजना बनाइ लागू गर्ने ।

आर्थिक रुपान्तरण अभियानको बहस अघि बढाउनका लागि सहकारी क्षेत्रले थालनी गर्नसक्ने केही सवालहरु तलको तालिका १ मा प्रस्तुत गरिएको छ:

**तालिका १: आर्थिक रुपान्तरणका लागि सहकारीहरुले गर्नसक्ने केही तत्कालीन कार्यहरु**

| क्र.सं. | विषयगत क्षेत्रको विद्यमान अवस्था | | चाहेको अवस्था (रुपान्तरण) | सहकारीले गर्नसक्ने कार्यहरु |
|---|---|---|---|---|
| | सबलता | नचाहेको नतीजा | | |
| १ | गाउँगाउँमा साकोसहरु छन्, ठूलो मात्रामा पूँजी संकलन छ । | साकोसहरु पैसा मात्र बेच्छन्, उद्यमशीलतामा प्राथमिकता नै दिंदैनन् । | साकोसहरुको ठूलो पूँजी उद्यमशीलतामा लगानी होस् । | उद्यमशीलतामा जाने गुरुयोजना तयार गर्नसक्छन् । |
| २ | गाउँ गाउँमा उत्पादन सहकारीहरु छन्, उत्पादन कार्यका लागि पर्याप्त जनशक्ति र प्राकृतिक स्रोत साधन छन् । | यी सहकारीहरु उद्यमको बाटो पहिल्याउन नसकेर आफैं चाउरिएर बसेका छन् । | उत्पादन सहकारीहरु उत्पादन प्रविधि, उत्पादन र बजार विस्तारमा केन्द्रित होउन् । गाउँ गाउँमा रोजगारी सिर्जना होस् । | समान उद्देश्यका सहकारीहरुबीच पालिकास्तरीय अन्तरक्रिया शुरु गरी उद्यमशीलता विकासमा अघि बढ्न ठोस प्रक्रिया निर्माण गर्न सक्छन् । |
| ३ | धेरैजसो गाउँका एउटै ठाउँमा धेरै सहकारीहरु क्रियाशील छन् । | एउटै व्यक्ति हरेकतिर सदस्य बनेको छ । सबैतिरबाट प्रायः अनुत्पादक ऋण गर्ने प्रवृत्तिले व्यक्ति र संस्था दुवै आर्थिक जोखिमतिर ढल्किरहेका छन् । | सम्पूर्ण वित्तीय सेवासहितका सहकारी विकास होउन् । आर्थिक क्रान्तिका लागि आपसी परिपुरक होउन् । स्थानीय आवश्यक्ता र अवस्थाअनुसार एकीकरण र सेवा विशिष्ठीकरण होउन् । | स्थानीय परिवेशअनुसार एकीकरण, विशिष्ठीकरण र विघटनको लागि पहल अघि बढाइ संस्थागत पुनसंरचना गर्न सक्छन् । |
| ४ | गाउँ गाउँमा गैरसरकारी संस्थाहरु छन्, हरेकसंग विकास कार्यक्रम र बजेट छ । | गैससहरु नाङले व्यापार मात्र गर्छन्, दिगो र एकीकृत विकासको कुनै सफल नमूना छैन । | गैससहरुको कामले दिगो र ठोस नतीजा दिन सकोस्, पालिकाको एकीकृत योजनाअनुसार लगानी गरुन् । | पालिकास्तरीय समन्वय समिति बनाइ गैसस, सहकारी र पालिकाबीच एकीकृत योजना र कार्यान्वयनको पहल अघि बढाउन सक्छन् । |
| ५ | गाउँमा भर्खरै स्थायी सरकार गठन भएको छ, जनप्रतिनिधिहरु काम गर्ने जोश, जाँगर बोकेर बसेका छन् । | गाउँ/नगरपालिकाहरु छरपष्ट बाटो, अन्यौलपूर्ण जोशमा अघि बढ्दैछन् । | पालिकाले दिगो विकासको बाटो समाओस्, धेरैले लाभ पाउने गरी चाँढै ठोस र प्रभावकारी नतीजा दिन सकोस् । | सहकारी, पालिका, गैसस, निजी क्षेत्र र सदस्यहरुबीच विस्तृत अन्तरक्रिया गरी उद्यमशीलता विकास तथा गरिबी निवारणसम्बन्धी योजना अघि बढाउन सक्छन् । |



> **रजत वर्षका लागि तय गरेको नारा *'२०८४ सम्मको जुक्ति, निरपेक्ष गरिबीबाट मुक्ति'* लाई आगामी दशकको कार्यदिशा तय गर्नका लागि आवश्यक प्रक्रिया अघि बढाउन यसै बर्ष ठोस कदमहरु चाल्नुपर्छ ।**

### ५. के गर्न सक्छ जनसचेतनले ?

- आर्थिक रुपान्तरणका लागि सहकारी क्षेत्रले गर्नसक्ने कार्यहरुमध्ये आफूले गर्नसक्ने कामहरुको सम्भावना पहिचान गरी ठोस रणनीतिहरु तय गर्न **आर्थिक रुपान्तरणका सवालहरु र जनसचेतनको कार्यदिशा** जस्ता विषयमा घनीभूत विचार विमर्श गरी दीर्घकालीन कार्यदिशा तय गर्नसक्छ ।
- रजत वर्षका लागि तय गरेको नारा **'२०८४ सम्मको जुक्ति, निरपेक्ष गरिबीबाट मुक्ति'** लाई आगामी दशकको कार्यदिशा तय गर्नका लागि आवश्यक प्रक्रिया अघि बढाउन यसै बर्ष ठोस कदमहरु चाल्नसक्छ ।
- सहकारीक्षेत्रका ताता सवालहरुलाई आमबहस बनाइ सामुहिक सम्बोधनको संस्कृति निर्माणमा योगदान गर्ने उद्देश्यले कम्तीमा पनि **१ सञ्चालक समिति, १ विशेषाङ्क** प्रकाशन जस्ता कार्यहरु अघि बढाउनसक्छ ।
- रजत स्मारिकामाथि समीक्षा तथा अन्तरक्रिया आयोजना गरी सहकारी अभियानमा केही नयाँ पहलहरु ल्याउनसक्छ ।
- समग्र सांस्कृतिक रुपान्तरणमा योगदान गर्नका लागि सहकारीलाई अध्ययन, अन्तरक्रिया, प्रचार प्रसार तथा कार्यमूलक अनुसन्धान गर्ने थलोको रुपमा विकास गर्न **सहकारी अध्ययनशाला** वा **सहकारी स्कुल** जस्ता ज्ञानकेन्द्रहरु सञ्चालन गर्नसक्छ ।

### ६. म के गर्न सक्छु ?

सांस्कृतिक रुपान्तरण अभियानहरु यस्ता विचारमा अघि बढ्न चाहने सहकारीहरुका लागि आपसी सहकार्यमा यस लेखमा प्रस्तुत अवधारणाहरुको विस्तृत छलफलपत्र तथा कार्यपत्रहरु तयार गर्न, अभिमुखीकरण सामग्रीहरु तयार गर्न, सो सम्बन्धी अन्तरक्रियाहरु सहजीकरण गर्न, सो को अभिलेखन तयार गर्न र दीर्घकालीन कार्यदिशा निर्माणका लागि वैचारिक, प्राविधिक सहजीकरण सहयोग गर्न सकिन्छ ।

### ७. तपाइँ के गर्न सक्नुहुन्छ ?

विशेष गरी सहकारीको नेतृत्व वा समन्वयमा तपाइँले खोजेको आर्थिक, सामाजिक, सांस्कृतिक रुपान्तरण के कस्तो हो ? त्यो कुरा सहकारीसम्म ल्याएर संस्थागत अभिलेखन राख्ने र छलफलमा आउनसक्ने बनाउन तपाइँ के योगदान गर्न सक्नुहुन्छ ? सहकारीका माध्यमबाट शुरुवात गर्न सकिने रुपान्तरण अभियानहरुमा तपाइँ कसरी सहयोग गर्न सक्नुहुन्छ ? म किन सोध्दैछु भने तपाइँले खोजेको रुपान्तरण स्थापित गर्न सहयोग गर्ने पहिलो साझेदार तपाइँ नै हो । तपाइँ नउठेसम्म तपाइँका सपनाहरु पनि सुतिरहन्छन् । भन्नोस्, तपाइँ कसरी उठ्नुहुन्छ ?

### ८. निम्तो

हामी हाम्रो देशको राष्ट्रिय परिस्थितिका कारण व्यक्तिगत, पारिवारिक, संस्थागत र सामाजिक रुपमै रुपान्तरणको संक्रमणमा छौं । हामीलाई हाम्रो जीवनका धेरै पक्षमा रुपान्तरण चाहिएको छ । रुपान्तरणका वैयक्तिक जिम्मेवारीदेखि राष्ट्रिय जिम्मेवारीसम्मका बहुआयामिक पक्षलाई समेट्ने अभियान सांस्कृतिक रुपान्तरण हो । यसका लागि तपाइँले जहाँबाट, जुन तरिकाबाट, जुन स्तरमा भए पनि योगदान गर्न सक्नुहुन्छ । यस लेखमार्फत हामी सहकारी क्षेत्रले गर्नसक्ने आर्थिक रुपान्तरणको विषयमा कुरा गरिरहेको हुनाले तपाइँले त्यहींबाट आफ्नो योगदान शुरु गर्न सक्नुहुन्छ । किनकि यो आफ्नै मागहरुको प्राप्तिका लागि सहभागिता हो । तर रुपान्तरण एक्लाएक्लै सम्भव छैन । कमसेकम हामी सहकारीबाट रुपान्तरणको अभियानका लागि उठौं । किनकि यहाँबाट शुरु गरिने रुपान्तरण अभियान सिधै हाम्रो पारिवारिक अर्थतन्त्रसंग पनि जोडिने भएकोले प्रायः सबै रुपान्तरणहरुको गाँठो यहींबाट फुक्न शुरु हुनेछ । यसका लागि आउनुहोस्, कम्तीमा हामी आर्थिक रुपान्तरणको एजेण्डा बोकेर सञ्चार र सहकार्यका लागि सहकारी सञ्जालमा एकतावद्ध बनौं ।

इमेलः inf0@divyadrishtinepal.com

# म नेपाली युवा (गीत)



**रमेश दाहाल**
वैत्यश्वर ५, काब्रे (हाल अमेरिका)

म नेपाली युवा,
माटोमा हात राखी कसम खान्छु,
ढुंगा छोएर प्रतिज्ञा गर्छु,
म देशको अस्तित्व छातीमै राख्छु,
म हिमालको उँचाइ शिरमै राख्छु,
मलाई बाँध, या मार,
म देशको भलो सोचेरै उठ्छु,
म देशको हित गरेरै मर्छु,
म नेपाली युवा ॥

उन्नतिको सपना देख्छु,
र पसिना पोख्छु म जहाँ जान्छु,
देशको झन्डा आफूसंगै लान्छु,
नराम्रोलाई सुधार्छु,
राम्रोलाई साथ दिन्छु,
म बाटो खन्ने हातलाई सलाम गर्छु,
म जहाँ छु त्यहीँ उभिएर पूर्व-पश्चिम हेर्छु,
म नेपाल बोल्छु,
म नेपाली सुन्छु,
म नेपाली युवा ॥

छातीमा हात राखेर कसम खान्छु,
जन्म-मृत्यु सम्झेर बाचा गर्छु,
म विभेदको बिरोधमा उभिएर बोल्छु,
म बुद्धको शान्ति कायम राख्छु,
मलाई मार, या बाँच्न देउ,
म तराईदेखि हिमालको गीत गाउँछु,
म देशको पानी पिएरै बाँच्छु,
म देशको माटो चुमेरै मर्छु,
म नेपाली युवा ॥



लघुकथा

# उत्प्रेरणा



**आर. पी. सापकोटा**
भीनपा ४, जिलू

"देवीप्रपन्नार्ती हरे प्रसीदः
प्रसीदःमातर जगतो खिलस्य
प्रसीदःविश्वेश्वरी पाहीविश्वम्
त्वमेश्वरी देवीःचराचरस्यः" ॥

आज दशैंको टीकाको दिन, जतासतै रमाइलो छाएको छ । प्रकृति सफा, क्षितिज मन्त्रमुग्ध, बालीनाली लरक्क पाक्नाले पहेँलपुर जमिन, बालबालिकालाई पिङको छुट्टै रौनक, सबैको टाउकोमा पहेँला जमराको आँकुरा फरफर र राता अक्षताले निधारमाझ पक्क टीका देखिँदा मान्छेमा छुट्टै गर्वको अनुभूति भएको छ । लाग्छ, विजयादशमीको टीकाको दिन त्यो सत्य, तेत्रायुगको पुराण वर्णित देवताहरूको दानवप्रतिको जीत आजकै दिन हामीले पनि पो केही कुरा जितेको हो कि? सबैमा गर्विलोपन महसुश भैरहेको छ । टाढा-टाढादेखि कोही जागिरको सिलसिला, कोही वैदेशिक रोजगारी, कोही ब्यापारी, कोही ज्यालादारी, जो जो घरबाट टाढा छन्, ती समुदायका व्यक्तिहरू परिवारका ढुकढुकीहरू यसै दिनको प्रतीक्षालाई आत्मसात गर्दै बर्षौंदेखि बृद्ध आमाबाबुको हातबाट टीका ग्रहण गर्ने असीम चाहना राखी घरतर्फ फर्की आएका छन् । फर्कंदै छन् । हिजो, अस्ति, पोहोर, परार भएका मन मुटाव, अलि मत्थर भएर यो बर्ष टीका थाप्नेको ओहोरदोहोर छ । माइत, मावल, ससुराली जानेको ताँती पनि विशेषै पो देखिन थालेको छ ।

यसै सिलसिलामा जग्गा जमीन खासै नभएका, हलो जोतेर जीवन कटाएका बाजे, बल्लतल्ल घरको गारो लाउन सिपालु मिस्त्रीसम्म भई औँलाका नङ र हातका कैयौं पत्र छाला गुमाएका बाबु र काठ कटानी चिरानी गर्ने ४ छोरी र एक छोराका पिता, उनको पनि आरो जिप्टिएर हातको दुई औँला गुमाइसकेका रमेशको घरमा भने आज बेग्लै वातावरण छाएको छ । उनका घरमा यो दशैंको उल्लासपूर्ण दिनमा बेग्लै रौनक छ । बृद्ध आमाबाबु जो असीको दशक नाघिसकेका, ओछ्यानको थलैमा छन् । तिनले आज गाउँकै

> **सोही सहकारीको प्रेरणाले जिल्ला सदरमुकामदेखि कुनाकुनासम्म महिला सहकारी, पेशागत सहकारी, बालसहकारीदेखि अनेकौँ सहकारी खुलेर सहकारीको बाढी आएको छ । सुपथ ब्याजमा ऋण लिने, गर्जो टार्ने, तिरोतारो गर्दै जाने । बचत दाखिला नियमित गर्दै जाने सहकारी उपल्ला तहमा पुग्ने र अन्तर्राष्ट्रियस्तरमा समेत ख्याती कमाउन सफल भएको छ । सोही सहकारी जनसचेतन सहकारीका सञ्चालकसँग पनि यो रमेश परिवारको समस्या पुग्यो र उनीमा पनि यसको समाधानका लागि जुट्ने सोच पैदा भयो ।**

विद्वान् पण्डितहरूको हातबाट छोराको निधारमा रातो टीका लगाएर विजयादशमीको साइत समुद्घाटन गर्ने तयारीमा छन् । चारैजना चेलीबेटी, ज्वाइँहरू, नाता-नातिनाको राम्रै जमघट छ । रमेशका घरमा आजभन्दा ठीक पाँचबर्ष पहिले डाक्टर पढ्न विदेश पठाउने सिलसिलामा यही आँगन हो छोरीछोरी पछाडिको ख्याउटे दीपेशलाई टीका, माला लगाइ विदाई गरेको झल्को सबैका अगाडि खडा भएको छ । सो दिन दुखका आँसु, भलभली बगेका थिए भने आज सुखका, शानका, सन्तुष्टीका आँसु सबैका आँखामा डबडबाइरहेका छन् । दीपेश पनि त्यतिबेलाको जस्तो कहाँ ख्याउटे छ र ? कपाल मिलेको, चम्किलो, हेरिरहूँ जस्तो रूपवान् पो छ त ।

दीपेशले गाउँकै स्कुलबाट जिल्लामा उत्कृष्ट नतिजा ल्याई एस.एल.सी. पास गऱ्यो । त्यो परिवारमा पहिले अध्ययनशील र सुशील व्यक्ति थियो ऊ । सरहरूको नजरमा पनि अध्ययनशील र मेधावी थियो तर गरिबीको कारण उच्च

शिक्षा अध्ययनमा खर्च जुटाउन मुस्किल थियो । दीपेशको परिवार खिन्न थियो, दुखित थियो, कसरी १२ कक्षा पढाउने, १२ कक्षापछि त जागिर खाला, विदेश जाला, हामीजस्तो हली, ज्यामी हुनु नपर्ला भनी जसोतसो ऋणधन गरी, भएको माखामुन्द्रा बेचविखन गरी १२ कक्षासम्म पढाइयो । दीपेश त झनै बढी अंक ल्याएर पास भएकोले रमेश परिवार मात्रै हैन गाउँ नै चकित भयो । धेरै मान्छे रिसले, इर्ष्याले भए पनि जिब्रो टोकेर चकित पर्न थाले । तर, धेरैको एउटै भनाई थियो गरीबको कोखमा जन्मेर यसले जति राम्रो पढे पनि के नै हुन्छ र ? आखिर यसको जीवन बित्ने र योबाट काम लिने विदेश त हो नि, सबैतिर अनेकौं लख काटिन थाले । उत्कृष्ट अंक ल्याई पास भएकोमा घरमा फेरि चिन्ता छाउन थाल्यो । बिक्री गर्ने त्यत्रो ठूलो जिन्सी नै के थियो र ? कसरी छोरो पढाउने ? के गर्दा समाधान निस्कन्छ ? झण्डै साठी दिनजति अन्यौलमा बिते ।

"तँ चिता मात्र म पुऱ्याउँछु" भनेझैँ गाउँमा देश कै उत्कृष्ट सहकारी स्थापना भएको छ । प्रसिद्ध विद्वान् र अनुभवीहरूले सञ्चालन गरिरहेका छन् । सोही सहकारीको प्रेरणाले जिल्ला सदरमुकामदेखि कुनाकुनासम्म महिला सहकारी, पेशागत सहकारी, बालसहकारीदेखि अनेकौँ सहकारी खुलेर सहकारीको बाढी आएको छ । सुपथ ब्याजमा ऋण लिने, गर्जो टार्ने, तिरोतारो गर्दै जाने । बचत दाखिला नियमित गर्दै जाने सहकारी उपल्ला तहमा पुग्ने र अन्तर्राष्ट्रियस्तरमा समेत ख्याती कमाउन सफल भएको छ। सोही सहकारी **जनसचेतन सहकारी**का सञ्चालकसँग पनि यो रमेश परिवारको समस्या पुग्यो र उनीमा पनि यसको समाधानका लागि जुट्ने सोच पैदा भयो । उनीहरूसँग भएको केही जग्गा धितो राखी सहुलियत दरमा ऋण दिने र गाउँकै इज्जतका लागि दीपेशलाई डाक्टर पढाउने निधो भयो । सोही सहकारीको लगानीको प्रतिफल आज दीपेश गाउँको मात्र हैन राष्ट्रकै तेजिलो ज्योती बन्न सफल भएको छ । आज खर्च जुटाउन नसकी प्रतिभा मार्न बाध्य भएका होनहार कैयन युवायुवतीहरूले समेत पाठ सिकिसकेका छन् । ठूला ठूला पदमा पुगिसकेका छन् । सधैँ रोएर बित्ने दशैं रमेशकै घरकोझैँ सर्वत्र खुसीयाली छाएको छ, पुरेत, बुबाआमा,बाजेबज्यैले टीका लगाइरहेका छन् - या देवी सर्व भूतेषु.......आयु द्रोणसुते श्रेयो ...........!!

धन्य छ, जनसचेतन सहकारी यसैगरी सबैका घरमा कालान्तरसम्म खुशी प्रदान गरोस् । सधैँ, सधैँ सबैको उत्प्रेरक बनोस् ।

*(लेखक शिक्षक कल्याण बचत तथा ऋण सहकारीका पूर्वअध्यक्ष हुन् ।)*



# मेरो प्यारो जनसचेतन



सुनिता ढुङ्गेल

जोश जाँगर भए पनि,
खल्ति टाट पल्टेपछि ।
आँटेको काम सफल पार्न,
एकादेशको कथा बनेपछि,
तिम्रो न्वारान गरेको मलाई हेक्का छ ॥
जनधनको जतन गर्न,
अचेत जनलाई सचेत बनाउन,
जनसचेतन नामकरण गरेको पनि मलाई याद छ ।
साहु महाजनको चर्को व्याजबाट छुटकारा लिन,
तिम्रो न्वारान गरेको मलाई हेक्का छ ॥
खहरे खोलाको बगरमा,
पानीको सुसाइसँग,
तिमी टोलाइरहेको अवस्था,
बुधवारे हटियामा,
एककान दो-कान मैदान गर्दै,
तिम्रो चर्चा चलेको पनि मलाई हेक्का छ ॥
तिम्रो लालन पालनका लागि,
दिन रात नभन्ने मेरा बा जस्तै अरु धेरै बाहरू,
मेरी आमा जस्तै धेरै आमाहरूले,
चिसो ढिंडो अगेनाको आडमा सुकाएर,
बाको प्रतीक्षा गरिरहेको क्षण पनि मलाई हेक्का छ ॥
धेरै दुःख गरेको पल थियो त्यो,
तिमीलाई बच्चाभ्कैं बामे सार्न,
धेरै कंसहरू आइलागेका थिए,
तिम्रो घाँटी निमोठ्न,
तर तिमी महांभारतको कृष्णभ्कैं,
आफ्नो जित गर्दै गयौ निरन्तर ।
ती त्रासदी क्षणहरू पनि मलाई हेक्का छ ॥
हिजो तिमी बामे सर्ने बच्चा,
आज २५ वर्ष यौवनले भरिएको मस्त जवानीमा,
शक्ति, धन दौलत त अरबौंको छ ।
बजारमा ठूलो महल बनाइ रजगज चलाइरहेका दिनहरू,
त्यो समृद्धिको पनि मलाई हेक्का छ ॥

के कमी छ र तिमीसँग आर्थिक सामाजिक प्रतिष्ठा,
मान-सम्मान मिलेको छ देश विदेशबाट,
चलिरहून् युगौं युग यो प्रक्रिया ।
रोजगारीका नयाँ नयां अवसर ल्याउनु तिमीले,
बल्नुपर्छ चिसो चुल्हो मेरो पनि त ।
गर्मी, जाडो कुनै बेला,
सहजसँग बल्दैन गरीबको चुल्हो,
यो तीतो सत्य पनि मलाई हेक्का छ ॥
सोच, कति राखेका छौ खै तिमीले,
एउटा कुरा भन्छु;
पाल्ने, फाल्ने छैन यहाँ कोही,
विदेशिएका हाम्रा छोरा-छोरी ।
बुढेसकालको सहारा तिमी आश्रय दिने प्रण गर ।
त्यसैले जनसचेतन तिमीले
अन्तिम सास फेर्ने बनाउ घर ।
तिमी यो गर्न सक्छौ,
किनकि बाल्यकालदेखिकै तिम्रो शक्ति मलाई छ ॥
कति चर्चा छ तिम्रो देश विदेशमा,
युवाको इच्छा र चाहना पूरा गर्न,
पढ्न होस वा व्यापार व्यवसाय गर्न,
स्वदेश वस्न होस् वा विदेश शयर गर्न,
परेनौ पछि बृद्धको सहारा बन्न ।
सकिनँ जनसचेतन तिम्रो बखान गरी,
प्रेमसहितका शब्दहरू कागजमा उतार्न ।
तर बुभ्छौ मेरो असीम प्रेम तिमीले,
किनकी निमुखाहरूको पनि बोली सुनेको मलाई हेक्का छ ॥
शुभ रहुन् आगामी वर्षहरू, जोश जाँगर बोकी,
नरोकिउन् तिम्रा जोशिला पाइलाहरू,
एउटा स्वर्णिम सपनाको बारीमा,
फुलोस् फलोस् भविष्य तिम्रो अनि हाम्रो,
सम्वन्ध बनिरहोस घनिष्ठ एक अर्कामा नङ र मासुको ।
नाचौंला हामी तिम्रो स्वर्णिम आँगनीमा,
आज हाँसिरहेछौं उज्यालो रजत जयन्तीमा ॥

# जनसचेतनको जन्मदिन



राधाकृष्ण दाहाल

**साहसी कदम**

५० साल मंसीरमा जन्म लिइ आयौ ।
युग मर्म बुझी तिम्ले पाइला धेरै सार्‍यौ ॥

अभाव र दरिद्रका पीडा व्यथा बोकी ।
आर्थिक र उन्नतिको बाटो दिने हो कि ॥

काब्रे, नाम्दु, मिर्गेलाई केन्द्रविन्दु पारी ।
काम गर्‍यौ आरिसेको शेखी पनि झारी ॥

प्रगति र उन्नतिको पाइला चुमी आयौ ।
सब्को आँखा तिमीतिरै लोभ्याउने पार्‍यौ ।।

संघ, संस्था, नेफस्कुन हुँदै 'आक्कु' पुगी आयौ ।
युग्को इच्छा बुझेर नै फड्को अघि मार्‍यौ ॥

**शुभकामना**

गुराँस, गुलाफ, मखमली बनी तिमी फुल्नु ।
भमरा र पुतली भइ गाँउ गाँउमा डुल्नु ॥

शरद र वसन्तको सन्देश लिइ आउनु ।
कोइली बनी मिठो गीत देशैभरि गाउनु ॥

निरन्तर सफलताको पाइला चलिरहोस् ।
युगौंसम्म तिम्रो नाम देशमा चम्किरहोस् ॥

**मुटुभरि माया**

मर्नु एकदिन पक्कै पर्छ , तिमी बाँचिरहु ।
रोए पनि मेरो मन, तिमी हाँसिरहु ॥

हारें भने कुनै दिन, तिमी जिती रहु ।
युगौंसम्म समाजको सेवा गर्दै रहु ॥

# संस्थाले प्राप्त गरेका सम्मान तथा प्रमाणपत्रहरू

श्री ५ को सरकार

सहकारी विभाग

जिल्ला सहकारी कार्यालय

काभ्रेपलाञ्चोक

दर्ता नम्बर :- ८१/०५०/०५१

## दर्ताको प्रमाणपत्र

सहकारी ऐन, २०४८ को दफा ५ बमोजिम श्री जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि. काभ्रे आ.गा.वि.स. ४, दोकरवा लाई सीमित दायित्व भएको संस्था । संघमा दर्ता गरी यो प्रमाणपत्र प्रदान गरिएको छ ।

दस्तखत :- २०५०/८/१

(नि. सहकारी अधिकृत)

रजिष्ट्रार

सहकारी विभाग

दर्ता गरेको मिति:- २०५०/८/१

कार्यालयको छाप।

"आर्थिक विकास र सामाजिक रुपान्तरणका लागि सहकारी"

## जिल्ला सहकारी संघ लि.

चरिकोट, दोलखा

२०५०

**प्रमाण-पत्र**

सस्थाको उत्तरोत्तर प्रगतिको कामना सहित सहकारी अभिवादन !

३० चैत्र २०७२

---

नेपाल सरकार

कृषि तथा सहकारी मन्त्रालय

सहकारी विभाग

## डिभिजन सहकारी कार्यालय

चरिकोट, दोलखा

**प्रशंसा-पत्र**

श्री जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि.

काइँ ६, दोलखा।

आ.ब. २०६२/०६३ मा त्यस संस्थाबाट उत्कृष्ट काम गरेवापत नगद पुरस्कार रु २०००।- (दुईहजार) सहित यो प्रशंसा-पत्र प्रदान गरिएको छ ।

डिभिजन सहकारी कार्यालय

मिति :: २०६३/१२/२०

प्रमुख अतिथि

---

## दोलखा जिल्ला बचत तथा ऋण सहकारी संघ लि.

चरिकोट, दोलखा

**प्रशंसा-पत्र**

जनसचेतन साकोस

काभ्रे-६, दोलखा

दोलखा जिल्लाको ग्रामिण भेगमा स्थापना भई व्यवस्थित तरिकाले संस्था संचालन गरी सहकारीको माध्यमबाट नागरिकको आर्थिक तथा सामाजिक क्रियाकलापमा पहुँच वृद्धि गनका लागि महत्वपूर्ण योगदान गरी दोलखा जिल्लाको सहकारी अभियानको गरिमा बढाउन यस संघमा रहेको अन्तर लगानी कार्यक्रम अन्तरगत सबैभन्दा बढि रकम जम्मा गरि यस संघको विकासको लागि महत्वपूर्ण योगदान गरेको हुँदा उक्त कार्यको उच्च मूल्याङ्न गर्दै त्यस संस्थालाई यस संघको १६ औं वार्षिक साधारण सभाको अवसरमा यो प्रशंसा-पत्र प्रदान गरिएको छ ।

माधव प्रसाद दहाल — महासचिव

जिवन ... खड्का — अध्यक्ष

जगदीश्वरराज घिमिरे — अध्यक्ष, प्रमुख अतिथि (नेफस्कून)

२७ मंसिर २०७१

---

## सामुदायिक रेडियो प्रसारक संघ नेपाल (ACORAB)

केन्द्रीय समिति

बाकुपाट, ललितपुर

ACORAB Nepal

**सम्मान-पत्र**

श्री जनसचेतन बचत तथा ऋण सहकारी संस्था लिमिटेड

काभ्रे, मैनापोखरी

सामुदायिक रेडियो प्रसारक संघ नेपाल (ACORAB) को "सामाजिक रुपान्तरणमा सामुदायिक रेडियो" भन्ने मूल नाराका साथ मिति २०७१ साल भदौ १८ र १९ गते नेपालको सुन्दर पर्यटकीय जिल्ला दोलखाको सदरमुकाम चरिकोटमा १० औं राष्ट्रिय सम्मेलन एवं वार्षिक साधारण सभा भव्यताका साथ सम्पन्न गर्नका लागि महत्वपूर्ण योगदान पुऱ्याउनु भएकोमा हार्दिक धन्यवाद सहित यो सम्मान-पत्र प्रदान गरिएको छ ।

मोहन चापागाई — अध्यक्ष, सामुदायिक रेडियो प्रसारक संघ, नेपाल

झलनाथ खनाल — पूर्व प्रधानमन्त्री

पुष्पकमल दहाल प्रचण्ड — पूर्व प्रधानमन्त्री

शेर बहादुर देउवा — पूर्व प्रधानमन्त्री

१९ भदौ २०७१





CERTIFICATE
ASSOCIATION OF ASIAN CONFEDERATION OF CREDIT UNIONS
Bangkok, Thailand
Hereby certifies that

JANASACHETAN
Saving & Credit Co-operative
Nepal

Has established and applied a management system that can channel the energies, abilities, and specific knowledge held by people in the organization toward achieving long-term strategic goals on the perspectives of Finance, Customer-Member, Internal Business Processes, and Learning and Growth
An audit was performed and documented in Report No. 0014.
Proof has been furnished that the requirements according to

ACCESS
A-one Competitive Choice for Excellence in Service & Soundness
BRONZE
are fulfilled.

Further clarification regarding the scope of this certification and the applicability of ACCESS Brand - BRONZE may be obtained by consulting the organization.
Certification is valid from July 1, 2014 to June 30, 2015.

Simon A. Pereira
*President*

Ranjith Hettiarachchi
*Chief Executive Officer*



CERTIFICATE
ASSOCIATION OF ASIAN CONFEDERATION OF CREDIT UNIONS
Bangkok, Thailand
Hereby certifies that

Janasachetan
Saving & Credit Co-operative Society Ltd.
Nepal

Has established and applied a management system that can channel the energies, abilities, and specific knowledge held by people in the organization toward achieving long-term strategic goals on the perspectives of Finance, Customer-Member, Internal Business Processes, and Learning and Growth
An audit was performed and documented in Report No. 0008.
Proof has been furnished that the requirements according to

ACCESS
A-one Competitive Choice for Excellence in Service & Soundness
BRONZE
are fulfilled.

Further clarification regarding the scope of this certification and the applicability of ACCESS Brand - BRONZE may be obtained by consulting the organization.
Certification is valid from September 1, 2012 to August 31, 2013.

Dr. Chalermpol Dusamphant
*President*

Ranjith Hettiarachchi
*Chief Executive Officer*



CERTIFICATE
ASSOCIATION OF ASIAN CONFEDERATION OF CREDIT UNIONS
Bangkok, Thailand
Hereby certifies that

JANASACHETAN
Saving & Credit Co-operative Society Ltd.
Nepal

Has established and applied a management system that can channel the energies, abilities, and specific knowledge held by people in the organization toward achieving long-term strategic goals on the perspectives of Finance, Customer-Member, Internal Business Processes, and Learning and Growth
An audit was performed and documented in Report No. 0025.
Proof has been furnished that the requirements according to

ACCESS
A-one Competitive Choice for Excellence in Service & Soundness
SILVER
are fulfilled.

Further clarification regarding the scope of this certification and the applicability of ACCESS Brand - BRONZE may be obtained by consulting the organization.
Certification is valid from September 1, 2016 to August 31, 2017.

Dr. Chul Sang Moon
*President*

Elenita V. San Roque
*Chief Executive Officer*



ASSOCIATION OF ASIAN CONFEDERATION OF CREDIT UNIONS

2013/2014 *Certificate of Membership*

Janasachetan Savings and Credit Co-operative Society Ltd.

*Its membership has supported ACCU in fostering significant progress in enabling more than 41.6 million individuals in Asia can access to affordable financial services.*

Simon A. Pereira
*President*

Ranjith Hettiarachchi
*Chief Executive Officer*

## राष्ट्रिय सहकारी बैंक लिमिटेड

नयाँबानेश्वर, काठमाडौं

### प्रशंसा-पत्र

राष्ट्रिय सहकारी बैंक लिमिटेडको सातौं वार्षिक साधारण सभाको अवसरमा काब्रे-६ दोलखा स्थित यस बैंकको शेयर सदस्य श्री जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि.ले आ. व. २०६६/६७ भरी उत्कृष्ट निक्षेप कारोबार गरी स्रोत संकलनमा अमूल्य योगदान पुऱ्याएकोमा सधन्यवाद यो प्रशंसा पत्र प्रदान गरिएको छ ।

(के. बी. उप्रेती)
प्रबन्ध सचालक

मिति: २०६७ पौष २४ गते

(रमेश प्रसाद पोखरेल)
अध्यक्ष

## नेपाल बचत तथा ऋण केन्द्रीय सहकारी संघ लि. (नेफ्स्कून)

नयाँ बानेश्वर, काठमाण्डौ

### कदर-पत्र

यस केन्द्रीय संघको लामो प्रयास पछि परीक्षणको रुपमा रहेको नेकोस सफ्टवयर प्रयोग गरी सफलतापूर्वक साल तमामी गराएर सफ्टवयरको परीक्षण कार्यलाई सफल पार्न गहन योगदान पुऱ्याउने बचत तथा ऋण सहकारी संस्थाहरुमध्ये दोलखा जिल्लाको काब्रे स्थित श्री जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि.लाई नेफ्स्कूनको १८ औं साधारण सभाको अवसरमा यो कदर-पत्र प्रदान गरिएको छ ।

कुबेर निरौला
का.मु. प्रमुख कार्यकारी अधिकृत

घनश्याम खतिवडा
महासचिव

मिन राज कडेल
अध्यक्ष

मिति : २०६६ पौष ३ गते शुक्रवार

## नेपाल सरकार
## अर्थ मन्त्रालय
## आन्तरिक राजस्व कार्यालय भक्तपुर

# आन्तरिक राजस्व कार्यालय भक्तपुर

जगाती, भक्तपुर

### सम्मान-पत्र

श्री जन सचेतन बचत तथा ऋण स.स.लि.
स्थायी लेखा नं. ३०३२१०६०५
दोलखा

आर्थिक वर्ष ०६९/०७० मा आयकरतर्फ उच्चतम कर सहभागिता जनाउनु भएकोमा तेस्रो राष्ट्रिय कर दिवस २०७१ को पावन अवसरमा कदर स्वरुप त्यस सहकारीलाई यो सम्मान-पत्र प्रदान गरिएको छ । आगामी वर्षहरुमा समेत त्यस सहकारीबाट कर सहभागिता एवं राजस्व संकलनमा उल्लेखनीय योगदान रहने अपेक्षा राखिएको छ ।

(उत्तमभक्त वाग्ले)
प्रमुख कर अधिकृत
आन्तरिक राजस्व कार्यालय, भक्तपुर

इति सम्वत् २०७१ साल चैत ०४ गते रोज ३ शुभम् ।

(चूडामणि शर्मा)
महानिर्देशक
आन्तरिक राजस्व विभाग

## जिल्ला विकास समिति

दोलखा, चरिकोट

### कदर-पत्र

जिल्लाको एकीकृत विकासमा उल्लेखनीय योगदान गर्ने व्यक्ति वा संस्थालाई पुरस्कृत गर्ने जिल्ला विकास समितिको नीति अनुरुप नवौं जिल्ला परिषदको अवसरमा जनसचेतन बचत तथा ऋण सहकारी संस्था काब्रे, दोलखालाई यो कदर-पत्र प्रदान गरिएको छ ।

प्रमुख अतिथि
प्रदीप नेपाल
मा. सांसद, प्रतिनिधि सभा

सभापति
[illegible] कुमार के.सी.
जिल्ला विकास समिति

सचिव
कृष्ण प्रसाद देवकोटा
जिल्ला विकास समिति

मिति : २८ फाल्गुण, २०६[illegible]





DOLKHALI SOCIETY, SOUTH KOREA
दोलखाली समाज, दक्षिण कोरिया

सम्मान-पत्र

जन सचेतन बचत तथा ऋण सहकारी संस्था लि. दोलखा

जनसचेतन बचत तथा ऋण सहकारी संस्था लि. दोलखाले यस वर्षको एसियाली स्तरको एक्सेस ब्राण्ड (Access Brand) मध्ये सिल्भर ब्राण्ड प्राप्त गर्न सफल भएकोमा हामी अत्यन्तै खुसी भएका छौं।

यसै सन्दर्भमा दक्षिण कोरियाको इन्छन सहरमा यहि सेप्टेम्बर ८ देखि ११ सम्म सम्पन्न एसियाली ऋण महासंघ (ACCU) को ३४ औं साधारण सभामा भाग लिन पाल्नु भएका साकोसका अध्यक्ष आदरणीय श्री भिम प्रसाद दाहाल ज्यू मार्फत हामी दोलखालीहरुको साझा संस्था दोलखाली समाज दक्षिण कोरियाको खुसी र गर्व महसुस गर्दै उक्त साकोसलाई बधाई ज्ञापन साथै शुभकामना व्यक्त गर्न चाहन्छौं।



राष्ट्रिय सहकारी संघ लि. नेपाल
बिजुलीबजार, काठमाण्डौ.

उत्कृष्ट सहकारी व्यवसाय पुरस्कार-२०६४

सहकारी व्यवसायका माध्यमद्वारा वचत तथा ऋण-क्षेत्रमा अनुकरणीय कार्य गरी नेपालको सहकारी आन्दोलनको विकासमा उल्लेखनीय योगदान पुऱ्याए वापत जनसचेतन वचत तथा ऋण सहकारी संस्था लि. काभ्रे. दोलखालाई नेपालको सहकारी आन्दोलन एवं राष्ट्रिय सहकारी संघ लि. का तर्फबाट ८६ औं अन्तर्राष्ट्रिय सहकारी दिवस (1st Saturday of July) को सु-अवसरमा यो उत्कृष्ट सहकारी व्यवसाय पुरस्कार प्रदान गरिएको छ ।

सुरिन्दर कुमार जाखर
संचालक
अन्तर्राष्ट्रिय सहकारी महासघ
तथा
अध्यक्ष, इण्डियन फार्मर्स फर्टिलाइजर को-अपरेटिभ लि., भारत

दीपक प्रकाश बाँस्कोटा
अध्यक्ष
राष्ट्रिय सहकारी संघ लि. नेपाल.
तथा
८६ औं अन्तर्राष्ट्रिय सहकारी दिवस
मूल समारोह समिति

मिति: २०६५/३/२१ गते, काठमाडौं

# कार्यरत कर्मचारीहरू


**कृष्णकुमार श्रेष्ठ**
प्रमुख कार्यकारी अधिकृत


**नवराज दाहाल**
व्यवसाय विकास अधिकृत


**राजेन्द्रप्रसाद ढुंगेल**
सहायक अधिकृत
ऋण विभाग प्रमुख


**मेघराज घिमिरे**
सहायक अधिकृत
आर्थिक प्रशासन विभाग प्रमुख


**रत्नबहादुर दाहाल**
सहायक अधिकृत
लघुवित्त विभाग प्रमुख


**ओलकप्रसाद दाहाल**
सहायक अधिकृत


**बन्दना घिमिरे**
सहायक अधिकृत


**इन्दु भण्डारी (ढुंगेल)**
सहायक अधिकृत


**सुबासकुमार दाहाल**
बरिष्ठ सहायक


**पार्वती दाहाल**
सहायक


**सकिला धनुके**
सहायक


**सन्तोष दाहाल**
सहायक


**श्रीकृष्ण न्यौपाने**
सहायक


**डिल्लीप्रसाद दाहाल**
कार्यालय सहायक


**गोमा खड्का**
कार्यालय सहायक


**इन्दिरा शर्मा**
कार्यालय सहायक


**ज्ञानु खतिवडा**
कार्यालय सहायक


**सरिता सापकोटा**
कार्यालय सहायक


**ताराबहादुर पाण्डे**
कार्यालय सहायक


**सुमन काफ्ले**
कार्यालय सहायक


**गणेश थामी**
कार्यालय सहायक


**प्रतिभा थापा**
कार्यालय सहायक


**बिमला बराइली**
कार्यालय सहायक


**खुश्बु पाण्डे**
कार्यालय सहायक


**कुमार दहाल**
कार्यालय सहायक


**रेणुका बस्नेत**
कार्यालय सहायक


**इन्दु बि क**
कार्यालय सहयोगी


**भरत दहाल**
सुरक्षा गार्ड


**कोपिला कार्की**
प्रशिक्षार्थी


**पुष्पा तामाङ**
प्रशिक्षार्थी


**संगिता खड्का**
प्रशिक्षार्थी


**रसिला चौलागाई**
प्रशिक्षार्थी

# सञ्चालक समिति



अध्यक्ष
**भीमप्रसाद दाहाल**



उपाध्यक्ष
**हेमन्त चौलागाईं**



सचिव
**मीनप्रसाद दाहाल**



सह सचिव
**नारायणप्रसाद दाहाल**



कोषाध्यक्ष
**कमलबहादुर दाहाल**



सदस्य
**रोचकुमारी चौलागाईं**



सदस्य
**भरत के.सी.**



सदस्य
**स्वस्थानी कुँवर**



सदस्य
**सरदचन्द्र सापकोटा**



सदस्य
**शिवराम ढकाल**



सदस्य
**चक्रबहादुर घतानी**



सदस्य
**फुलकाजी लामा**



सदस्य
**टंकबहादुर सुनुवार**



सदस्य
**सुमिता शिवाकोटी उप्रेती**



सदस्य
**अस्मिता दाहाल**

# लेखा सुपरीवेक्षण समिति



संयोजक
**गोपालध्वज श्रेष्ठ**



सचिव
**राधाकृष्ण दहाल**



सदस्य
**पुष्पराज दाहाल**

# CERTIFICATE

ACCU

ASSOCIATION OF ASIAN CONFEDERATION OF CREDIT UNIONS

Bangkok, Thailand

Hereby certifies that

## JANASACHETAN
## Saving and Credit Co-operative Society Ltd.

Nepal

Has established and applied a management system that can channel the energies, abilities, and specific knowledge held by people in the organization toward achieving long-term strategic goals on the perspectives of Finance, Customer-Member, Internal Business Processes, and Learning and Growth

An audit was performed and documented in Report No. 0037/2017.

Proof has been furnished that the requirements according to

ACCESS

A-one Competitive Choice for Excellence in Service & Soundness

SILVER

are fulfilled.

Further clarification regarding the scope of this certification and the applicability of ACCESS Brand - SILVER may be obtained by consulting the organization.

Certification is valid from September 1, 2017 to August 31, 2018.

Dr. Chul Sang Moon
*President*

Elenita V. San Roque
*Chief Executive Officer*